तिमीहरूको इच्छा भए मलाई अऋणी तुल्याउन सक्छौ, म आफ्नो उद्योगले तिर्न सक्तिनँ॥२२॥इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां द्वात्रिंशोऽध्यायः॥३२॥

( रासलीला ) श्रीशुकदेव भन्दछन्–हे राजन् ! भगवान्‌का मधुर कुरा सुनेर गोपिनीहरूको विरहजनित ताप हराएर गयो र तिनको अङ्गसङ्ग मर्द्दिनाले ती सबै सफल-मनोरथ हुन गए ॥१॥ अनि त्यहाँ श्रीकृष्णले परम प्रसन्न, अनुगत र परस्पर पाखुरामा पाखुरा जोरेर ती स्त्रीरत्नहरूसित रासक्रीडा आरम्भ गरे ॥२॥ गोपिनीहरूको मण्डलले सुशोभित रासोत्सवको आरम्भ भयो । ती स्त्रीहरूमध्ये दुइ-दुइका माझमा एकेक योगेश्वर भगवान् कृष्ण तिनको घाँटीमा हात हालेर उभिए । त्यस बेला सबै स्त्रीहरूले उनलाई आफ्नै नजीक ठाने ॥३॥ त्यस बेला रासोत्सव हेर्नका लागि आफाफ्ना पत्नीसहित आएका अत्यन्त उत्सुक देवगणमा अगणित विमानहरूले सारा आकाशमण्डल भरियो ॥ ४ ॥ तत्काल दुन्दुभीहरूको गड-गड ध्वनिका साथै आकाशबाट पुष्पहरूको वर्षा हुन लाग्यो र गन्धर्वगण आफ्नी प्रियाहरू सहित कृष्णको पवित्र यश-गान गर्नलागे ॥ ५ ॥ यता त्यस रास-मण्डलमा आफ्ना प्रियतमसित

व्रतैः ॥ स्त्रीरत्नैरन्वितः प्रीतैरन्योन्याबद्धबाहुभिः॥२॥ रासोत्सवःसम्प्रवृत्तो गोपीमण्डलमण्डितः ॥ योगेश्वरेण कृष्णेन तासां मध्ये द्वयोर्द्वयोः॥ प्रविष्टेन गृहीतानां कण्ठे स्वनिकटं स्त्रियः ॥३॥ यं मन्येरन्नभस्तावद्विमानशतसंकुलम् ॥ दिवौकसां सदाराणामौत्सुक्यापहृतात्मनाम् ॥ ४ ॥ ततोदुन्दुभयोनेदुः निपेतुः पुष्पवृष्टयः ॥ जगुर्गन्धर्वपतयः सस्त्रीकास्तद्यशोऽमलम् ॥ ५ ॥ वलयानां नूपुराणां किङ्किणीनां च योषिताम् ॥ सप्रियाणामभूच्छब्दस्तुमुलो रासमण्डले ॥ ६ ॥ तत्रातिशुशुभे ताभिर्भगवान्देवकीसुतः ॥ मध्ये मणीनां हैमानां महामारकतो यथा ॥ ७ ॥ पादन्यासैर्भुजविधुतिभिः सस्मितैर्भ्रू-विलासैर्भज्यन्मध्यैश्चलकुचपटैः कुण्डलैर्गण्डलोलैः ॥ स्विद्यन्मुख्यः कवररशनाग्रन्थयः कृष्णवध्वो गायन्त्यस्तं तडित इव ता मेघचक्रे विरेजुः ॥ ८ ॥ उच्चैर्जगुर्नृत्यमाना रक्तकण्ठ्यो रतिप्रियाः ॥ कृष्णाभिमर्शमुदिता यद्गीतेनेदमावृतम् ॥ ९ ॥ काचित्समं मुकुन्देन स्वरजातीरमिश्रिताः ॥ उन्निन्ये

नृत्य गर्ने गोपाङ्गनाहरूका कङ्कण, पाउजेब र कन्धनीको स-साना घण्टीहरूको सम्मिलित निनाद हुनलाग्यो ॥ ६ ॥ ती व्रजसुन्दरीहरूको माझमा भगवान् देवकीनन्दन सुवर्णमय मणि-हरूको माझमा महामरकतमणि झैं अत्यन्त सुशोभित भए ॥७॥ त्यस बेला उनको मुखमा पसीनाका थोपा झल्कीरहेका थिए र आफ्ना कपाल र कटिको गाँठो टन्काएर बाँधेका थिए । सबै कृष्ण-प्रिया गोपिनी भगवान् कृष्णका पवित्र यशोगान गर्दै विचित्र पद विन्यास, बाहुविक्षेप, मधुर हास्ययुक्त भृकुटी-विलास, कम्मरको लचक, चञ्चल अञ्चल र गालाहरूका नगीचै हल्लने कुण्डलहरूले ती मेघ-मण्डलमा टल्किरहेको बिजुली झैं सुशोभित भए ॥८॥ ती क्रीडासक्त कलकण्ठी गोपिनीहरू श्रीकृष्णको अङ्गसङ्गले आनन्दित भएर नाच्तै ती चर्को स्वरले मनोहर गायन गर्नलागे । तिनको सुमधुर गानले समस्त भूमण्डल गुञ्जायमान भयो ॥९॥ कुनै गोपिनी कृष्णसित गान गर्दै अत्यन्त उच्च स्वरले आलाप लिनलागे । उनका

* प्रेमको अद्भुत गति—वाणीले भन्न नसकिने प्रेमको बान्दै अद्भुत गति छ । आँखामा दर्शनको भोकले अरू-झरू भोक बढाइदिन्छ । यो अद्भुत गति हुने प्रेम, स्नेही आएर टेरी कौ कौ ढोकाको, कौ बाटो पर्को र कतै गाँठो परेको मान हुन्छ । हे स्नेही ! यो प्रेमको अद्भुत भाव आएर हेर—कसको सजाना हुनाशय सबै सुद्धि-बुद्धि हराएर जान्छ ।

आलापको ध्वनि भगवान्‌भन्दा पनि उत्तम र विलक्षण थियो । त्यसले प्रसन्न भएर श्रीकृष्णले 'स्यावास' भनेर प्रशंसा गर्नुभयो । त्यही लय समातेर गाउने अर्काको पनि प्रशंसा गर्नुभयो ॥१०॥ कुनै गोपी नाच्दा-नाच्दा थाकी । त्यसका नारीको कङ्कण र कपालको मल्लिकपुष्प खस्नलाग्यो । अनि उसले नजीकै उभिएका मुरलीधरको काँध आफ्नो भुजाले समात्न पक्रिई ॥११॥ अर्की गोपीले आफ्नू काँधमा राखेका कमलकुसुम समान सुगन्धित र चन्दन-चर्चित भगवान्‌का भुजाहरू सुँघी र आनन्दले पुलकित भएर चुम्बन लिई ॥ १२ ॥ अर्कीले नाचको कारण हल्लिरहेका कुण्डलहरूको कान्तिले टल्किरहेको आफ्नू कपोल श्रीकृष्णको कपोलसित टाँसिदिई । अनि भगवान्‌ले उसको मुखमा आफूले चपाएको पान दिनुभयो ॥१३॥ चौथी गोपिनी नूपुर र मेखलाको झनकार गर्दै नाचिरहेकी थिई । त्यो जब थकी थाकी तब उसले छेउमै स्थित श्रीकृष्णचन्द्रको कल्याणकारी कर-कमल आफ्ना स्तनद्वयमा राखी ॥१४॥ हे राजन् ! एकमात्र लक्ष्मीका प्रियतम भगवान् कृष्णलाई एकान्तरूपमा पाएर गोपिनीहरू, जसका पाँटी उनकी भुजपाशमा बाँधिएकाथिए, भगवान्‌का गुणगाउँदै

पूजिता तेन प्रीयता साधु साध्विति ॥ तदेव ध्रुवमुन्निन्ये तस्यै मानं च बह्वदात् ॥१०॥ काचिद्रासपरिश्रान्ता पार्श्वस्थस्य गदाभृतः ॥ जग्राह बाहुना स्कन्धं श्लथद्वलयमल्लिका ॥ ११ ॥ तत्रैकांसगतं बाहुं कृष्णस्योत्पलसौरभम् ॥ चन्दनालिप्तमाघ्राय हृष्टरोमा चुचुम्ब ह ॥ १२ ॥ कस्याश्चिन्नाट्यविक्षिप्तकुण्डलत्विषमण्डितम् ॥ गण्डं गण्डे सन्दधत्या अदात्ताम्बूलचर्वितम् ॥ १३ ॥ नृत्यन्ती गायती काचित्कूजन्नूपुरमेखला ॥ पार्श्वस्थाच्युतहस्ताब्जं श्रान्ताऽधात्स्तनयोः शिवम् ॥ १४ ॥ गोप्यो लब्ध्वाऽच्युतं कान्तं श्रिय एकान्तवल्लभम् ॥ गृहीतकण्ठ्यस्तद्दोर्भ्यां गायन्त्यस्तं विजह्रिरे ॥ १५ ॥ कर्णोत्पलालकविटङ्ककपोलघर्मवक्त्रश्रियो वलयनूपुरघोषवाद्यैः ॥ गोप्यः समं भगवता ननृतुः स्वकेशस्रस्तस्रजो भ्रमरगायकरासगोष्ठ्याम् ॥ १६ ॥ एवं परिष्वङ्गकराभिमर्शस्निग्धेक्षणोद्दामविलासहासैः ॥ रेमे रमेशो व्रजसुन्दरीभिर्यथाऽर्भकः स्वप्रतिबिम्बविभ्रमः ॥ १७ ॥ तदङ्गसङ्गप्रमुदाकुलेन्द्रियाः केशान्दुकूलं कुचपट्टिकां वा ॥ नाञ्जः प्रतिव्योढुमलं व्रजस्त्रियो विस्रस्तमालाभरणाः कुरूद्वह ॥ १८ ॥ कृष्णविक्रीडितं वीक्ष्य

उनैसित रमण गर्नलागे ॥१५॥ कानमा कमल-कुसुम, अलकावलीले अलंकृत कपोल र पसीनाका थोपाले सुशोभित मुख हुने ती गोपिनी-भ्रमर नै जसमा गायक थिए—त्यो रास-मण्डलमा आफ्ना कङ्कण र नुपुररूपी बाजाहरूको शब्द गर्दै भगवान्‌सित नृत्य गर्न थाले । त्यस बखत तिनका केशपाशमा सिउरेका पुष्पका मालाहरू टुक्रा-टुक्रा भएर छरिइन्थे ॥१६॥ जस्तै बालक आफ्नू छायासित स्वयं खेल्दछ, त्यस्तै नै रमारमण भगवान् कृष्णले आलिङ्गन, अङ्गस्पर्श, प्रणय-कटाक्ष र मनोहर मुसकान छर्दै व्रज-रमणीहरूसित रमण गरे ॥१७॥ हे कुरुनन्दन ! भगवान्‌को अङ्गस्पर्शजनित आनन्द र प्रभुका श्रीचरणको प्राप्तिवश इन्द्रियहरू विह्वल भइदिनाले गर्दा जसका पुष्पहार र शरीरका वस्त्र-आभूषण अस्त-

१ जीवनको लक्ष्य—जीवनको लक्ष्य दुर्लभ—भगवान्‌का चरणको प्राप्ति र यसैलाई परम पुरुषार्थ मान्नुपर्दछ । अरू पनि पुरुषार्थ र प्राप्त गर्ने योग्य पदार्थ छन्, ती सबै तल झार्ने खालका छन् । जबसम्म यो निश्चय हुँदैन कि भगवान्‌लाई प्राप्त गर्नु नै परम पुरुषार्थ हो, तथा यही जीवनको चरम लक्ष्य हो, तबसम्म मनुष्य कहीं पनि शान्ति पाउन सक्तैन । २—भगवान्‌का चरण प्राप्त गर्ने अनन्य लालसा नै जीवनको चरम ध्येय हो । भगवान्‌को प्राप्ति सकिलो छ, तर उनका चरणाश्रय प्राप्त गर्ने लालसा साह्रै दुर्लभ छ । ३—भगवान्‌लाई जान्ने इच्छा दुर्लभ भजन गर्ने, उनका चरणको आश्रय ग्रहण गर्ने । हाम्रो काम भगवान्‌लाई जान्ने होइन, प्राप्त गर्ने हो । त्यो प्राप्त हुन्छ भजनले, उनका चरणको कृपाले ! कुनै ठूलो राजालाई मात्र चिन्नाले केही हात लाग्दैन, तर यदि असित मैत्री भए काम बन्दछ । यसै गरी जो केवल तर्क र युक्तिले भगवान्‌लाई जान्ने इच्छा गर्दछन्,

व्यस्त भइसकेका थिए, ती व्रजबालाहरू आफ्ना केश-बन्धन, दुकूल र कंचुकीलाई पनि स्याहारीरहेका थिएनन् ॥१८॥ भगवान्को रासक्रीडा देखेर आकाशमा सुरसुन्दरीहरू कामातुर भएर मोहित भए र ग्रहगण समेत चकित चन्द्रमा कामार्दित हुनगए ॥१९॥ यद्यपि भगवान् आत्माराम थिए, तापनि त्यहाँ जति गोपिनी थिए, त्यतिनै रूपधारणगरेर उनले लीलापूर्वक तिनीहरूको साथमा रमण गरे। त्यसपछि हे तात ! अत्यन्त विहार गर्नाले थाकेका ती गोपाङ्गनाहरूका मुख करुणाधाक कृष्णले प्रेमपूर्वक आफ्नो शान्तिदायक करकमलले पुछिदिए ॥२०॥२१॥ भगवान्का नखस्पर्शले आनन्दित गोपिनीगण आफ्ना टल्कने सुवर्ण-कुण्डल र बटारिएका अलकावली युक्त कान्तिमण्डित कपोलको शोभा र सुमधुर मुसुकानमयी

मुमुहुः खेचरस्त्रियः ॥ कामार्दितः शशाङ्कश्च सगणो विस्मितोऽभवत् ॥ १९ ॥ कृत्वा तावन्तमात्मानं यावतीर्गोपयोषितः ॥ रेमे स भगवाँस्ताभि-
रात्मारामोऽपि लीलया ॥ २० ॥ तासामतिविहारेण श्रान्तानां वदनानि सः ॥ प्रामृजत्करुणः प्रेम्णा शन्तमेनाङ्ग पाणिना ॥ २१ ॥ गोप्यः
स्फुरत्पुरटकुण्डलकुन्तलत्विड्गण्डश्रिया सुधितहासनिरीक्षणेन ॥ मानं दधत्य ऋषभस्य जगुः कृतानि पुण्यानि तत्कररुहस्पर्शप्रमोदाः ॥२२॥
ताभिर्युतः श्रममपोहितुमङ्गसङ्गघृष्टस्रजः सकुचकुंकुमरञ्जितायाः ॥ गन्धर्वपालिभिरनुद्रुत आविशद्वाः श्रान्तो गजीभिरिभराडिव भिन्नसेतुः ॥ २३ ॥
सोऽम्भस्यलं युवतिभिः परिषिच्यमानः प्रेम्णेक्षितः प्रहसतीभिरितस्ततोऽङ्ग ॥ वैमानिकैः कुसुमवर्षिभिरीड्यमानो रेमे स्वयं स्वरतिरत्र गजेन्द्रलीलः

इष्टिले सम्मानित गर्दै ती नरश्रेष्ठका परम पवित्र लीलाहरूको गान गर्नलागे ॥२२॥ तदनन्तर जस्तै थाकेको गजराज आफ्नी मनपरेकी ढोईसित जलमा पसेर जलविहार गर्दछ, त्यसै गरी लोक र वेदको मर्यादा भङ्ग पारी भगवान् आफ्नू थकाई मार्नको निम्ति ती कामिनीहरूसित जलक्रीडा गर्नका लागि यमुनाको जलमा पसे। त्यस बखत गोपिनीका अङ्गसंगले मलिएको र उनका कुचकुंकुमले रंजित वनमालामा डुल्ने भ्रमर गन्धर्वराज झैं गुञ्जार गर्दै तिनको पछिलागे ॥२३॥ हे राजन् ! जलमा पुगेपछि सबै व्रजबालाहरू

तिनको हात केही लाग्दैन। अतः भगवान्लाई चान्न र रहस्यमा प्रवेशगर्नको निम्ति इच्छा त्यागेर भजनमा लाग्नुपर्दछ। भजन गर्नाले हाम्रो निम्ति जे जान्न आवश्यक हुन्छ, त्यो भगवान् स्वयं जनाइदिन्छन् र त्यही जान्नु यथार्थ जान्नु हो। ४—दुःख के हो ? भगवान्को परमानन्द स्वरूपमा विश्वास नहुनु र संसारका क्षुद्र पदार्थमा सुखको लोभले आसक्त हुनु। ५—जो भगवान्को छ, जो भगवान्को भइसकेको छ, जसलाई उनको साथ गोठा आश्रय छ, यस्तो बालक, वृद्ध, पशु-पक्षी जो भए पनि ती सबैको भार भगवान्मै रहन्छ। तिनलाई कहिले र कुन बेला के चाहिन्छ, त्यसको जाँच भगवान् नै गर्दछन्। ६—जसले श्रीकृष्णका चरणको स्पर्श पाइसकेका छन्, तिनको त कुरै छैन, जसलाई यो निश्चय भइसकेको छ कि पेरैं लामो समयपछि श्रीकृष्णका चरणको स्पर्श प्राप्त हुन्छ, तिनमा पनि विषय-विषको प्रभाव पर्न सक्तैन। जसलाई भगवान्को चरणको नङको तृष्णा पनि प्राप्त भयो अथवा हुनेछ, उनमा जगतको विष व्याप्त हुन सक्तैन। ७—जति अवतार छन्, तिनमा भगवान् परवश छैनन्, स्ववश छन्, तर यो श्रीकृष्णावतारमा ती स्वजन परवश छन् अर्थात् आफ्ना प्रेमीहरूको वशमा रहन्छन् र उनले जे भन्दछन्, त्यही गर्दछन्। ८—जो सबैलाई आकर्षित पारोस्, कतिसम्म भने जीवन्मुक्त पुरुषहरूको चित्तलाई पनि हरोस्, त्यसको नाम हो 'कृष्ण'। भगवान् कृष्ण यस्तै छन्। यसैले उनको मोटा नाम हो 'आत्माराम-गुणाकर्षी।' उनका गुण नै यस्ता छन्। ती आत्माराम महापुरुषहरूलाई पनि अहैतुक प्रेम गर्नको निम्ति बाध्य पारिदिन्छन्। 'आत्मारामाश्च मुनयो निर्ग्रन्था अप्युरुक्रमे। कुर्वन्त्यहैतुकीं भक्तिमित्थं भूतगुणो हरिः।' ९—यो आकाशमा उडङ्छ, त्यसलाई पिंजरामा छुन निकै राम्रो लाग्दछ, तर त्यसलाई समाउने कसरी ? यो त्यसलाई पक्ने शक्ति जान्दछन्, तिनीसँग गहर प्रार्थना गरियो भने त्यसलाई समायनमा सफलता पाउन सकिन्छ। यसै प्रकार भगवान्का नित्यपार्षद, प्रेमी भक्तजनको सहायता बिना श्रीकृष्णका पाउको सेवा गर्ने अधिकार पाउन कठिन छ।

चारैतिरबाट प्रणय-कटाक्ष गर्दै बेसरी हाँस्तै भगवान्माथि पानीको प्रहार गर्नलागे र विमानमा बसेका देवगण पुष्पवर्षा गरेर उनको स्तुति गर्नलागे। यसरी त्यहाँ स्वयं आत्माराम भगवानले पोथी गजराज समान जलक्रीडा गरे ॥ २४ ॥ अनि युवती मण्डल र भ्रमरहरूले घेरिएका श्रीहरि जहाँ सबैतिर जल र स्थल पुष्पहरूको बास्नाले सुवासित वायु चल्दै थियो, यमुनातटको त्यो रमणीय उपवनमा यसरी डुल्न लागे, जसरी मद बगाउने हात्ती होईहरूका समूहसित डुल्दछ ॥ २५ ॥ हे राजन्! चन्द्रमाको चन्द्रिकाले चर्चित र काव्य वर्णित शरत्कालीन सामग्रीहरूले सम्पन्न ती रात्रिहरूमा सत्यसङ्कल्प र अस्खलितवीर्य प्रभुले आफ्नी अनुचरी ललनाहरूसित विहार गरे ॥ २६ ॥ यति कथा सुनेर राजा परीक्षितले सोधे—हे भगवन्! जगत्पति कृष्ण धर्मको स्थापना र अधर्मको नाश गर्नका लागि नै पूर्ण अंशले अवतीर्ण भए ॥२७॥ अनि धर्ममर्यादाका वक्ता, रचयिता र रक्षक भएर पनि उनले परस्त्री-गमन जस्तो धर्म-विरुद्ध कार्य कसरी गरे? ॥ २८ ॥ कृष्ण भगवान् पूर्णकाम भएर पनि त्यस्तो निन्दनीय कामनामा किन प्रवृत्त भए, यसको आशय मैले बुझ्न सकिन। हे

॥ २४ ॥ ततश्च कृष्णोपवने जलस्थलप्रसूनगन्धानिलजुष्टदिक्तटे ॥ चचार भृङ्गप्रमदागणावृतो यथा मदच्युद्द्विरदः करेणुभिः ॥ २५ ॥ एवं शशाङ्कांशुविराजिता निशाः स सत्यकामोऽनुरताबलागणः ॥ सिषेव आत्मन्यवरुद्धसौरतः सर्वाः शरत्काव्यकथारसाश्रयाः ॥ २६ ॥ राजोवाच ॥ संस्थापनाय धर्मस्य प्रशमायेतरस्य च ॥ अवतीर्णो हि भगवानंशेन जगदीश्वरः ॥ २७ ॥ स कथं धर्मसेतूनां वक्ता कर्ताऽभिरक्षिता ॥ प्रतीपमाचरद्ब्रह्मन्परदाराभिमर्शनम् ॥ २८ ॥ आप्तकामो यदुपतिः कृतवान्वै जुगुप्सितम् ॥ किमभिप्राय एतं नः संशयं छिन्धि सुव्रत ॥ २९ ॥ श्रीशुक उवाच ॥ धर्मव्यतिक्रमो दृष्ट ईश्वराणां च साहसम् ॥ तेजीयसां न दोषाय वह्नेः सर्वभुजो यथा ॥ ३० ॥ नैतत्समाचरेज्जातु मनसाऽपि ह्यनीश्वरः ॥ विनश्यत्याचरन्मौढ्याद्यथा रुद्रोऽब्धिजं विषम् ॥ ३१ ॥ ईश्वराणां वचः सत्यं तथैवाचरितं क्वचित् ॥ तेषां यत्स्ववचोयुक्तं बुद्धिमांस्तत्समाचरेत् ॥३२॥ कुशलाचरितेनैषामिह स्वार्थो न विद्यते ॥ विपर्ययेण वाऽनर्थो निरहंकारिणां प्रभो ॥ ३३ ॥ किमुताखिलसत्त्वानां तिर्यङ्मर्त्यदिवौकसाम् ॥ ईशितुश्चेशितव्यानां कुशलाकुशलान्वयः ॥ ३४ ॥ यत्पादपङ्कजपरागनिषेवतृप्ता योगप्रभावविधुताखिलकर्मबन्धाः ॥ स्वैरं चरन्ति मुनयोऽपि न

सुव्रत! तपाईं मेरो यो सन्देह मेटिदिनुस् ॥ २९ ॥ श्रीशुकदेवले भने–हे राजन्! कहिले काहीं पुरुषद्वारा धर्मको उल्लङ्घन गरेर पनि हठपूर्वक साहसका काम भएका देखिन्छन्, तर त्यसले ती तेजस्वीलाई कुनै दोष लाग्दैन। जस्तै–सबै वस्तु भक्षण गर्ने अग्नि असत्पदार्थका गुण-दोषले दूषित हुँदैन ॥ ३०। जो व्यक्ति असमर्थ छन् तिनले त्यस्तो आचरण मनले पनि गर्नुहुँदैन। यदि कोही मूर्खताले त्यस्तो आचरण गर्दछ भने त्यो नष्ट हुनेछ। जस्तै-समुद्रबाट उत्पन्न विष शिवले पिउनु भयो, त्यस्तै शिवको अनुकरण गर्ने व्यक्ति नष्ट भएर जान्छ ॥ ३१ ॥ ईश्वरका वचन सत्य हुन्छन्। अतएव तिनैको पालन गर्नुपर्दछ। कहीं कहीं तिनका आचरण पनि अनुकरणीय हुन्छन्। अतः उनको जुन आचरण उनैको उपदेशको अनुकूल छ, बुद्धिमान पुरुष त्यसैको अनुसरण गरुन् ॥ ३२ ॥ हे राजन्! गर्वहीन समर्थ पुरुषका शुभ उद्योगमा उनको उद्योगमा उनको कुनै आफ्नू स्वार्थ हुँदैन। अतः अशुभ कर्मले उनको कुनै हानि अथवा अनर्थ पनि हुँदैन ॥३३॥ जब ईश्वरको शुभाशुभ कर्मले कुनै हानि हुन्न

तब तिर्यक् मनुष्य र देवता आदि समस्त जीवका एकमात्र सर्वेश्वर श्रीहरिको कुनै शुभाशुभ कर्मले हानि वा लाभ कसरी हुन सक्छ ? ।। ३४ ।। जसका चरण कमलको धूलो सेवनले तृप्त भक्तजन र योगसाधनको प्रभाववश समस्त कर्मबन्धनबाट मुक्त योगीजन सधैं वरिका निषेधरूपी बन्धनबाट मुक्त भएर स्वच्छन्द डुल्दछन्, अनि ती स्वेच्छाशरीरधारी श्रीकृष्णलाई कसरी कुनै कर्मबन्धनले बाँध्नसक्छ।।३५।। जुन गोपिनी, तिनका पति र सबै देहधारीको अन्तःकरणमा विराजमान थिए, ती सर्वसाक्षी भगवान्‌ले नै लीलामय शरीर धारण गरेर संसारमा अवतार लिएका थिए ।। ३६ ।। भगवान् जीवहरूमा कृपा गर्नका लागि नै मनुष्यरूप धारण गरेर यस्ता-यस्ता लीला गर्दछन् कि तिनको स्मरण गरेर मानिस भगवत्परायण हुने गर्दछन् ।।३७।। उता व्रतमा भगवान्‌को मायाले मोहित भएर व्रजवासीहरूले आफाफना स्त्रीहरूलाई घरमै भएका ठाने र भगवान कृष्णको तर्फबाट केही पनि आफ्नू मनमा दुर्भावना आउन दिएनन् ।।३८।। ब्राह्ममुहूर्त भएपछि प्रभुको आज्ञा पाएर उनकी प्रिया गोपाङ्गनाहरू इच्छा नभए पनि आफाफना घर हिंडे ।। ३९ ।। जो धैर्यशाली पुरुष व्रजबालाहरू

मुह्यमानास्तस्येच्छयाऽऽत्तवपुषः कुत एव बन्धः ।।३५।। गोपीनां तत्पतीनां च सर्वेषामेव देहिनाम् ।। योऽन्तश्चरति सोऽध्यक्षः क्रीडनेनेह देहभाक् ।।३६।। अनुग्रहाय भूतानां मानुषं देहमास्थितः ।। भजते तादृशीः क्रीडा या श्रुत्वा तत्परो भवेत् ।। ३७ ।। नासूयन्खलु कृष्णाय मोहितास्तस्य मायया ।। मन्यमानाः स्वपार्श्वस्थान्स्वान्स्वान्दारान् व्रजौकसः ।। ३८ ।। ब्रह्मरात्र उपावृत्ते वासुदेवानुमोदिताः ।। अनिच्छन्त्यो ययुर्गोप्यः स्वगृहान्भगवत्प्रियाः ।। ३९ ।। विक्रीडितं व्रजवधूभिरिदं च विष्णोः श्रद्धान्वितोऽनुशृणुयादथ वर्णयेद्यः ।। भक्तिं परां भगवति प्रतिलभ्य कामं हृद्रोगमाश्वपहिनोत्यचिरेण धीरः ।। ४० ।। इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे रासक्रीडावर्णनं नाम त्रयस्त्रिंशोऽध्यायः ।। ३३ ।।

श्रीशुक उवाच ।। एकदा देवयात्रायां गोपाला जातकौतुकाः ।। अनोभिरनडुद्युक्तैः प्रययुस्तेऽम्बिकावनम् ।। १ ।। तत्र स्नात्वा सरस्वत्यां देवं पशुपतिं विभुम् ।। आनर्चुरर्हणैर्भक्त्या देवीं च नृपतेऽम्बिकाम्।।२।। गावो हिरण्यं वासांसि मधु मध्वन्नमादृताः ।। ब्राह्मणेभ्यो ददुः सर्वे देवो नः प्रीयतामिति ।।३।। ऊषुःसरस्वतीतीरे जलं प्राश्य धृतव्रताः ।। रजनीं तां महाभागा नन्दसुनन्दकादयः ।। ४ ।। कश्चिन्महानहिस्तस्मिन्विपिनेऽतिबुभुक्षितः ।। यदृच्छयाऽऽगतो नंदं शयानमुरगोऽग्रसीत् ।। ५ ।। स चुक्रोशाहिना ग्रस्तः कृष्ण कृष्ण महानयम् ।। सर्पो मां ग्रसते तात प्रपन्नं परिमोचय ।।६।। तस्य

सित गरिएको भगवान् कृष्णको रासलीलाको कथा श्रद्धापूर्वक वारम्वार सुन्छन् वा भन्दछन् ती शीघ्र भगवान्‌को पराभक्ति प्राप्त गरेर हृदयका रोगरूपी कामविकारलाई फाल्दछन् ।।४०।। इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे पं० गौरीशंकरकृत 'वासिष्ठी' भाषाटीकायां त्रयस्त्रिंशोऽध्यायः ।। ३३ ।।

( सुदर्शनको उद्धार र शङ्खचूड बध ) श्रीशुकदेव भन्दछन्—हे राजन् ! एक दिन देवयात्राको प्रसंगमा सबै गोप ठूलो उत्साहले गोरू गाडामा बसेर अम्बिका-वनमा गए ।। १ ।। त्यहाँ सरस्वती नदीमा स्नान गरेर तिनले अनेक थरिणा सामग्रीले शिवजी र अम्बिकादेवीको ठूलो भक्तिले पूजा गरे ।।२।। अनि 'देवाधिदेव शिव हामीसित प्रसन्न होउन्' यस कामनाले तिनले आदरसाथ धेरै गाई सुवर्ण, वस्त्र, मधु र मीठो अन्न ब्राह्मणलाई दान दिए ।। ३ ।। त्यो रात पानी पिएर नन्द र सुनन्द आदि गोपगण त्यहीं सरस्वतीको तटमा

उपवास गरेर बसे । त्यसै बेला त्यो वनमा यौटा मोको अजिंगर आएर सुतेका नन्दजीलाई समातेर निल्नलाग्यो ॥४॥५॥ आफूलाई सर्पले निल्न लागेको जानेर नन्दजी भयभीत भई च राउन लागे–'हे कृष्ण ! हेर, यो महासर्प मलाई निल्न तयार छ । बाबु ! शरणागत लाई यस सङ्कटबाट छुटाऊ ।' ॥ ६ ॥ नन्दीजीले कराएको सुनेर सबै गोप सहसा उठेर उभिए । नन्दलाई अजिङ्गरको मुखमा देखेर ती निकै आत्तिए र सर्पलाई बल्दो अगुल्टोले पोल्नलागे ॥ ७ ॥ तर त्यो अगुल्टोले दग्ध भएर पनि त्यस भुजङ्गले नन्दजीलाई छाडेन । त्यतिमै यदुपति कृष्ण त्यहाँ पुगेर त्यसलाई आफ्ना पाउले छोइदिए ॥८॥ श्रीकृष्णको चरण-स्पर्श हुनासाथ त्यसका सबै अशुभ नष्ट भएर गए र उसले तुरुन्त सर्प-शरीर त्यागेर विद्याधरद्वारा वन्दित सुन्दर रूप प्राप्त गऱ्यो ॥ ९ ॥ उसको शरीर दिव्य तेजले टल्किरहेको थियो र उसको घाँटीमा सुवर्णको माला थियो । उसलाई अत्यन्त विनयपूर्वक उभिएको देखेर भगवान्ले सोध्नुभयो–॥१०॥ तिमी को हौ ? तिम्रो दिव्य देह निकै राम्रो देखिरहेछ । तिमी त अद्भुत तेजस्वी देखिँदैछौ । अनि तिमीलाई यो निन्दित गति अर्थात् सर्पयोनि

चाक्रन्दितं श्रुत्वा गोपालाः सहसोत्थिताः ॥ ग्रस्तं च दृष्ट्वा विभ्रान्ताः सर्पं विव्यधुरुल्मुकैः ॥ ७ ॥ अलातैर्दह्यमानोऽपि नामुञ्चत्तमुरङ्गमः ॥ तमस्पृ-
शत्पदाऽभ्येत्य भगवान्सात्वतां पतिः ॥ ८ ॥ स वै भगवतः श्रीमत्पादस्पर्शहताशुभः ॥ भेजे सर्पवपुर्हित्वा रूपं विद्याधरार्चितम् ॥ ९ ॥ तमपृच्छ-
द्धृषीकेशः प्रणतं समुपस्थितम् ॥ दीप्यमानेन वपुषा पुरुषं हेममालिनम् ॥ १० ॥ को भवान्परया लक्ष्म्या रोचतेऽद्भुतदर्शनः ॥ कथं जुगुप्सितामेतां
गतिं वा प्रापितोऽवशः ॥ ११ ॥ सर्प उवाच ॥ अहं विद्याधरः कश्चित्सुदर्शन इति श्रुतः ॥ श्रिया स्वरूपसम्पत्त्या विमानेनाचरं दिशः ॥ १२ ॥
ऋषीन्विरूपानाङ्गिरसः प्राहसं रूपदर्पितः ॥ तैरिमां प्रापितो योनिं प्रलब्धैः स्वेन पाप्मना ॥ १३ ॥ शापो मेऽनुग्रहायैव कृतस्तैः करुणात्मभिः ॥
यदहं लोकगुरुणा पदा स्पृष्टो हताशुभः ॥ १४ ॥ तं त्वाऽहं भवभीतानां प्रपन्नानां भयापहम् ॥ आपृच्छे शापनिर्मुक्तः पादस्पर्शादमीवहन् ॥ १५ ॥
प्रपन्नोऽस्मि महायोगिन्महापुरुष सत्पते ॥ अनुजानीहि मां देव सर्वलोकेश्वरेश्वर ॥ १६ ॥ ब्रह्मदण्डाद्विमुक्तोऽहं सद्यस्तेऽच्युत दर्शनात् ॥ यन्नाम
गृह्णन्नखिलाञ्श्रोतॄनात्मानमेव च ॥ सद्यः पुनाति किं भूयस्तस्य स्पृष्टः पदा हि ते ॥ १७ ॥ इत्यनुज्ञाप्य दाशार्हं परिक्रम्याभिवन्द्य च ॥ सुदर्शनो

कसरी प्राप्त भयो ? ॥११॥ सर्पले भन्यो–म सुदर्शन नामको यौटा प्रख्यात विद्याधर थिएँ । त्यस बेला कान्ति र रूप-सम्पत्तिले सम्पन्न भएर म इच्छित स्थानमा डुल्दथें ॥१२॥ म आफ्नू सौन्दर्य-मदले उन्मत्त थिएँ । अतः एक दिन बाटोमा अङ्गिरा वंशका कुरूप मुनिहरूलाई देखेर म हाँस्नलागें । मेरो त्यस कर्मले कुपित ती मुनिगणले मलाई श्राप दिएर यो अधम योनिमा पठाइदिए ॥१३॥ सत्य कुरा के भने, ती कारुणिक मुनिजनले ममाथि कृपा गर्नको निम्ति नै श्राप दिएका थिए । त्यसैको प्रभावले आज हजुरको चरण-स्पर्श प्राप्त भएको छ र मेरा सबै पाप निखारिए ॥१४॥ हजुर संसारका भयभीत आफ्ना भक्तहरूको भय नाश गरिदिनु हुन्छ । हे प्रभो ! हजुरको चरण-स्पर्शले श्रापमुक्त भएर अब म आफ्नू लोकमा जाने-आज्ञा पाऊँ ॥१५॥ हे महायोगिन् ! हे परमपुरुष ! हे सज्जनका स्वामी ! हे लोकेश्वर ! म हजुरको शरणमा छु, जाने आज्ञा पाऊँ ॥१६॥ हे अच्युत ! म हजुरको दर्शन पाउनासाथ ती ब्राह्मणहरूको श्रापबाट मुक्त भएँ । जसको नामोच्चारण गर्नाले प्राणी श्रोतासहित आफूलाई पवित्र पारिलिन्छ भने साक्षात् उनै परमेश्वरको

चरण-स्पर्श भएपछि मेरो पाप मुक्त हुनु कुन ठूलो कुरा हो ? ॥१७॥ यस प्रकार स्तुति गरेर ती दयाधामको आज्ञा पाई उनको प्रदक्षिणा गरेर सुदर्शनले प्रणाम गरे र तत्काल स्वर्गलोक गए। उता नन्दजी पनि यो ठूलो सङ्कटबाट मुक्त भए ॥ १८ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! भगवान् कृष्णको यस्तो अद्भुत प्रभाव देखेर ती व्रजवासीहरूलाई आश्चर्य भयो र ती आफ्नू यात्रा समाप्त गरेर भगवानका गाथा गान गर्दै फेरि व्रजमा फर्के ॥ १९ ॥ एक दिनको कुरा हो, भगवान् कृष्ण र अद्भुत पराक्रमी बलराम रात्रिको वेलामा व्रजका सुन्दरीहरूसित वन-विहार गर्दै थिए ॥ २० ॥ त्यस वेला उनमा अनुराग राख्ने व्रजबाला मधुर स्वरले उनको गुणगान गर्दै थिए। ती दुवै भाई राम्रा अलङ्कार, मनोहर माला र सफा वस्त्र पहिरेका थिए र तिनका अङ्ग सुगन्धित चन्दनले-चर्चित थिए ॥ २१ ॥ अनि जसमा तारागण सहित चन्द्रमा उदाएका थिए र जो मल्लिकाको वासनाले उन्मत्त भ्रमरगण र कुमुद कुसुमको सुगन्धले सुवासित वायुले युक्त थियो, त्यस रात्रिको प्रथम प्रहरको आदर गर्दै दुवै भाई संसारका समस्त प्राणीको

दिवं यातः कृच्छ्रान्नन्दश्च मोचितः ॥ १८ ॥ निशाम्य कृष्णस्य तदात्मवैभवं व्रजौकसो विस्मितचेतसस्ततः ॥ समाप्य तस्मिन्नियमं पुनर्व्रजं नृप ययुस्तत्कथयन्त आदृताः ॥ १९ ॥ कदाचिदथ गोविन्दो रामश्चाद्भुतविक्रमः ॥ विजह्रतुर्वने रात्र्यां मध्यगौ व्रजयोषिताम् ॥ २० ॥ उपगीयमानौ ललितं स्त्रीजनैर्बद्धसौहृदैः ॥ स्वलंकृतानुलिप्ताङ्गौ स्रग्विणौ विरजोऽम्बरौ ॥ २१ ॥ निशामुखं मानयन्तावुदितोडुपतारकम् ॥ मल्लिकागन्धमत्तालिजुष्टं कुमुदवायुना ॥ २२ ॥ जगतः सर्वभूतानां मनः श्रवणमङ्गलम् ॥ तौ कल्पयन्तौ युगपत्स्वरमण्डलमूर्च्छितम् ॥ २३ ॥ गोप्यस्तद्गीतमाकर्ण्य मूर्च्छिता नाविदन्नृप ॥ स्रंसद्दुकूलमात्मानं स्रस्तकेशस्रजं ततः ॥ २४ ॥ एवं विक्रीडतोः स्वैरं गायतोः सम्प्रमत्तवत् ॥ शङ्खचूड इति ख्यातो धनदानुचरोऽभ्यगात् ॥ २५ ॥ तयोर्निरीक्षतो राजंस्तन्नाथं प्रमदाजनम् ॥ क्रोशन्तं कालयामास दिश्युदीच्यामशङ्कितः ॥ २६ ॥ क्रोशन्तं कृष्ण रामेति विलोक्य स्वपरिग्रहम् ॥ यथा गा दस्युना ग्रस्ता भ्रातरावन्वधावताम् ॥२७॥ मा भैष्टेत्यभयारावौ शालहस्तौ तरस्विनौ ॥ आसेदतुस्तं तरसा त्वरितं गुह्यकाधमम् ॥ २८ ॥ स वीक्ष्य तावनुप्राप्तौ कालमृत्यू इवोद्विजन् ॥ विसृज्य स्त्रीजनं मूढः प्राद्रवज्जीवितेच्छया ॥२९॥ तमन्वधावद्गोविन्दो

मन र श्रवणलाई पुलकित पार्ने स्वरको मीठो तानले गीत गाउन लागे ॥ २२ ॥ २३ ॥ हे राजन् ! तिनको मनमोहक गान सुनेर गोपिनीहरू यस प्रकार मोहित भए कि तिनलाई आफ्नू साड़ी तल खुस्केको र केशकलापको माला झरेको तथा आफ्नू देहको केही ज्ञान रहेन ॥ २४ ॥ जब भगवान् कृष्ण र बलराम यस प्रकार स्वच्छन्दतापूर्वक विहार गर्दै उन्मत्त गायक झैं गाउन लागे, त्यसै वेला शङ्खचूड नामको यौटा विख्यात कुवेरको दूत त्यहाँ आयो ॥ २५ ॥ हे राजन् ! ती दुवै भाइका सामुन्ने नै ताडारा सुरक्षित व्रजसुन्दरीहरूलाई निःशङ्क भावले बलपूर्वक बोकेर उत्तर दिशातिर भाग्यो। त्यस वेला ती सबै गोपिनी रुनलागे ॥२६॥ डाकूद्वारा हटाइएका डराएका गाई-हरू झैं आफ्नी प्रियालाई 'हा कृष्ण ! हा राम !' भनेर कराएकी देखेर ती दुवै भाइ त्यसको पछि-पछि दगुरे ॥ २७ ॥ तिनलाई अभय दान भनी 'नडराऊ-नडराऊ' भन्दै हातमा एकेक शालवृक्ष लिई ठूलो वेगले दगुर्दै त्यो दुष्ट यक्षकहाँ पुगे ॥ २८ ॥ काल र मृत्यु झैं भयङ्कर ती दुवै जना ती, गोपिनीलाई [illegible]

मूढ आत्तियो र आफ्नू प्राण-रक्षाका लागि ती स्त्रीलाई त्यहीं छाडेर भाग्यो ॥ २९ ॥ तब बलरामजी तिनको रक्षाका लागि त्यहीं उभिए, तर कृष्णचन्द्र त्यसको शिरको चूडामणि प्राप्त गर्नका लागि पछि-पछि दगुरे ॥ ३० ॥ हे नृप ! अलि पर पुगेर उनले त्यसलाई समाते र एक मुड्की दिंदा,चूडामणि समेत त्यसको शिर धडबाट छुट्टियो ॥ ३१ ॥ यसरी शङ्खचूडलाई मारेर त्यसको प्रकाशमय मणि लिई भगवान् फर्किए र सबै स्त्रीहरूका समक्ष त्यो दिव्य मणि उनले प्रसन्नतापूर्वक आफ्ना दाजू बलरामजीलाई सुम्पिदिए ॥ ३२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' भाषाटीकायां चतुस्त्रिंशोऽध्यायः ॥ ३४ ॥

( युगलगीत ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! जब भगवान् कृष्ण वनमा गाई चराउन जान्थे, तब व्रजका गोपिनीहरूको मन उनैमा अड्किरहन्थ्यो र ती उनका चरित्र गान गर्दै कष्टले दिन काट्तथे ॥ १ ॥ ती भन्दथे—'हे सखि ! जब बायाँ हत्केलामा बायाँ गाला राखेर बाँका भ्रुकुटी नचाउँदै ओंठमा राखेको बाँसुरीका प्वालमा कोमल औंला

यत्र यत्र स धावति ॥ जिहीर्षुस्तच्छिरोरत्नं तस्थौ रक्षन्स्त्रियो बलः ॥ ३० ॥ अविदूर इवाभ्येत्य शिरस्तस्य दुरात्मनः ॥ जहार मुष्टिनैवाङ्ग सहचूडामणिं विभुः ॥ ३१ ॥ शङ्खचूडं निहत्यैवं मणिमादाय भास्वरम् ॥ अग्रजायाददात्प्रीत्या पश्यन्तीनां च योषिताम् ॥ ३२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे शङ्खचूडवधो नाम चतुस्त्रिंशत्तमोऽध्यायः ॥ ३४ ॥

श्रीशुक उवाच ॥ गोप्यः कृष्णे वनं याते तमनुद्रुतचेतसः ॥ कृष्णलीलाः प्रगायन्त्यो निन्युर्दुःखेन वासरान् ॥१॥ गोप्य ऊचुः॥वामबाहुकृतवामकपोलो वल्गितभ्रुरधरार्पितवेणुम् ॥ कोमलाङ्गुलिभिराश्रितमार्गं गोप्य ईरयति यत्र मुकुन्दः ॥ २ ॥ व्योमयानवनिताः सह सिद्धैर्विस्मितास्तदुपधार्य सलज्जाः ॥ काममार्गणसमर्पितचित्ताः कश्मलं ययुरपस्मृतनीव्यः ॥३॥ हन्त चित्रमबलाः शृणुतेदं हारहास उरसि स्थिरविद्युत् ॥ नन्दसूनुरयमार्तजनानां नर्मदो यर्हि कूजितवेणुः ॥४॥ वृन्दशो व्रजवृषा मृगगावो वेणुवाद्यहृतचेतस आरात् ॥ दन्तदष्टकवला धृतकर्णा निद्रिता लिखितचित्रमिवासन् ॥ ५ ॥ बर्हिणस्तबकधातुपलाशैर्बद्धमल्लपरिबर्हविडम्बः ॥ कर्हिचित्सबल आलि स गोपैर्गाः समाह्वयति यत्र मुकुन्दः ॥६॥ तर्हि भग्नगतयः सरितो वै तत्पदाम्बु

फिराउँदै बजाउँछन् तब त्यसको मधुर स्वर सुनेर आकाशमा आफ्ना पति सिद्धगणसित विमानमा बसेर सिद्धपत्नीहरू कामबाणले विद्ध हुनाले लज्जावश अतिशय विस्मय भएर यस्तो अचेत हुन्थे कि आफ्नो नीवी सुस्केको पनि ज्ञान हुँदैनथ्यो ॥ ३ ॥ हे अबला हो ! यौटा अर्को छक्क पर्ने कुरा सुन–जसको हाँसो हारको समान शुभ्र छ र जसको वक्षःस्थलमा बिजुली झैं चञ्चला लक्ष्मी अचल भएर विराजमान रहन्छिन्, ती आर्तजनका आनन्ददाता नन्दनन्दन जब बाँसुरी बजाउँछन् तब परैबाट त्यसको ध्वनिले मुग्ध भएर व्रजका गोरु, गाई, मृग आदि पशु दाँतले चारो पक्री, कान उचाली र निदाए झैं आँखा चिम्ली चित्रलिखित झैं उभिइरहन्छन् ॥ ४-५ ॥ हे सखी ! जब कहिले मयूरका प्वाँख, फूलका झुप्पा, गेरु आदि धातुहरू र कोमल पल्लवहरूले सजिएर पहलवान झैं वेष बनाई हाम्रा बलराम र दयावान श्रीकृष्ण अन्य ग्वालाहरूसित गाईहरूलाई डाकछन् तब वायुद्वारा उडाइएको उनको चरणरज पाउने लोभले यमुनाको गतिसम्म रोकिन्छ, तर ती पनि हामी जस्तै अभागिनी छन्, जो प्रेमवश काँपिरहेका

याहु झैं दुइ-चार तरंग उछालेर फेरि निश्चल हुन्छिन् ॥ ६ ॥ ७ ॥ हे सखी हो! जसका अनुगामी गोप भगवान्‌का विचित्र चरित्र गान गर्दछन्, आदिपुरुष नारायण [illegible] अविचल ऐश्वर्ययुक्त भगवान् कृष्ण जब वनमा डुल्दै गिरि-शिखरमा चर्ने गाईलाई बाँसुरी बजाएर डाकछन् तब वनलताहरू र पुष्प र फलका भारले नम्र [illegible] आफूमा विष्णु भगवानको सत्ता प्रकट गर्दै प्रेमले पुलकित भएर महको धारा बगाउन थाल्दछन् ॥ ८ ॥ ९ ॥ जुन भगवान्‌को मस्तकमा दर्शनीय तिलक शोभित छ, जो राम्रा पुरुषमा श्रेष्ठ छन्, ती श्रीकृष्ण जब आफ्नू घाँटीमा रहेको वनमालाको सुगन्धयुक्त तुलसीको मीठो मधुले उन्मत्त मधुपको उच्च स्वरले गाइएको अनुकूल गानको आ[illegible] गर्दै वंशी बजाउँछन्, त्यस वेला उनको मधुर गीतमा मुग्ध भएर सरोवरमा बस्ने सारस र हंस आदि पक्षि भगवान्‌का नजीकै आएर आफ्ना आँखा चिम्ली मौन धारण गरेर संयत चित्तले उनको उपासना गर्न लाग्दछन् ॥ १० ॥ ११ ॥ हे सखी हो ! पुष्प कर्णाभूषणले जसको अद्भुत शोभा भइरहेछ, ती श्याम सुन्दर आफ्ना दाजु बलराम सहित पर्वत[illegible] माथि

जरजोऽनिलनीतम् ॥ स्पृहयतीर्वयमिवाबहुपुण्याः प्रेमवेपितभुजाः स्तिमितापः ॥ ७ ॥ अनुचरैः समनुवर्णितवीर्य आदिपूरुष इवाचलभूतिः ॥ वनचरो गिरितटेषु चरन्तीर्वेणुनाऽऽह्वयति गाः स यदा हि ॥ ८ ॥ वनलतास्तर आत्मनि विष्णुं व्यञ्जयन्त्य इव पुष्पफलाढ्याः ॥ प्रणतभारविटपा मधुधाराः प्रेमहृष्टतनवः ससृजुः स्म ॥ ९ ॥ दर्शनीयतिलको वनमालादिव्यगन्धतुलसीमधुमत्तैः ॥ अलिकुलैरलघुगीतमभीष्टमाद्रियन्यर्हि सन्धितवेणुः ॥ १० ॥ सरसि सारसहंसविहङ्गाश्चरुगीतहृतचेतस एत्य ॥ हरिमुपासत ते यतचित्ता हन्त मीलितदृशो धृतमौनाः ॥ ११ ॥ सहबलः स्रगवतंसविलासः सानुषु क्षितिभृतो व्रजदेव्यः ॥ हर्षयन्यर्हि वेणुरवेण जातहर्ष उपरम्भति विश्वम् ॥ १२ ॥ महदतिक्रमणशङ्कितचेता मन्दमन्दमनुगर्जति मेघः ॥ सुहृदमभ्यवर्षत्सुमनो‒भिश्छायया च विदधत्प्रतपत्रम् ॥ १३ ॥ विविधगोपचरणेषु विदग्धो वेणुवाद्य उरुधा निजशिक्षाः ॥ तव सुतः सति यदाऽधरबिम्बे दत्तवेणुरनयत्स्वर‒जातीः ॥ १४ ॥ सवनशस्तदुपधार्य सुरेशाः शक्रशर्वपरमेष्ठिपुरोगाः ॥ कवय आनतकन्धरचित्ताः कश्मलं ययुरनिश्चिततत्त्वाः ॥ १५ ॥ निजपदा‒ब्जदलैर्ध्वजवज्रनीरजाङ्कुशविचित्रललामैः ॥ व्रजभुवः शमयन्खुरतोदं वर्ष्मधुर्यगतिरीडितवेणुः ॥ १६ ॥ व्रजति तेन वयं सविलासवीक्षणार्पितम‒

उभिएर स्वयं आनन्दित भई संसारलाई आनन्दित पार्दै जब जगतलाई वेणुनादले पूरित पार्दछन् तब महान पुरुष श्रीकृष्णको अतिक्रमण नहोस्, यो डरले मेघ उनको वंशी‒ध्वनिसित मिसिएर बिस्तार-बिस्तार गर्जन्छन् र आफ्ना सुहृद कृष्णमा आफ्नै छायाको छाता लगाएर उनमाथि पुष्पवर्षा गर्दछन् ॥१२॥१३॥ हे नन्दरानी ! व्रजका गोपहरूको विविध क्रीडाहरूमा निपुण तिम्रो पुत्र कृष्ण जब ओंठमा बाँसुरी राखेर स्वयं सिकेको ऋषभ, निषाद, षड्ज आदि स्वरहरूलाई ह्रस्व, मध्यम र दीर्घ आदि भेदहरूले [illegible] झिक्छन्, उस वेलामा वंशीको ध्वनी सुनेर ती स्वरको मर्म जान्न नसकेर इन्द्र, शिव र ब्रह्मा आदि प्रधान देवता पनि शिर निहुराएर मोहित हुन्छन् ॥ १४ ॥ १५ ॥ हे सखी [illegible] जब भगवान् कृष्ण ध्वजा, वज्र, कमल र अंकुश आदि विचित्र तथा सुन्दर चिन्ह युक्त आफ्नू पल्लव सदृश सुकुमार चरण-कमलले व्रजभूमिको गोखुर जनित [illegible] र गजराज झैं मन्द-मन्द हिंड्दै बाँसुरी बजाउँदैछन् त्यस वेला उनको लीला विलासमयी हेराइद्वारा प्राप्त कामवेगले वृक्ष झैं जडवत् [illegible] [illegible] दाम्रा

1009

आफना वस्त्र र वेणी शिथिल भएको पनि थाहा पाउन्नौं ॥१६॥१७॥ मणिहरूका हार र प्रियंगुको गन्धयुक्त तुलसीको माला धारण गरेका श्रीकृष्ण जब गाईहरू गन्दै, कुनै प्रियसखाको घाँटीमा पाखुरा राखेर गाउन थाल्दछन् तब तिनको बाँसुरीको स्वरले मोहित मृगीहरू आएर गुणागार कृष्णलाई घेर्दछन् र हामी मुग्धा गोपिनीहरू झैं घर फर्कने इच्छा छाडेर त्यहीं मौन उभिइरहन्छौं ॥१८॥१९॥ हे यशोदा ! जब कुन्दकलीको मालाद्वारा विचित्र वेष बनाई आफ्ना प्रेमीलाई प्रसन्न पार्न तिम्रा पुत्र श्रीनन्दनन्दन यमुनाको तटमा गोपाल र गाईहरूले घेरिएर विहार गर्दछन् तब चन्दन झैं आफ्नू शीतल स्पर्शले उनको सम्मान गर्दै मन्द-मन्द र अनुकूल वायु चल्न थाल्दछ र वन्दीगण-हरू झैं गन्धर्वादि उपदेवगण गान-बजान र अनेक थरिका भेट दिंदै सबैतिरबाट घेरेर उनको उपासना गर्न लाग्दछन् ॥ २० ॥ २१ ॥ हेर, दिनको अन्त भएपछि सबै गाईहरू एकत्र पारेर व्रजवासी र गाईहरूका हितकारी कृष्ण आफना सखा द्वारा कीर्तित र बाटोमा ब्रह्मादि लोकगुरुहरूद्वारा सम्मानित, वन्दित भएर वेणुनाद गर्दै आइरहेका छन् । तिनका घाँटीको

नोभववेगाः ॥ कुजगतिं गमिता न विदामः कश्मलेन कवरं वसनं वा ॥ १७ ॥ मणिधरः क्वचिदगणयन्गा मालया दयितगन्धतुलस्याः ॥ प्रणयि-नोऽनुचरस्य कदांसे प्रक्षिपन्भुजमगायत यत्र ॥ १८ ॥ क्वणितवेणुरववञ्चितचित्ताः कृष्णमन्वसत कृष्णगृहिण्यः ॥ गुणगणार्णमनुगत्य हरिण्यो गोपिका इव विमुक्तगृहाशाः ॥ १९ ॥ कुन्ददामकृतकौतुकवेषो गोपगोधनवृतो यमुनायाम् ॥ नन्दसूनुरनघे तव वत्सो नर्मदः प्रणयिनां विजहार ॥२०॥ मन्दवायुरुपवात्यनुकूलं मानयन्मलयजस्पर्शेन ॥ वन्दिनस्तमुपदेवगणा ये वाद्यगीतबलिभिः परिवव्रुः ॥ २१ ॥ वत्सलो व्रजगवां यदगध्रो वन्द्यमानचरणः पथि वृद्धैः ॥ कृत्स्नगोधनमुपोह्य दिनान्ते गीतवेणुरनुगेडितकीर्तिः ॥२२॥ उत्सवं श्रमरुचाऽपि दृशीनामुन्नयन्खुररजश्छुरितस्रक् ॥ दित्सयैति सुहृदाशिष एष देवकीजठरभूरुडुराजः ॥ २३ ॥ मदविघूर्णितलोचन ईषन्मानदः स्वसुहृदां वनमाली ॥ बदरपाण्डुवदनो मृदुगण्डं मण्ड-यन्कनककुण्डललक्ष्म्या ॥ २४ ॥ यदुपतिर्द्विरदराजविहारो यामिनीपतिरिवैष दिनान्ते ॥ मुदितवक्त्र उपयाति दुरन्तं मोचयन्व्रजगवां दिनतापम् ॥ २५ ॥ श्रीशुक उवाच ॥ एवं व्रजस्त्रियो राजन्कृष्णलीलानुगायतीः ॥ रेमिरेऽहःसु तच्चित्तास्तन्मनस्का महोदयाः ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे वृन्दावनक्रीडायां गोपिकायुगलगीतं नाम पञ्चत्रिंशोऽध्यायः ॥ ३५ ॥

माला गाईका खुरले उडेको धूलोले कुल्चिएको र ती थाकेका भए पनि आफ्नू कान्तिले हाम्रा नयनलाई आनन्दित पार्दछन् । हेर, आफना मित्रका इच्छा पूर्ण पार्न देवकीको गर्भबाट उत्पन्न चन्द्रमा झैं राम्रा श्रीकृष्ण आइरहेछन् ॥ २२ ॥ २३ ॥ अहो ! जसका नेत्र मदले केही अरुण वर्ण भइरहेछन्, कनक निर्मित कुण्डलमा कान्ति र गालाको शोभाले जसको मुख पाकेको बयर झैं पाण्डुवर्णको देखिन्छ, आफ्ना सुहृद्लाई सम्मान दिने यदुनन्दन भई व्रजवासी र गाईका दुरन्त ताप नष्ट पार्दै सायंकालको वेलामा चन्द्रमा तथा गजराज झैं बिस्तार-बिस्तार आइरहेछन् ॥२४॥२५॥ शुकदेव भन्दछन्–हे राजन् ! श्रीकृष्णमा नै जसको मन लागेको थियो, ती गोपिनीहरू यसै प्रकार उनको चिन्तन र लीला-गान गर्दै मनमनै दिनभरि उनैसित रलण गर्मे गर्दथे ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां पञ्चत्रिंशोऽध्यायः ॥३५॥

अरिष्टासुरवध, अक्रूर व्रजागमन )—शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! त्यसै बेला अरिष्टासुर गोरुको रूप धारण गरेर आफ्ना खुरले भूमि खन्दै र पृथ्वी कम्पित पार्दै व्रजमा आयो । उसको ककुद् ( जुरो ) र देह ठूलो थियो ॥१॥ त्यो बेसरी डुकन्दै, खुरले भूमि खन्दै र पुच्छर उचालेर सींगले खेतका आलिहरू ढाल्दै वेगले हिंड्दथ्यो ॥२॥ बीच-बीचमा बारम्बार मल-मूत्र त्याग्दै र आँखा पल्टाई यता-उता हेर्दै दगुरिरहेको थियो । त्यसको कर्कश निनादले आकालमै मरिने भयले गाईहरू र गर्भवती स्त्रीहरूका गर्भ-पतन हुन्थे र मेघगण पर्वत ठानेर त्यसको जुरोमा अडिन्थे ॥ ३ ॥ ४ ॥ हे राजन् ! त्यो तीक्ष्णशृङ्ग दैत्यलाई देखेर गोपिनी र गोपगण सान्है, भयभीत भए र व्रजका पशु डरले गोठ छाडेर भागे ॥ ५ ॥ अनि सबै व्रजवासी 'हे कृष्ण ! हे राम !' भनेर कराउँदै श्रीकृष्ण भगवान्का शरणमा आइपुगे । अनि भगवान्ले जब गोकुललाई अत्यन्त भयभीत देखे तब 'नडराओ' भन्ने अभय-वाणीले तिनलाई धैर्य दिए र त्यस वृषभासुरलाई चर्को स्वरले कराई भने—'ए मन्दमति दुष्ट पापी ! यी गाई र

श्रीशुक उवाच ॥ अथ तर्ह्यागतो गोष्ठमरिष्टो वृषभासुरः ॥ महीं महाककुत्कायः कम्पयन्खुरविक्षताम् ॥१॥रम्भमाणःखरतरं पदा च विलिखन्महीम्॥ उद्यम्य पुच्छं वप्राणि विषाणाग्रेण चोद्धरन् ॥२॥किञ्चित्किञ्चिच्छकृन्मुञ्चन्मूत्रयन् स्तब्धलोचनः ॥ यस्य निर्ह्रादितेनाङ्ग निष्ठुरेण गवां नृणाम्॥३॥पतन्त्यकालतो गर्भाः स्रवन्ति स्म भयेन वै ॥ निविशन्ति घना यस्य ककुद्यचलशङ्कया ॥४॥ तं तीक्ष्णशृङ्गमुद्वीक्ष्य गोप्यो गोपाश्चतत्रसुः ॥ पशवो दुद्रुवुर्भीता राजन्संत्यज्य गोकुलम् ॥५॥ कृष्ण कृष्णेति ते सर्वे गोविन्दं शरणं ययुः ॥ भगवानपि तद्वीक्ष्य गोकुलं भयविद्रुतम् ॥६॥ मा भैष्टेति गिराऽऽश्वास्य वृषासुरमुपाह्वयत् ॥ गोपालैः पशुभिर्मन्द त्रासितैः किमसत्तम ॥७॥ बलदर्पहाऽहं दुष्टानां त्वद्विधानां दुरात्मनाम् ॥ इत्यास्फोट्याच्युतोऽरिष्टं तालशब्देन कोपयन् ॥ ८ ॥ सख्युरंसे भुजा भोगं प्रसार्यावस्थितो हरिः ॥ सोऽप्येवं कोपितोऽरिष्टः खुरेणावनिमुल्लिखन् ॥उद्यत्पुच्छभ्रमन्मेघः क्रुद्धःकृष्णमुपाद्रवत् ॥९॥ अग्रन्यस्तविषाणाग्रः स्तब्धासृग्लोचनोऽच्युतम् ॥ कटाक्षिप्याद्रवत्तूर्णमिन्द्रमुक्तोऽशनिर्यथा ॥ १० ॥ गृहीत्वा शृङ्गयोस्तं वा अष्टादश पदानि सः ॥ प्रत्यपोवाह भगवान्गजः प्रतिगजं यथा ॥ ११ ॥ सोऽपविद्धो भगवता पुनरुत्थाय सत्वरः ॥ आपतत्स्विन्नसर्वाङ्गो निःश्वसन्क्रोधमूर्च्छितः ॥ १२ ॥ तमापतन्तं स निगृह्य शृङ्गयोः पदा समाक्रम्य निपात्य भूतले ॥ निष्पीडयामास यथार्द्रमम्बरं कृत्वा विषाणेन जघान सोऽपतत् ॥१३॥

गोपाललाई व्यर्थ डराउनमा के पुरुषार्थ छ ? हेर, तँ जस्ता दुरात्माको बल-दर्प चूलो पार्ने म यता छु, यता !' यति भनेर तिघ्रा ठटाई भगवान्ले अरिष्टासुरलाई जिस्क्याई दिए ॥ ६-८ ॥ त्यस बेला भगवान् यौटा मित्रका काँधमा सर्प झैं बाहु राखेर उभिएका थिए । तिनको कुरा सुनेर कुपित अरिष्टासुर खुरले पृथ्वी खन्दै र आकाशतिर उचालेको पुच्छरले मेघलाई घुमाउँदै श्रीकृष्णतिर लम्क्यो ॥ ९ ॥ त्यो दुष्ट तीखा सींग अगाडितिर सोझ्याएर राता-राता आँखाले एकहोरो श्रीकृष्णमाथि तेसों दृष्टिले निर्के बेर हेरेर अनि इन्द्रको हातबाट छुटेको वज्र झैं बेगले दगुर्‍यो ॥१०॥ अनि यौटा हात्तीसित जुधेको अर्को हात्ती जसरी पछाडि धुच्याउँछ । त्यसै गरी सींग समातेर भगवान्ले अठार पाइला पछाडि धुच्याइदिए ॥११॥ भगवान्ले हटाएपछि त्यो तुरुन्त ठिङ्ग उभियो । यद्यपि श्रीकृष्णको एक धक्काले नै त्यसको शरीर पसीनाले नुहाए झैं भइसकेको थियो, तैपनि रिसले अचेत भएर

लाम् मास छाड्दै प्रभुमाथि फेरि झम्ट्यो ॥ १२ ॥ सामुन्ने आए पनि कृष्णले त्यस असुरको सींग समाते र भूमिमा पच्छारी आफ्ना पाउले थनरी किचिमिचि पारे, जस्तै मानिस लुगा पछार्छन् । अनि त्यसका सींग उखेलेर त्यसले प्रहार गर्नलागे । अतः त्यो दैत्य रगतै वमन र मल-मूत्र त्याग्दै पच्छारियो ! त्यसका आँखाका परेला उचालिए र त्यो चारै खुट्टा पच्छार्दै ठूलो कष्टले मरेर यमराजको घर गयो । त्यो मरेको देखेर देवता भगवान्माथि पुष्प-वर्षा गरेर स्तुति गर्नलागे ॥ १३ ॥ १४ ॥ गोपिनीका नेत्रलाई आनन्दित पार्ने वासुदेव त्यसरी वृषभासुरलाई मारेर आफ्ना जात-भाइद्वारा प्रशंसित हुँदै बलराम सहित व्रजमा प्रविष्ट भए ॥ १५ ॥ हे राजन् ! अद्भुतकर्मा श्रीकृष्णद्वारा अरिष्टासुर मारिएपछि एक दिन देवतातुल्य दर्शनीय नारदजीले गएर कंसलाई भने– ॥ १६ ॥ जुन कन्या देवकीको गर्भबाट उत्पन्न भनिएकी थिइन्, वास्तवमा ती यशोदाकी छोरी थिइन् । देवकीका आठौं पुत्र कृष्ण नै हुन् रोहिणीका पुत्ररूपले प्रसिद्ध बलराम पनि देवकीकै सातौं पुत्र हुन् । यी दुवैलाई वसुदेवले तिम्रो डर मानी आफ्ना मित्र नन्दकहाँ पठाएका

असृग्वमन्मूत्रशकृत्समुत्सृजन् क्षिपंश्च पादाननवस्थितेक्षणः ॥ जगाम कृच्छ्रं निर्ऋतेरथ क्षयं तुष्पैः किरन्तो हरिमीडिरे सुराः ॥ १४ एवं ककुद्मिनं हत्वा स्तूयमानः स्वजातिभिः ॥ विवेश गोष्ठं सबलो गोपीनां नयनोत्सवः ॥ १५ ॥ अरिष्टे निहते दैत्ये कृष्णेनाद्भुतकर्मणा ॥ कंसयाथाह भगवा– न्नारदो देवदर्शनः ॥ १६ ॥ यशोदायाः सुतां कन्यां देवक्याः कृष्णमेव च ॥ रामं च रोहिणीपुत्रं वसुदेवेन बिभ्यता ॥ १७ ॥ न्यस्तौ स्वमित्रे नन्दे वै याभ्यां ते पुरुषा हताः ॥ निशम्य तद्भोजपतिः कोपात्प्रचलितेन्द्रियः ॥ १८ ॥ निशातमसिमादत्त वसुदेवजिघांसया ॥ निवारितो नारदेन तत्सुतौ मृत्युमात्मनः ॥१९ ॥ ज्ञात्वा लौहमयैः पाशैर्बबन्ध सह भार्यया ॥ प्रतियाते तु देवर्षौ कंस आभाष्य केशिनम् ॥ २० ॥ प्रेषयामास हन्येतां भवता रामकेशवौ ॥ ततो मुष्टिकचाणूरशलतोशलकादिकान् ॥ २१ ॥ अमात्यान्हस्तिपाँश्चैव समाहूयाह भोजराट् ॥ भो भो निशम्यतामेतद्वीर चाणूरमुष्टिकौ ॥ २२ ॥ नन्दव्रजे किलासाते सुतावानकदुन्दुभेः ॥ रामकृष्णौ ततो मह्यं मृत्युः किल निदर्शितः ॥ २३ ॥ भवद्भ्यामिह सम्प्राप्तौ हन्येतां मल्ललीलया ॥ मञ्चाः क्रियन्तां विविधा मल्लरङ्गपरिश्रिताः ॥ पौरा जानपदाः सर्वे पश्यन्तु स्वैरसंयुगम् ॥ २४ ॥ महामात्र त्वया भद्र रङ्ग–

थिए । तिनै दुइ जनाले तिम्रा अनेक सेवक मारेका हुन् । यति कुरा सुन्नासाथ भोजराज कंसका सबै इन्द्रिय रिसले चञ्चल भए ॥ १७ ॥ १८ ॥ उनले वसुदेवलाई मार्नको निम्ति आफ्नो तीखो तरवार झिक्यो, तर नारदजीले रोकिदिए । अनि वसुदेवका छोरालाई नै आफ्नू काल ठानेर उनकी भार्या देवकीलाई र उनलाई नेलले कसेर झ्यालखानामा थुनायो । देवर्षि नारदजी गएपछि दुष्ट कंसले केशीलाई डाक्यो र आज्ञा दियो—'केशि ! तँ गएर कृष्णलाई मारिदे ।' अनि मुष्टिक, चाणूर, शल र तोशल आदि मल्लहरु तथा मन्त्रीगण तथा माहुते आदि सबैलाई डाकी भोजदेशको राजा कंसले भन्यो–हे वीरवर ! चाणूर र मुष्टिक ! सुन– ॥ १९ ॥ २० ॥ २१ ॥ २२ ॥ वसुदेवका दुई पुत्र बलराम र कृष्ण नन्दगोपको व्रजमा बस्तछन् । तिनको हातबाट मेरो मृत्यु हुन्छ भन्ने मैले सुनेको छु ॥ २३ ॥ अतएव जब ती यहाँ आउँछन् तब तिमीहरू उनलाई मल्लयुद्धको निहुँले मारिदिनु । अब राम्रा-राम्रा मंच बनाओ र अखाडाको चारैतिर बाटुलो सजाओ । त्यहीं बसेर सबै पुरवासी र जनपदवासी त्यो युद्ध हेरुन् ॥ २४ ॥ हे माहुते ! तँ रंगभूमिको मुख्य द्वारमा कुवलयापीड

हात्ती लैआउ र मेरा शत्रुलाई कुल्चाएर मारिदिनु ॥ २५ ॥ यही चतुर्दशीमा विधिवत् धनुषयज्ञ आरम्भ गरिदेओ र उसको सफलता लागि भूतनाथ भैरवलाई अनेक पवित्र वस्तुको बलिदेओ' ॥ २६ ॥ आफ्नू स्वार्थ साधनमा निपुण कंसले माहुते र मल्लगणलाई यस प्रकार आज्ञा दिएर यादवश्रेष्ठ अक्रूरलाई डाक्यो र उनको हात आफ्नू हातमा लिई आदरपूर्वक भन्यो—॥ २७ ॥ 'हे यादवपते ! तिमी मेरो आदरका पात्र छौ । आज तिमी मेरो निम्ति यौटा मित्रोचित कार्य गर किनकि सबै भोज र वृष्णिवंशीहरूमा मेरो तिमी मन्दा ठूलो हितकारी अर्को छैन ॥ २८ ॥ अतएव हे सौम्य ! यो ठूलो काम गर्नको निम्ति मैले त्यसै गरी तिम्रो सहारा लिएको छु, जसरी समर्थ भएर पनि इन्द्रले विष्णुको सहायताले आफ्नू कार्य सिद्धि गरेका थिए ॥ २९ ॥ तिमी नन्दको व्रजमा जाऊ । त्यहाँ वसुदेवका जुन दुइ बालक छन्, तिनलाई रथमा बसालेर यहाँ ल्याऊ—अब ढीलो नगर ॥ ३० ॥ विष्णुका

द्वार्युपनीयताम् ॥ द्विपः कुवलयापीडो जहि तेन ममाहितौ ॥ २५ ॥ आरभ्यतां धनुर्यागश्चतुर्दश्यां यथाविधि ॥ विशसन्तु पशून्मेध्यान्भूतराजाय मीढुषे ॥ २६ ॥ इत्याज्ञाप्यार्थतन्त्रज्ञ आहूय यदुपुङ्गवम् ॥ गृहीत्वा पाणिना पाणिं ततोऽक्रूरमुवाच ह ॥ २७ ॥ भो भो दानपते मह्यं क्रियतां मैत्रमादृतः ॥ नान्यस्त्वत्तो हिततमो विद्यते भोजवृष्णिषु ॥२८॥ अतस्त्वामाश्रितः सौम्य कार्यगौरवसाधनम् ॥ यथेन्द्रो विष्णुमाश्रित्य स्वार्थमध्यगमद्विभुः ॥ २९ ॥ गच्छ नन्दव्रजं तत्र सुतावानकदुन्दुभेः ॥ आसाते ताविहानेन रथेनानय मा चिरम् ॥ ३० ॥ निसृष्टः किल मे मृत्युर्देवैर्वैकुण्ठसंश्रयैः ॥ तावानय समं गोपैर्नन्दाद्यैः साभ्युपायनैः ॥३१॥ घातयिष्य इहानीतौ कालकल्पेन हस्तिना ॥ यदि मुक्तौ ततो मल्लैर्घातये वैद्युतोपमैः ॥३२॥ तयोर्निहतयोस्तप्तान्वसुदेवपुरोगमान् ॥ तद्बन्धून्निहनिष्यामि वृष्णिभोजदशार्हकान् ॥३३॥ उग्रसेनं च पितरं स्थविरं राज्यकामुकम् ॥ तद्भ्रातरं देवकं च ये चान्ये विद्विषो मम ॥३४॥ ततश्चैषा मही मित्र भवित्री नष्टकण्टका ॥ जरासन्धो मम गुरुर्द्विविदो दयितः सखा ॥३५॥ शम्बरो नरको बाणो मय्येव कृतसौहृदाः ॥ तैरहं सुरपक्षीयान्हत्वा भोक्ष्ये महीं नृपान् ॥३६॥ एतज्ज्ञात्वाऽऽनय क्षिप्रं रामकृष्णाविहार्भकौ ॥ धनुर्मखनिरीक्षार्थं

आश्रित देवताहरूले तिनैलाई मेरो काल बनाएर पठाएका हुन् । अतः तिमी भेट लिएर आउने नन्दादि गोपसित तिनलाई पनि यहाँ ल्याऊ ॥ ३१ ॥ यहाँ आएपछि भीषण कुवलयापीड हात्तीद्वारा मार्न लगाउँछु । यदि त्योसित बाँचे भने मेरा विजुली झैं छिटा-छरिता मल्ल तिनलाई मारिदिन्छन् ॥ ३२ ॥ ती मारिएपछि शोकाकुल वसुदेवादि उनका वृष्णि-भोज र दाशार्हवंशी बन्धुहरूलाई पनि म मारिदिनेछु ॥ ३३ ॥ अनि राज्यका लोभी आफ्ना वृद्ध पिता उग्रसेन र तिनका भाई देवक तथा अरु पनि मसित द्वेष राख्ने जुन-जुन यादव छन्, ती सबैलाई नष्ट पारिदिन्छु ॥ ३४ ॥ हे सखे ! अनि यी पृथ्वी निष्कण्टक हुनेछन् । मेरा ससुरा जरासन्ध ठूला विज्ञ गुरु छन् ॥ ३५ ॥ शम्बरासुर, नरकासुर र बाणासुर पनि मसित मित्रता राख्दछन् । ती सबैको सहायताले म देवपक्षका सबै राजालाई मारेर निष्कण्टक राज्य भोग्नेछु* ॥ ३६ ॥ यस्तो जानेर तिमी शीघ्र धनुषयज्ञ र यादवहरूको राजधानी

---

* उदाहरण—शेखचिल्ली नामको यौटा मानिस रेलवे स्टेशनमा कुलीको काम गर्दथ्यो । एक दिन यौटा बाबूसाहेबले शेख चिल्लीसित भने—'ए भरिया, [illegible]' शेखचिल्लीले भन्यो—'हजुर ! मेरो काम नै के हो ! के दिनु हुन्छ ?' साहेबले भने—'दुइ आना ।' अनि शेख चिल्लीले भारी उठायो । अनि-अनि [illegible] ।

10/3

मथुराको शोभा देखाउने निहुँले कृष्ण र बलराम दुवै जनालाई यहाँ लिएर आऊ' ॥३७॥ अक्रूरजी भन्दछन्–हे राजन् ! हजुर आफ्नू कल्याण चाहनु हुन्छ, त्यो उचित हो । मनुष्यले सफलता असफलतामा समान रहेर आफ्नू कर्तव्य पालन गर्नुपर्दछ, किनकि फलदाता दैव नै छन् ॥३८॥ मनुष्य प्रारब्ध द्वारा नष्ट गरिएका पनि ठूला-ठूला मनोरथहरूको इच्छा गर्दछन्, तिनको सिद्धि वा असिद्धिले हर्ष-शोक दुवै भोग्नुपर्दछ तथापि म हजुरको आज्ञा पालन गर्दछु ॥३९॥ शुकदेव भन्नुहुन्छ—यस प्रकार अक्रूरजीलाई आज्ञा दिएर कंसले मन्त्रीहरूलाई बिदा दियो । अनि अन्तःपुरमा गयो र अक्रूर पनि घर फर्के ।।४०॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपाली भाषाटीकायां षट्त्रिंशोऽध्यायः ॥३६॥

( केशी र व्योमासुर-वध तथा नारद द्वारा भगवान्को स्तुति )–श्रीशुकदेव भन्छन्–हे राजन् ! यता कंसले पठाएको केशी नामक दैत्य ठूलो विशालकाय घोडाको रूप धारण

द्रष्टुं यदुपुरश्रियम् ॥ ३७ ॥ अक्रूर उवाच ॥ राजन्मनीषितं सम्यक् तव स्वावद्यमार्जनम् ॥ सिद्ध्यसिद्ध्योः समं कुर्याद्दैवं हि फलसाधनम् ॥ ३८ ॥
मनोरथान्करोत्युच्चैर्जनो दैवहतानपि ॥ युज्यते हर्षशोकाभ्यां तथाप्याज्ञां करोमि ते ॥३९॥ एवमादिश्य चाक्रूरं मन्त्रिणश्च विसृज्य सः ॥ प्रविवेश
गृहं कंसस्तथाऽक्रूरः स्वमालयम् ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धेऽक्रूरसंप्रेषणं नाम षट्त्रिंशोऽध्यायः ॥ ३६ ॥

श्रीशुक उवाच ॥ केशी तु कंसप्रहितः खुरैर्महीं महाहयो निर्जरयन्मनोजवः ॥ सटावधूताभ्रविमानसंकुलं कुर्वन्नभो हेषितभीषिताखिलः ॥१॥ तं
त्रासयन्तं भगवान्स्वगोकुलं तद्धेषितैर्वालविघूर्णिताम्बुदम् ॥ आत्मानमाजौ मृगयन्तमग्रणीरुपाह्वयत्स व्यनदन्मृगेन्द्रवत् ॥२॥ स तं निशाम्याभिमुखो
मुखेन खं पिबन्निवाभ्यद्रवदत्यमर्षणः ॥ जघान पद्भ्यामरविन्दलोचनं दुरासदश्चण्डजवो दुरत्ययः ॥ ३ ॥ तद्वञ्चयित्वा तमधोक्षजो रुषा प्रगृह्य दोर्भ्यां

गरेर मनको समान वेगले दगुर्दै, आफ्ना खुट्टाको प्रहारले पृथ्वी विदीर्ण पार्दै, हावाले छरिएका मेघ, विमानले भरिएको आकाश र आफ्नो हिहिल्याइँले सबै लोकलाई व्यग्र पार्दै व्रजमा पुग्यो ॥१॥ भगवान्ले देख्नुभयो–बारम्बार कराएर सारा गोकुललाई भयभीत पारिरहेको छ, आफ्नू पुच्छरका रौंले बादललाई छिन्न-भिन्न पारिरहेको छ र युद्धको निम्ति मलाई खोज्दै हिंडिरहेको छ, तब अगाडि आएर प्रभुले त्यसलाई ललकार्नु भयो र सिंह झैं भयङ्कर गर्जन गर्नुभयो ॥ २ ॥ भगवान्को डरलाग्दो गर्जन सुनेर सहन नसकी त्यो प्रचण्ड वेगवान् दुर्जय एवं दुर्दम्य दैत्य आकाश नै निल्छु झैं त्यो यसरी मुख उघारेर प्रभुतिर दगुर्‍यो र कमल-नयन भगवान् कृष्णलाई उसले पछिल्ला दुवै खुट्टाले

शेखचिल्ली आफ्नू मनमा विचार्न लाग्यो—अब दुइ आनाको कुखुरा किन्छु । त्यसका धेरै चल्ला र चल्ला हुन्छन् । तिनलाई बेचेर बाख्रो किन्छु । त्यसका पाठा हुन्छन्, ती बेचेर गाई किन्छु, गाईका बाछा हुन्छन्, ती बेचेर भैंसी किन्छु । भैंसीले धेरै लाभ हुन्छ अनि घर बनाउँछु । घर बनिएपछि बिहे गर्दछु । केही दिनपछि छोरा छोरी हुनन् । जब कुनै बालक आएर भन्ला–'हिंड बाबु ! खानेकुरा खान आमा डाक्तैछन् ।' अनि म यसरी टाउको हल्लाई हल्लाई भन्नेछु—'अहिले म खान्न ।' टाउको हल्लनालाय घिउको गाग्रो खस्यो र फुट्यो । बाबु साहबले पछाडि फर्केर हेरेर भने—'यो के गरेको मूर्ख ! गाग्रो फुटाइस ?' शेखचिल्लीले भन्यो–साहेब ! तिम्रो त घिउको गाग्रो नै हानि भयो, मेरो त बसालिसकेको घर नै भत्कियो ।' बाबु साहेबले उसलाई दुइ कोर्रा हिर्काए । त्यो कराउँदै भाग्यो । जो मनक, लड्डू निर्धारित गर्ने गर्दछन् तिनको यही गति हुन्छ ।

हिर्कायो । त्यो चोट छलेर भगवानले रिसाई आफ्ना दुवै हातले उसका दुवै पछिल्ला खुट्टा समाते र जसरी गरुडजी कुनै सर्पलाई झड्कारेर फालिदिन्छन्, त्यसै गरी उसलाई अवज्ञा-पूर्वक सय धनुष अर्थात् चार सय हात पर फ्याँकिदिए ॥ ३ ॥ ४ ॥ केही बेरपछि चेत आएर केशी उठ्यो र रोषपूर्वक मुख खोलेर ठूलो वेगले भगवानमाथि झम्टियो । अनि भगवानले मुसुक्क हाँस्तै जसरी सर्प प्वालमा पस्तछ, उसै गरी त्यसको मुखमा आफ्नो बायाँ भुजा पुसारिदिए ॥५॥ भगवान्‌का भुजाको स्पर्श हुनासाथ केशीका सबै दाँत फुक्लिए । तातो फलामले छोए झैं भयो । त्यसको मुखभित्र पुगेको भगवानको भुजा उपेक्षित रोग झैं बढ्न लाग्यो ॥ ६ ॥ श्रीकृष्णको बाहु बर्ता बढ्दै जानाले उसको सास रोकियो, शरीरबाट पसीना बग्न थाल्यो र आँखा पल्टिए, त्यो खुट्टा पछार्दै तथा मल-त्याग गर्दै प्राणहीन भएर धराशायी भयो ॥७॥ अनि महाबाहु भगवान् कृष्णले स्वतः चिरिएको काँक्रो झैं त्यसको प्राणहीन शरीरबाट आफ्नू बाहु झिके। उनलाई यसले केही विस्मय भएन, तर स्वर्गका देवता अत्यन्त विस्मित भएर विना प्रयत्नको नै शत्रुलाई मार्ने भएका

परिविद्धय पादयोः ॥ सावज्ञमुत्सृज्य धनुःशतान्तरे यथोरगं तार्क्ष्यसुतो व्यवस्थितः ॥ ४ ॥ स लब्धसंज्ञः पुनरुत्थितो रुषा व्यादाय केशी
तरसाऽपतद्धरिम् ॥ सोऽप्यस्य वक्त्रे भुजमुत्तरं स्मयन् प्रवेशयामास यथोरगं बिले ॥ ५ ॥ दन्ता निपेतुर्भगवद्भुजस्पृशस्ते केशिनस्तप्तमयः स्पृशो
यथा ॥ बाहुश्च तद्देहगतो महात्मनो यथाऽऽमयः संववृधे उपेक्षितः ॥ ६ ॥ समेधमानेन स कृष्णबाहुना निरुद्धवायुश्चरणांश्च विक्षिपन् ॥
प्रस्विन्नगात्रः परिवृत्तलोचनः पपात लेण्डं विसृजन्क्षितौ व्यसुः ॥ ७ ॥ तद्देहतः कर्कटिकाफलोपमाद्व्यसोरपाकृष्य भुजं महाभुजः ॥ अविस्मि·
तोऽयत्नहतारिरुत्स्मयैः प्रसूनवर्षैर्दिविषद्भिरीडितः ॥ ८ ॥ देवर्षिरुपसङ्गम्य भागवतप्रवरो नृप ॥ कृष्णमक्लिष्टकर्माणं रहस्येतदभाषत ॥ ९ ॥
कृष्ण कृष्णाप्रमेयात्मन्योगेश जगदीश्वरः ॥ वासुदेवाखिलावास सात्वतां प्रवर प्रभो ॥ १० ॥ त्वमात्मा सर्वभूतानामेको ज्योतिरिवैधसाम् ॥ गूढो
गुहाशयः साक्षी महापुरुष ईश्वरः ॥ ११ ॥ आत्मनात्माश्रयः पूर्वं मायया ससृजे गुणान् ॥ तैरिदं सत्यसंकल्पः सृजस्यत्स्यवसीश्वरः ॥ १२ ॥
स त्वं भूधरभूतानां दैत्यप्रमथरक्षसाम् ॥ अवतीर्णो विनाशाय सेतूनां रक्षणाय च ॥ १३ ॥ दिष्ट्या ते निहतो दैत्यो लीलयाऽयं हयाकृतिः ॥
यस्य हेषितसंत्रस्तास्त्यजन्त्यनिमिषा दिवम् ॥ १४ ॥ चाणूरं मुष्टिकं चैव मल्लानन्यांश्च हस्तिनम् ॥ कंसं च निहतं द्रक्ष्ये परश्वोऽहनि ते विभो

भगवान् माथि पुष्प वर्षा गर्दै स्तुति गर्नलागे– ॥ ८ ॥ हे राजन् ! उसै बेला भागवतप्रवर देवर्षि नारदले अक्लिष्टकर्मा भगवान् कृष्णको नजीकै गएर उनलाई एकान्तमा भने–॥९॥ 'हे कृष्ण ! हे कृष्ण ! हे अप्रमेयस्वरूप ! हे योगेश्वर ! हे जगत्पते ! हे वासुदेव ! हे सर्वधिष्ठान ! हे यदुवंशीहरूमा श्रेष्ठ ! हे प्रभो ! ॥ १० ॥ काठहरूमा लुकेको अग्नि समान केवल हजुर नै सबै प्राणीहरूका आत्मा, बुद्धिका आश्रय तथा साक्षी हुनुहुन्छ । हे प्रभो ! हजुर महापुरुष र सबैका स्वामी हुनुहुन्छ ॥११॥ सृष्टिको आदिमा हजुरले आफ्नो मायाको भरले नै त्रिगुणको रचना गर्नु भएथ्यो । हजुर सत्य सङ्कल्प परमेश्वर हुनुहुन्छ । त्रिगुणको सहायताले नै हजुर संसारको उत्पत्ति, स्थिति र संहार गर्नुहुन्छ ॥१२॥ यस बेला हजुरले राजवेषधारी दैत्य, प्रमथ र राक्षसहरूलाई नष्ट गर्न र धर्मको रक्षाका लागि अवतार लिनु भएको छ । यो हर्षको कुरा हो—हजुरले यी अश्वरूपधारी दैत्यलाई मार्नुभयो ।

1015

यसको चर्को स्वरले डराएर देवता पनि स्वर्ग छाडेर भाग्दथे ॥ १३ ॥ १४ ॥ 'हे विभो ! पर्सी म हजुरको हातबाट चाणूर-मुष्टिक आदि अन्यान्य मल्लहरू र कुवलयापीड हात्ती तथा कंस मरेको देख्नेछु ॥ १५ ॥ त्यसपछि हे जगत्पते ! शङ्खासुर, कालयवन, मुर र नरकासुर आदि मारिनु र स्वर्गबाट पारिजात हरेर ल्याउनु, इन्द्रका पराजय, पराक्रमको मूल्यमा राजकन्याहरूसित विवाह भएको, द्वारकामा बस्ता राजा नृगको शाप-मुक्ति, आफ्नी भार्या जाम्बवती सहित स्यमन्तकमणि पाउनु, ब्राह्मणका मृत-पुत्रलाई आफ्नू धाम अर्थात् महाकाल पुरबाट ल्याउनु, पौण्ड्रक-वध, काशीपुरी डढाउनु, दन्तवक्त्र-वध तथा राजसूय यज्ञमा शिशुपालको मृत्यु आदि हजुरका चरित्र म देख्नेछु ॥ १६-१९ ॥ त्यस बाहेक हजुर द्वारकामा रहेर पृथ्वीतलमा कविहरू द्वारा गान गरिने योग्य अरु पनि जे-जे कर्म गर्नु हुनेछ, त्यो सबै म प्रत्यक्ष देख्नेछु ॥ २० ॥ फेरि हजुर आफ्नू कालरूपले पृथ्वीको भार टार्नको निम्ति पार्थको सारथी बनेर अनेक अक्षौहिणी सेनाको संहार गरेको पनि म देख्नेछु ॥ २१ ॥ हे देव ! हजुर विशुद्ध विज्ञानघन, नित्य परमानन्द स्वरूपमा

॥ १५ ॥ तस्यानु शंखयवनमुराणां नरकस्य च ॥ पारिजातापहरणमिन्द्रस्य च पराजयम् ॥ १६ ॥ उद्वाहं वीरकन्यानां वीर्यशुल्कादिलक्षणम् ॥ नृगस्य मोक्षणं शापाद्द्वारकायां जगत्पते ॥ १७ ॥ स्यमन्तकस्य च मणेरादानं सह भार्यया ॥ मृतपुत्रप्रदानं च ब्राह्मणस्य स्वधामतः ॥ १८ ॥ पौण्ड्रकस्य वधं पश्चात्काशिपुर्याश्च दीपनम् ॥ दन्तवक्त्रस्य निधनं चैद्यस्य च महाक्रतौ ॥ १९ ॥ यानि चान्यानि वीर्याणि द्वारकामावसन्भवान् ॥ कर्ता द्रक्ष्याम्यहं तानि गेयानि कविभिर्भुवि ॥ २० ॥ अथ ते कालरूपस्य क्षपयिष्णोरमुष्य वै ॥ अक्षौहिणीनां निधनं द्रक्ष्याम्यर्जुनसारथेः ॥ २१ ॥ विशुद्धविज्ञानघनं स्वसंस्थया समाप्तसर्वार्थममोघवाञ्छितम् स्वतेजसा नित्यनिवृत्तमायागुणप्रवाहं भगवन्तमीमहि ॥ २२ ॥ त्वामीश्वरं स्वाश्रयमात्ममायया विनिर्मिताशेषविशेषकल्पनम् ॥ क्रीडार्थमद्यात्तमनुष्यविग्रहं नतोऽस्मि धुर्यं यदुवृष्णिसात्वताम् ॥ २३ ॥ श्रीशुक उवाच ॥ एवं यदुपतिं कृष्णं भागवतप्रवरो मुनिः ॥ प्रणिपत्याभ्यनुज्ञातो ययौ तद्दर्शनोत्सवः ॥२४॥ भगवानपि गोविन्दो हत्वा केशिनमाहवे ॥ पशूनपालयत्पालैः प्रीतैर्व्रजसुखावहः ॥ २५ ॥ एकदा ते पशून्पालाँश्चारयन्तोऽद्रिसानुषु ॥ चक्रुर्निलायनक्रीडाश्चोरपालापदेशतः ॥ २६ ॥ तत्रासन्कतिचिच्चोराः पालाश्च कतिचिन्नृप ॥ मेषायिताश्च तत्रैके विजह्रुरकुतोभयाः ॥२७॥ मयपुत्रो महामायो व्योमो गोपालवेषधृक् ॥ मेषायितानपोवाह प्रायश्चोरायितो

स्थित रहनाले हजुरलाई सबै पदार्थ सुलभ छन् । हजुरको इच्छाशक्ति अमोघ छ । हजुरको तेजले यो गुणप्रवाहरूपी संसार सदा बाधित रहन्छ । म षडैश्वर्यसम्पन्न हजुरको शरणमा छु ॥ २२ ॥ हजुर सर्वेश्वर तथा स्वतन्त्र रही आफ्नी मायाले समस्त भेदकल्पनाहरूको रचना गर्नुहुन्छ । हजुरले लीलाको निम्ति नै यो अवतार लिनु भएको । हजुर यदु, वृष्णि र सात्वतवंशीमा अग्रणी हुनुहुन्छ । म हजुरलाई नमस्कार गर्दछु' ॥२३॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! भक्तश्रेष्ठ नारद मुनिले यदुपति श्रीकृष्णको यस प्रकार स्तुति र प्रणाम गरेर उनको दर्शनले आनन्दित भई, उनको आज्ञा पाएर फर्किए ॥२४॥ यता भगवान् कृष्ण युद्धमा केशी दैत्यलाई मारेर व्रजवासीलाई सुख दिँदै अरु ग्वाल-बालका साथमा प्रसन्नतापूर्वक गाई चराउन लागे ॥२५॥ एक दिन सबै ग्वाल-बाल पर्वतमा गाई चराउने वेला चोर र रक्षक बनेर लुक्ने-पक्रने खेल खेल्नलागे ॥२६॥ तीमध्ये केही

ग्वाल बाल चोर बने, केही भेडा चराउने र केही भेडा बने । यसरी बनी निःशङ्क भावले खेल्नलागे ।।२७।। त्यसै अवसरमा मयासुरको महामायावी पुत्र व्योमासुर ग्वालबाल बनेर त्यहाँ आयो र स्वयं चोर बनेर धेरै भेडा बनेका बालकलाई लगेर लुकायो ।। २८ ।। त्यो दैत्य तिनलाई लगेर यँटा गुफामा राखेर आउँथ्यो र गुफाको द्वार ठूलो शिलाले छोपिदिन्थ्यो । यसरी विस्तार-विस्तार सबै लुप्त भएर केवल चार-पाँच जना मात्र रहे ।।२९।। अनि सज्जनका शरणदाता भगवान्ले उसको कुकर्म थाहा पाए । अतः उसले बालकलाई लिएर गइरहेको बेला उनले सिंहले स्याललाई ध्याँके झैं थिचे ।। ३० ।। अब त्यो असुरले तुरुन्त आफ्नू पर्वताकार रूप प्रकट गरिदियो । भगवान्को हातमा अँठिनाले त्यो व्याकुल भएर उम्कने निकै चेष्टा गर्‍यो, तर सफल हुन सकेन । अनि भगवान्ले उसलाई दुवै हातले समातेर भूमिमा पच्छारिदिए र आकाशमा स्थित देवगणले हेर्दाहेर्दै बलिपशु झैं मारिदिए ।। ३१ ।। ३२ ।। अनि गुफाको शिला फोरेर भगवान्ले ग्वाल-बाललाई त्यो सङ्कटपूर्ण स्थानबाट बाहिर झिके र देवगण तथा

वहून् ।।२८।। गिरिदर्यां विनिक्षिप्य नीतं नीतं महासुरः ।। शिलया पिदधे द्वारं चतुःपञ्चावशेषिताः ।।२९।। तस्य तत्कर्म विज्ञाय कृष्णःशरणदःसताम् ।। गोपान्नयन्तं जग्राह वृकं हरिरिवौजसा ।।३०।। स निजं रूपमास्थाय गिरीन्द्रसदृशं बली ।। इच्छन्विमोक्तुमात्मानं नाशक्नोद्ग्रहणातुरः ।।३१।। तं निगृह्याच्युतो दोर्भ्यां पातयित्वा महीतले ।। पश्यतां दिवि देवानां पशुमारममारयत् ।।३२।। गुहापिधानं निर्भिद्य गोपान्निःसार्य कृच्छ्रतः।।स्तूयमानः सुरैर्गोपैः प्रविवेश स्वगोकुलम् ।। ३३ ।। इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे व्योमासुरवधो नाम सप्तत्रिंशोऽध्यायः ।। ३७ ।।

श्रीशुक उवाच ।। अक्रूरोऽपि च तां रात्रिं मधुपुर्यां महामतिः ।। उषित्वा रथमास्थाय प्रययौ नन्दगोकुलम् ।। १ ।। गच्छन्पथि महाभागो भगवत्यम्बुजेक्षणे ।। भक्तिं परामुपगत एवमेतदचिन्तयत् ।। २ ।। किं मयाऽऽचरितं भद्रं किं तप्तं परमं तपः ।। किं वाऽथाप्यर्हते दत्तं यद्द्रक्ष्याम्यद्य केशवम् ।। ३ ।। ममैतद्दुर्लभं मन्य उत्तमश्लोकदर्शनम् ।। विषयात्मनो यथा ब्रह्मकीर्तनं शूद्रजन्मनः ।। ४ ।। मैवं ममाधमस्यापि स्यादेवाच्युतदर्शनम् ।। ह्रियमाणः कालनद्या क्वचित्तरति कश्चन ।। ५ ।। ममाद्यमङ्गलं नष्टं फलवाँश्चैव मे भवः ।। यन्नमस्ये भगवतो योगिध्येयांघ्रिपङ्कजम् ।। ६ ।। कंसो बताद्याकृत मेऽत्यनुग्रहं द्रक्ष्येऽङ्घ्रिपद्मं प्रहितोऽमुना हरेः ।। कृतावतारस्य दुरत्ययं

गोपद्वारा प्रशंसित हुँदै व्रजमा फर्किए ।। ३३ ।। इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' भाषाटीकायां सप्तत्रिंशोऽध्यायः ।। ३७ ।।

( अक्रूरजीको व्रज-यात्रा ) श्रीशुकदेव भन्दछन्–हे राजन् ! कंसको आज्ञा पाएर महामति अक्रूरजी त्यो रात मथुरापुरीमा बसेर भोलिपल्ट बिहानै रथमा चढेर नन्दजीको गोकुल जान हिंडे ।। १ ।। बाटोमा जाँदा अक्रूरजीको हृदयमा भगवान् कृष्णको परामक्तिको उदय भयो र ती विचार गर्नलागे ।।२।। मैले कुन यस्तो शुभकर्म गरेछु, कुन ठूलो तपस्या गरेछु अथवा कुनै सत्पात्रलाई के यस्तु दानमा दिएछु, जसले आज श्रीकृष्णको दर्शन पाउने भएँ ।।३।। म त आफ्नू निम्ति भगवान्को दर्शन पाउनु यस्तो नै दुर्लभ ठान्दछु, जस्तै विषयी तथा शूद्र कुलमा उत्पन्न पुरुषले वेद पढ्नु ।।४।। तर सर्वथा यस्तो कुरा पनि होइन । म अधमलाई पनि भगवान् दर्शन दिन सक्छन्, किनकि कालरूपी नदीमा बग्ने जीवरा-

कहिले कुनै जीव अनायास संसार पारी तर्दछन् ॥५॥ आज मेरा सबै पाप नष्ट भए र मेरो जन्म सफल भयो किनकि आज म ईश्वरका ती चरण-कमलमा सादर प्रणाम गर्नेछु, जसको योगीजन ध्यान गर्दछन् ॥६॥ कंसले आज ममाथि ठूलो कृपा गरेको छ, किनकि उसले पठाएर नै म अहिले ती पृथिवीमा अवतार लिने भगवानका अति पवित्र चरण-कमलको दर्शन गर्नेछु, जसका स्वच्छ नङको कान्तिको ध्यान गरेर पहिल्यै अनेक महानुभाव दुस्तर अज्ञानान्धकारबाट पारी तरे ॥७॥ ब्रह्मा र शिवादि देवगण, देवी लक्ष्मीजी तथा भक्त-मण्डली सहित समस्त गुणीजन जसको पूजन गर्दछन्, ती गाई चराउन आफ्ना साथी ग्वाल-बालसित वनमा डुल्दछन् र जो व्रजका गोपिनीहरूका कुच-कुङ्कुमले रंजित छन् ॥ ८ ॥ सुन्दर कपोल, राम्रो नासिका, मनोहर हास्यपूर्ण हेराई, अरुण कमल-नयन र घुमुरिएका अलकावलीले अलंकृत भगवान् कृष्णको मुखकमल आज म अवश्य देख्न पाउने छु किनकि मृगादि जन्तु मलाई दाहिने पारेर हिंड्दै छन् ॥९॥ जो पृथ्वीको भार टार्न आफ्नू इच्छाले नै मनुष्य देह धारण गरेका छन्, के आज मलाई ती सौन्दर्यधाम श्रीकृष्ण भगवानको

तमः पूर्वेऽतरन्तन्नखमण्डलत्विषा ॥७॥ यदर्चितं ब्रह्मभवादिभिः सुरैः श्रिया च देव्या मुनिभिः ससात्वतैः ॥ गोचारणायानुचरैश्चरद्वने यद्गोपिकानां कुचकुंकुमाङ्कितम् ॥ ८ ॥ द्रक्ष्यामि नूनं सुकपोलनासिकं स्मितावलोकारुणकञ्जलोचनम् ॥ मुखं मुकुन्दस्य गुडालकावृतं प्रदक्षिणं मे प्रचरन्ति वै मृगाः ॥ ९ ॥ अप्यद्य विष्णोर्मनुजत्वमीयुषो भरावताराय भुवो निजेच्छया ॥ लावण्यधाम्नो भवितोपलम्भनं मह्यं न न स्यात्फलमञ्जसा दृशः ॥ १० ॥ य ईक्षिताहंरहितोऽप्यसत्सतोः स्वतेजसाऽपास्ततमोभिदाभ्रमः ॥ स्वमाययात्मन्रचितैस्तदीक्षया प्राणाक्षधीभिः सदनेष्वभीयते ॥ ११ ॥ यस्याखिलामीवहभिः सुमङ्गलैर्वाचो विमिश्रा गुणकर्मजन्मभिः प्राणन्ति शुम्भन्ति पुनन्ति वै जगद्यास्तद्विरक्ताः शवशोभना मताः ॥ १२ ॥ स चावतीर्णः किल सात्वतान्वये स्वसेतुपालामरवर्यशर्मकृत् ॥ यशो वितन्वन्व्रज आस्त ईश्वरो गायन्ति देवा यदशेषमङ्गलम् ॥ १३ ॥ तं त्वद्य नूनं महतां गतिं गुरुं त्रैलोक्यकान्तं दृशिमन्महोत्सवम् ॥ रूपं दधानं श्रिय ईप्सितास्पदं द्रक्ष्ये ममासन्नुषसः सुदर्शनाः ॥ १४ ॥ अथावरूढः सपदीशयो रथात्प्रधानपुंसोश्चरणं स्वलब्धये ॥ धिया धृतं योगिभिरप्यहं ध्रुवं नमस्य आभ्यां च सखीन्वनौकसः ॥ १५ ॥

दर्शन प्राप्त हुनेछ ? के यसले अनायास नेत्रको फल मिल्नेछैन ? ॥१०॥ जो अहङ्कार रहित भएर पनि कार्य-कारणरूप यस प्रपञ्चका द्रष्टा छन् र जो आफ्नू चिन्मय तेजले अज्ञानजनित भेद-भ्रमलाई नष्ट पारिदिन्छन्, तैपनि आफ्नी मायाको भरमा अवलोकन मात्रले पनि प्राण, इन्द्रिय, बुद्धि सहित आफूमै रचेका अनेक जीवहरूसंग वृन्दावनका मनोहर कुञ्ज तथा गोपिनीहरूका घरमा खेलेका देखिन्छन् ॥११॥ जसका पापनाशक र मङ्गलमय गुण, कर्म तथा जन्मका कथाहरूले मिश्रित वाणी संसारलाई जीवित, शोभित र पवित्र पार्दछन्। ती भगवत् गुण आदिले हीन वाणी सुसज्जित मुर्दा झैं शोभायमान मानिन्छ॥ १२ ॥ मैले सुनेको छु—आफूले रचेका वर्णाश्रमधर्मको मर्यादा पालन तथा देवताहरूको समुचित कल्याण गर्नको निम्ति श्रीहरिले यदुकुलमा अवतार लिए। यस बेला ती ईश्वर जसको सर्वमङ्गलमय सुयश देवता पनि गान गर्दछन्, आफ्नू कीर्तिको विस्तार गर्दै व्रजमा विद्यमान छन् ॥ १३ ॥ ती ईश्वर महापुरुषका एकमात्र आश्रय र गुरु हुन्। उनले आँखा हुनेलाई परमानन्द दिने र लक्ष्मीको इच्छाको आश्रयरूपी त्रिलोक सुन्दर स्वरूप धारण गरेका छन्।

आज म अवश्य उनको दर्शन गर्नेछु, किनकि उषाकालदेखि नै म राम्रा शकुन देखिरहेको छु ॥ १४ ॥ ती भगवान्‌लाई देख्नासाथ म रथबाट ओर्लनेछु र प्रधान-पुरुषस्वरूप बलराम र कृष्णका चरणकमललाई—जसको योगीजन आत्मलाभको निम्ति केवल मनले ध्यान गर्दछन्—प्रणाम गर्नेछु र उनका वनवासी सखा ग्वाल-बाललाई पनि नमस्कार गर्नेछु ॥ १५ ॥ के ती भगवान् आफ्ना पाउमा न्यूरेको मेरो शिरमा त्यो करकमल राख्लान्, जुन कालसर्पको भयले उद्विग्न भएर तिनका चरण-कमलका इच्छुक व्यक्तिलाई अभयदान दिन्छन् ॥१६॥ जसलाई सबै पूजासामग्री समर्पण गरेर इन्द्र र बलिले त्रिलोकको आधिपत्य प्राप्त गरेका छन्, जुन कमलको सुगन्धयुक्त करकमलले विहार गर्दा व्रजबालाहरूको श्रम हरण गरेको थियो ॥१७॥ यद्यपि मलाई कंसले आफ्नु दूत बनाएर पठाएको छ, तर ती सर्वसाक्षी भगवान् मसित शत्रुभाव राख्ने छैनन्, किनकि क्षेत्रज्ञरूपले सबैका अन्तःकरण भित्र र बाहिरका सबै कार्य आफ्नु निर्मल ज्ञानदृष्टिले देख्दछन् ॥ १८ ॥ जब म तिनको सामुन्ने विनम्रभावले हात जोरेर उभिनेछु, त्यस बेला ती आफ्नु मधुर हास्यपूर्ण दया-

अप्यङ्घ्रिमूले पतितस्य मे विभुः शिरस्यधास्यन्निजहस्तपङ्कजम् ॥ दत्ताभयं कालभुजङ्गरंहसा प्रोद्वेजितानां शरणैषिणां नृणाम् ॥ १६ ॥ समर्हणं यत्र निधाय कौशिकस्तथा बलिश्चाप जगत्त्रयेन्द्रताम् ॥ यद्वा विहारे व्रजयोषितां श्रमं स्पर्शेन सौगन्धिकगन्ध्यपानुदत् ॥ १७ ॥ न मय्युपैष्यत्य‑रिबुद्धिमच्युतः कंसस्य दूतः प्रहितोऽपि विश्वदृक् ॥ योऽन्तर्बहिश्चेतस एतदीहितं क्षेत्रज्ञ ईक्षत्यमलेन चक्षुषा ॥ १८ ॥ अप्यङ्घ्रिमूलेऽवहितं कृताञ्जलिं मामीक्षिता सस्मितमार्द्रया दृशा ॥ सपद्यपध्वस्तसमस्तकिल्बिषो वोढा मुदं वीतविशङ्क ऊर्जिताम् ॥ १९ ॥ सुहृत्तमं ज्ञातिमनन्यदैवतं दोर्भ्यां बृहद्भ्यां परिरप्स्यतेऽथ माम् ॥ आत्मा हि तीर्थीक्रियते तदैव मे बन्धश्च कर्मात्मक उच्छ्वसित्यतः ॥ २० ॥ लब्धाङ्गसङ्गं प्रणतं कृताञ्जलिं मां वक्ष्यतेऽक्रूर ततेत्युरुश्रवाः ॥ तदा वयं जन्मभृतो महीयसा नैवादृतो यो धिगमुष्य जन्म तत् ॥ २१ ॥ न तस्य कश्चिद्दयितः सुहृत्तमो न चाप्रियो द्वेष्य उपेक्ष्य एव वा ॥ तथापि भक्तान्भजते यथा तथा सुरद्रुमो यद्वदुपाश्रितोऽर्थदः ॥ २२ ॥ किंचाग्रजो मावनतं यदूत्तमः स्मयन्परिष्वज्य गृहीत‑मञ्जलौ ॥ गृहं प्रवेश्याप्तसमस्तसत्कृतं संप्रक्ष्यते कंसकृतं स्वबन्धुषु ॥ २३ ॥ श्रीशुक उवाच ॥ इति सञ्चिन्तयन्कृष्णं श्वफल्कतनयोऽध्वनि ॥ रथेन

दृष्टिले मतिर हेर्नेछन् । उनको दृष्टि पर्नासाथ मेरा सबै पाप सखाप हुनेछन् र म निःशङ्कभावले परमानन्दमा निमग्न हुनेछु ॥ १९ ॥ म उनको प्रिय र जाति-बन्धु हुँ । ती बाहेक मेरा अरु कुनै इष्टदेव छैनन् । यो विचारेर जब ती आफ्ना विशाल बाहुले मेरो आलिङ्गन गर्नन्, तब मेरो देह पवित्र हुनेछ र मेरा सबै कर्म-बन्धन टुक्रिनेछन् ॥ २० ॥ उनको अङ्गसङ्गले प्रसन्न भएर म जब हात जोरेर विनीत भावले उनको सामुन्ने उभिनेछु र ती अनन्तकीर्ति भगवान् मलाई 'तात अक्रूर !' भन्नन्, तब म आफूलाई सबै प्राणीहरूमा सौभाग्यवान् ठान्नेछु । जो परम-पुरुष परमात्माका आदरपात्र हुन्नन्, तिनको जीवनलाई धिक्कार छ ॥ २१ ॥ भगवान्‌लाई न कोही प्रिय छन् न अप्रिय, न सुहृद, न शत्रु, न उपेक्षणीय छन, तापनि जस्तै कल्पवृक्ष आफ्नु नजीक आउने सबैको कामना पूर्ण पारिदिन्छ, त्यसै गरी भगवान् आफ्ना भक्तलाई उनका भावानुसार फल दिन्छन् ॥ २२ ॥ अहो ! आफ्नु सामुन्ने विनीतभावले उभिएको मलाई यदुश्रेष्ठ बलरामजी आलिङ्गन गरेर मेरो दुवै हात समातेर घर लैजानन् र मेरो सबै तरहले सत्कार गरेर सोध्नन्

आफ्ना बन्धुजनको प्रति कंसको व्यवहार विषयमा प्रश्न गर्नन् ॥ २३ ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! श्वफल्कतनय अक्रूर यसरी श्रीकृष्णको चिन्तन गर्दा-गर्दै रथमा बसेर नन्दगाउँ पुगेर र उता सूर्यदेव अस्ताचलमा पुगे ॥ २४ ॥ जसको निर्मल पदरजलाई समस्त लोकपाल आफ्ना मुकुटमा धारण गर्दछन्, त्यहाँ पुगेर अक्रूरले ती श्रीकृष्णचन्द्रको परम पवित्र चरण चिन्ह देखे । जो पृथ्वीको शोभा बढाउने र कमल, यव र अंकुशादि चिह्नले सुशोभित थिए ॥ २५ ॥ उनको दर्शनजनित आनन्दले ती अतिशय विह्वल भए । प्रेमवश उनको देहमा रोमाञ्च भयो र आँखामा जल भरियो । ती शीघ्र रथबाट ओर्लेर 'अहो ! यो प्रभुका चरणको रज हो' यस्तो भन्दै त्यहाँको धूलामा लडिबुडी गर्नलागे ॥ २६ ॥ जब कंसको आज्ञा मिलेथ्यो, तबदेखि यहाँ पुग्दासम्म अक्रूरको विचित्र दशा थियो । दम्भ, भय र शोक त्यागेर भगवानका श्रीविग्रहको दर्शन र उनको गुणश्रवण आदि सौभाग्यको उपार्जन गर्नु नै देहधारीहरूको ठूलो लाभ हो ॥ २७ ॥ व्रजमा पुगेर उनले कृष्ण र बलराम–दुवै भाईलाई गोदोहन-स्थानमा विद्यमान देखे । ती दुवै

गोकुलं प्राप्तः सूर्यश्चास्तगिरिं नृप ॥ २४ ॥ पदानि तस्याखिललोकपालकिरीटजुष्टामलपादरेणोः ॥ ददर्श गोष्ठे क्षितिकौतुकानि विलक्षितान्यब्जयवांकुशाद्यैः ॥ २५ ॥ तद्दर्शनाह्लादविवृद्धसम्भ्रमः प्रेम्णोर्ध्वरोमाऽश्रुकलाकुलेक्षणः ॥ रथादवस्कन्द्य स तेष्वचेष्टत प्रभोरमून्यङ्घ्रिरजांस्यहो इति ॥ २६ ॥ देहंभृतामियानर्थो हित्वा दम्भं भियं शुचम् ॥ सन्देशाद्यो हरेर्लिङ्गदर्शनश्रवणादिभिः ॥ २७ ॥ ददर्श कृष्णं रामं च व्रजे गोदोहनं गतौ ॥ पीतनीलाम्बरधरौ शरदम्बुरुहेक्षणौ ॥ २८ ॥ किशोरौ श्यामलश्वेतौ श्रीनिकेतौ बृहद्भुजौ ॥ सुमुखौ सुन्दरवरौ बालद्विरदविक्रमौ ॥ २९ ॥ ध्वजवज्रांकुशाम्भोजैश्चिह्नितैरङ्घ्रिभिर्व्रजम् ॥ शोभयन्तौ महात्मानावनुक्रोशस्मितेक्षणौ ॥ ३० ॥ उदाररुचिरक्रीडौ स्रग्विणौ वनमालिनौ ॥ पुण्यगन्धानुलिप्ताङ्गौ स्नातौ विरजवाससौ ॥ ३१ ॥ प्रधानपुरुषावाद्यौ जगद्धेतू जगत्पती ॥ अवतीर्णौ जगत्यर्थे स्वांशेन बलकेशवौ ॥ ३२ ॥

उस बेला क्रमशः पहेंलो र नीलो लुगा लगाएका थिए र तिनका नेत्र शरत्कालको कमल सदृश फक्रेका थिए ॥ २८ ॥ त्यस बेला उनको किशोर अवस्था थियो, दुवैको श्याम र गौर शरीर थियो, दुवैका लामा-लामा भुजा थिए । ती लक्ष्मीको निवास स्थान, सुन्दर देह, मनोहर र बालगजराज जस्तै पराक्रमी थिए ॥ २९ ॥ ती दुवै नै महात्मा ध्वजा, वज्र, अंकुश र कमल आदिका चिन्हले युक्त आफ्ना चरणले व्रजको शोभा बढाइरहेका थिए र तिनको हास्यपूर्ण हेराइबाट अनुग्रहभाव प्रकट भइरहेथ्यो ॥ ३० ॥ तिनका लीलाहरू निकै उदार र मोहक थिए । उनको घाँटीमा मणिमाला र वनमाला शोभित थियो र स्नान गरेर उनले देहमा अङ्गराग मलेर स्वच्छ वस्त्र धारण गरेका थिए ॥ ३१ ॥ अक्रूरले देखे—समस्त जगत्का आदिकारण स्वयं जगत्का प्रधान पुरुष नै संसारको रक्षाका लागि आफ्ना सबै अंशले बलराम र कृष्णको रूपमा अवतीर्ण भएर सुवर्णभूषित मरकतमणि

विरहव्याख्या–हे प्रभो ! म ती आँखाले हजुरलाई कहिले देख्न पाउँला ? श्याम सुन्दर मनोहर मूर्ति, प्रत्येक अंग सुख दिने भएका तथा वृन्दावनमा दिनहुँ विहार गर्ने, गोपवृन्दसित गाई चराउने, हाँसी-हाँसी सबैसित मिलेर दही नौनी चोरेर खाने–यस्ता प्रभुको दर्शन पाउने आशाले धेरै दिन बितिसके । अब उनको दर्शन नपाई मनलाई शान्ति हुँदैन । हे मेरा गिरिधर ! छिटै आएर दर्शन दिई सफल मनोरथ तुल्याऊ । भक्तको आशा पुऱ्याऊ ।

१०२०

एवं चाँदीका दुइ पर्वत समान आफ्नू प्रभावले सबै दिशाको अन्धकार नष्ट पार्दै विराजमान थिए ॥३२॥३३॥ तिनलाई देख्नासाथ अक्रूरजी स्नेहाकुल भएर रथबाट बर्ली कृष्ण तथा बलरामका चरणमा दण्ड झैं लम्पसार परे ॥३४॥ हे राजन् ! भगवद्दर्शनको आनन्दले तिनका नेत्रमा जल भरिए, उनको सारा शरीर पुलकित भयो र घाँटी अवरुद्ध हुनाले ती आफ्नू परिचय पनि दिन सकेनन् ॥३५॥ शरणागतवत्सल भगवान्‌ले तिनको मनोभाव जानेर उनलाई प्रसन्नतापूर्वक आफ्ना चक्राङ्कित हातले उठाएर अङ्कमाल गरे। महामना, दाजु बलरामले पनि निकै विनम्रभावले उभिएका अक्रूरलाई अङ्कमाल गरेर आफ्नू यौटा हातले उनका दुवै हात समातेर भाइ कृष्ण सहित उनलाई घरमा पुऱ्याए ॥ ३६ ॥ ३७ ॥ अनि

दिशो वितिमिरा राजन्कुर्वाणो प्रभया स्वया ॥ यथा मारकतः शैलो रौप्यश्च कनकाचितौ ॥ ३३ ॥ रथात्तूर्णमवप्लुत्य सोऽक्रूरः स्नेहविह्वलः ॥
पपात चरणोपान्ते दण्डवद्रामकृष्णयोः ॥ ३४ ॥ भगवद्दर्शनाह्लादवाष्पपर्याकुलेक्षणः ॥ पुलकाचिताङ्ग औत्कण्ठ्यात्स्वाख्याने नाशकन्नृप ॥ ३५ ॥
भगवाँस्तमभिप्रेत्य रथाङ्गाङ्कितपाणिना ॥ परिरेभेऽभ्युपाकृष्य प्रीतः प्रणतवत्सलः ॥ ३६ ॥ सङ्कर्षणश्च प्रणतमुपगुह्य महामनाः ॥ गृहीत्वा पाणिना
पाणी अनयत्सानुजो गृहम् ॥ ३७ ॥ पृष्ट्वाऽथ स्वागतं तस्मै निवेद्य च वरासनम् ॥ प्रक्षाल्य विधिवत्पादौ मधुपर्कार्हणमाहरत् ॥ ३८ ॥ निवेद्य गां
चातिथये संवाह्य श्रान्तमादृतः ॥ अन्नं बहुगुणं मेध्यं श्रद्धयोपाहरद्विभुः ॥ ३९ ॥ तस्मै भक्तवते प्रीत्या रामः परमधर्मवित् ॥ मुखवासैर्गन्धमाल्यैः
परां प्रीतिं व्यधात्पुनः ॥ ४० ॥ पप्रच्छ सत्कृतं नन्दः कथं स्थ निरनुग्रहे ॥ कंसे जीवति दाशार्ह सौनपाला इवावयः ॥ ४१ ॥ योऽवधीत्स्वस्वसु·
स्तोकान् क्रोशन्त्या असुतृप् खलः ॥ किंनुस्वित्तत्प्रजानां वः कुशलं विमृशामहे ॥ ४२ । इत्थं सूनृतया वाचा नन्देन सुसभाजितः ॥ अक्रूरः

कुशल प्रश्नपछि उनलाई राम्रो आसन दिएर विधिवत् पाउ पखालेर मधुपर्क आदि पूजन सामग्री अर्पण गरे ॥३८॥ भगवान्‌ले एक सय गाइ दिई चरण सेवा आदि गरेर तिनको बाटोको थकाई निवारण गरेर अनेक गुणयुक्त पवित्र पक्वान्न ल्याएर प्रेमले भोजन गराए ॥ ३९ ॥ खाइसकेपछि उनलाई परम धर्मज्ञ सङ्कर्षणले पान खान दिए र सुगन्धित माला पहिराई अतिशय आनन्दित पारे ॥४०॥ सत्कार भइसकेपछि नन्दजीले सोधे—'हे दाशार्ह ! जसको रक्षक कसाई होस् यस्ता भेडा-बाख्रा झैं हजुरहरू पापी कंस जीवित रहेसम्म कसरी आफ्ना दिन बिताइरहनु भएको छ ?* ॥ ४१ ॥ अहो ! आफ्नै प्राणको पोषण गर्ने जुन दुष्टले आफ्नी गाईजस्ती बहिनीका बालकहरू निर्दय भावले मारिदियो र तिनका प्रजास्वरूप

---

दृष्टान्त ( जसको ईश्वरले रक्षा गर्दछन् त्यसलाई कसैले मार्न सक्तैन )—डेकान नगरको बब्बाकुम्ब ग्रामको निवासी जॉन ली को घटना हो—यसमा शीघ्र विश्वास गर्न कठिन छ। तर कुरा पूर्णरूपेण सत्य हो। श्रीमती केजीबको हत्याको अभियोग लगाएर 'ली'लाई फाँसीको आज्ञा भयो। मृत्युदेखि नडराएर लीले न्यायाधीशको सामुन्ने आफूलाई निर्दोष बताएर भन्यो—मैले यो काम गरेको होइन। सबैका स्वामी भगवान् जान्दछन् म निर्दोष छु। ती प्रभु मलाई फाँसी द्वारा कहिल्यै मर्न दिँदैनन्। उनले मलाई निर्णय रहनु भनेका छन्। उता फाँसीको सबै व्यवस्था भइसक्यो। डोरी बाँन्न यौटा पुतली झुण्ड्याएको थियो। सबै पुरा ठीक थियो। त्यो दृश्य हेर्न यौटा उन्मत्त भीड सास रोकेर उभिएको थियो। सिपाहीले 'ली'लाई फाँसीको चौकीमा उभ्यायो। अनि त्यसलाई कालो छुगा ओढाएर डोरी तानियो। तर त्यो निर्दोष 'ली' यहाँको त्यहीं जीवित उभिएकै थियो। हक्क परेको यौटा निरीक्षक सिपाही अपराधीको स्थानमा गएर उभियो। त्यस पटक जब पोहेले डोरी तान्यो, तब सिपाही झ्याम्म पछारियो र त्यसको यौटा खुट्टा भाँचियो। अनि तत्काल फाँसीको सट्टा एक सप्ताहको निम्ति टारियो। तर अर्कोपल्ट पनि 'ली'लाई फाँसी दिने कुनै पनि उपाय सफल भएन र जबसम्म पुतली झुण्ड्याएर परीक्षा गरिन्थ्यो, तबसम्म डोरी तान्नु सार्थक हुन्थ्यो, तर जब

हजुरहरूको कुशलताको म विचार पनि कसरी गर्न सक्छु ?' ॥४२॥ जुन नन्दले अक्रूरसित प्रश्न गरेका थिए, उनको द्वारा यसरी विनम्र वाणी द्वारा सत्कार पाइसकेपछि अक्रूरको सबै थकाई मेटियो ॥४३॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' भाषाटीकायामष्टत्रिंशोऽध्यायः ॥३८॥

( श्रीकृष्ण-बलरामको मथुरा प्रस्थान )—श्रीशुकदेव भन्नुहुन्छ—बलराम द्वारा राम्ररी सम्मानित भएर अक्रूरजी आनन्दले पलङ्गमा बसे। उनले बाटोमा जे-जे इच्छाहरू गरेका थिए, ती सबै पूर्ण भए ॥१॥ हे राजन् ! लक्ष्मीपति प्रसन्न भएपछि यस्तो कुन वस्तु छ, जुन प्राप्त नहोस्। तैपनि भगवत्परायण व्यक्ति कुनै पदार्थको इच्छा गर्दैनन् ॥२॥ सायंकालको खान पान गरिसकेपछि भगवान् देवकीनन्दनले अक्रूरको नजीकै बसेर आफ्ना बन्धु-बान्धवसित कंसको कस्तो व्यवहार छ र अब त्यो के गर्न खोजिरहेको छ, यस विषयमा धेरै थरि कुरा सोधे ॥३॥ भगवान् भन्दछन्—हे तात ! हे सौभाग्य ! हजुर यहाँ निर्विघ्न पाल्नुभयो न ? हजुरको स्वागत छ, कल्याण होस्। हजुरका सबै जात-भाई आनन्द र निरोग छन् ? ॥४॥

परिपृष्टेन जहावध्वपरिश्रमम् ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धेऽक्रूरागमनं नामाष्टत्रिंशत्तमोऽध्यायः ॥ ३८ ॥

श्रीशुक उवाच ॥ सुखोपविष्टः पर्यंके रामकृष्णोरुमानितः ॥ लेभे मनोरथान्सर्वान्पथि यान्स चकार ह ॥ १ ॥ किमलभ्यं भगवति प्रसन्ने श्रीनिकेतने ॥ तथापि तत्परा राजन्न हि वाञ्छन्ति किञ्चन ॥२॥ सायंतनाशनं कृत्वा भगवान्देवकीसुतः ॥ सुहृत्सु वृत्तं कंसस्य पप्रच्छान्यच्चिकीर्षितम् ॥३॥ श्रीभगवानुवाच ॥ तात सौम्यागतः कच्चित्स्वागतं भद्रमस्तु वः ॥ अपि स्वज्ञातिबन्धूनामनमीवमनामयम् ॥ ४ ॥ किं नु नः कुशलं पृच्छे एधमाने कुलामये ॥ कंसे मातुलनाम्न्यङ्ग स्वानां नस्तत्प्रजासु च ॥ ५ ॥ अहो अस्मदभूद्भूरि पित्रोर्वृजिनमार्ययोः ॥ यद्धेतोः पुत्रमरणं यद्धेतोर्बन्धनं तयोः ॥ ६ ॥ दिष्ट्याऽद्य दर्शनं स्वानां मह्यं वः सौम्य काङ्क्षितम् ॥ सञ्जातं वर्ण्यतां तात तवागमनकारणम् ॥ ७ ॥ श्रीशुक उवाच ॥ पृष्टो भगवता सर्वं वर्णयामास माधवः ॥ वैरानुबन्धं यदुषु वसुदेववधोद्यमम् ॥ ८ ॥ यत्संदेशो यदर्थं वा दूतः संप्रेषितः स्वयम् ॥ यदुक्तं नारदेनास्य स्वजन्मानकदुन्दुभेः

म आफ्नू कुलको कुशल के सोधौं ? हाम्रो कुलको निम्ति रोगरूप र नाममात्रको मामा कंस बाँचेसम्म हाम्रा स्वजन वा तिनका सन्तान सकुशल कसरी रहन सक्छन् ? ॥५॥ अहो ! हाम्रा निम्ति भद्र पिताले ठूलो कष्ट भोग्नु पर्‍यो, हाम्रो नै कारण अनेक पुत्र मारिए र हाम्रो निम्ति नै उनले धेरै दिनसम्म बन्धनमा बस्नुपर्‍यो ॥ ६ ॥ हे सौम्य ! आज ठूलो सौभाग्यले आफ्ना स्वजनस्वरूप हजुरको दर्शन लाभ भयो। मलाई पनि यसको निकै अभिलाषा थियो। हे तात ! अब हजुर यहाँ आउने कारण भन्नुहवस् ॥७॥ श्रीशुकदेव भन्दछन्—हे राजन् ! यसरी भगवान्ले सोधेपछि अक्रूरजीले कंसद्वारा यदुवंशीसित शत्रुता राख्ने र वसुदेवको बध गर्ने उद्योग आदि सारा वृत्तान्त एकेक वर्णन गरेर सुनाए ॥८॥ कंसको जो

लीलाई त्यहाँ त्यहाँ उभ्याएपछि, डोरीले काम गर्दैनथ्यो। त्यहाँको न्यायाधीश मोटा सौम्य र धर्मभीरु पुरुष थियो। उसले तार द्वारा गृह-सचिवसित सल्लाह माग्यो। वहाँबाट उत्तर आयो 'फाँसीको काम पूरा गर्नु।' स्थानीय नागरिकहरूले अत्यन्त उत्तेजित भएर लीलाई छाडिदिने माँग गरे। तर अधिकारी बिचरालाई त आज्ञा पालन गर्नु थियो। तिनले फेरि यो वीर कर्म पूरा गर्ने चेष्टा गरे, तर ती सफल हुन सकेनन्। चार भिन्न-भिन्न दिन फाँसी दिने प्रयत्न गरियो, तर प्रत्येक पल्ट डोरीले ठीक काम गरेन। त्यतिमै गृह-सचिवको फेरि तार आयो। त्यसमा जॉन लीलाई प्राणदण्ड दिने आज्ञा निरस्त गरिएको थियो। केही समयपछि क्षमा दान दिएर छाडी पनि दिए।

1022

धनुर्यज्ञ सम्बन्धी कपटपूर्ण सन्देश थियो, जसको निम्ति उनलाई दूत तुल्याएर पठाइएको थियो र देवर्षिले जो वसुदेव द्वारा भगवान्को जन्म-रहस्य कंसलाई भनेका थिए, त्यो वृत्तान्त पनि उनले भगवान्लाई सुनाए ॥९॥ विपक्षी वीरहरूको संहारमा निपुण कृष्ण र बलराम अक्रूरका कुरा सुनेर हाँसे। उनले पिता नन्दलाई राजा कंसको आज्ञा सुनाए ॥ १० ॥ त्यसै अनुसार नन्दले सबै गोपगणलाई आज्ञा दिए–'सबै गोरस एकत्रित पार, दर्शन भेटको सामग्री र आफाफ्ना गाड़ा ठिक पार ॥ ११ ॥ भोलि हामी सबै जना मथुरापुरी जाने छौं र राजा कंसलाई गोरस अर्पण गर्ने छौं। त्यहाँ गएर हामी यौटा ठूलो उत्सव हेर्ने छौं, जसलाई हेर्न पर-परराट मानिस आइरहेछन्।' नन्दजीले व्रजभरि यो घोषणा गराइदिए ॥१२॥ जब गोपिनीहरूले सुने–राम र कृष्णलाई मथुरा लैजान व्रजमा अक्रूर आएका छन्–ती साह्रै दुःखी भए ॥ १३ ॥ हृदयको तातो श्वासले कतिको मुख सुकेर आयो, केही अचेत जस्तै भए, कुनैका वस्त्र खुकुला भए र कंकण, केशपाश खुकुला भएर फुस्किए ॥ १४ ॥ भगवान्को चिन्तनले केही गोपिनीहरूको समस्त चित्त

॥ ९ ॥ श्रुत्वाऽक्रूरवचः कृष्णो बलश्च परवीरहा ॥ प्रहस्य नन्दं पितरं राज्ञादिष्टं विजज्ञतुः ॥ १० ॥ गोपान्समादिशत्सोऽपि गृह्यतां सर्वगोरसः ॥
उपायनानि गृह्णीध्वं युज्यन्तां शकटानि च ॥११॥ यास्यामः श्वो मधुपुरीं दास्यामो नृपते रसान् ॥ द्रक्ष्यामः सुमहत्पर्व यान्ति जानपदाः किल ॥
एवमाघोषयत्क्षत्रा नन्दगोपः स्वगोकुले ॥ १२ ॥ गोप्यस्तास्तदुपश्रुत्य बभूवुर्व्यथिता भृशम् ॥ रामकृष्णौ पुरीं नेतुमक्रूरं व्रजमागतम् ॥ १३ ॥
काश्चित्तत्कृतहृत्तापश्वासम्लानमुखश्रियः ॥ स्रंसद्दुकूलवलयकेशग्रन्थ्यश्च काश्चन ॥ १४ ॥ अन्याश्च तदनुध्याननिवृत्ताशेषवृत्तयः ॥ नाभ्यजानन्निमं लोकमात्मलोकं गता इव ॥ १५ ॥ स्मरन्त्यश्चापराः शौरेरनुरागस्मितेरिताः ॥ हृदिस्पृशश्चित्रपदा गिरः संमुमुहुः स्त्रियः ॥ १६ ॥ गतिं
सुललितां चेष्टां स्निग्धहासावलोकनम् ॥ शोकापहानि नर्माणि प्रोद्दामचरितानि च ॥ १७ ॥ चिन्तयन्त्यो मुकुन्दस्य भीता विरहकातराः ॥ समेताः
संघशः प्रोचुरश्रुमुख्योऽच्युताशयः ॥ १८ ॥ गोप्य ऊचुः ॥ अहो विधातस्तव न क्वचिद्दया संयोज्य मैत्र्या प्रणयेन देहिनः ॥ ताँश्चाकृतार्थान्वि-
युनङ्क्ष्यपार्थकं विक्रीडितं तेऽर्भकचेष्टितं यथा ॥१९॥ यस्त्वं प्रदर्श्यासितकुन्तलावृतं मुकुन्दवक्त्रं सुकपोलमुन्नसम् ॥ शोकापनोदस्मितलेशसुन्दरं

चित्त शान्त भए र मुक्त पुरुष झैं उनलाई आफ्नू देहको पनि ज्ञान रहेन ॥ १५ ॥ कतिपय गोपिनी भगवान्को प्रणय, हास्य तथा विचित्र पदावली युक्त हृदयहारिणी कुराहरू सम्झनाले अचेत भए ॥ १६ ॥ भगवान्को ललित गति, विचित्र लीला, स्नेहयुक्त तथा हास्यपूर्ण हेराई, शोक नाश पार्ने ठट्टा र उदार चरित्रहरूको सम्झना गरेर उनी-सित वियोगको सम्भावनाले व्याकुल र भयभीत भई सबै गोपिनी, जसका चित्त सदा भगवान्मै लागिरहन्थ्यो, एक स्थानमा जम्मा भएर आँखाबाट आँसुका धारा बगाउँदै परस्पर यस प्रकार कुरा गर्नलागे–॥१७॥१८॥ गोपिनी भन्दछन्–'ए विधाता! तँलाई कसैमाथि दया लाग्दैन? तँ प्राणीहरूलाई मित्रता र स्नेहको बन्धनमा बाँधेर मनोरथ सिद्ध हुनुभन्दा पहिले नै तिनको वियोग गराइदिन्छस्! तेरो यो काम बालकहरूको खेलवाड झैं तुच्छ छ ॥ १९ ॥ तँ जो हामीलाई श्रीकृष्णको श्याम अलकावलीले ढाकिएका कपोल तथा उन्नत नासिकाले शोभित र शोक हटाउने मन्दहास्ययुक्त मनोहर मुख देखाएर अब उनलाई हाम्रा आँखाबाट पर पारिदिन खोज्दैछस्। अतः तेरो यो काम राम्रो

माल सकिन्न॥२०॥हरे, विधाता ! त साह्रै क्रूर छस् , तँ नै आज अक्रूरको नामले मूर्खको समान यहाँ आएर आफैँले दिएको हाम्रा ती नेत्रलाई खोसेर लगिरहेको छस् , जसद्वारा हामी
भगवान मधुसूदनका प्रत्येक अङ्गमा तेरो सृष्टिको समस्त सौन्दर्य हेर्ने गर्दथ्यौँ॥२१॥फेरि ती सबै परस्पर भन्नलागे– अहो ! यी नन्दनन्दनलाई पनि नित्य नयाँ-नयाँ व्यक्तिसित नै स्नेह
बढाउन मनपर्दछ । इनको त्यो स्नेह एक क्षणमै भङ्ग हुन्छ । हेर–हामीले आफ्ना घर, स्वजन पति र पुत्रादि सबै छाडेर यिनका दासी बन्न स्वीकार गर्‍यौं, तर ती आफ्नै निम्ति
आतुर हामी गोपिनीहरूतिर हेरिरहेका पनि छैनन ॥२२॥ अवश्य मथुराका नारीहरूको निम्ति आउने रात निकै मङ्गलमयी हुनेछ । तिनका सबै इच्छाहरू पूर्ण हुनेछन्, किनकि
ती नगरीमा व्रजराजले प्रवेश गरेपछि, ती आफ्ना कटाक्षले इनको हास्ययुक्त मुखको माधुरी पिउने छन् ॥२३॥ यद्यपि कृष्ण ठूला मनस्वी छन्, तथापि ती मथुरा निवासिनीका
मह झैं मधुर वचनमा आसक्त भई, लज्जायुक्त हास-विलासले विभोर भई हामी काँठे ग्वालिनीहरू तर्फ कसरी आउन सक्छन् ? ॥ २४ ॥ अहो ! आज भगवान्‌को दर्शन गरेर

करोषि पारोक्ष्यमसाधु ये कृतम् ॥ २० ॥ क्रूरस्त्वमक्रूरसमाख्यया स्म नश्चक्षुर्हि दत्तं हरसे बताज्ञवत् ॥ येनैकदेशेऽखिलसर्गसौष्ठवं त्वदीयमद्राक्ष्म
वयं मधुद्विषः ॥ २१ ॥ न नन्दसूनुः क्षणभङ्गसौहृदः समीक्षते नः स्वकृतातुरा बत ॥ विहाय गेहान्स्वजनान्सुतान्पतींस्तद्दास्यमद्धोपगता नवप्रियः
॥ २२ ॥ सुख प्रभाता रजनीयमाशिषः सत्या बभूवुः पुरयोषितां ध्रुवम् ॥ याः सम्प्रविष्टस्य मुखं व्रजस्पतेः पास्यन्त्यपाङ्गोत्कलितस्मितासवम् ॥२३॥
तासां मुकुन्दो मधुमञ्जुभाषितैर्गृहीतचित्तः परवान्मनस्व्यपि ॥ कथं पुनर्नः प्रतियास्यतेऽबला ग्राम्याः सलज्जस्मितविभ्रमैर्भ्रमन् ॥२४॥ अद्य ध्रुवं तत्र
दृशो भविष्यते दाशार्हभोजान्धकवृष्णिसात्वताम् ॥ महोत्सवः श्रीरमणं गुणास्पदं द्रक्ष्यन्ति ये चाध्वनि देवकीसुतम् ॥ २५ ॥ मैतद्विधस्याकरुणस्य
नामभूदक्रूर इत्येतदतीव दारुणः ॥ योऽसावनाश्वास्य सुदुःखितं जनं प्रियात्प्रियं नेष्यति पारमध्वनः ॥ २६ ॥ अनार्द्रधीरेष समास्थितो रथं तम-
न्वमी च त्वरयन्ति दुर्मदाः ॥ गोपा अनोभिः स्थविरैरुपेक्षितं दैवं च नोऽद्य प्रतिकूलमीहते ॥ २७ ॥ निवारयामः समुपेत्य माधवं किं नोऽकरिष्य-
न्कुलवृद्धबान्धवाः ॥ मुकुन्दसङ्गान्निमिषार्धदुस्त्यजाद्दैवेन विध्वंसितदीनचेतसाम् ॥ २८ ॥ यस्यानुरागललितस्मितवल्गुमन्त्रलीलावलोकपरिरम्भण-

अवश्य नै मथुरापुरीका दशार्ह, भोज, अन्धक र वृष्णिवंशी यादवहरूका नेत्रलाई परमानन्द प्राप्त हुनेछ । जसले मार्गमा रमारमण र गुणागार भगवान् देवकीनन्दनको दर्शन गर्नेछन्
तिनका नेत्रको निम्ति पनि ठूलो उत्सव हुनेछ॥२५॥ फेरि अक्रूरतर लक्ष्य गरेर गोपिनीहरू भन्नलागे–अहो ! यी अक्रूर साह्रै निष्ठुर छन्, यी हामी अबलाहरूलाई धैर्यसम्म पनि नदिएर
हाम्रा प्राणप्रिय नन्दनन्दनलाई हाम्रो दृष्टिपथबाट पर भगाएर लैजान खोज्दैछन् । यस्ता क्रूर पुरुषको नाम 'अक्रूर' कसले राख्यो होला ॥२६॥ हेर, निष्ठुर श्रीकृष्ण पनि रथमा गएरबसे ।
यी ग्वालाहरू पनि गाडाद्वारा उनीसित जानको निम्ति चाँडो-छिटो गरिरहेका छन् ? यस बखत गाउँका बूढापाका उदासीन भएर बसेका छन्–ती पनि यिनलाई रोकिरहेका छैनन ।
मुख्य कुरा त यो हो कि विधाता पनि आज हाम्रो प्रतिकूल नै सबै काम गरिरहेको छ ॥२७॥ हिंड, हामी स्वयं गएर श्रीकृष्णलाई रोकौं । कुलका बूढा-पाका र बन्धु-बान्धव हामीलाई के
गर्न सक्छन् ? किनकि जसलाई आधापलको निम्ति पनि छाड्न कठिन छ, दुर्दैववश कृष्णको सहवासको विच्छेद हुनाले गर्दा हामी दीन भइरहेका छौं ॥२८॥ जसको पूर्ण, ललित

हास्ययुक्त मीठा-मीठा कुरा, लीलामय कटाक्ष र आलिङ्गनादिले युक्त रासमण्डलमा हामीले ती रात एक क्षणको समान बिताएका थियौं। हे सखि हो! अब तीनै नभई हामी उनको विरह व्यथाबाट कसरी पारी तर्नें ? ॥२९॥ साँझको वेला गाईको खुरबाट उडेका धूलोले धूसरित अलकावली र पुष्प-मालादिले मण्डित भएर जुन कृष्ण अनेक गोप-मित्रहरूले घेरिएर बाँसुरी बजाउँदै आफ्नू मधुर मुसकान र कटाक्षयुक्त हेराईले हाम्रो हृदय घायल पार्दथे, तिनी नभई हामी कसरी बाँच्नेछौं ? ॥३०॥ श्रीशुकदेव भन्दछन्—हे राजन्! विरहले आतुर भएर यसै प्रकार कुरा गन र कृष्णमै आसक्त-चित्त ती व्रजाङ्गनाहरू लोकलाज त्यागेर—'हे गोविन्द! हे माधव!' यस्तो भन्दै ठूलूमा गाँठो पारेर रुन लागे ॥३१॥ रोएर रात बितेर गयो, सूर्योदय भयो। अनि अक्रूरले सन्ध्यावन्दनादि प्रातःकालीन कृत्य समाप्त पारी रथ हाँके ॥ ३२ ॥ उनैसित नन्दादि गोपगण पनि धेरै थरि उपहार सामग्रीहरू र गोरस भरिएका माम्रा साथमा लिई गाडाहरूमा हिंडे ॥ ३३ ॥ त्यसै वेला गोपिनीहरू आफ्ना प्रिय कृष्णको दर्शन पाएर केही आश्वस्त भएर भगवान्‌को आदेश पाउने आकांक्षाले

रासगोष्ठयाम् ॥ नीताः स्म नः क्षणमिव क्षणदा विना तं गोप्यः कथं न्वतितरेम तमो दुरन्तम् ॥ २९ ॥ योऽह्नः क्षये व्रजमनन्तसखः परीतो गोपै-
र्विशन्खुररजश्छुरितालक स्रक् ॥ वेणुं क्वणन्स्मितकटाक्षनिरीक्षणेन चित्तं क्षिणोत्यमुमृते नु कथं भवेम । ३० ॥ श्रीशुक उवाच ॥ एवं ब्रुवाणा
विरहातुरा भृशं व्रजस्त्रियः कृष्णविषक्तमानसाः ॥ विसृज्य लज्जां रुरुदुः स्म सुस्वरं गोविन्द दामोदर माधवेति ॥ ३१ ॥ स्त्रीणामेवं रुदन्तीनामुदिते
सवितर्यथ ॥ अक्रूरश्चोदयामास कृतमैत्रादिको रथम् ॥ ३२ ॥ गोपास्तमन्वसज्जन्त नन्दाद्याः शकटैस्ततः ॥ आदायोपायनं भूरि कुम्भान्गोरस-
सम्भृतान् ॥३३॥ गोप्यश्च दयितं कृष्णमनुव्रज्यानुरञ्जिताः ॥ प्रत्यादेशं भगवतः काङ्क्षन्त्यश्चावतस्थिरे ॥ ३४ ॥ तास्तथा तप्यतीर्वीक्ष्य स्वप्र-
स्थाने यदूत्तमः ॥ सान्त्वयामास सप्रेमैरायास्य इति दौत्यकैः ॥ ३५ ॥ यावदालक्ष्यते केतुर्यावद्रेणू रथस्य च ॥ अनुप्रस्थापितात्मानो लेख्यानीवोपल-
क्षिताः ॥ ३६ ॥ ता निराशा निववृतुर्गोविन्दविनिवर्तने ॥ विशोका अहनी निन्युर्गायन्त्यः प्रियचेष्टितम् ॥ ३७ ॥ भगवानपि सम्प्राप्तो रामाक्रूर-
युतो नृप ॥ रथेन वायुवेगेन कालिन्दीमघनाशिनीम् ॥ ३८ ॥ तत्रोपस्पृश्य पानीयं पीत्वा मृष्टं मणिप्रभम् ॥ वृक्षषण्डमुपव्रज्य सरामो रथमाविशत्
॥ ३९ ॥ अक्रूरस्तावुपामन्त्र्य निवेश्य च रथोपरि ॥ कालिन्द्या ह्रदमागत्य स्नानं विधिवदाचरत् ॥ ४० ॥ निमज्ज्य तस्मिन्सलिले जपन्ब्रह्म सना-

उनको सामुन्ने ठिङ्ग उभिए ॥ ३४ ॥ आफ्नू मथुरा यात्राले गोपिनीहरूलाई सन्तप्त देखेर श्रीयदुनन्दनले प्रेमपूर्वक यो सन्देश दिए—'म छिटै नै फर्केर आउँछु' यसिले गोपिनी-हरूलाई धैर्य दियो ॥ ३५ ॥ विरह-व्यथित गोपिनीहरूलाई जबसम्म रथको ध्वजा र चक्राले उडाएको धूलो देखियो, तबसम्म ती तस्वीर झैं त्यही स्थानमा उभिएर उतैतर एकहरो हेरिरहे, तर तिनको मन चाहिं आफ्ना प्यारा कृष्णसित गइसकेको थियो ॥ ३६ ॥ जब गोविन्द फर्कने आशा हराएर गयो, अनि ती निराश भएर आफाफ्नो घर फर्केर गए र आफ्ना प्रियतमको चरित्र गान गरी-गरी शोक शान्त पार्दै समय बिताउन लागे ॥ ३७ ॥ यता भगवान् कृष्ण र बलराम अक्रूरसित वायु समान वेगले हिंड्ने रथमा चढेर एक छिनमै पाप नाशिनी यमुनाजीको तटमा पुग्दाभए ॥ ३८ ॥ त्यहाँ श्रीकृष्णले हात पाउ धोएर इन्द्र-नीलमणि समान स्वच्छ यमुनाको पानी पिएर फेरि

श्याम्म परेको वृक्षमुनि गएर बलरामसित रथमा बसे । ३९ ॥ अक्रूरले ती दुवै भाईलाई रथमा बसालेर उनको आज्ञा लिई यमुनाको कुण्ड अर्थात् अनन्त तीर्थको जलमा पसेर
विधिवत् स्नान गरे ॥ ४० ॥ अनि जलमा डुबुल्की मारेर गायत्री जप गर्नलागे । जप गर्दागर्दै तिनले जल भित्र व राम र कृष्ण दुवै भाई संगसंगै बसेका देखे ॥ ४१ ॥
अनि यस्तो विचार गरे— 'वसुदेवका दुवै बालक त रथमा बसेका थिए, ती यहाँ कसरी आए ? यदि यहाँ छन् भने सम्भव उहाँ नहोउन्' तिनले जलको बाहिर शिर निकालेर हेरे
॥ ४२ ॥ ती दुवै उहाँ पनि पहिलेकै समान रथमा बसेका देखिए। अनि यस्तो विचार गरे—'मैले तिनलाई जलभित्र देखेको थिएँ, के त्यो मेरो भ्रम थियो ?' फेरि डुबुल्की मारे
त्यहाँ फेरि उनै अनन्तदेवलाई विद्यमान देखे—जसको सिद्ध, चारण, गन्धर्व र असुरगण मस्तक न्युराएर स्तुति गरिरहेका छन् ॥ ४३ ॥ ४४ ॥ ती अनन्तदेवका हजार शिर थिए।
ती आफ्ना हजार फणामा हजारै मुकुट र आफ्नू कमलनाल समान श्वेत शरीरमा नीलाम्बर लगाएका थिए । तिनको सुन्दर शरीर सहस्र शिखायुक्त कैलाश पर्वत झैं शुभ्र देखिइरहेथ्यो।

तनम् ॥ तावेव ददृशेऽक्रूरो रामकृष्णौ समन्वितौ ॥ ४१ ॥ तौ रथस्थौ कथमिह सुतावानकदुन्दुभेः ॥ तर्हिस्वित्स्यन्दने न स्त इत्युन्मज्ज्य व्यचष्ट सः
॥ ४२ ॥ तत्रापि च यथापूर्वमासीनौ पुनरेव सः ॥ न्यमज्यद्दर्शनं यन्मे मृषा किं सलिले तयोः ॥४३॥ भूयस्तत्रापि सोऽद्राक्षीत्स्तूयमानमहीश्वरम् ॥
सिद्धचारणगन्धर्वैरसुरैर्नतकन्धरैः ॥४४॥ सहस्रशिरसं देवं सहस्रफणमौलिनम् ॥ नीलाम्बरं विसश्वेतं शृङ्गैः श्वेतमिव स्थितम् ॥ ४५ ॥ तस्योत्सङ्गे घन-
श्यामं पीतकौशेयवाससम् ॥ चतुर्भुजं नरं शान्तं पद्मपत्रारुणेक्षणम् ॥ ४६ ॥ चारुप्रसन्नवदनं चारुहासनिरीक्षणम् ॥ सुभ्रून्नसं चारुकर्णं सुकपोलारु-
णाधरम् ॥ ४७ ॥ प्रलम्बपीवरभुजं तुङ्गांसोरःस्थलश्रियम् ॥ कम्बुकण्ठं निम्ननाभिं वलिमत्पल्लवोदरम् ॥४८॥ बृहत्कटितटश्रोणिकरभोरुद्वयान्वितम् ॥
चारुजानुयुगं चारुजङ्घायुगलसंयुतम् ॥४९॥ तुङ्गगुल्फारुणनखव्रातदीधितिभिर्वृतम् ॥ नवाङ्गुल्यङ्गुष्ठदलैर्विलसत्पादपङ्कजम् ॥५०॥ सुमहार्हमणिव्रातकि-
रीटकटकाङ्गदैः ॥ कटिसूत्रब्रह्मसूत्रहारनूपुरकुण्डलैः ॥ ५१ ॥ भ्राजमानं पद्मकरं शङ्खचक्रगदाधरम् ॥ श्रीवत्सवक्षसं भ्राजत्कौस्तुभं वनमालिनम् ॥ ५२ ॥
सुनन्दनन्दप्रमुखैः पार्षदैः सनकादिभिः ॥ सुरेशैर्ब्रह्मरुद्राद्यैर्नवभिश्च द्विजोत्तमैः ॥ ५३ ॥ प्रह्लादनारदवसुप्रमुखैर्भागवतोत्तमैः ॥ स्तूयमानं पृथग्भावैर्-

॥ ४५ ॥ उनले देखे–ती शेष भगवानको काखमा पौँटा रेशमी पीताम्बर धारण गरेका मेघ झैं श्याम शरीर चतुर्भुज पुरुषको शान्त मूर्ति बसेको छ। तिनका नेत्र कमलदल झैं विशाल
र अरुणवर्ण थिए ॥ ४६ ॥ उनको मुख अति राम्रो र प्रसन्न थियो । उनको हास्ययुक्त चितवन निकै मनोहर थियो। भृकुटी र नासिका अग्लो र सुहाउने थियो। ती राम्रा कर्णपुट
मनोहर कपोल र अरुण अधरले सुशोभित थिए । ॥ ४७ ॥ उनका भुजा लमा र स्थूल थिए । काँध अग्लो थियो र वक्षःस्थलमा लक्ष्मीजी विराजमान थिइन् । शङ्खको समान
गलक परेको तथा नाभि गहिरो थियो र त्रिवलीयुक्त उदर पीपलको पात झैं शोभायमान थियो ॥ ४८ ॥ उनको विशाल कटिप्रदेश दुवै नितम्ब तथा हात्तीको सुँड झैं दुवै
उरुले सुशोभित थिए, उनका अति राम्रा दुइ जानु एवं दुवै तिघ्रा थिए ॥ ४९ ॥ ती अग्लो गुल्फ र अरुणवर्ण नङका कान्तिले युक्त थिए । उनका चरण-कमल कोमल औंला-
हरूले र बूढीऔंलाले शोभायमान थिए ॥ ५१ ॥ ती बहुमूल्य मणिहरू जडित किरीट, कटक, अङ्गद, कटिसूत्र, यज्ञोपवीत, हार, नूपुर र कुण्डलले देदीप्यमान भइरहेका थिए। उनका

हातमा शङ्ख, चक्र, गदा, पद्म, वक्षःस्थलमा श्रीवत्स र गलामा वनमाला तथा कौस्तुभमणि विराजमान थिए॥५१॥५२॥ ती नन्द-सुनन्दादि पार्षद, सनकादि महर्षिहरू, ब्रह्मा शिवादि देवगण, मरीचि आदि नौ ब्राह्मण र प्रह्लाद, नारद तथा अष्टवसु आदि निर्मलात्मा भक्तद्वारा भिन्न-भिन्न प्रकारले स्तूयमान भइरहेका थिए।५३॥५४॥ श्री, पुष्टि, वाणी, कान्ति, कीर्ति, तुष्टि, इला, ऊर्जा, विद्या-अविद्या आदि शक्तिहरू तथा माया उनको सेवा गरिरहेका थिए॥५५॥त्यो दृश्य देखेर अक्रूरलाई आनन्द प्राप्त भयो। ती निगूढ भक्तिभावले भरिए- उनको शरीरमा रोमाञ्च भएर आयो र भावोद्रेकले गर्दा तिनका नेत्रबाट आँसु बग्न लाग्यो ॥५६॥ अनि अक्रूरले धैर्यधारण गरेर भगवान्‌का चरणमा शिर न्युराई प्रणाम गरे र हात जोरी गद्‌गद् वाणीले विस्तार-विस्तार यस प्रकार स्तुति गर्नलागे ॥५७॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धेपूर्वार्धे नेपाली भाषाटीकायामेकोनचत्वारिंशोऽध्यायः ॥३९॥

(अक्रूरद्वारा गरिएको भगवत् स्तुति)–अक्रूर भन्दछन्–हे कृष्ण! जसद्वारा यो सम्पूर्ण लोक उत्पन्न भएको थियो, ती ब्रह्मा जसको नाभिबाट उत्पन्नकमलकोशबाट प्रकटभएका हुन्, ती

चोभिरमलात्मभिः ॥५४॥ श्रिया पुष्ट्या गिरा कान्त्या कीर्त्या तुष्ट्येलयोर्जया ॥ विद्ययाऽविद्यया शक्त्या मायया च निषेवितम् ॥ ५५ ॥ विलोक्य सुभृत प्रीतो भक्त्या परमया युतः ॥ हृष्यत्तनूरुहो भावपरिक्लिन्नात्मलोचनः ॥५६॥ गिरागद्‌गदयास्तौषीत्सत्त्वमालम्ब्य सात्वत ॥ प्रणम्य मूर्ध्नाऽव- हित कृताञ्जलिपुटः शनैः ॥ ५७ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धेऽक्रूरप्रतियाने एकोनचत्वारिंशोऽध्यायः ॥ ३९ ॥

अक्रूर उवाच ॥ नतोऽस्म्यहं त्वाऽखिलहेतुहेतुं नारायणं पूरुषमाद्यमव्ययम् ॥ यन्नाभिजातादरविन्दकोशाद्ब्रह्माऽऽविरासीद्यत एष लोकः ॥ १ ॥ भूस्तोयमग्निः पवनः खमादिर्महानजादिर्मन इन्द्रियाणि ॥ सर्वेन्द्रियार्था विबुधाश्च सर्वे ये हेतवस्ते जगतोऽङ्गभूताः ॥ २ ॥ नैते स्वरूप विदुरात्म- नस्ते ह्यजादयोऽनात्मतया गृहीताः ॥ अजोऽनुबद्धः स गुणैरजाया गुणात्परं वेद न ते स्वरूपम् ॥ ३ ॥ त्वां योगिनो यजन्त्यद्धा महापुरुष- मीश्वरम् ॥ साध्यात्मं साधिभूतं च साधिदैवं च साधवः ॥ ४ ॥ त्रय्या च विद्यया केचित्त्वां वै वैतानिका द्विजाः ॥ यजन्ते विततैर्यज्ञैर्नानारूपा- मराख्यया ॥५॥ एके त्वाऽखिलकर्माणि संन्यस्योपशमं गताः ॥ ज्ञानिनो ज्ञानयज्ञेन यजन्ति ज्ञानविग्रहम् ॥ ६ ॥ अन्ये च संस्कृतात्मानो विधिनाऽभिहितेन ते ॥ यजन्ति त्वन्मयास्त्वां वै बहुमूर्त्येकमूर्तिकम् ॥ ७ ॥ त्वामेवान्ये शिवोक्तेन मार्गेण शिवरूपिणम् ॥ बह्वाचार्यविभेदेन

सबै कारणहरूका कारण र अविनाशी हजुर आदिपुरुष नारायणलाई म नमस्कार गर्दछु ॥१॥ पृथ्वी, जल, अग्नि, वायु, आकाश, महतत्त्व, प्रकृति, पुरुष तथा मन, इन्द्रिय, इन्द्रियहरूका विषय र उनका अधिष्ठाता देवता यी जति जगत्‌का मूलकारण छन्, ती सबै हजुरका अङ्ग हुन् ॥२॥ अनात्मरूपले ग्रहण गरिने मायादिको कारण सबैका आत्मारूप हजुर परमात्मा- को स्वरूपलाई यीहो जान्न सक्तैनन्। ब्रह्मा पनि हजुरकी माया गुणले युक्त छन्। अतः ती पनि हजुरको गुणातीत स्वरूप जान्न सक्तैनन् ॥३॥ योगीजन पनि अध्यात्म, अधिभूत र अधिदैव सहित हजुर परमपुरुष परमेश्वरको नै पूजा गर्दछन् ॥ ४ ॥ यसै प्रकार अनेकौं कर्मकाण्डी ब्राह्मण वेदत्रयीको विधिले अनेक यज्ञद्वारा इन्द्रादि विभिन्न नाम र रूपले हजुरको नै योग-यज्ञ गर्दछन् ॥ ५ ॥ कतिपय ज्ञानीजन पनि आफ्ना कर्महरूलाई त्यागेर तथा शान्तभावमा स्थित भएर ज्ञानयज्ञद्वारा हजुर ज्ञान स्वरूपको नै पूजा गर्दछन्

॥ ६ ॥ यसै प्रकार अनेक शुद्धचित्त वैष्णव हजुरले नै आज्ञा भएको पाञ्चरात्रोक्त विधिले तन्मय भएर वासुदेव, सङ्कर्षण आदि अनेक र नारायण नामक एक मूर्तिले हजुरको नै पूजा गर्दछन् ॥७॥ हे भगवन् ! केही व्यक्ति शिवजीले बताएको आचार भेदले शैव-पाशुपत आदि अनेक भेद हुने मार्गले शिवरूपमा हजुरकै उपासना गर्दछन् ॥८॥ हे प्रभो ! जो अन्य देवताका भक्त छन्, ती यद्यपि भेदबुद्धि भएका हुन्, तापनि हजुर सर्वदेवमय हुनुहुन्छ । यसै निम्ति ती सबै पनि हजुर परमेश्वरको नै पूजा गर्दछन् ॥९॥ जस्तै पर्वतबाट निस्कने नदी मेघको जलले उम्लेर सबैतिर बग्दै समुद्रमै मिल्दछन् । त्यसै गरी हे प्रभो ! सबै उपासना-मार्ग अन्त्यमा हजुरकै प्राप्ति गराउँछन् ॥१०॥ सत्व, रज र तम यी हजुरकै मायाका गुण ( धागो ) हुन् र इनैमा ब्रह्मादेखि स्थावरपर्यन्त जीव उनिएका छन् ॥११॥ हजुर सर्वरूप र सबैका बुद्धिहरूका साक्षी हुनुहुन्छ । हजुरको दृष्टि निर्लिप्त छ । हजुरलाई म प्रणाम गर्दछु । सबै जीव अविद्याकृत गुणप्रवाहले देव, मनुष्य र तिर्यगादि योनिमा प्रवृत्त हुन्छन्, तर हजुर यसबाट सर्वथा अलिप्त रहनु हुन्छ १२॥ अग्नि हजुरको मुख हो, पृथ्वी चरण, सूर्य नेत्र,

भगवन्समुपासते ॥ ८ ॥ सर्व एव यजन्ति त्वां सर्वदेवमयेश्वरम् ॥ येऽप्यन्यदेवताभक्ता यद्यप्यन्यधियः प्रभो ॥ ९ ॥ यथाऽद्रिप्रभवा नद्यः पर्जन्यापूरिताः प्रभो ॥ विशन्ति सर्वतः सिन्धुं तद्वत्त्वां गतयोऽन्ततः ॥ १० ॥ सत्त्वं रजस्तम इति भवतः प्रकृतेर्गुणाः ॥ तेषु हि प्राकृताः प्रोता आब्रह्मस्थावरादयः ॥ ११ ॥ तुभ्यं नमस्तेऽस्त्वविषक्तदृष्टये सर्वात्मने सर्वधियां च साक्षिणे ॥ गुणप्रवाहोऽयमविद्यया कृतः प्रवर्तते देवनृतिर्यगात्मसु ॥ १२ ॥ अग्निर्मुखं तेऽवनिरङ्घ्रिरीक्षणं सूर्यो नभो नाभिरथो दिशः श्रुतिः ॥ द्यौः कं सुरेन्द्रास्तव बाहवोऽर्णवाः कुक्षिर्मरुत्प्राणबलं प्रकल्पितम् ॥ १३ ॥ रोमाणि वृक्षौषधयः शिरोरुहा मेघाः परस्यास्थिनखानि तेऽद्रयः ॥ निमेषणं रात्र्यहनी प्रजापतिर्मेढ्रस्तु वृष्टिस्तव वीर्यमिष्यते ॥ १४ ॥ त्वय्यव्ययात्मन्पुरुषे प्रकल्पिता लोकाः सपाला बहुजीवसङ्कुलाः ॥ यथा जले सञ्जिहते जलौकसोऽप्युदुम्बरे वा मशका मनोमये ॥ १५ ॥ यानि यानीह रूपाणि क्रीडनार्थं बिभर्षि हि ॥ तैरामृष्टशुचो लोका मुदा गायन्ति ते यशः ॥ १६ ॥ नमः कारणमत्स्याय प्रलयाब्धिचराय च ॥ हयशीर्ष्णे नमस्तुभ्यं मधुकैटभमृत्यवे ॥ १७ ॥ अकूपाराय बृहते नमो मन्दरधारिणे ॥ क्षित्युद्धारविहाराय नमः सूकरमूर्तये ॥ १८ ॥ नमस्तेऽद्भुत-

आकाश नाभि, दिशाहरू कान, स्वर्ग शिर हो, देवेन्द्रगण भुजा हुन्, समुद्र कोखा हो, वायु प्राणशक्ति हो ॥१३॥ वृक्ष र औषधि रौं हुन्, मेघ कपालका रौं, पर्वत हजुरका अस्थि-समूह र नङ हुन्, रात्रि र दिन आँखा चिम्लनु र खोल्नु हो, प्रजापति लिङ्ग र वृष्टि हजुरको वीर्य हो ॥१४॥ हे अव्ययात्मन् ! लोकपाल समेत अनेक प्राणीहरूले युक्त सबै लोक जस्तै—जलमा अनेक जलचर जीव र गूलरको फलभित्र भुसुना आदि रहन्छन्, त्यसै गरी हजुर मनोमय ज्ञानस्वरूप परमपुरुषमानै कल्पित हुनुहुन्छ ॥१५॥ हजुरलीला निम्ति पृथ्वीमा जे-जस्तो रूप धारण गर्नुहुन्छ, तिनको प्रभावले शोकरहित भएर मानिस हजुरको गुणगान गर्दछन् ॥१६॥ कारणवश मत्स्यावतार धारण गरेर प्रलय-सागरमा क्रीडागर्ने हजुर परमेश्वर-लाई मेरो नमस्कार छ । मधुर कैटभ नामका दैत्यलाई मार्ने हजुर हयग्रीव भगवान्लाई नमस्कार छ ॥१७॥ मन्दराचल पर्वत धारण गर्ने बृहत्काय कूर्म भगवान्लाई नमस्कार छ । पृथिवीको लीलापूर्वक उद्धार गर्ने वाराहरूपधारी भगवान्लाई नमस्कार छ ॥१८॥ हे भञ्जनको भय निवारण गर्ने प्रभो ! अद्भुत नृसिंह रूप धारण गर्ने हजुरलाई नमस्कार

छ । आफ्ना पाउनाले तीनै लोक ढाकिलिने वामनरूपधारीलाई नमस्कार छ ॥१९॥ उन्मत्त क्षत्रियरूपी वनलाई छिमलिदिने भृगुपति परशुरामरूपधारी हजुरलाई नमस्कार छ । रावणको संहार गर्ने हजुर रघुनाथलाई नमस्कार छ ॥२०॥ यादवहरूका स्वामी वासुदेव, सङ्कर्षण, अनिरुद्ध र प्रद्युम्नरूपधारी हजुर परमेश्वरलाई नमस्कार छ ॥२१॥ दैत्यगण र दानवगणलाई मोहित पार्ने तथा म्लेच्छ झैं आचरणशील शुद्धचित्त बुद्ध भगवानलाई नमस्कार छ र म्लेच्छ प्रायः क्षत्रियहरूको संहार गर्ने कल्कि भगवान्‌लाई नमस्कार छ ॥२२॥ हे भगवन् ! सृष्टिका सम्पूर्ण जीव हजुरका मायाले मोहित भएर नै 'म र यो मेरो हो' यस्तो असत आग्रह गरेर कर्ममार्गमा घुमिरहेका छन् ॥२३॥ म मूर्ख पनि शरीर, पुत्र, घर, स्त्री, धन र स्वजन आदि स्वप्न जस्तै पदार्थलाई सत्य मानेर त्यसैमा भुलिएको छु ॥२४॥ म अनित्य, अनात्म र कष्टरूप पदार्थमा विपरीत अर्थात् आत्मा र सुखबुद्धि गरेर अज्ञानवश सुख-दुःखादि द्वन्द्वहरूमा रमिरहेको छु र आफ्ना प्रिय हजुर परमेश्वरलाई जान्दिन ॥ २५ ॥ जस्तै–कुनै अज्ञानी पुरुष जलबाटै उत्पन्न तृण-शैवालादि पदार्थले ढाकिएको जल छाडेर

सिंहाय साधुलोकभयापह ॥ वामनाय नमस्तुभ्यं क्रान्तत्रिभुवनाय च ॥ १९ ॥ नमो भृगूणां पतये दृप्तक्षत्रवनच्छिदे ॥ नमस्ते रघुवर्याय रावणान्त-
कराय च ॥ २० ॥ नमस्ते वासुदेवाय नमः सङ्कर्षणाय च ॥ प्रद्युम्नायानिरुद्धाय सात्वतां पतये नमः ॥ २१ ॥ नमो बुद्धाय शुद्धाय दैत्यदानवमो-
हिने ॥ म्लेच्छप्रायक्षत्रहन्त्रे नमस्ते कल्किरूपिणे ॥ २२ ॥ भगवञ्जीवलोकोऽयं मोहितस्तव मायया ॥ अहंममेत्यसद्ग्राहो भ्राम्यते कर्मवर्त्मसु ॥२३॥
अहं चात्मात्मजागारदारार्थस्वजनादिषु ॥ भ्रमामि स्वप्नकल्पेषु मूढः सत्यधिया विभो ॥ २४ ॥ अनित्यानात्मदुःखेषु विपर्ययमतिर्ह्यहम् ॥ द्वन्द्वाराम-
स्तमोविष्टो न जाने त्वात्मनः प्रियम् ॥ २५ ॥ यथाऽबुधो जलं हित्वा प्रतिच्छन्नं तदुद्भवैः ॥ अभ्येति मृगतृष्णां वै तद्वत्त्वाहं पराङ्मुखः ॥२६॥
नोत्सहेऽहं कृपणधीः कामकर्महतं मनः ॥ रोद्धुं प्रमाथिभिश्चाक्षैर्ह्रियमाणमितस्ततः ॥ २७ ॥ सोऽहं तवाङ्घ्र्युपगतोऽस्म्यसतां दुरापं तच्चाप्यहं भव-
दनुग्रह ईश मन्ये ॥ पुंसो भवेद्यर्हि संसरणापवर्गस्त्वय्यब्जनाभ सदुपासनाय मतिः स्यात् ॥२८॥ नमो विज्ञानमात्राय सर्वप्रत्ययहेतवे ॥ पुरुषेशप्र-
धानाय ब्रह्मणेऽनन्तशक्तये ॥ २९ ॥ नमस्ते वासुदेवाय सर्वभूतक्षयाय च ॥ हृषीकेश नमस्तुभ्यं प्रपन्नं पाहि मां प्रभो ॥ ३० ॥ इति श्रीमद्भागवते
महापुराणे दशमस्कन्धे पूर्वार्धेऽक्रूरस्तुतिर्नाम चत्वारिंशत्तमोऽध्यायः ॥ ४० ॥

मृग मरीचिकातिर दगुर्दछ, त्यस्तै–आफ्नै मायाले ढाकिएका हजुरलाई छाडेर म विषयहरूमा भौंतारिरहेको छु ॥ २६ ॥ वासनाले गर्दा मेरो बुद्धि हीन भएको छ । यसै निमित्त काम्यकर्म र कामनाहरूले चञ्चल तथा बलिया इन्द्रियद्वारा यता-उता अलमल्याइएको आफ्नो मन एकाग्र पार्न असमर्थ छु ॥ २७ ॥ हे ईश ! अब म हजुरको चरण-शरणमा आएको छु । हजुरका चरण असत्पुरुषका निम्ति सर्वथा अप्राप्य छन् । 'म अधमलाई उनको दर्शन मिल्यो' यो म हजुरको कृपाको फल मान्दछु । हे पद्मनाभ ! जब प्राणीका संसार बन्धनका अन्त हुने बेला छ, त्यसैले उसको बुद्धि हजुरमा लाग्दछ ॥२८॥ हे प्रभो ! हजुर केवल विज्ञानमूर्ति, समस्त प्रतीतिहरूका आश्रय र पुरुषहरूलाई सुख-दुःखादि प्राप्त गराउने काल, कर्म र स्वभावादिका नियन्ता छन् । यस्ता अनन्त शक्ति हजुर परब्रह्मलाई मेरो नमस्कार छ ॥२९॥ हजुर वासुदेव, सबै प्राणीहरूका आश्रय सङ्कर्षणदेव, हृषीकेश अर्थात् बुद्धि र मनका

अधिष्ठाता प्रद्युम्न र अनिरुद्धलाई नमस्कार । हे प्रभो हजुर म शरणागतको रक्षा गर्नुहवस् ॥३०॥ इति श्रीमद्भागवते दशमस्कन्धेपूर्वार्धे नेपाली भाषाटीकां चत्वारिंशोऽध्यायः ॥ ४० ॥

( श्रीकृष्णको मथुरा प्रवेश ) शुकदेवजी भन्दछन्–हे राजन् ! यसरी स्तुति गर्ने अक्रूरलाई जलभित्र आफ्नो अनुपम रूप देखाएर भगवान्ले नाट्यवेषधारी नटुवा जस्तै त्यसलाई फेरि लुकाए ॥ १ ॥ त्यस रूपलाई अन्तर्धान भएको देखेर अक्रूर जलबाहिर निस्केर झट्ट आवश्यक कार्य समाप्त पारी छक्कपर्दै रथमा फर्केर आए ॥२॥ त्यहाँ कृष्ण भगवान्ले भन्नु भयो—'हे अक्रूरजी ! के हजुरले पृथ्वी, आकाश, वा जलमा कुनै विचित्र कुरा देख्नुभयो ! किनकि हजुरको आकृतिले त्यस्तै प्रकट गरिरहेको छ' ॥ ३ ॥ उनले भने–हे प्रभो ! पृथ्वी, आकाश र जलमा जति अद्भुत पदार्थ छन्, हजुर सर्वस्वरूपलाई देखेपछि तीमध्ये मैले नदेखेको कुनै पदार्थ बाँकी रहन्न ॥ ४ ॥ पृथ्वी, आकाश वा जलमा जति अद्भुत पदार्थ छन्, ती सबै हजुरमै विराजमान छ । अतः हे विभो ! हजुरलाई देखेपछि मैले हजुर बाहेक अरु के अद्भुत वस्तु देखे हुँला ॥ ५ ॥ भगवानसित यति भनेर ती गान्दिनी-पुत्र अक्रूरले

श्रीशुक उवाच ॥ स्तुवतस्तस्य भगवान्दर्शयित्वा जले वपुः ॥ भूयः समाहरत्कृष्णो नटो नाट्यमिवात्मनः ॥१॥ सोऽपि चान्तर्हितं वीक्ष्य जलादुन्म-ज्ज्य सत्वरः ॥ कृत्वा चावश्यकं सर्वं विस्मितो रथमागमत्॥२॥तमपृच्छद्धृषीकेशः किं ते दृष्टमिवाद्भुतम्॥भूमौ वियति तोये वा तथा त्वां लक्षयामहे॥३॥ अक्रूर उवाच ॥ अद्भुतानीह यावन्ति भूमौ वियति वा जले ॥त्वयि विश्वात्मके तानि किं मेऽदृष्टं विपश्यतः॥४॥यत्राद्भुतानि सर्वाणि भूमौ वियतिवाजले॥ तं त्वानुपश्यतो ब्रह्मन्किं मेऽदृष्टमिहाद्भुतम्॥५॥ इत्युक्त्वा चोदयामास स्यन्दनं गान्दिनीसुतः ॥ मथुरामनयद्रामं कृष्णं चैव दिनात्यये ॥६॥ मार्गे ग्राम-जना राजंस्तत्र तत्रोपसंगताः ॥ वसुदेवसुतौ वीक्ष्य प्रीता दृष्टिं न चाददुः ॥७॥ तावद्व्रजौकसस्तत्र नन्दगोपादयोऽग्रतः ॥ पुरोपवनमासाद्य प्रतीक्षन्तो-ऽवतस्थिरे ॥८॥ तान्समेत्याह भगवानक्रूरं जगदीश्वरः ॥ गृहीत्वा पाणिना पाणिं प्रश्रितं प्रहसन्निव ॥ ९ ॥ भवान्प्रविशतामग्रे सहयानः पुरीं गृहम् ॥ वयं त्विहावमुच्याथ ततो द्रक्ष्यामहे पुरीम् ॥ १० ॥ अक्रूर उवाच ॥ नाहं भवद्भ्यां रहितः प्रवेक्ष्ये मथुरां प्रभो ॥ त्यक्तुं नार्हसि मां नाथ भक्तं ते भक्तवत्सल ॥ ११ ॥ आगच्छ याम गेहान्नः सनाथान्कुर्वधोक्षज ॥ सहाग्रजः सगोपालैः सुहृद्भिश्च सुहृत्तम ॥ १२ ॥ पुनीहि पादरजसा गृहान्नो गृहमेधिनाम् ॥ यच्छौचेनानुतृप्यन्ति पितरः साग्नयः सुराः ॥१३॥ अवनिज्यांघ्रियुगलमासीच्छ्लोक्यो बलिर्महान् ॥ ऐश्वर्यमतुलं लेभे गतिं चैका-

आफ्नू रथ हिंडाए र सायंकालको बेला राम र कृष्णलाई लिएर मथुरापुरी पुगे ॥ ६ ॥ हे राजन् ! बाटोमा जहाँ-तहाँ भेटिने ग्रामीण वसुदेव देवकीका बालक दुबैलाई देखेर उनको रूपमाधुरीले आनन्दित भएर उनको तर्फबाट आफ्नो दृष्टि फर्काइरहेका थिएनन् ॥ ७ ॥ नन्दादि व्रजवासी गोपगण राम-कृष्ण पुग्नुभन्दा पहिले नै मथुरा पुगिसकेका थिए र नगर बाहिर उपवनमा बसेर तिनको प्रतीक्षा गरिरहेका थिए । तिनको नजीक पुगेपछि–जगत्पति भगवान् कृष्णले अक्रूरको हात समातेर मुसु-मुसु हाँस्तै नम्र वाणीमा भने—॥ ९ ॥ हजुर रथ लिएर नगरमा प्रवेश गर्दै घर जानुहवस् । हामी एकछिन यहाँ बसेर नगरको शोभा हेर्न निस्कनेछौं' ॥ १० ॥ उनले हात जोरेर भने—हे प्रभो ! म हजुरलाई नलिई एक्लै मथुरामा जान सक्तिन हे भक्तवत्सल ! म हजुरको भक्त हुँ । हे नाथ ! हजुर मलाई नछाड्नुहवस् ॥ ११ ॥ हे अधोक्षज ! आउनोस्, संगै जाऊँ । हे सुहृत्तम ! दाजु बलराम र सखा

1030

ग्वालबाल सहित गएर मेरो घर सनाथ तुल्याउनोस् ॥ १२ ॥ हे नाथ ! हजुर हामी गृहस्थका घरलाई आफ्ना ती चरणरजले पवित्र पार्नोस्, जुन चरण पखालिएको जल अर्थात् गङ्गा-देखि अग्निहरूसहित पितृगण र सबै देवता तृप्त हुन्छन् ॥१३॥ हे प्रभो ! हजुरका चरणयुगल पखाल्नाले नै राजा बलि परमयशस्वी भएका थिए र उनलाई अतुल ऐश्वर्य एवं हजुरका अनन्य भक्तगणलाई प्राप्त हुने योग्य गति प्राप्त भएको थियो ॥१४॥ हजुरका चरण जलले तीनैलोक पवित्र पारेको छ। त्यो शिवजी पनि आफ्नू माथमा धारण गर्दछन् र उनैको स्पर्श हुनाले सगरका सबै पुत्र स्वर्गलोक गएका थिए ॥ १५ ॥ हे देवदेव ! हे पुण्यश्रवणकीर्तन ! हे यदुश्रेष्ठ ! हे पुण्यकीर्ते ! हे नारायण ! हजुरलाई अनेकशः नमस्कार छ ॥ १६ ॥ भगवान् भन्नुहुन्छ—म यदुवंशको द्रोही कंसलाई मारेर दाजूको साथै हजुरको घर अवश्य आउनेछु र आफ्ना सुहृद्हरूको भलो गर्नेछु ॥ १७ ॥ श्रीशुकदेव भन्दछन्—भगवानले यसरी भने पछि अक्रूर गान्हो मानेर मथुरामा प्रवेश गरे र कंसलाई राम-कृष्ण आगमनको समाचार सुनाएर आफ्नू घर गए ॥ १८ ॥ अनि सङ्कर्षण सहित भगवान् श्रीकृष्णले अपराह्णकालमा

न्तिनां तु या ॥ १४ ॥ आपस्तेंऽघ्रयवनेजन्यस्त्रींलोकाञ्छुचयोऽपुनन् ॥ शिरसाऽधत्त याः शर्वः स्वर्याताः सगरात्मजाः ॥ १५ ॥ देवदेव जगन्नाथ पुण्यश्रवणकीर्तन ॥ यदूत्तमोत्तमश्लोक नारायण नमोऽस्तु ते ॥ १६ ॥ श्रीभगवानुवाच ॥ आयास्ये भवतो गेहमहमार्यसमन्वितः ॥ यदुचक्रद्रुहं हत्वा वितरिष्ये सुहृत्प्रियम् ॥१७॥ श्रीशुक उवाच ॥ एवमुक्तो भगवता सोऽक्रूरो विमना इव ॥ पुरीं प्रविष्टः कंसाय कर्मावेद्य गृहं ययौ ॥ १८ ॥ अथापराह्णे भगवान्कृष्णः संकर्षणान्वितः ॥ मथुरां प्राविशद् गोपैर्दिदृक्षुः परिवारितः ॥१९॥ ददर्श तां स्फाटिकतुङ्गगोपुरद्वारां बृहद्धेमकपाटतोरणाम् ॥ ताम्रारकोष्ठां परिखादुरासदामुद्यानरम्योपवनोपशोभिताम् ॥ २० ॥ सौवर्णशृङ्गाटकहर्म्यनिष्कुटैः श्रेणीसभाभिर्भवनैरुपस्कृताम् ॥ वैदूर्यवज्रामलनील-विद्रुमैर्मुक्ताहरिद्भिर्वलभीषु वेदिषु ॥ २१ ॥ जुष्टेषु जालामुखरन्ध्रकुट्टिमेष्वाविष्टपारावतबर्हिनादिताम् ॥ संसिक्तरथ्यापणमार्गचत्वरां प्रकीर्णमाल्यां-कुरलाजतण्डुलाम् ॥ २२ ॥ आपूर्णकुम्भैर्दधिचन्दनोक्षितैः प्रसूनदीपावलिभिः सपल्लवैः ॥ सवृन्दरम्भाक्रमुकैः सकेतुभिः स्वलंकृतद्वारगृहां सपट्टिकैः ॥२३॥ तां सम्प्रविष्टौ वसुदेवनन्दनौ वृतौ वयस्यैर्नरदेववर्त्मना ॥ द्रष्टुं समीयुस्त्वरिताः पुरस्त्रियो हर्म्याणि चैवारुरुहुर्नृपोत्सुकाः ॥ २४ ॥ काश्चि-

मथुरापुरी हेर्न गोपालहरू सहित नगरमा प्रवेश गरे ॥१९॥ त्यहाँ भगवान्ले देख्नुभयो—नगरका अग्ला-अग्ला द्वार स्फटिकका बनेका छन्। तिनमा सुनका ठूला-ठूला फाटकहरू लगाइएका छन् र उत्सवले गर्दा सबैतिर ध्वजा पताका झुण्ड्याइएका छन्। धान्यागार र कोष तामा र पीतलले मोरेका छन्। नगरका सबैतिर नगरका चारैतिर गौंटा खाडल खनिएको थियो, जसले शत्रु आउन सक्तैनथे। त्यो पुरी सबैतिरबाट सुरम्य उपवनले सुशोभित थियो ॥ २० ॥ सुनको चौबाटो, धनिकहरूका महल, महलका बगैंचा तथा श्रेणीबद्ध सभाभवन र अन्यान्य भवन नगरको शोभा बढाइरहेका थिए। वैदूर्य, वज्र, नीलमणि, विद्रुम, मोती र हीरा जडिएका वेदी, आँखीझ्याल एवं दलान आदि झगमगाइरहेका छन्। तिनको स्थान-स्थानमा परेवा, मयूरआदिपक्षी थरि-थरिका बोली बोलीरहेछन्। गल्ली, बजार, मूलबाटो र चौतारामा जल छर्केको थर जहाँ-जहाँ फूलका माला, दूध, लावा र चामल राखिएका छन् ॥ २१'२२ ॥ सबै भवनमा मूल द्वार जल र दहीले भरिएका र चन्दन चर्चित कलश, पुष्प, धूप, दीप, नवपल्लव,

फल सहित केराका वृक्ष, सुपारीका वृक्ष र समाना झण्डा सबै रेशमी वस्त्रले राम्ररी सजिएका छन् ॥ २३ ॥ हे राजन् ! मथुरापुरी पुगेका वसुदेवनन्दन राम र कृष्ण जब आफ्ना सखाहरूसित राजमार्गबाट आनलागे, तब उनलाई हेर्न नगरका नारीहरू एकत्रित भएर ठूलो उत्सुकताले आफ्आफ्ना महलको कौशीमा उक्ले ॥ २४ ॥ आतुरीले गर्दा कोही उल्टो वस्त्राभूषण लगाएर, कोही दुइ-दुइ लगाइने आभूषण मध्ये यौटा मात्र लगाएर, कोही यौटै कानको छेउमा पत्र रचना गरेर, कोही यौटै खुट्टामा नूपुर लगाएर; कोही यौटै आँखामा गाजल लगाएर आर्को आँखामा नलगाई दगुरे ॥२५॥ केही भामिनीहरू खान लागेका थिए, ती उत्साहले गर्दा हातको गाँस छाडेर हिंडे कोही धुक्रुवा घस्न लाउँदै थिए, तर स्नान नगरे नै दगुरेर । यसै प्रकार जो निदाएका थिए, ती कोलाहल सुनेर जुरुक्क उठी तत्काल हिंडे । जो बालकलाई दूध ख्वाउँदै थिए, ती बालकलाई त्यसै छाडेर हिंडे ॥२६॥ मस्त गजराज झैं पराक्रमी कमलनयन कृष्णले आफ्नू रमारमण श्याम शरीरले त्यहाँका पुरवासीहरूको नेत्र आनन्दित पार्दै आफ्नू विलासमयी प्रगल्भ हाँसो र हेराईले तिनको चित्त बलपूर्वक हरिलिए ॥ २७ ॥ हे शत्रुदमन ! धेरै दिनदेखि श्रीकृष्णसम्बन्धी कुरा सुनिरहनाले तिनको चित्त चंचल भइरहेको थियो ।

द्विपर्यग्धृतवस्त्रभूषणा विस्मृत्य चैकं युगलेष्वथापराः ॥ कृतैकपत्रश्रवणैकनूपुरा नाङ्क्त्वा द्वितीयं त्वपराश्च लोचनम् ॥२५॥ अश्नन्त्य एकास्तद्-पास्य सोत्सवा अभ्यज्यमाना अकृतोपमज्जनाः ॥ स्वपन्त्य उत्थाय निशम्य निःस्वनं प्रपाययन्त्योऽर्भमपोह्य मातरः ॥२६॥ मनांसि तासामरविन्द-लोचनः प्रगल्भलीलाहसितावलोकैः ॥ जहार मत्तद्विरदेन्द्रविक्रमो दृशां ददच्छ्रीरमणात्मनोत्सवम् ॥ २७ ॥ दृष्ट्वा मुहुः श्रुतमनुद्रुतचेतसस्तं तत्प्रेक्षणो-त्स्मितसुधोक्षणलब्धमानाः ॥ आनन्दमूर्तिमुपगुह्य दृशात्मलब्धं हृष्यत्त्वचो जहुरनन्तमरिन्दमाधिम् ॥ २८ ॥ प्रासादशिखरारूढाः प्रीत्युत्फुल्लमु-खाम्बुजाः ॥ अभ्यवर्षन्सौमनस्यैः प्रमदा बलकेशवौ ॥ २९ ॥ दध्यक्षतैः सोदपात्रैः स्रग्गन्धैरभ्युपायनैः ॥ तावानर्चुः प्रमुदितास्तत्र तत्र द्विजा-तयः ॥ ३० ॥ ऊचुः पौरा अहो गोप्यस्तपः किमचरन्महत् ॥ या ह्येतावनुपश्यन्ति नरलोकमहोत्सवौ ॥ ३१ ॥ रजकं कञ्चिदायान्तं रङ्गकारं गदाग्रजः ॥ दृष्ट्वाऽयाचत वासांसि धौतान्यत्युत्तमानि च ॥ ३२ ॥ देह्यावयोः समुचितान्यङ्ग वासांसि चार्हतोः ॥ भविष्यति परं श्रेयो दातुस्ते नात्र

आज उनलाई देखेर तथा उनको रूपको हास्य-सुधाले सिंचित भएर ती कृतकृत्य भए । त्यो आनन्दमयी तथा मनोहर मूर्ति आफ्ना नयनपथबाट हृदयमा पसालेर त्यसको आलिंगन गरे र पुलकित भई अनन्त विरहव्यथाबाट मुक्त भए ॥ २८ ॥ अत्यन्त हर्षले जसका मुखकमल फक्रेका थिए, ती मथुराका नारीहरू आफ्ना घरको अटालीमा उक्लेर बलराम र कृष्णमाथि पुष्पवर्षा गर्नलागे ॥ २९ ॥ जताततै ब्राह्मणादि द्विजातिहरूले दही, अक्षता र जलले भरिएका पात्र, फूलका माला एवं चन्दनादि सामग्रीले ती दुवै दाजू भाईको अत्यन्त हर्षले पूजा गरे ॥३०॥ प्रभुलाई देखेर सबै पुरवासी भन्नलागे—'अहो ! व्रजका गोपिनीहरूले यस्तो कुन तप गरेका थिए, जसले ती मनुष्यमात्रलाई आनन्दित पार्ने यी दुवै मनोहर मूर्ति दिनहुँ देख्दछन्' ॥३१॥ उसै बेला यौटा धोबी जो लुगा रंगाउने काम गर्दथ्यो, आफूतिर आउन लागेको देखियो । भगवान् कृष्णले त्यासित अति उत्तम धोएका लुगा मागे ॥ ३२ ॥ भगवान्ले भने—हे भाई ! तिमी हामीलाई ठिक्क हुने केही वस्त्र देऊ । यी लुगा हामीहरूकै योग्य छन् । हामीलाई लुगाहरू दिनाले तिम्रा

कल्याण हुनेछ–यसमा कुनै सन्देह छैन' ॥३३॥ त्यो रजक राजाको सेवक हुनाले निकै अभिमानी थियो। अतः पूर्णकाम भगवान् कृष्णले वस्त्र मागेपछि रिसाएर आक्षेप गर्दै भन्यो–॥३४॥ 'तिमी पहाड़ र वनमा डुल्ने ग्वाला के सधैं यस्तो लुगा लगाउँथ्यौ ? ए, यता अघिसरेर किन आइरहेछौ ? तिमी त राजाका लुगा लगाउन खोजिरहेका छौ ? ॥ ३५ ॥ ए मूर्ख हो ! जाओ, यदि बाँच्न मन छ भने फेरि यस्ता वस्त्र कहिल्यै नमाग्नु ! हेर, तिमी जस्ता उद्धत व्यक्तिलाई राजकर्मचारी बेसरी बाँधेर कुट्तछन् र तिनीसित जे भएको सबै वस्तु खोसेर धपाइदिन्छन्' ॥३६॥ यस प्रकार धाक लगाउने त्यो रजकप्रति कुपित भएर भगवान् देवकीनन्दनले आफ्नू हातको अग्रभाग ( नङ ) ले त्यसको शिर काटेर धड्बाट छुट्याइदिए ।।३७।। त्यसको स्थिति देखेर जो धोबी त्यसको आश्रित रहेर आफ्नू आजीविका चलाइरहेथे, ती सबै लुगाको पोको त्यहीं फालेर यता उता भागेर गए। अनि भगवान्‌ले ती सबै लुगा लिए ॥ ३८ ॥ श्रीकृष्ण र बलरामले तीमध्ये आफूलाई मनपरेका लुगा लगाए र जो बच्यो, गोपालहरूलाई दिए र केही त्यहीं छाडेर हिंडे ॥ ३९ ॥ अलि

संशयः ॥ ३३ ॥ स याचितो भगवता परिपूर्णेन सर्वतः ॥ साक्षेपं रुषित प्राह भृत्यो राज्ञः सुदुर्मदः ॥ ३४ ॥ ईदृशान्येव वासांसि नित्यं गिरिवने· चराः ॥ परिधत्त किमुद्वृत्ता राजद्रव्याण्यभीप्सथ ॥ ३५ ॥ याताशु बालिशा मैवं प्रार्थ्यं यदि जिजीविषा ॥ बध्नन्ति घ्नन्ति लुम्पन्ति दृप्तं राजकुलानि वै ॥ ३६ ॥ एवं विकत्थमानस्य कुपितो देवकीसुतः ॥ रजकस्य कराग्रेण शिरः कायादपातयत् ॥ ३७ ॥ तस्यानुजीविनः सर्वे वासःकोशान्विसृज्य वै दुद्रुवुः सर्वतो मार्गं वासांसि जगृहेऽच्युतः ॥ ३८ ॥ वसित्वात्मप्रिये वस्त्रे कृष्णः संकर्षणस्तथा ॥ शेषाण्यादत्त गोपेभ्यो विसृज्य भुवि कानिचित् ॥ ३९ ॥ ततस्तु वायकः प्रीतस्तयो र्वेषमकल्पयत् ॥ विचित्रवर्णैश्चैलेयैराकल्पैरनुरूपतः ॥ ४० ॥ नानालक्षणवेषाभ्यां कृष्णरामौ विरेजतुः ॥ स्वलंकृतौ बालगजौ पर्वणीव सितेतरौ ॥ ४१ ॥ तस्य प्रसन्नो भगवान्प्रादात्सारूप्यमात्मनः ॥ श्रियं च परमां लोके बलैश्वर्यस्मृतीन्द्रियम् ॥ ४२ ॥ ततः सुदाम्नो भवनं मालाकारस्य जग्मतुः ॥ तौ दृष्ट्वा स समुत्थाय ननाम शिरसा भुवि ॥ ४३ ॥ तयोरासनमानीय पाद्यं चार्घ्यार्हणादिभिः ॥ पूजां सानुगयोश्चक्रे स्रक्ताम्बूलानुलेपनैः ॥ ४४ ॥ प्राह नः सार्थकं जन्म पावितं च कुलं प्रभो ॥ पितृदेवर्षयो मह्यं तुष्टा ह्यागमनेन वाम् ॥ ४५ ॥ भवन्तौ किल विश्वस्य जगतः कारणं परम् ॥ अवतीर्णाविहांशेन क्षेमाय च भवाय च ॥ ४६ ॥ न हि वां

अघि गएपछि यौटा सूजीकार भेटियो। त्यसले उनको अनुपम रूपमा मुग्ध भएर थिरि-थरिका लुगाको सजावटले तिनको निकै राम्रो वेष बनाइदियो ॥४०॥ ती वस्त्रले विभूषित राम र कृष्ण उत्सवको मौकामा राम्ररी सजाइएका श्वेत र श्याम वर्णका दुइ बाल्य अवस्था हुने हात्ती देखिनलागे ॥४१॥ भगवान्‌ले त्यो सूजिकारमाथि प्रसन्न भएर उसैं परलोकमा सारूप्य मुक्ति दिए र यस लोकमा अत्यधिक धन, बल, ऐश्वर्य, स्मृति र कहिल्यै शिथिल नहुने इन्द्रिय शक्ति दिए ॥४२॥ यसरी डुल्दै ती सुदामा नामको मालीको घरमा पुगे। भगवान् कृष्ण र बलरामलाई देखेर सुदामा झट्ट उठिएर र पृथ्वीमा शिर न्युराएर प्रणाम गरे ॥ ४३ ॥ अनि उनलाई आसन दिएर ग्वाल-बाल सहित दुवै दाजु-भाईको पाद्य, अर्घ्य, माला, पान र चन्दनादिले पूजा गरे ॥ ४४ ॥ उनले भने–'हे प्रभो ! हजुर आइदिनाले मेरो जन्म सफल भयो र कुल पनि पवित्र भयो। हाम्रा पितृगण, ऋषिगण र

देवगण मप्रति सन्तुष्ट भए ॥ ४५ ॥ हजुर समस्त संसारका परमकारण हुनुहुन्छ । हजुर संसारको कल्याणार्थ र उन्नतिको निम्ति नै आफ्ना कलाले पृथ्वीमा अवतीर्ण हुनुभएको छ ॥ ४६ ॥ यद्यपि हजुर भजन गर्नेलाई नै भज्नु हुन्छ तापनि हजुरमा विषम दृष्टि छैन, किनकि हजुर जगत्का परम सुहृद् र आत्मा हुनुहुन्छ । हजुरको दृष्टिमा सबै जीव समान छन् ॥ ४७ ॥ हे राजेन्द्र ! म हजुरको दास हुँ ! हजुर मलाई आज्ञा दिनोस म हजुरको के सेवा गरूँ ? हे भगवन् ! हजुरको आज्ञा पालन गर्ने अवसर पाइयोस्. यही जीवप्रति सबभन्दा ठूलो दया हो ?' ॥४८॥ हे राजेन्द्र ! यति भनेर सुदामाले प्रभुको अभिप्राय जाने र उनलाई प्रसन्न मनले सुगन्धित फूलले बनेका माला लगाइदिए ॥ ४९ ॥ सखा ग्वाल-बालका साथै राम्ररी अलंकृत भएर वरदायक श्रीकृष्णचन्द्र र बलरामले प्रसन्न भएर विनीत र शरणागत सुदामासित माग्नको निम्ति भने ॥ ५० ॥ अनि सुदामाले ती सर्वात्मा श्रीहरिमा अचला भक्ति, उनका भक्तहरूमा प्रेम र समस्त जीवका प्रति दयाको वर मागे ॥ ५१ ॥ उसले मागेको वर र संगसंगै सन्तान-वृद्धि गर्ने लक्ष्मी, बल, आयु, यश र कान्ति आदि दिएर दाजु

विषमा दृष्टिः सुहृदोर्जगदात्मनोः ॥ समयोः सर्वभूतेषु भजन्तं भजतोरपि ॥ ४७ ॥ तावाज्ञापयतं भृत्यं किमहं करवाणि वाम् ॥ पुंसोऽत्यनुग्रहो ह्येष भवद्भिर्यन्नियुज्यते ॥ ४८ ॥ इत्यभिप्रेत्य राजेन्द्र सुदामा प्रीतमानसः ॥ शस्तैः सुगन्धैः कुसुमैर्मालां विरचितां ददौ ॥ ४६ ॥ ताभिः स्वलंकृतौ प्रीतौ कृष्णरामौ सहानुगौ ॥ प्रणताय प्रपन्नाय ददतुर्वरदो वरान् ॥ ५० ॥ सोऽपि वव्रेऽचलां भक्तिं तस्मिन्नेवाखिलात्मनि ॥ तद्भक्तेषु च सौहार्दं भूतेषु च दयां पराम् ॥ ५१ ॥ इति तस्मै वरं दत्त्वा श्रियं चान्वयवर्धिनीम् ॥ बलमायुर्यशः कान्तिं निर्जगाम सहाग्रजः ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे पुरप्रवेशो नाम एकचत्वारिंशोऽध्यायः ॥ ४१ ॥

श्रीशुक उवाच ॥ अथ व्रजन्राजपथेन माधवः स्त्रियं गृहीतांगविलेपभाजनाम् ॥ विलोक्य कुब्जां युवतीं वराननां पप्रच्छ यान्तीं प्रहसन्रसप्रदः ॥१॥ का त्वं वरोर्वेतदुहानुलेपनं कस्याङ्गने वा कथयस्व साधु नः ॥ देह्यावयोरङ्गविलेपमुत्तमं श्रेयस्ततस्ते न चिराद्भविष्यति ॥ २ ॥ सैरन्ध्र्युवाच ॥ दास्यस्म्यहं सुन्दर कंससम्मता त्रिवक्रनामा ह्यनुलेपकर्मणि ॥ मद्भावितं भोजपतेरतिप्रियं विना युवां कोऽन्यतमस्तदर्हति ॥ ३ ॥ रूपपेशलमाधुर्यहसितालापवीक्षितैः

बलरामसहित नन्दनन्दन त्यहाँबाट निस्कनु भयो ॥५२॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकरकृत 'बालिष्ठी' भाषाटीकायामेकचत्वारिंशोऽध्यायः ॥ ४१ ॥

( कुब्जामाथि कृपा, धनुर्भङ्ग र मल्लशालाको साजसज्जा ) शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! अनि भगवान् कृष्णले राजमार्गबाट गइरहेकी यौटी युवती स्त्रीलाई देख्नु भयो, जसको मुख सुन्दर थियो, तर त्यो कुब्जा ( बाङ्गी ) थिई । त्यो आफ्नू हातमा चन्दनको पात्र बोकेकी थिई । त्यसलाई देखेर प्रेमरस प्रदान गर्न भगवानले हाँस्तै सोधे–॥१॥ हे वरोरु ! तिमी को हौ ? यो चन्दन कसको निम्ति लगिरहेकी छौ ? हे कल्याणि ! मलाई सबै कुरा साँचो-साँचो भन । यो अत्युत्तम अनुलेप हामीलाई पनि देऊ, यसले तत्काल तिम्रो कल्याण हुनेछ' ॥ २ ॥ सैरन्ध्रीले भनी–हे सुन्दर ! म कंसकी प्रिय दासी हुँ, मेरो नाम त्रिवक्रा' हो । म राजाकहाँ चन्दन घोट्ने काम गर्दछु । मैले घोटेको चन्दन भोजराज कंसलाई मान्है मनपर्दछ, तर अब हजुरबाहेक अरु को यस चन्दनको सबभन्दा बढी उपयुक्त पात्र हुन सक्छ ? ॥३॥ यति भनेर कुब्जाले भगवानको रूप, सुकुमारता, माधुर्य र मधुर हास्ययुक्त

कुराकानी एवं सौन्दर्यमा मुग्ध भएर ती दुवै दाजु-भाइलाई त्यो उत्तम चन्दन अर्पण गरिदिइन् । अनि आफ्नू श्याम र गौरवर्णदेखि भिन्न पहेंलो र रक्तवर्णको अंगराग द्वारा नाभिदेखि माथिको भागमा अनुरंजित भएर श्रीकृष्ण र बलराम सार्है राम्रा देखिनलागे ।५।। भगवान्‌ले आफ्नू दर्शनको प्रत्यक्ष फल देखाउनको निम्ति तीन स्थानबाट बाङ्गी र सुन्दर मुख हुने कुब्जालाई सोझी पार्ने विचार गर्नुभयो ।।६।। त्यसलाई सपार्ने निश्चय गरेर भगवान्‌ले आफ्नू पाउले कुब्जाको खुट्टामा थिच्नु भयो र माथितिर उचालेका आफ्नू बाहुका दुइ औंला त्यसको चिउँडोमा लगाएर त्यसको शरीरलाई मास्तिर उचालिदिनुभयो ।।७।। त्यतिले नै उसका सबै अंग सोझा भए । श्रीमुकुन्दको करस्पर्शले त्यो तत्काल विशाल नितम्ब र पीन पयोधरले युक्त यौटी उत्तम नारी बन्नलाई ।।८।। रूप, गुण र उदारताले सम्पन्न भएपछि कुब्जाको हृदयमा प्रेम उत्पन्न भयो र उसले भगवानको ओढ्नेको छेउ समातेर हाँस्तै भनी–।।९।। हे वीर! आउनोस् घर-जाऔं । अब म हजुरलाई यहाँ छाड्न सक्तिन, किनकि हजुरले मनमा खलबली उत्पन्न गरिदिनुभयो । हे पुरुषश्रेष्ठ ! हजुर यो दासीमाथि प्रसन्न हुनुहवस'।। १०।। बलराम-

धर्पितात्मा ददौ सान्द्रमुभयोरनुलेपनम् ।।४।। ततस्तावङ्गरागेण स्ववर्णेतरशोभिना ।। सम्प्राप्तपरभागेन शुशुभातेऽनुरञ्जितौ ।।५।। प्रसन्नो भगवान्कुब्जां त्रिवक्रां रुचिराननाम् ।। ऋज्वीं कर्तुं मनश्चक्रे दर्शयन्दर्शने फलम् ।। ६ ।। पद्भ्यामाक्रम्य प्रपदे द्व्यङ्गुल्युत्तानपाणिना ।। प्रगृह्य चिबुकेऽध्यात्ममुदनीनमदच्युतः ।।७।। सा तदर्जुसमानाङ्गी बृहच्छ्रोणिपयोधरा ।। मुकुन्दस्पर्शनात्सद्यो बभूव प्रमदोत्तमा ।।८।। ततो रूपगुणौदार्यसम्पन्ना प्राह केशवम् ।। उत्तरीयान्तमाकृष्य स्मयन्ती जातहृच्छया ।।९।। एहि वीर गृहं यामो न त्वां त्यक्तुमिहोत्सहे ।। त्वयोन्मथितचित्तायाः प्रसीद पुरुषर्षभ ।।१०।। एवं स्त्रिया याच्यमानः कृष्णो रामस्य पश्यतः ।। मुखं वीक्ष्यानु गोपानां प्रहसंस्तामुवाच ह ।। ११ ।। एष्यामि ते गृहं सुभ्रूः पुंसामाधिविकर्शनम् ।। साधितार्थोऽगृहाणां नः पान्थानां त्वं परायणम् ।। १२ ।। विसृज्य माध्व्या वाण्या तां व्रजन्मार्गे वणिक्पथैः ।। नानोपायनताम्बूलस्रग्गन्धैः साग्रजोऽर्चितः ।। १३ ।। तद्दर्शनस्मरक्षोभादात्मानं नाविदन्स्त्रियः ।। विस्रस्तवासःकबरवलयालेख्यमूर्तयः ।। १४ ।। ततः पौरान्पृच्छमानो धनुषः स्थानमच्युतः ।। तस्मिन्प्रविष्टो ददृशे धनुरैन्द्रमिवाद्भुतम् ।। १५ ।। पुरुषैर्बहुभिर्गुप्तमर्चितं परमर्द्धिमत् ।। वार्यमाणो नृभिः कृष्णः प्रसह्य धनुराददे

जीको साम्मुन्ने त्यस रमणीले त्यसरी प्रार्थना गरेपछि भगवानले गोपहरूको मुखतर्फ हेर्दै हाँसेर भन्नुभयो ।।११।। हे सुभ्रु ! म आफ्नू काम पूरा गरेर पुरुषको मनोव्यथा निवारण गर्ने तिम्रो घर अवश्य आउने छु । हामी जस्ता निराश्रय बटुवाको निम्ति तिमी परमाश्रय हौ' ।।१२।। यसरी मधुर वाणीले उसलाई बिदा गरेर भगवान हिड्नु भयो । अब व्यापारीहरूको बजारमा पुग्नुभयो तब राम-कृष्ण दुबैको पान-माला र चन्दनादिले राम्ररी पूजा भयो ।।१३।। केवल उनको दर्शनले नै प्रेमको आवेग बढ्नाले स्त्रीगणलाई आफ्नो शरीरको पनि सुद्दि रहन सक्तैनथ्यो । उनका वस्त्र केशबन्धन र कंकण खुकुला भए र ती चित्रलिखित मूर्ति जस्तै नयाँलिकन उभिइरहे ।। १४ ।। त्यसपछि पुरवासीहरूसँग धनुषको स्थान सोधेर श्रीकृष्ण रङ्गशालामा पुगे र त्यहाँ इन्द्रधनुष झैं यौटा विचित्र धनुष राखेको देखे ।।१५।। त्यो धनुष अनेक रक्षकले सुरक्षित विशाल वैभवशाली थियो कृष्णले रक्षकद्वारा रोक्ता-रोक्तै पनि बलपूर्वक धनुष उचाले र जस्तै कुनै पराक्रमी हात्ती उखुको लाँका भाँचिदिन्छ, त्यसै गरी भगवान्‌ले सबैको साम्मुन्ने धनुष बायाँ हातले उठाएर ताँदो चढाउँदै पलमा तानेर दुइ टुक्रा

पारिदिए ॥१६॥१७॥ धनुष भाँचिएको शब्दले आकाश, पृथ्वी र दशै दिशा प्रतिध्वनित भयो । त्यो सुनेर कंसलाई ठूलो डर लाग्न लाग्यो ॥ १८ ॥ धनुषका रक्षक आततायी असुर
आफ्ना अनुचर सहित साह्रै रिसाएर उनलाई समाउने इच्छाले–'पक्र, झट्ट बाँध' भन्दो भनेर कोलाहल मच्याउन लागे ॥१९॥ तिनको दूषित इच्छा जानेर श्रीबलराम तथा कृष्णलाई
पनि रिस उठ्यो र ती धनुषका दुवै टुक्रा लिएर तिनलाई कुट्न लागे ॥२०॥ यसरी कंसले पठाएका सबै सेना विध्वंश पारेर ती धनुषशालाबाट बाहिर निस्केर आए र आनन्द-
पूर्वक मथुरापुरीको शोभा हेर्दै डुल्नलागे ॥२१॥ ती दुवै भाइका अद्भुत पराक्रम, प्रचण्डतेज र प्रगल्भता एवं अनुपम रूप देखेर पुरवासीहरूले उनलाई कुनै ठूला देवता
नै ठाने ॥२२॥ यस प्रकार कृष्ण र बलराम स्वेच्छापूर्वक नगरमा डुलिरहेकै थिए–सूर्यास्त भयो। अनि गोपालले घेरिएका गोविन्द र बलराम मथुरापुरीको बाहिरतिर आफ्नू
डेरामा, जहाँ गाडा उभ्याइएका थिए, फर्केर आए ॥२३॥ आफूलाई मनपराउने ब्रह्मादिक अन्य देवताहरूले·छाडेर स्वयं लक्ष्मी जसको निश्चल भावले भज्दछिन्, ती भगवान् कृष्णका

॥ १६ ॥ करेण वामेन सलीलमुद्धृतं सज्यं च कृत्वा निमिषेण पश्यताम् ॥ नृणां विकृष्य प्रबभञ्ज मध्यतो यथेक्षुदण्डं मदकर्युरुक्रमः ॥ १७ ॥
धनुषो भज्यमानस्य शब्दः खं रोदसी दिशः ॥ पूरयामास यं श्रुत्वा कंसस्त्रासमुपागमत् ॥ १८ ॥ तद्रक्षिणः सानुचराः कुपिता आततायिनः ॥
ग्रहीतुकामा आवव्रुर्गृह्यतां बध्यतामिति ॥ १९ ॥ अथ तान्दुरभिप्रायान्विलोक्य बलकेशवौ ॥ क्रुद्धौ धन्वन आदाय शकले तांश्च जघ्नतुः ॥ २० ॥
बलं च कंसप्रहितं हत्वा शालामुखात्ततः ॥ निष्क्रम्य चेरतुर्हृष्टौ निरीक्ष्य पुरसम्पदः ॥ २१ ॥ तयोस्तदद्भुतं वीर्यं निशाम्य पुरवासिनः ॥ तेजः
प्रागल्भ्यं रूपं च मेनिरे विबुधोत्तमौ ॥ २२ ॥ तयोर्विचरतोः स्वैरमादित्योऽस्तमुपेयिवान् ॥ कृष्णरामौ वृतौ गोपैः पुराच्छकटमीयतुः ॥ २३ ॥
गोप्यो मुकुन्दविगमे विरहातुरा या आशासताऽऽशिष ऋता मधुपुर्यभूवन् ॥ सम्पश्यतां पुरुषभूषणगात्रलक्ष्मीं हित्वेतरान्नु भजतश्चकमेऽयनं श्रीः
॥ २४ ॥ अवनिक्ताङ्घ्रियुगलौ भुक्त्वा क्षीरोपसेचनम् ॥ ऊषतुस्तां सुखं रात्रिं ज्ञात्वा कंसचिकीर्षितम् ॥ २५ ॥ कंसस्तु धनुषो भङ्गं रक्षिणां स्वबलस्य
च ॥ वधं निशम्य गोविन्दरामविक्रीडितं परम् ॥२६॥ दीर्घप्रजागरो भीतो दुर्निमित्तानि दुर्मतिः ॥ बहून्यचष्टोभयथा मृत्योर्दौत्यकराणि च ॥ २७ ॥
अदर्शनं स्वशिरसः प्रतिरूपे च सत्यपि ॥ असत्यपि द्वितीये च द्वैरूप्यं ज्योतिषां तथा ॥ २८ ॥ छिद्रप्रतीतिश्छायायां प्राणघोषानुपश्रुतिः ॥ स्वर्ण-

अङ्गहरूको शोभा हेर्ने मथुरा निवासीको विषयमा भगवान्‌सित छुट्टिने बेलामा विरहातुर गोपिनीले जे जति भनेका थिए, ती सबै मधुपुरीमा अक्षरशः सत्य भए ॥२४॥ हे राजन् !
अनि हात-पाउ धोएर राम र कृष्णले दुग्ध-मिश्रित ( पायस आदि ) अन्न भोजन गरे र 'कंसको इच्छा के छ ?' यो जानेर रात्रि सानन्द सुते ॥२५॥ अब कंसले सुन्यो–राम र
र कृष्णले ख्याल-ख्यालमै धनुष भाँचिदिए र धनुषका रक्षक र मेरा सेनाको वध गरिदिए, तब भयवश रात्रिमा धेरै बेरसम्म सुत्न सकेन, त्यो दुर्मतिलाई सुत्दा र उठ्दा
पनि विविध मृत्युसूचक अपशकुन देखिए ॥२६॥२७॥ उसले देख्यो–जल वा ऐनामा उसको प्रतिबिम्ब देखिन्थ्यो तर टाउको थिएन । कुनै आड नभए पनि चन्द्रमा, तारा र
बत्ती आदिका ज्योति दुइ-दुइवटा भएर देखिन्थे । छायामा अनेक छिद्र देखिन्थे, कानमा प्राणको धू-धू शब्द सुनिन्नथ्यो, रूखको रङ्ग सुवर्ण झैं पहेंलो देखिन्थ्यो

1036

र बालुवा या हीलोमा खुट्टाका चिह्न देखिन्दैनथे ॥ २८॥२९ ॥ कंसले स्वप्नमा देख्यो—ऊ प्रेतसित अङ्कमाल गरेर गधा माथि चढेर हिंडीरहेको छु, विष भक्षण गर्दैछु र टाउकोदेखि खुट्टासम्म तेल पोतेर घाँटीमा जपाकुसुमको माला लगाई नाङ्गो शरीर एक्लै डुलिरहेको छ ॥३०॥ स्वप्न र जाग्रत्‌अवस्थामा उसले यस्तै अरु पनि अपशकुन देख्यो। चिन्ता र मृत्युको डरले उसलाई त्यो रात निद्रा लागेन ॥३१॥ कुनै प्रकारले रात बित्यो र सूर्यनारायण समुद्रको जलबाट माथि उठे। अनि हे कुरुनन्दन ! राजा कंसले मल्लयुद्धको उत्सव आरम्भ गरायो ॥३२। सेवकले रङ्ग-भूमिलाई राम्ररी सजाएका थिए। भेरी तुरही आदि बाजा बज्नलागे र पूरा मञ्च माला, पताका, झण्डा र तोरणादिले राम्ररी सजाइएको थियो ॥३३॥ त्यहाँ ब्राह्मण र क्षत्रिय आदि पुरवासी र जनपदवासी आफआफ्ना योग्यतानुसार बसे। सबै राजाहरू पनि आफआफ्ना आसनमा आएर बसे ॥३४॥ स्वयं राजा कंस आफ्ना मन्त्रीगणसित मण्डलेश्वरको माझमा राजसिंहासनमा बस्यो। त्यस बेला पनि त्यसको चित्त उद्विग्न थियो। अनि मल्लहरूले ताल ठोक्नाका साथै बाजाहरू

प्रतीतिर्वृक्षेषु स्वपादानामदर्शनम् ॥ २६ ॥ स्वप्ने प्रेतपरिष्वङ्गः खरयानं विषादनम् ॥ यायान्नलदमाल्येकस्तैलाभ्यक्तो दिगम्बरः ॥ ३० ॥ अन्यानि चेत्थंभूतानि स्वप्नजागरितानि च ॥ पश्यन्मरणसन्त्रस्तो निद्रां लेभे न चिन्तया ॥ ३१ ॥ व्युष्टायां निशि कौरव्य सूर्ये चाद्भ्यः समुत्थिते ॥ कारयामास वै कंसो मल्लक्रीडामहोत्सवम् ॥ ३२ ॥ आनर्चुः पुरुषा रङ्गं तूर्यभेर्यश्च जघ्निरे ॥ मञ्चाश्चालंकृताः स्रग्भिः पताकाचैलतोरणैः ॥ ३३ ॥ तेषु पौरा जानपदा ब्रह्मक्षत्रपुरोगमाः ॥ यथोपजोषं विविशू राजनश्च कृतासनाः ॥ ३४ ॥ कंसः परिवृतोऽमात्यै राजमञ्च उपाविशत् ॥ मण्डलेश्वरमध्यस्थो हृदयेन विदूयता ॥ ३५ ॥ वाद्यमानेषु तूर्येषु मल्लतालोत्तरेषु च ॥ मल्लाः स्वलंकृता दृप्ताः सोपाध्यायाः समामत ॥ ३६ ॥ चाणूरो मुष्टिकः कूटः शलस्तोशल एव च ॥ त आसेदुरुपस्थानं वल्गुवाद्यप्रहर्षिताः ॥ ३७ ॥ नन्दगोपादयो गोपा भोजराजसमाहुताः ॥ निवेदितोपायनास्त एकस्मिन्मञ्च आविशन् ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे मल्लरङ्गोपवर्णनं नाम द्विचत्वारिंशोऽध्यायः ॥ ४२ ॥

श्रीशुक उवाच ॥ अथ कृष्णश्च रामश्च कृतशौचौ परन्तप ॥ मल्लदुन्दुभिनिर्घोषं श्रुत्वा द्रष्टुमुपेयतुः ॥ १ ॥ रङ्गद्वारं समासाद्य तस्मिन्नागमवस्थितम् ॥ अपश्यत्कुवलयापीडं कृष्णोऽम्बष्ठप्रचोदितम् ॥ २ ॥ बद्ध्वा परिकरं शौरिः समूह्य कुटिलालकान् ॥ उवाच हस्तिपं वाचा

बज्न लागे र अभिमानी पहलवान राम्ररी सुसज्जित भएर आफआफ्ना शिक्षकसित रङ्गभूमिमा पुगे ॥३६॥ अनेक बाजका मधुर ध्वनिले उत्साहित चाणूर मुष्टिक, कूट, शल र तोशल आदि ठूला-ठूला मल्ल अखाडामा गएर बसे ॥३७। त्यसै बेला नन्दादि गोप कंसले डाकेर रङ्गभूमिमा आए र ल्याएको सौगात राजा कंसलाई समर्पण गरेर यौटा मञ्चमा गएर बसे ॥३८॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां द्विचत्वारिंशोऽध्यायः ॥४२॥

( कुवलयापीड-वध र राम-कृष्णको मल्लशालामा प्रवेश )—श्रीशुकदेव भन्नुहुन्छ—हे परन्तप ! बिहानै राम-कृष्ण नित्यक्रियाबाट निवृत्त भई मल्लहरूका ताल र बाजाहरूका शब्द सुनी मल्लक्रीडा हेर्न उत्सव-भवन हिंडे ॥१॥ रङ्गभूमिको द्वारमा पुगेर श्रीकृष्णले देखे—त्यहाँ माहुतेको प्रेरणाले कुवलयापीड हात्ती उभिएको छ ॥१॥ अनि वसुदेवनन्दन कृष्णले [illegible]

र घुँगुरिएको अलकावली सम्हारेर त्यो माहुतेलाई मेघ झैं गम्भीर वाणीमा भने–॥ ३ ॥ 'हे माहुते ! बाटो छाड, बाटोबाट हट । अबेर नगर, नभए म हात्तीसमेत तँलाई अहिल्यै यमपुरी पठाउने छु' ॥ ४ ॥ भगवान कृष्णले यसरी हप्काएपछि माहुते रिसाएर अन्तक, काल र यम समान त्यो भयङ्कर कुवलयापीड हात्तीलाई अंकुश प्रहारले कुपित पारेर ती दुवै भाइतिर बढायो ॥ ५ ॥ हात्तीले कृष्णतिर झम्टेर सूँडद्वारा उनलाई समात्यो, तर ती तत्काल फुत्के र एक मुड्की हिर्काएर हात्तीको खुट्टामुनि गएर लुके ॥६॥ भगवानलाई आफ्नू साम्नुन्ने नदेखेर कुवलयापीड निकै रिसायो र सुँघेर नै जान्नसक्ने त्यो गजराजले भगवानलाई सूँडले छामेर थाहा पायो तर फेरि बलपूर्वक भगवान छुटिगए ॥७॥ अनि भगवान त्यो महाबलवान् गजराजको पुच्छर समातेर, जसरी गरुडले सर्पलाई तान्दछन् त्यसै गरी पच्चीस धनुष अर्थात् सय हात परसम्म तानेर लगे ॥ ८ ॥ पुच्छर पक्रिएपछि फनफनी घुम्ने बाछोसित जसरी बालक घुम्दछ, त्यसै गरी दायाँ-बायाँतिर डल्दै हात्तीसित स्वयं पनि घुम्न लागे ॥ ९ ॥ एकाएक भगवानले हात्तीको साम्नुन्ने गएर त्यसलाई एक लबटा

मेघनादगभीरया ॥ ३ ॥ अम्बष्ठाम्बष्ठ मार्गं नौ देह्यपक्रम मा चिरम् ॥ नो चेत्सकुञ्जरं त्वाद्य नयामि यमसादनम् ॥ ४ ॥ एवं निर्भर्त्सि-तोऽम्बष्ठः कुपितः कोपितं गजम् ॥ चोदयामास कृष्णाय कालान्तकयमोपमम् ॥ ५ ॥ करीन्द्रस्तमभिद्रुत्य करेण तरसाऽग्रहीत् ॥ कराद्विगलितः सोऽमुं निहत्याङ्घ्रिष्वलीयत ॥ ६ ॥ संक्रुद्धस्तमचक्षाणो घ्राणदृष्टिः स केशवम् ॥ परामृशत्पुष्करेण स प्रसह्य विनिर्गतः ॥ ७ ॥ पुच्छे प्रगृह्यातिबलं धनुषः पञ्चविंशतिम् ॥ विचकर्ष यथा नागं सुपर्ण इव लीलया ॥ ८ ॥ स पर्यावर्तमानेन सव्यदक्षिणतोऽच्युतः ॥ बभ्राम भ्राम्य-माणेन गोवत्सेनेव बालकः ॥ ९ ॥ ततोऽभिमुखमभ्येत्य पाणिनाऽऽहत्य वारणम् ॥ प्राद्रवन्पातयामास स्पृश्यमानः पदे पदे ॥ १० ॥ स धावन्क्रीडया भूमौ पतित्वा सहसोत्थितः ॥ तं मत्वा पतितं क्रुद्धो दन्ताभ्यां सोऽहनत्क्षितिम् ॥ ११ ॥ स्वविक्रमे प्रतिहते कुञ्जरेन्द्रोऽत्यमर्षितः ॥ चोद्यमानो महामात्रैः कृष्णमभ्यद्रवद्रुषा ॥ १२ ॥ तमापतन्तमासाद्य भगवान्मधुसूदनः ॥ निगृह्य पाणिना हस्तं पातयामास भूतले ॥ १३ ॥ पतितस्य पदा-क्रम्य मृगेन्द्र इव लीलया ॥ दन्तमुत्पाट्य तेनेभं हस्तिपाँश्चाहनद्धरिः ॥ १४ ॥ मृतकं द्विपमुत्सृज्य दन्तपाणिः समाविशत् ॥ असन्यस्तविषाणोऽसृ-ङ्मदबिन्दुभिरङ्कितः ॥ विरूढस्वेदकणिकावदनाम्बुरुहो बभौ ॥ १५ ॥ वृतौ गोपैः कतिपयैर्बलदेवजनार्दनौ ॥ रङ्गं विविशतू राजन्गजदन्तवरा-

हिर्काए र पद-पदमा स्पृश्यमान भएर उसको वरिपरि दगुरेर त्यसलाई थकाउन लागे ॥ १० ॥ दगुर्दा दगुर्दै भगवान पृथ्वीमा लडे झैं गरेर तुरुन्त उठे । उनलाई ढलेका जानेर हात्ती रिसाई आफ्नू दाँतले पृथ्वीमा कठोर प्रहार गर्‍यो ॥ ११ ॥ आफ्नो आक्रमण व्यर्थ हुनाले कुवलयापीड साह्रै नै रिसायो र त्यो माहुतेको प्रेरणाले अतिशय क्रोध गरेर कृष्णचन्द्र माथि झम्टियो ॥१२ ॥ त्यो आउन लागेको देखेर भगवान् मधुसूदनले त्यसको सूँढ समातेर पृथिवीमा पछारिदिए ॥१३॥ ढलेको गजराजलाई खुट्टाले थिचेर भगवानले सिंह समान लीलाले नै त्यसका दुवै दाँत उखेले र तिनै दाँतको प्रहारले हात्ती र माहुतेलाई धराशायी पारिदिए ॥ १४ ॥ अनि मृत हात्तीलाई छाडेर भगवान कृष्णले हातमा दाँत लिएर रङ्गशालामा प्रवेश गरे । उनका काँधमा दाँत राखिएको थियो । उनको शरीर रगत र गजमदका थोपाले रंगिएको थियो । अनुहार पसीनाले भरिएको

थियो ॥१५॥ हे राजन् ! हातमा आयुधको रूपमा हात्तीको दाँत लिएर श्रीबलराम र कृष्ण ग्वाल-बाल सहित रङ्गभूमिमा प्रवेश गरेर ॥१६॥ आर्य बलरामका साथै रङ्गभूमिमा आएका कृष्ण मल्ललाई वज्र, मनुष्यलाई नररत्न, स्त्रीहरूलाई साक्षात् कामदेव, गोपगणलाई स्वजन, दुष्ट राजाहरूलाई शासक, पिता-मातालाई बालक, कंसलाई मृत्यु, अज्ञानीलाई विराट्, योगीहरूलाई परमतत्त्व र वृष्णिवंशी यादवहरूलाई इष्टदेवको रूपमा देखिए ॥१७॥ हे राजन् ! कंस ठूलो वीर थियो, तापनि कुवलयापीड मारिनाले ती दुवै भाइलाई दुर्जय जानेर त्यो निकै डरायो ॥१८॥ विचित्र वेष, आभूषण, माला र वस्त्रादि धारण गरेका ती महाबाहु नररत्न राम-कृष्ण रङ्गशालामा आफ्नो कान्तिले दर्शकको चित्त चोर्दै यस्ता ज्ञात भए, मानो दुइ सुन्दर वेषमा सुसज्जित, कुनै अभिनेता होस् ॥१९॥ हे राजन् ! मञ्चहरूमा बसेका नगर-निवासी तथा देशवासी व्यक्तिका नेत्र र मुख ती दुवै नरवीरलाई देखेर आनन्दले प्रफुल्लित भए ती नेत्रले उनको मुख-माधुर्य पानगर्नलागे, किन्तु निकै बेरसम्म एकहरो दृष्टिले हेर्दै रहँदा पनि तृप्त भएनन् ॥ २० ॥ तिनलाई देखेपछि यस्तो लाग्दथ्यो—मानो ती उनलाई नेत्रले

युधौ ॥ १६ ॥ मल्लानामशनिर्नृणां नरवरः स्त्रीणां स्मरो मूर्तिमान् गोपानां स्वजनोऽसतां क्षितिभुजां शास्ता स्वपित्रोः शिशुः ॥ मृत्युर्भोजपतेर्विराडविदुषां तत्त्वं परं योगिनां वृष्णीनां परदेवतेति विदितो रङ्गं गतः साग्रजः ॥१७॥ हतं कुवलयापीडं दृष्ट्वा तावपि दुर्जयौ ॥ कंसो मनस्व्यपि तदा भृशमुद्विविजे नृप ॥ १८ ॥ तौ रेजतू रङ्गगतौ महाभुजौ विचित्रवेषाभरणस्रगम्बरौ ॥ यथा नटावुत्तमवेषधारिणौ मनः क्षिपन्तौ प्रभया निरीक्षताम् ॥ १९ ॥ निरीक्ष्य तावुत्तमपूरुषौ जना मञ्चस्थिता नागरराष्ट्रका नृप ॥ प्रहर्षवेगोत्कलितेक्षणाननाः पपुर्न तृप्ता नयनैस्तदाननम् ॥ २० ॥ पिबन्त इव चक्षुर्भ्यां लिहन्त इव जिह्वया ॥ जिघ्रन्त इव नासाभ्यां श्लिष्यन्त इव बाहुभिः ॥ २१ ॥ ऊचुः परस्परं ते वै यथादृष्टं यथाश्रुतम् ॥ तद्रूपगुणमाधुर्यप्रागल्भ्यस्मारिता इव ॥ २२ ॥ एतौ भगवतः साक्षाद्धरेर्नारायणस्य हि ॥ अवतीर्णाविहांशेन वसुदेवस्य वेश्मनि ॥ २३ ॥ एष वै किल देवक्यां जातो नीतश्च गोकुलम् ॥ कालमेतं वसन्गूढो ववृधे नन्दवेश्मनि ॥२४॥ पूतनाऽनेन नीताऽन्तं चक्रवातश्च दानवः ॥ अर्जुनौ गुह्यकः केशी धेनुकोऽन्ये च तद्विधाः ॥२५॥ गावः सपाला एतेन दावाग्नेः परिमोचिताः ॥ कालियो दमितः सर्प इन्द्रश्च विमदः कृतः ॥ २६ ॥ सप्ताहमेकहस्तेन धृतोऽद्रिप्रवरोऽमुना ॥ वर्षवाताशनिभ्यश्च परित्रातं च गोकुलम् ॥ २७ ॥ गोप्योऽस्य नित्यमुदितं हसितप्रेक्षणं मुखम् ॥ पश्यन्त्यो विवि-

घुटुक निल्छन्, जिब्रोले चाट्छन्, नाकले सुँघछन् या बाहुले अङ्कमाल गर्दछन् ।२०॥ दुवै भाइका रूप गुण, माधुर्य र निर्भयताले मानो दर्शकलाई तिनका लीलाको सम्झना गराइदिएको थियो । उनीहरूले जस्तो तिनको विषयमा सुनेका थिए, उस्तै परस्पर कुरा गर्नलागे ॥२२॥ ती भन्दछन्–यी दुवै बालक साक्षात् नारायणकै अंशले पृथ्वीमा वसुदेवजीकहाँ अवतरित भए ॥ २३ ॥ यी श्याम सुन्दर देवकीको गर्भबाट उत्पन्न भएका हुन् । यिनलाई वसुदेवले गोकुल पुऱ्याएर आएका थिए र यी नन्दकहाँ गुप्तरीतले बढेका हुन् । यिनैका हातबाट पूतना, तृणावर्त, यमलार्जुन, शङ्खचूड, गुह्यक, केशी, धेनुकादि अनेक दानवको वध भयो ॥ २४-२५ ॥ यिनले नै गाई र गोपाललाई दावानलबाट रक्षा गरे । यिनले कालिया नागको दमन गरे र इन्द्रको मान मर्दन गरेका थिए ॥ २६ ॥ यिनले नै सात दिनसम्म यौटै हातले गिरिराजलाई उचाले र वर्षा, वायु, विजुलीबाट गोकुलको रक्षा गरे ॥ २७ ॥

यिनको मधुर हास्यपूर्ण हेराई, सुन्दर मुखारविन्दको दर्शनले आनन्दित भएर गोपिनीहरू नाना प्रकारका सन्तापबाट सहजै पारी तर्दथे ॥ २८ ॥ कसैको यस्तो भनाई छ– यिनी बाट सुरक्षित भएर यो प्रख्यात यदुवंश महत्व, श्री, यश र गौरव प्राप्त गर्नेछ ॥ २९ ॥ यी यिनका दाजु श्रीमान बलरामजी हुन्। यिनले प्रलम्बासुर, वत्सासुर र बकासुर आदि दैत्यहरू मारे' ॥३०॥ दर्शकहरूमा जब यो चर्चा भइरहेको थियो र अखाडामा भेरीको शब्द भइरहेको थियो, उसै बेला चाणूरले राम र कृष्णलाई डाकेर भन्यो–॥३१॥ 'हे नन्दनन्दन ! हे बलराम ! तिमी दुवै ठूला वीर मानिन्छौ। तिमीलाई मल्लयुद्धमा निपुण मानेर महाराज कंसले तिम्रो कौशल हेर्नको निम्ति नै यहाँ डाकेका हो ॥ ३२ ॥ मन, वचन, कर्मले राजाको प्रिय गर्नाले कल्याण हुन्छ। जो यस्तो गर्दैनन्, तिनले यसको विपरीत फल भोग्नुपर्दछ ॥३३॥ यी कुरा सबै जान्दछन्–गाई-बाछा चराउने ग्वाला दिनहुँ आनन्दपूर्वक वनमा मल्ल-युद्ध खेल खेल्दै गाईहरू चराउँछन् ॥ ३४ ॥ तब आऊ, हामी र तिमी मिलेर राजालाई प्रसन्न पारौं। यस्तो गर्नाले हामीसित सबै जना

थांस्तापांस्तरन्तिस्म श्रमं मुदा ॥ २८ ॥ वदन्त्यनेन वंशोऽयं यदोः सुबहुविश्रुतः ॥ श्रितं यशो महत्त्वं च लप्स्यते परिरक्षितः ॥२९॥ अयं चास्याग्रजः श्रीमान्रामः कमललोचनः ॥ प्रलम्बो निहतो येन वत्सको ये बकादयः ॥ ३० ॥ जनेष्वेवं ब्रुवाणेषु तूर्येषु निनदत्सु च ॥ कृष्णरामौ समाभाष्य चाणूरो वाक्यमब्रवीत् ॥ ३१ ॥ हे नन्दसूनो हे राम भवन्तौ वीरसम्मतौ ॥ नियुद्धकुशलौ श्रुत्वा राज्ञाहूतौ दिदृक्षुणा ॥ ३२ ॥ प्रियं राज्ञः प्रकुर्वन्त्यः श्रेयो विन्दन्ति वै प्रजाः ॥ मनसा कर्मणा वाचा विपरीतमतोऽन्यथा ॥ ३३ ॥ नित्यं प्रमुदिता गोपा वत्सपाला यथा स्फुटम् ॥ वनेषु मल्लयुद्धेन क्रीडन्तश्चारयन्ति गाः ॥ ३४ ॥ तस्माद्राज्ञः प्रियं यूयं वयं च करवामहे ॥ भूतानि नः प्रसीदन्ति सर्वभूतमयो नृपः ॥ ३५ ॥ तन्निशम्याब्रवीत्कृष्णो देशकालोचितं वचः ॥ नियुद्धमात्मनोऽभीष्टं मन्यमानोऽभिनन्द्य च ॥ ३६ ॥ प्रजा भोजपतेरस्य वयं चापि वनेचराः ॥ करवाम प्रियं नित्यं तन्नः परमनुग्रहः ॥३७॥ बाला वयं तुल्यबलैः क्रीडिष्यामो यथोचितम् ॥ भवेन्नियुद्धं माऽधर्मः स्पृशेन्मल्ल सभासदः ॥३८॥ चाणूर उवाच ॥ न बालो न किशोरस्त्वं बलश्च बलिनां वरः ॥ लीलयेभो हतो येन सहस्रद्विपसत्त्वभृत् ॥३९॥ तस्माद्भवद्भ्यां बलिभिर्योद्धव्यंनानयोऽत्र वै ॥ मयि विक्रम वार्ष्णेय बलेन सह मुष्टिकः ॥४०॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे कुवलयापीडवधो नाम त्रिचत्वारिंशोऽध्यायः ॥४३॥

प्रसन्न हुनेछन्, किनकि राजा सर्वभूतमय मानिन्छन्' ॥ ३५ ॥ उनीसित मल्लयुद्ध गर्ने त उनको इच्छा नै थियो। अतएव स्तुति सुनेर उनले चाणूरको प्रशंसा गरे र देश, काल अनुसार कुरा गरे–॥ ३६ ॥ उनले भने—हामी यी भोजराज महाराज कंसका बनवासी प्रजा हौं। अतएव हामीले यिनीलाई प्रसन्न पार्न प्रयत्न गर्नैपर्दछ। यसैले यी हामीमाथि प्रसन्न हुनेछन्। हे मल्ल ! हामी त अहिले बालकै छौं, यस निम्ति हामी आफू समान बलवान् बालकसित नै मल्ल युद्ध गर्नेछौं। कुश्ती समान बलशालीसित नै हुनुपर्दछ, जसले सभासदहरूलाई अन्याय ज्ञात नहोस् ॥३७॥३८॥ चाणूरले भन्यो–तिमी बलवानमा श्रेष्ठ छौ। बालक वा कुमार होइनौ। एकै छिन पहिले हजार हात्तीको समान बलियो कुवलयापीडलाई तिमीले ख्याल-ख्यालमै मारिदियौ ॥३९॥ तिमी दुवैले हामी जस्ता बलवान्‌सित नै मल्लयुद्ध गर्नु योग्य छ। यसमा कुनै अन्यायको कुरा छैन। हे वार्ष्णेय कृष्ण ! तिमी ममाथि

आफ्नो पराक्रम देखाऊ र बलराम माथि मुष्टिक आफ्नू पराक्रम प्रदर्शित गरोस् ॥४०॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां त्रिचत्वारिंशोऽध्यायः ॥४३॥

( चाणूर-मुष्टिक आदि मल्ल र कंस-वध )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! योजनानुसार श्रीकृष्ण चाणूरसित र रोहिणीनन्दन बलराम मुष्टिकसित जुध्नलागे ॥ १ ॥ ती हातले हात र खुट्टाले खुट्टा जोरेर विजयको इच्छाले यौटा अर्कोलाई बलपूर्वक तान्नलागे ॥ २ ॥ ती दुवैले यौटाले अर्कोको नारीमा नारीले, तिघ्रामा तिघ्राले शिरमा शिरले र छातीमा छातीले प्रहार गरे ॥ ३ ॥ ती परिभ्रमण अर्थात् हात समातेर चारैतिर घुमनू, विक्षेप अर्थात् घुच्याउनु, परिरम्भ अर्थात् टाँसिनु, अवपातन अर्थात् पछाडु, उत्सर्पण वा फुत्केर अलग्ग हुनु र अपसर्पण अर्थात् पछाडि हटनु आदि दाउमा यौटाले अर्कोलाई रोक्तै जित्ने इच्छाले लड्न लागे । उत्थापन अर्थात् तल गिरेको मल्लको खुट्टा र तिघ्रा एकत्र पारेर उठाउनु, उन्नयन अर्थात् हातले समातेर उठाउनु, चालन अर्थात् घाँटीमा टाँसिएकोलाई पर हटाउनु र स्थापन अर्थात् हात-खुट्टा समेटेर थचक बस्नु आदि उपायले यौटा अर्कोको

श्रीशुक उवाच ॥ एवं चर्चितसंकल्पो भगवान्मधुसूदनः ॥ आससादाथ चाणूरं मुष्टिकं रोहिणीसुतः ॥ १ ॥ हस्ताभ्यां हस्तयोर्बद्ध्वा
पद्भ्यामेव च पादयोः ॥ विचकर्षतुरन्योन्यं प्रसह्य विजिगीषया ॥ २ ॥ अरत्नी द्वे अरत्निभ्यां जानुभ्यां चैव जानुनी ॥ शिरः शीर्ष्णोरसोरस्ता-
वन्योन्यमभिजघ्नतुः ॥ ३ ॥ परिभ्रामणविक्षेपपरिरम्भावपातनैः ॥ उत्सर्पणापसर्पणैश्चान्योन्यं प्रत्यरुन्धताम् ॥ ४ ॥ उत्थापनैरुन्नयनैश्चालनैः
स्थापनैरपि ॥ परस्परं जिगीषन्तावुपचक्रतुरात्मनः ॥ ५ ॥ तद्बलाबलवद्युद्धं समेताः सर्वयोषितः ॥ ऊचुः परस्परं राजन्सानुकम्पा वरूथशः
॥ ६ ॥ महानयं बताधर्म एषां राजसभासदाम् ॥ ये बलाबलवद्युद्धं राज्ञोऽन्विच्छन्ति पश्यतः ॥ ७ ॥ क्व वज्रसारसर्वाङ्गौ मल्लौ शैलेन्द्रसन्निभौ ॥
क्व चातिसुकुमाराङ्गौ किशोरौ नाप्तयौवनौ ॥ ८ ॥ धर्मव्यतिक्रमो ह्यस्य समाजस्य ध्रुवं भवेत् ॥ यत्राधर्मः समुत्तिष्ठेन्न स्थेयं तत्र कर्हिचित्
॥ ९ ॥ न सभां प्रविशेत्प्राज्ञः सभ्यदोषाननुस्मरन् ॥ अब्रुवन्विब्रुवन्नज्ञो नरः किल्बिषमश्नुते ॥१०॥ वल्गतः शत्रुमभितः कृष्णस्य वदनाम्बुजम् ॥
वीक्ष्यतां श्रमवार्युप्तं पद्मकोशमिवाम्बुभिः ॥११॥ किं न पश्यत रामस्य मुखमाताम्रलोचनम् ॥ मुष्टिकं प्रति सामर्षं हाससंरम्भशोभितम् ॥ १२ ॥

शरीरमा प्रहार गरे ॥४॥५॥ हे राजन् ! बलवान् र निर्बलको मल्लयुद्ध देखेर यूथका यूथ नगरका नारीहरू परस्पर भन्नलागे—॥६॥ 'यी सभासद् यो ठूलो अन्याय गरिरहेका छन्, जुन राजाको सामुन्ने बलवान् र निर्बलको युद्धको समर्थन गर्दछन् ॥७॥ हेर न, कहाँ यी हात्ती झैं अङ्ग हुने पर्वतराज समान दुवै योद्धा र कहाँ जसले अझ युवावस्थामा पनि प्रवेश गरेका छैनन्, यस्ता सुकुमार शरीर हुने यी बालक ! ॥ ८ ॥ यस सभालाई अवश्य धर्मोल्लङ्घनको पाप लाग्नेछ । जाऊँ, अब यहाँ नबसौं, किनकि जहाँ अधर्मको प्रधानता हुन्छ, त्यहाँ कहिल्यै पनि नबस्नु ॥९॥ सभासद्का अवगुण जान्नेभएका बुद्धिमान् मनुष्यको कर्तव्य हो कि यथा सम्भव यस्ता सभामा नजाउन्, किनकि ती अवगुणहरू भन्ने, नभन्ने अथवा ( म जान्दिन ) यस्तो भन्नाले पनि मनुष्यले पापको भागी हुनै पर्दछ ॥१०॥ हेर न, शत्रुका चारैतिर फन-फनि घुम्ने कृष्णका कमल कोश जस्तै मुखकमल पसीनाका थोपाले कस्तो भरिएको छ' ॥ ११ ॥ यौटी अर्की खीले भनी—'ए संगिनी ! तिमी बलरामको अरुण-नयनयुक्त मनोहर मुख देख्दिनौ ! हेर, मुष्टिक प्रति क्रोधित भएर पनि ती कस्तो

मनोहर हास्यले सुशोभित भइरहेछन् ॥ १२ ॥ अहो ! त्यो व्रजभूमि धन्य हो, जहाँ मनुष्यरूपमा लुकेका साक्षात् भगवान् पुराणपुरुष, जसका चरणको श्रीमहादेव र लक्ष्मी पनि पूजा गर्दछिन्, विचित्र वनमाला धारण गरेर बाँसुरी बजाउँदै श्रीबलभद्रका संगै गाई चराई तथा विविध प्रकारका लीला गर्दै वन-वनमै डुल्दछन् ॥१३॥ ती गोपिनीहरुले कुन यस्तो तपस्या गरे जसले आफ्ना नेत्रद्वारा इनका नित्य नूतन र दुर्लभ रूपमाधुर्यको पान गर्दछन् । भगवान्को यो रूप सौन्दर्यका सार हो । यसको समान तथा यो भन्दा पनि बर्ता अरु कुनै रूप छैन । त्यो स्वयं सिद्धि, यश, श्री एवं ऐश्वर्यका एक मात्र आश्रय छ ॥१४॥ हे सखि हो ! ती व्रजाङ्गना धन्य हुन्, जो सदैव भगवान्मा नै चित्त लगाएर गाई दुहुन्, धान आदि कुट्न्, दही मन्थन गर्नु, घर लिप्नु, बाललाई झुलाउनु, रोएका बालकलाई चुप लगाउनु र स्नान गराई लुगा फेराउनु, घर सफा पार्नु आदि सबै घर-धन्दा गर्ने बेलामा पनि तन्मयभावले गद्‌गद् कण्ठद्वारा इनकै गुणगान गर्दछन् ॥१५॥ श्रीकृष्ण बिहानै गाई चराउनको निम्ति वनमा जान्छन् । सायंकालको बेला जब गाईहरू लिएर बाँसुरी बजाउँदै गाउँछन्

पुण्या बत व्रजभुवो यदयं नृलिङ्गगूढः पुराणपुरुषो वनचित्रमाल्यः ॥ गाः पालयन्सहबलः क्वणयंश्च वेणुं विक्रीडयाऽञ्चति गिरित्ररमार्चिताङ्घ्रिः ॥ १३ ॥ गोप्यस्तपः किमचरन्यदमुष्य रूपं लावण्यसारमसमोर्ध्वमनन्यसिद्धम् ॥ दृग्भिः पिबन्त्यनुसवाभिनवं दुरापमेकान्तधाम यशसः श्रिय ऐश्वरस्य ॥ १४ ॥ या दोहनेऽवहनने मथनोपलेपप्रेङ्खेङ्खनार्भरुदितोक्षणमार्जनादौ ॥ गायन्ति चैनमनुरक्तधियाऽश्रुकण्ठ्यो धन्या व्रजस्त्रिय उरुक्रमचित्तयानाः ॥ १५ ॥ प्रातर्व्रजाद्व्रजत आविशतश्च सायं गोभिः समं क्वणयतोऽस्य निशम्य वेणुम् ॥ निर्गम्यतूर्णमबलाः पथि भूरिपुण्याः ॥ पश्यन्ति सस्मितमुखं सदयावलोकम् ॥ १६ ॥ एवं प्रभाषमाणासु स्त्रीषु योगेश्वरो हरिः ॥ शत्रुं हन्तुं मनश्चक्रे भगवान्भरतर्षभ ॥ १७ ॥ सभयाः स्त्रीगिरः श्रुत्वा पुत्रस्नेहशुचातुरौ ॥ पितरावन्वतप्येतां पुत्रयोरबुधौ बलम् ॥ १८ ॥ तैस्तौर्नियुद्धविधिभिर्विविधैरच्युतेतरौ ॥ युयुधाते यथाऽन्योन्यं तथैव बलमुष्टिकौ ॥ १९ ॥ भगवद्गात्रनिष्पातैर्वज्रनिष्पेषनिष्ठुरैः ॥ चाणूरो भज्यमानाङ्गो मुहुर्ग्लानिमवाप ह ॥२०॥ स श्येनवेग उत्पत्य मुष्टीकृत्य करावुभौ ॥ भगवन्तं वासुदेवं क्रुद्धो वक्षस्यबाधत ॥ २१ ॥ नाचलत्तत्प्रहारेण मालाहत इव द्विपः ॥ बाह्वोर्निगृह्य चाणूरं बहुशो भ्रामयन्हरिः

तब तिनको मुरलीको ध्वनि सुनेर जो गोपिनी तुरुन्त आफ्नो घरबाट निस्केर बाटोमा उभिई तिनको मधुर मुसकानयुक्त मुख र कृपाकटाक्ष हेरिरहन्छन्, अवश्य नै तिनले पूर्वजन्ममा धेरै ठूलो पुण्य गरेका होलान् ॥१६॥ हे भरत श्रेष्ठ ! जुन बेला पुरवासी स्त्रीहरू यस प्रकार कुरा गरिरहेका थिए, त्यसै बेला योगेश्वर भगवान् कृष्णले शत्रुलाई मार्ने विचार गरे ॥१७॥ यता स्त्रीहरूको कुरा सुनेर आफ्ना छोराको बल नजान्ने पिता वसुदेव र आमा देवकी पुत्रस्नेहले विह्वल भएर अत्यन्त चिन्ताग्रस्त भए, किनकि वसुदेव-देवकी त्यहीं बसेका थिए ॥१८॥ उता भगवान कृष्ण र उनको प्रतिद्वन्द्वी चाणूर दुवै नै थरि-थरिका दाउ पेंचले लडिरहेका थिए । त्यसै गरी बलराम र मुष्टिक पनि परस्पर जोल्टिएका थिए ॥१९॥ भगवानको वज्रकूट सदृश कठोर अङ्गका घर्षणले चाणूरका अङ्ग प्रत्यङ्ग शिथिल हुन गए र त्यो बारम्बार मूर्च्छा पर्न लाग्यो ॥ २० ॥ अनि अत्यन्त क्रोधित भई बाज पक्षी झैं झम्टेर उसले दुवै हातका मुड्की बटारेर भगवान कृष्णको छातीमा हिर्कायो ॥२१॥ तर पुष्पमालाले आहत गजराज जस्तै त्यस प्रहारले भगवान् अलिकति पनि विचलित भएनन् । उनले चम्केर

1042

चाणूरका दुवै पाखुर समातेर उसलाई आकाशमा धेरै पल्ट घुमाएर पृथिवीमा पच्छारिदिए। त्यो चोटले तुरुन्त त्यसको प्राण निस्कियो र वेष-भूषा तथा माला आदि अस्तव्यस्त भइदिनाले इन्द्रको ध्वजा समान पृथिवीमा पल्टियो ॥ २२-२३ ॥ उसै गरी मुष्टिकको मुड्कीले आहत महाबलवान् बलभद्रजीले त्यसलाई एक लबटा हिर्काए ॥ २४ ॥ लबटा लाग्नाले नै त्यो काम्नलाग्यो र आँधीले उखेलिएका वृक्षको समान अत्यन्त व्यथित भएर मुखबाट रक्त वमन गर्दै प्राणहीन भएर धराशायी हुनगयो ॥ २५ ॥ हे राजन् ! प्रकार गर्नेहरूमा श्रेष्ठ श्रीबलरामले आफ्नो सामुन्ने आएको कूट नामक मल्ललाई लीलाले नै उपेक्षापूर्वक आफ्नू बाँयाहातको मुड्कीले हिर्काए र त्यहीं समाप्त भयो ॥२६॥ उसै वेला शल र तोशल पनि भगवान कृष्णको पाद-प्रहारले टाउको फुटेर त्यहीं प्राणहीन भई ढले ॥ २७ ॥ यसरी चाणूर मुष्टिक, कूट, शल र तोशल मारिएपछि शेष सबै मल्ल आफ्नू-आफ्नू प्राण बचाउने इच्छाले भागे ॥ २८ ॥ मल्लहरू भागेपछि कृष्ण र बलराम आफ्ना समवयस्क गोपहरूलाई अखाडामा तानेर तिनैसित मल्लयुद्ध गर्दै नाच-नचाएर जेरीको ध्वनिसँगै आफ्ना

॥२२॥ भूपृष्ठे पोथयामास तरसा क्षीणजीवितम् ॥ विस्रस्ताकल्पकेशस्रगिन्द्रध्वज इवापतत् ॥ २३ ॥ तथैव मुष्टिकः पूर्वं स्वमुष्टयाऽभिहतेन वै ॥ बलभद्रेण बलिना तलेनाभिहतो भृशम् ॥२४॥ प्रवेपितः स रुधिरमुद्वमन्मुखतोऽर्दितः ॥ व्यसुः पपातोर्व्युपस्थे वाताहत इवाङ्घ्रिपः ॥ २५ ॥ ततः कूटमनुप्राप्तं रामः प्रहरतां वरः ॥ अवधीलीलया राजन्सावज्ञं वाममुष्टिना ॥२६॥ तर्ह्येव हि शलः कृष्णपदापहतशीर्षकः ॥ द्विधा विदीर्ण स्तोशलक उभावपि निपेततुः ॥२७॥ चाणूरे मुष्टिके कूटे शले तोशलके हते ॥ शेषाः प्रदुद्रुवुर्मल्लाः सर्वे प्राणपरीप्सवः ॥२८॥ गोपान्वयस्या-नाकृष्य तैः संसृज्य विजह्रतुः ॥ वाद्यमानेषु तूर्येषु वल्गन्तौ रुतनूपुरौ ॥२९॥ जनाः प्रजहृषुः सर्वे कर्मणा रामकृष्णयोः ॥ ऋते कंसं विप्रमुख्याः साधवः साधु साध्विति ॥ ३० ॥ हतेषु मल्लवर्येषु विद्रुतेषु च भोजराट् ॥ न्यवारयत्स्वतूर्याणि वाक्यं चेदमुवाच ह ॥ ३१ ॥ निःसारयत दुर्वृत्तौ वसुदेवात्मजौ पुरात् ॥ धनं हरत गोपानां नन्दं बध्नीत दुर्मतिम् ॥ ३२ ॥ वसुदेवस्तु दुर्मेधा हन्यतामाश्वसत्तमः ॥ उग्रसेनः पिता चापि सानुगः परपक्षगः ॥ ३३ ॥ एवं विकत्थमाने वै कंसे प्रकुपितोऽव्ययः ॥ लघिम्नोत्पत्य तरसा मञ्चमुत्तुङ्गमारुहत् ॥ ३४ ॥ तमाविशन्तमालोक्य मृत्युमात्मन आसनात् ॥ मनस्वी सहसोत्थाय जगृहे सोऽसिचर्मणी ॥ ३५ ॥ तं खड्गपाणिं विचरन्तमाशु श्येनं यथा दक्षिणसव्यमम्बरे ॥ समग्रहीद्दुर्विषहोग्रतेजा

चरण नूपुरका ध्वनिसित मिलाउँदै परस्पर मल्लयुद्ध देखाउन लागे ॥ २९ ॥ बलराम र भगवान कृष्णको अद्भुत पराक्रम देखेर कंस बाहेक अरु सबै ब्राह्मणादि सज्जन पुरुष 'धन्य हो ! धन्य हो !' यस्तो भन्दै अत्यन्त प्रसन्न भए। आफ्ना मुख्य-मुख्य मल्लहरू मारिएका र बाँचेका पनि भागिसकेपछि भोजरात कंसले भेरीको बाजा बन्द गराइदियो र भन्यो— ॥३०-३१॥ ए यहाँ कोही छ ? वसुदेवका यी दुश्चरित्र बालकलाई नगरबाट बाहिर धपाइदेओ। गोपहरूको सारा धन खोस र मन्दमति नन्दलाई पनि मारिदेओ ॥ ३२ ॥ वसुदेव हुलो दुर्बुद्धि र असाधु छ, त्यसलाई तुरुन्त मार। मेरा पिता उग्रसेन पनि आफ्ना अनुयायी समेत शत्रुपक्षसित मिलेका छ। अतः उसलाई पनि समाप्त पार ॥ ३३ ॥ कंस यसै गरी कराइरहेकै थियो कि भगवान् कृष्ण रिसाएर वेगले उफ्री अग्लो मञ्चमा उक्लिए ॥ ३४ ॥ कंस पनि निकै धीर-वीर थियो। अतःउसले मृत्युरूप भगवानलाई नजीकै देखेर

1043

सहसा आसनबाट उठेर ढाल-तरवार सम्हाल्यो ॥३५॥ हातमा तरवार लिएर ऊ प्रहार गर्ने अवसर खोज्दै आकाशमा उडिरहेको बाज पक्षी झैं भगवान्को दायाँ र बायाँतिर फनफनी घुम्नलाग्यो । तर उसको प्रचण्ड तेज अत्यन्त दुःसह थियो, ती कृष्णचन्द्रले—गरुड जस्तै सर्पलाई पक्रन्छन्—त्यस्तै नै कंसलाई समाते । ३६॥ त्यसले कंसको मुकुट भुँमा खस्यो र भगवानले जुल्फी समातेर त्यो अग्लो मञ्चबाट रङ्गभूमिमा ल्याएर पच्छारे । त्यसको माथि विश्वका आश्रय र आत्मतन्त्र भगवान् कमलनाभ स्वयं पनि हाम्फालेर आए ॥३७॥ त्यसैले कंसको प्राण निस्कियो । अनि भगवान् कंसको मृत्युलाई सबैले हेर्दाहेर्दै, जस्तै सिंह हात्तीलाई तान्दछ, उसै गरी त्यसको कपाल समातेर पृथिवीमा घिस्याउन लागे । हे नरेन्द्र ! त्यस बेला उहाँ बसेका सबै जनाको मुखबाट घोर हाहाकारको शब्द निस्कियो ॥३८॥ कंस खाने-पिउने, कुरा-कानी, सुत्ने र श्वास लिने आदि सबै क्रियाको समय अत्यन्त व्यग्रताले सदासर्वदा भगवान् चक्रधर नारायणलाई नै आफ्ना आँखाको सामुन्ने देख्दथ्यो, अतः अत्यन्त दुष्प्राप्य भए पनि उसलाई त्यही रूपको प्राप्ति भयो ॥३९॥ कंसका कङ्क र न्यग्रोधादि

यथोरगं तार्क्ष्यसुतः प्रसह्य ॥ ३६ ॥ प्रगृह्य केशेषु चलत्किरीटं निपात्य रङ्गोपरि तुङ्गमञ्चात् ॥ तस्योपरिष्टात्स्वयमब्जनाभः पपात विश्वाश्रय आत्मतन्त्रः ॥ ३७ ॥ तं सम्परेतं विचकर्ष भूमौ हरिर्यथेभं जगतो विपश्यतः ॥ हाहेति शब्दः सुमहाँस्तदाऽभूदुदीरितः सर्वजनैर्नरेन्द्र ॥३८॥ स नित्यदोद्विग्नधिया तमीश्वरं पिबन्वदन्वा विचरन्स्वपञ्छ्वसन् ॥ ददर्श चक्रायुधमग्रतो यतस्तदेव रूपं दुरवापमाप ॥ ३९ ॥ तस्यानुजा भ्रातरोऽष्टौ कङ्कन्यग्रोधकादयः ॥ अभ्यधावन्नभिक्रुद्धा भ्रातुर्निर्वेशकारिणः ॥ ४० ॥ तथाऽतिरभसास्तांस्तु संयत्तान्रोहिणीसुतः ॥ अहन्परिघमुद्यम्य पशूनिव मृगाधिपः ॥ ४१ ॥ नेदुर्दुन्दुभयो व्योम्नि ब्रह्मेशाद्या विभूतयः ॥ पुष्पैः किरन्तस्तं प्रीताः शशंसुर्ननृतुः स्त्रियः ॥ ४२ ॥ तेषां स्त्रियो महाराज सुहृन्मरणदुःखिताः ॥ तत्राभीयुर्विनिघ्नन्त्यः शीर्षाण्यश्रुविलोचनाः ॥ ४३ ॥ शयानान्वीरशय्यायां पतीनालिङ्ग्य शोचतीः ॥ विलेपुः सुस्वरं नार्यो विसृजन्त्यो मुहुः शुचः ॥ ४४ ॥ हा नाथ प्रिय धर्मज्ञ करुणानाथ वत्सल ॥ त्वया हतेन निहता वयं ते सगृहप्रजाः ॥ ४५ ॥ त्वया विरहिता पत्या पुरीयं पुरुषर्षभ ॥ न शोभते वयमिव निवृत्तोत्सवमङ्गला ॥ ४६ ॥ अनागसां त्वं भूतानां कृतवान्द्रोहमुल्बणम् ॥ तेनेमां भो दशां नीतो भूतध्रुको लभेत

आठ कान्छा भाई थिए । त्यसै बेला ती सबै मृत दाजुको साटो फेर्न अतिशय क्रोधित भएर राम र कृष्णको सम्मुख आए ॥४०॥ तर सिंह जसरी पशुलाई मार्दछ, त्यसै गरी युद्धका निम्ति उद्यत भएर अत्यन्त वेगले आइलागेका ती सबैलाई रोहिणीसुत बलरामले यौटा परिघले मारिदिए ॥ ४१ ॥ तत्काल आकाशमा दुन्दुभी बज्न लागे र भगवान्का विभूतिस्वरूप ब्रह्मा र शिव आदि देवता पुष्पवर्षा गर्दै प्रेमपूर्वक उनको प्रशंसा गर्नलागे र अप्सराहरू नाच्न लागे ॥ ४२ ॥ हे राजन् ! शत्रुका स्त्रीहरू आफ्ना स्वजनहरूको मृत्युले दुःखित भएर आँखाबाट जल बगाउँदै र टाउको ठटाउँदै त्यहाँ आए ॥ ४३ ॥ ती वीरशय्यामा सुतेका पतिसित अंकमाल गरेर आँसु बगाउँदै चर्को स्वरले यसरी विलाप गर्न लागे—॥ ४४ ॥ 'हा नाथ ! हा प्रिय ! हा धर्मज्ञ ! हे करुणामय ! हे अनाथवत्सल ! तिमी मारिनाले घर-सन्तान सहित हामी सबै पनि मारिनगयौं ॥४५॥ हे नरश्रेष्ठ ! आफ्ना स्वामी तिमी नहुनाले सबै उत्सव र मङ्गलहरूले हीन यो पुरी पनि हामी जस्तै खिन्न भएकी छ ॥ ४६ ॥ हेर ! तिमीले निरपराध प्राणीसित ठूलो द्वेष गरेका थियौ । त्यसैले तिम्रो

यो गति भयो । सत्य हो, सबै प्राणीसित द्रोह गर्ने कुन पुरुष शान्ति प्राप्त गर्न सक्छ ? ॥४७॥ समस्त प्राणीका उत्पत्ति र लयका स्थान यी श्रीकृष्ण हुन् । यिनै सबैको रक्षा गर्दछन् । इनको अपमान गर्ने प्राणी कहिल्यै सुखी रहन सक्तैन ॥ ४८ ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! त्यसपछि संसारको पालन गर्ने भगवान् कृष्णले ती रानीहरूलाई सान्त्वना दिनुभयो र ती मरेका कंसादिको, शास्त्रमा जुन अन्त्येष्टि आदि लौकिकी क्रियाहरू कहिएका छन्, ती सबै गराए ॥४९॥ त्यसपछि भगवान् राम र कृष्णले माता-पितालाई बन्धन-मुक्त पारेर उनका पाउमा शिर राखी दण्डवत् गरे ॥ ५० ॥ तर तिनले प्रणाम गर्दा पनि देवकी र वसुदेवले उनलाई साक्षात् जगदीश्वर ठानेर शंकित-चित्त भएर हृदयमा टाँस्न सकेनन्, बरू हात जोरेर नबोली उभिइरहे ॥ ५१ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे 'वासिष्ठी' भाषाटीकायां चतुश्चत्वारिंशोऽध्यायः ॥४४॥

( श्रीकृष्ण र बलरामको उपनयन संस्कार विद्याध्ययन ) श्रीशुकदेव भन्दछन्—हे राजन् ! पुरुषोत्तम भगवान् कृष्णले–मेरा माता-पितालाई पारमार्थिक स्वरूपको ज्ञान

शम् ॥ ४७ ॥ सर्वेषामिह भूतानामेष हि प्रभवाप्ययः ॥ गोप्ता च तदवध्यायी न क्वचित्सुखमेधते ॥ ४८ ॥ श्रीशुक उवाच ॥ राजयोषित आश्वास्य भगवाँल्लोकभावनः ॥ यामाहुर्लौकिकीं संस्थां हतानां समकारयत् ॥ ४९ ॥ मातरं पितरं चैव मोचयित्वाऽथ बन्धनात् ॥ कृष्णरामौ ववन्दाते शिरसा स्पृश्य पादयोः ॥ ५० ॥ देवकी वसुदेवश्च विज्ञाय जगदीश्वरौ ॥ कृतसंवन्दनौ पुत्रौ सस्वजाते न शङ्कितौ ॥ ५१ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे कंसवधो नाम चतुश्चत्वारिंशोऽध्यायः ॥ ४४ ॥

श्रीशुक उवाच ॥ पितरावुपलब्धार्थौ विदित्वा पुरुषोत्तमः॥मा भूदिति निजां मायां ततान जनमोहिनीम्॥१॥उवाचपितरावेत्यसाग्रजःसात्वतर्षभः॥ प्रश्रयावनतः प्रीणन्नम्ब तातेति सादरम् ॥२॥ नास्मत्तो युवयोस्तात नित्योत्कण्ठितयोरपि ॥ बाल्यपौगण्डकैशोराः पुत्राभ्यामभवन्क्वचित् ॥३॥ न लब्धो दैवहतयोर्वासो नौ भवदन्तिके॥ यां बालाःपितृगेहस्था विन्दते लालिता मुदम् ॥४॥ सर्वार्थसम्भवो देहो जनितः पोषितः यतः॥ नतयोर्याति निर्वेशं पित्रो· र्मर्त्यः शतायुषा ॥ ५ ॥ यस्तयोरात्मजः कल्प आत्मना च धनेन च ॥ वृत्तिं न दद्यात्तं प्रेत्य स्वमांसं खादयन्ति हि ॥६॥ मातरं पितरं वृद्धं भार्यां· साध्वीं सुतं शिशुम् ॥ गुरुं विप्रं प्रपन्नं च कल्पोऽबिभ्रच्छ्वसन्मृतः ॥७॥ तन्नावकल्पयोःकंसान्नित्यमुद्विग्नचेतसोः ॥ मोघमेते व्यतिक्रान्तादिवसा वाम·

महसकेछ भन्ने जानेर, तिनको बुद्धिमा आफ्नो मोहिनी मायाको पर्दा हालिदिए–जसले गर्दा त्यो ज्ञान नरहोस् । अनि दाजू बलराम सहित यदुनाथले उनको नजीकै गएर अतिशय आदर र विनयपूर्वक–हे माता ! हे पिता !' आदि मधुर वाणीले प्रसन्न पारेर भन्नुभयो–॥१॥२॥ 'हे तात ! हामी हजुरका छोरा हौं । हजुर हाम्रो निम्ति उत्कण्ठित रहनु हुन्थ्यो । तैपनि हजुरलाई हाम्रो बाल्य, पौगण्ड र किशोर अवस्थाका सुख प्राप्त भएनन् । अभाग्यले हामी दुबैले हजुरका नजीक बस्ने सौभाग्य पाएनौं । यसैले हामीलाई पनि माता-पिताको घरमा बसेर तिनको स्नेहको जुन आनन्द मिल्न सक्थ्यो, त्यो मिलेन ॥३॥४॥ जसद्वारा सबै फलको साधनभूत शरीर उत्पन्न हुन्छ र जसद्वारा यसको पालन-पोषण हुन्छ, ती माता-पिताको सय वर्ष सेवा गरेर पनि मनुष्य उऋण हुन सक्तैन । जो समर्थ पुत्र शरीर र धनले माता-पिताको सेवा गर्दैनन् ती मरेपछि यमदूत तिनलाई उनकै देहको मासु खुवाउँदछन् ॥५॥६॥

जुन पुरुष समर्थ भएर पनि माता-पिता, वृद्ध, सती भार्या, बालक, सन्तान, ब्राह्मण र शरणागतको रक्षा गर्दैन, त्यो बाँचेर पनि मरेकै समान रहन्छ ॥ ७ ॥ अतः हाम्रा यति दिन व्यर्थ बितेर गएर। किनकि कंसको भयले नित्य उद्विग्न रहनाले गर्दा हजुरको सेवा गर्नमा समर्थ हुन सकेनौं ॥ ८ ॥ अतः हे तात ! हे माता ! हजुर दुवै जना हामीलाई क्षमा गर्नु हवस्। दुष्ट कंसले हजुरलाई कति कष्ट पुर्‍यायो, परन्तु परतन्त्र हुनाले गर्दा हजुरको कुनै सेवा गर्न पाएनौं' ॥ ९ ॥ श्रीशुकदेव भन्दछन्—माया-मानवरूपधारी विश्वात्मा श्रीकृष्णका वचन सुनेर वसुदेव र देवकी मोहित भए। उनले राम र कृष्णलाई काखमा उचालेर पुत्रस्नेहले छातीमा टाँसेर ती दुवै आनन्दमग्न भए ॥ १० ॥ हे राजन् ! स्नेह-पाशमा बाँधिएर मोहित भएका वसुदेवजी उनलाई आँसुका धाराले भिजाउन लागे र तिनको घाँटी अवरुद्ध भयो। अतः ती केही बोल्न सकेनन् ॥ ११ ॥ यसरी आफ्ना माता-पितालाई सान्त्वना दिएर भगवान् मधुसूदनले आफ्ना मातामह अर्थात् उग्रसेनलाई यादवहरूका राजा तुल्याए ॥ १२ ॥ र भने—'हे महाराज ! हामी हजुरका प्रजा हौं, हजुर हामीलाई आज्ञा दिनोस्।

नर्चतोः ॥ ८ ॥ तत्क्षन्तुमर्हथस्तात मातर्नौ परतन्त्रयोः ॥ अकुर्वतोर्वां शुश्रूषां क्लिष्टयोर्दुर्हृदा भृशम् ॥ ९ ॥ श्रीशुक उवाच ॥ इति मायामनुष्यस्य हरेर्विश्वात्मनो गिरा ॥ मोहितावङ्कमारोप्य परिष्वज्यापतुर्मुदम् ॥ १० ॥ सिञ्चन्तावश्रुधाराभिः स्नेहपाशेन चावृतौ ॥ न किञ्चिदूचतुः राजन्बाष्पकण्ठौ विमोहितौ ॥ ११ ॥ एवमाश्वास्य पितरौ भगवान्देवकीसुतः ॥ मातामहं तूग्रसेनं यदूनामकरोन्नृपम् ॥ १२ ॥ आह चास्मान्महाराज प्रजाश्चाज्ञातुमर्हसि ॥ ययातिशापाद्यदुभिर्नासितव्यं नृपासने ॥ १३ ॥ मयि भृत्य उपासीने भवतो विबुधादयः ॥ बलिं हरन्त्यवनताः किमुतान्ये नराधिपाः ॥ १४ ॥ सर्वान्स्वाञ्ज्ञातिसंबन्धान्दिग्भ्यः कंसभयाकुलान् ॥ यदुवृष्ण्यन्धकमधुदाशार्हकुकुरादिकान् ॥ १५ ॥ सभाजितान्समाश्वास्य विदेशावासकर्शितान् ॥ न्यवासयत्स्वगेहेषु वित्तैः संतर्प्य विश्वकृत् ॥ १६ ॥ कृष्णसंकर्षणभुजैर्गुप्ता लब्धमनोरथाः ॥ गृहेषु रेमिरे सिद्धाः कृष्णरामगतज्वराः ॥ १७ ॥ वीक्षन्तोऽहरहः प्रीता मुकुन्दवदनाम्बुजम् ॥ नित्यं प्रमुदितं श्रीमत्सदयस्मितवीक्षणम् ॥ १८ ॥ तत्र प्रवयसोऽप्यासन्युवानोऽतिबलौजसः ॥ पिबन्तोऽक्षैर्मुकुन्दस्य मुखाम्बुजसुधां मुहुः ॥ १९ ॥ अथ नन्दं समासाद्य भगवान्देवकीसुतः ॥ संकर्षणश्च राजेन्द्र परिष्वज्येदमू-

स्वर्गीय महाराज ययातिको श्राप हुनाले यदुवंशी राजसिंहासनमा बस्तैनन्। यद्यपि हजुर पनि यदुकुलमै उत्पन्न हुनुहुन्छ, तर मेरो आज्ञाले हजुरलाई कुनै दोष लाग्दैन ॥ १३ ॥ म सेवक रहेपछि अन्य राजाको त कुरै छैन, देवता पनि अतिशय विनीत भावले हजुरलाई भेट अर्पण गर्नेछन् ॥ १४ ॥ अनि विश्वकर्ता भगवान्ले यदु, वृष्णि, अन्धक, मधु, दाशार्ह र कुकुर आदि वंशमा उत्पन्न आफ्ना समस्त सजातीय सम्बन्धीहरूको, जो कंसको भयले दिशा-विदिशाहरूमा भागेका थिए, डाके। परदेशमा रहनाले कष्टले दुब्लाएका थिए। भगवान्ले तिनको सत्कार गरेर सान्त्वना दिए र धनादिले उनलाई प्रसन्न पारे, त्यसैले ती आफाफ्ना घरमा सानन्द बस्नलागे ॥ १५-१६ ॥ राम र कृष्णका भुजाले सुरक्षित यादव राम-कृष्णको कृपाले निर्भय, पूर्णकाम र सफल-मनोरथ भएर नित्य मुकुन्दका सदय र कृपाकटाक्षयुक्त नित्य प्रसन्न अनुहार हेरेर आनन्दित हुँदै आफ्ना आफ्ना घरमा सुखले रहन लागे ॥ १७-१८ ॥ आफ्ना नेत्रले निरन्तर श्रीमुकुन्दको सौन्दर्यामृत पान गर्दै रहनाले त्यहाँ वृद्ध पुरुष पनि युवक समान अत्यन्त बलवान् तथा उत्साही

देखिइरहेका थिए ॥१९॥ हे राजेन्द्र ! अनि भगवान देवकीनन्दन र बलरामजी नन्दजीकहाँ पुगे र अंकमाल गरेर भने–॥२०॥ 'हे पिताजी ! माता यशोदा र हजुरले हाम्रो अत्यन्त स्नेहपूर्वक लालन-पालन गर्नुभयो। यसमा कुनै संशय छैन। सन्तानमा माता-पिताको प्रीति आफ्नू शरीर भन्दा पनि बढी हुने गर्दछ ॥ २१ ॥ असलाई पाल्न असमर्थ हुनाले स्वजनले त्यागिदिएका छन्, ती बालकलाई जो पुरुष तथा स्त्री आफ्ना पुत्र झैं पाल्दछन्, उनै तिनका वास्तविक पिता र माता हुन् ॥२२॥ हे पिताजी ! अब हजुर व्रजमा जानुहोस्। हामी आफ्ना सुहृदहरूलाई सुखी पारेर केही दिनमा आफ्नू विरहले व्याकुल हजुर आफ्ना स्नेही बन्धुसित भेट्न अवश्य आउने छौं ॥ २३ ॥ अन्य व्रजवासीहरूसहित नन्दजीलाई यसरी सम्झाई-बुझाई श्रीकृष्णले वस्त्र-आभूषण र विविध धातुका भाँडा आदि दिएर उनको सत्कार गरे ॥२४॥ श्रीकृष्ण भगवानका वचन सुनेर नन्दजीले प्रेमाकुल भएर दुवै भाईलाई छातीमा टाँसे र आँखामा आँसु टलपल पारेर गोपालहरू सहित व्रजमा फर्के। हे राजन् ! अनि शूरनन्दन वसुदेवले आफ्ना पुरोहित अन्य ब्राह्मणद्वारा दुवै छोराहरूको यथाविधि

चतुः ॥ २० ॥ पितर्युवाभ्यां स्निग्धाभ्यां पोषितौ भृशम् ॥ पित्रोरभ्यधिका प्रीतिरात्मजेष्वात्मनोऽपि हि ॥ २१ ॥ स पिता सा च जननी यौ पुष्णीतां स्वपुत्रवत् ॥ शिशून्बन्धुभिरुत्सृष्टानकल्पैः पोषरक्षणे ॥ २२ ॥ यात यूयं व्रजं तात वयं च स्नेहदुःखितान् ॥ ज्ञातीन्वो द्रष्टुमेष्यामो विधाय सुहृदां सुखम् ॥२३॥ एवं सान्त्वय्य भगवान्नन्दं सव्रजमच्युतः ॥ वासोऽलङ्कारकुप्याद्यैरर्हयामास सादरम् ॥ २४ ॥ इत्युक्तस्तौ परिष्वज्य नन्दः प्रणयविह्वलः ॥ पूरयन्नश्रुभिर्नेत्रे सह गोपैर्व्रजं ययौ ॥ २५ ॥ अथ शूरसुतो राजन्पुत्रयोः समकारयत् ॥ पुरोधसा ब्राह्मणैश्च यथावद्द्विजसंस्कृतिम् ॥२६॥ तेभ्योऽदाद्दक्षिणा गावो रुक्ममालाः स्वलङ्कृताः ॥ स्वलङ्कृतेभ्यः संपूज्य सवत्साः क्षौममालिनीः ॥ २७ ॥ याः कृष्णरामजन्मर्क्षे मनोदत्ता महामतिः ताश्चाददादनुस्मृत्य कंसेनाधर्मतो हृताः ॥ २८ ॥ ततश्च लब्धसंस्कारौ द्विजत्वं प्राप्य सुव्रतौ ॥ गर्गाद्यदुकुलाचार्याद्गायत्रं व्रतमास्थितौ ॥ २९ ॥ प्रभवौ सर्वविद्यानां सर्वज्ञौ जगदीश्वरौ ॥ नान्यसिद्धामलज्ञानं गूहमानौ नरेहितैः ॥ ३० ॥ अथो गुरुकुले वासमिच्छन्तावुपजग्मतुः ॥ काश्यं सान्दीपनिं नाम ह्यवन्तीपुरवासिनम् ॥ ३१ ॥ यथोपसाद्य तौ दान्तौ गुरौ वृत्तिमनिन्दिताम् ॥ ग्राहयन्तावुपेतौ स्म भक्त्या देवमिवादृतौ ॥ ३२ ॥ तयोर्द्विजवरस्तुष्टः शुद्धभावानुवृत्तिभिः ॥ प्रोवाच वेदानखिलान्साङ्गोपनिषदो गुरुः ॥ ३४ ॥ सरहस्यं धनुर्वेदं

यज्ञोपवीत संस्कार गराए ॥ २५-२६ ॥ उनले ब्राह्मणहरूलाई नाना प्रकारका वस्त्राभूषणले अलंकृत पारेर तिनको पूजा गरे र घाँटीमा सुनको माला र पिठिउँमा रेशमी वस्त्रले सुसज्जित पारेर सवत्सा गाई दक्षिणामा दिए ॥ २७ ॥ महामति वसुदेवले कृष्ण र बलरामका जन्म-नक्षत्रको मौका जति गाई संकल्प गरेर दान दिए र ती सबै कंसले अधर्मपूर्वक हरण गरेका थिए, ती सबैलाई पनि सम्झेर फर्काइदिए ॥ २८ ॥ यदुकुलका पुरोहित गर्गाचार्यले संस्कार द्वारा द्विजत्व प्राप्त गरेपछि सुव्रत राम र कृष्णले ब्रह्मचर्यव्रत धारण गरे ॥२९॥ कृष्ण भगवान र बलराम सबै विद्याहरूका उत्पत्ति स्थान, सर्वज्ञ र जगदीश्वर भएर पनि आफ्नू स्वतः सिद्ध ज्ञान मानवलीला गरेर लुकाएका थिए ॥ ३० ॥ तदुपरान्त गुरुकुलमा बस्ने इच्छाले दुवै भाई काशीमा जन्मेका र अवन्तीपुरका निवासी सान्दीपनि नामक आचार्यकहाँ गए ॥ ३१ ॥ नियमानुसार गुरुकहाँ गएर इन्द्रियदमनपूर्वक बस्तथे र

गुरुद्वारा पनि सत्कृत ती दुवै भाई संसारलाई उत्तम गुरुसेवाको शिक्षा दिँदै गुरुलाई इष्टदेवको समान मानेर भक्तिपूर्वक गुरुको सेवा गर्नलागे ॥३२॥ तिनको निष्कपट सेवाले सन्तुष्ट भएर ब्राह्मणप्रवर गुरु सान्दीपनीले उनलाई षडङ्ग र उपनिषद् समेत चारै वेदको शिक्षा दिए ॥३३॥ यो बाहेक रहस्य अर्थात् मन्त्र र देवता-ज्ञान सहित धनुर्वेद, मनु आदि धर्मशास्त्र, मीमांसा, न्यायशास्त्र, आन्वीक्षिकी, तर्कविद्या, आत्मविद्या र सन्धि-विग्रह आदि छ थरिका राजनीतिको शिक्षा दिए ॥३४॥ हे राजन् ! सबै शिक्षाका प्रवर्तक तथा नरवरमा श्रेष्ठ श्रीकृष्ण र बलरामले ती विद्यालाई केवल एकपल्ट बुझाउँदा नै कण्ठस्थ पारे ॥३५॥ हे महाराज ! ती दुवै भाईले संयत चित्त भएर चौंसट्ठी कलाहरू दिन-रातमै सिखिलिए। यसरी अध्ययन समाप्त भइसकेपछि तिनले गुरुसित इच्छानुसार गुरुदक्षिणा माग्ने प्रार्थना गरे ॥ ३६ ॥ भगवान् कृष्णको अद्भुत महिमा र अलौकिक बुद्धि देखेर गुरुले आफ्नी भार्यासित सल्लाह गरेर प्रभास क्षेत्रमा समुद्रमा डुबेर मरेको आफ्नू बालक मागे ॥ ३७ ॥ अनि ती दुवै महापराक्रमी र वीर 'हुन्छ' भनेर आफ्नू वेगवान् रथद्वारा समुद्रतटमा

धर्मान् न्यायपथाँस्तथा ॥ तथा चान्वीक्षिकीं विद्यां राजनीतिं च षड्विधाम् ॥ ३४ ॥ सर्वं नरवरश्रेष्ठौ सर्वविद्याप्रवर्तकौ ॥ सकृन्निगदमात्रेण तौ संजगृहतुर्नृप ॥ ३५ ॥ अहोरात्रैश्चतुःषष्ट्या संयत्तौ तावतीः कलाः ॥ गुरुदक्षिणयाऽऽचार्यं छन्दयामासतुर्नृप ॥ ३६ ॥ द्विजस्तयोस्तं महिमानमद्भुतं संलक्ष्य राजन्नतिमानुषीं मतिम् ॥ सम्मन्त्र्य पत्न्या स महार्णवे मृतं बालं प्रभासे वरयाम्बभूव ह ॥ ३७ ॥ तथेत्यथारुह्य महारथौ रथं प्रभासमासाद्य दुरन्तविक्रमौ ॥ वेलामुपव्रज्य निषीदतुः क्षणं सिन्धुर्विदित्वाऽर्हणमाहरत्तयोः ॥ ३८ ॥ तमाह भगवानाशु गुरुपुत्रः प्रदीयताम् ॥ योऽसाविह त्वया ग्रस्तो बालको महतोर्मिणा ॥ ३९ ॥ समुद्र उवाच ॥ नैवाहार्षमहं देव दैत्यः पञ्चजनो महान् ॥ अन्तर्जलचरः कृष्ण शङ्खरूपधरोऽसुरः ॥ ४० ॥ आस्ते तेनाहृतो नूनं तच्छ्रुत्वा सत्वरं प्रभुः ॥ जलमाविश्य तं हत्वा नापश्यदुदरेऽर्भकम् ॥ ४१ ॥ तदङ्गप्रभवं शङ्खमादाय रथमागमत् ॥ ततः संयमनीं नाम यमस्य दयितां पुरीम् ॥ ४२ ॥ गत्वा जनार्दनः शङ्खं प्रदध्मौ सहलायुधः ॥ शङ्खनिर्ह्रादमाकर्ण्य प्रजासंयमनी यमः ॥ ४३ ॥ तयोः सपर्यां महतीं चक्रे भक्त्युपबृंहिताम् ॥ उवाचावनतः कृष्णं सर्वभूताशयालयम् ॥ लीलामनुष्य हे विष्णो युवयोः करवाम किम् ॥ ४४ ॥ श्रीभगवानुवाच ॥ गुरुपुत्रमिहानीतं निजकर्मनिबन्धनम् ॥ आनयस्व महाराज मच्छासनपुरस्कृतः ॥ ४५ ॥ तथेति तेनोपानीतं गुरुपुत्रं

पुगे। त्यहाँ एक दिन बसे। उनलाई परमेश्वर जानेर समुद्र पूजा सामग्री लिएर उनको सामुन्ने आए ॥ ३८ ॥ भगवान्ले समुद्रसित भने–'तिमीले यहाँ जुन बालकलाई आफ्नू तरङ्गमा बगाएर ल्याएका छौ, ती हाम्रा गुरुपुत्रलाई तुरुन्त ल्याएर देऊ' ॥ ३९ ॥ समुद्रले भने–'हे भगवन् ! मैले ती बालक ल्याएको होइन। मेरो जलमा शङ्खरूपधारी पञ्चजन नामक ठूलो एक दैत्य बस्तछ, उसैले चोरेको छ।' यति सुन्नासाथ भगवान् जलमा हाम्फाले र त्यो दैत्यलाई मारे, तर ती बालक त्यसको पेटमा पनि पाइएनन् ॥ ४० ॥ ॥ ४१ ॥ अनि त्यसको देहबाट निस्केको पाञ्चजन्य शङ्ख लिएर भगवान् रथमा बसी यमराजको नगर संयमनी पुरीमा पुगे। राम र कृष्णले त्यहाँ पुगेर शङ्खनाद गरे। समस्त प्रजाको नियन्त्रण गर्ने यमराजले शङ्खको शब्द सुनेर हर्षोल्लासपूर्वक भगवानको पूजा गरे अनि सबैका अन्तःकरण निवासी श्रीकृष्णसित विनयपूर्वक भने–हे मायामानव–

रूपधारी वि णो ! म दुवै जनाको के सेवा गरूँ ! ॥ ४२–४४ ॥ भगवान्‌ले भन्नुभयो–हे महाराज ! हाम्रा गुरुपुत्र कर्मबन्धनमा परेर ल्याइएका छन् । उनलाई तिमी हाम्रो आज्ञाले ल्याऊ ॥ ४५ ॥ यमराजले 'हुन्छ' भनेर ल्याइदिए र त्यस बालकलाई यदुश्रेष्ठ कृष्ण र बलरामले गुरुलाई सुम्पेर भने–'अब अर्को कुनै वर माग्नु हवस्' ॥ ४६ ॥ गुरुले भने–बाबु तिमी दुवैले मलाई राम्ररी गुरुदक्षिणा दियौ । जुन पुरुष तिमी जस्ताको गुरु छ, त्यसको कुन इच्छा अपूर्ण रहन सक्दछ ? ॥४७॥ हे वीर हो ! अब तिमी दुवै आफ्नू घर जाओ । तिम्रो सुयश सबैलाई पवित्र पार्न हवस् र तिमीले पढेको विद्या यो लोक र परलोकमा सदा नयाँ बनिरहोस्–कहिल्यै नबिर्सियोस् ॥ ४८ ॥ हे तात ! यसरी गुरुले आज्ञा दिएपछि राम र कृष्ण वायु झैं वेगवान् र मेघ झैं गर्जन गर्ने रथमा बसेर आफ्नू नगर फर्किए ॥ ४९ ॥ जसलाई निकै दिनदेखि देखेको थिएन, ती राम र कृष्णलाई देखेर सबै प्रजा यसरी आनन्दित भए, जसरी हराएको धन पाइएको होस् ॥ ५० ॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपाली भाषाटीकायां पंचचत्वारिंशोऽध्यायः ॥ ४५ ॥

यदूत्तमौ ॥ दत्त्वा स्वगुरवे भूयो वृणीष्वेति तमूचतुः ॥ ४६ ॥ गुरुरुवाच ॥ सम्यक्संपादितो वत्स भवद्भ्यां गुरुनिष्क्रयः ॥ को नु युष्मद्विधगुरोः कामानामवशिष्यते ॥ ४७ ॥ गच्छतं स्वगृहं वीरौ कीर्तिर्वामस्तु पावनी ॥ छन्दांस्ययातयामानि भवन्त्विह परत्र च ॥ ४८ ॥ गुरुणैवमनुज्ञातौ रथेनानिलरंहसा ॥ आयातौ स्वपुरं तात पर्जन्यनिनदेन वै ॥ ४९ ॥ समनन्दन्प्रजाः सर्वा दृष्ट्वा रामजनार्दनौ ॥ अपश्यन्त्यो बह्वहानि नष्टलब्ध-धना इव ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे गुरुपुत्रानयनं नाम पञ्चचत्वारिंशोऽध्यायः ॥ ४५ ॥

श्रीशुक उवाच ॥ वृष्णीनां प्रवरो मन्त्री कृष्णस्य दयितः सखा ॥ शिष्यो बृहस्पतेः साक्षादुद्धवो बुद्धिसत्तमः ॥१॥ तमाह भगवान्प्रेष्ठं भक्तमेका-न्तिनं क्वचित् ॥ गृहित्वा पाणिना पाणिं प्रपन्नार्तिहरो हरिः ॥ २ ॥ गच्छोद्धव व्रजं सौम्य पित्रोर्नौ प्रीतिमावह ॥ गोपीनां मद्वियोगाधिं मत्सन्देशै-र्विमोचय ॥३॥ ता मन्मनस्का मत्प्राणा मदर्थे त्यक्तदैहिकाः ॥ ये त्यक्तलोकधर्माश्च मदर्थे तान्बिभर्म्यहम् ॥४॥ मयि ताः प्रेयसां प्रेष्ठे दूरस्थे गोकुल-स्त्रियः ॥ स्मरन्त्योऽङ्ग विमुह्यन्ति विरहौत्कण्ठ्यविह्वलाः ॥५॥ धारयन्त्यतिकृच्छ्रेण प्रायः प्राणान्कथञ्चन॥प्रत्यागमनसन्देशैर्बल्लव्यो मे मदात्मिकाः ॥६॥

(उद्धवको व्रज-यात्रा) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! वृष्णिवंशी यादवहरूमा श्रेष्ठ र साक्षात् बृहस्पतिका शिष्य परम बुद्धिमान् उद्धवजी भगवान् श्रीकृष्णका प्रिय मित्र र मन्त्री दुवै थिए ॥ १ ॥ एक दिन शरणागतको पीडा हरण गर्ने श्रीहरिले आफ्ना एक मात्र परम प्रिय भक्त उद्धवको हात आफ्नू हातमा लिएर भने—॥ २ ॥ हे सौम्य उद्धव ! तिमी व्रजमा जाऊ र मेरा माता-पितालाई आनन्दित पार र ती गोपिनीहरूलाई, जुन मेरो वियोगले मानसिक वेदना भोगिरहेका छन्, तिनलाई मेरो समाचार सुनाएर शान्त पार ॥ ३ ॥ तिनको चित्त सदा ममा नै लागिरहन्छ । म नै तिनको प्राण हुँ । मेरो निम्ति तिनीहरूले आफ्ना पति-पुत्रादि सबै सम्बन्धी त्यागिदिएका छन् । जो जन मेरो निम्ति आफ्ना सम्पूर्ण लौकिक र पारलौकिक धर्महरू छाडिदिन्छन् तिनको भरण-पोषण म स्वयं गर्दछु ॥ ४ ॥ हे प्रिय ! म तिनको परम प्रियतम हुँ । म पर गएपछि मेरो निम्ति गोकुलका स्त्रीहरू मेरो नै स्मरण गरेर विरह-व्यथाले विह्वल भएर अचेत भइरहेका हुनन् ॥५॥ मैले छिट्टै फर्कन्छु भनेको थिएँ ।

म फर्कने आशाले नै मेरा तन्म र गोपिनीहरू जस्तो-तस्तो कष्टपूर्वक आफ्नो प्राण-रक्षा गरिरहेका छन् ॥ ६ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! यति सुनेर स्वामीको सन्देश आदरपूर्वक ग्रहण गरी उद्धव रथमा बसेर नन्दजीको गोकुल अर्थात् नन्दगाउँ हिंडे ॥ ७ ॥ सूर्यास्त हुने बेलाला उद्धवजी नन्दको व्रजमा पुगे । त्यस बेला वनमा चरेर फर्केका गाईहरूका खुरले उडेको धूलोमा तिनको रथ लुके झैं भयो ॥८॥९॥ त्यो व्रजभूमि ऋतुमती गाईहरूको निम्ति आपुसमा लड्ने उन्मत्त साँढेहरूको शब्द र थनका भारले थिचिएका आफ्ना बाछातिर दगुर्ने गाईहरूले सुशोभित भइरहेथ्यो । यता-उता उफ्रने अनेक सेतो रंगका बाछा र गोदोहन तथा बाँसुरीको शब्दले त्यस बेला त्यहाँको अपूर्व शोभा भइरहेथ्यो ॥१०॥ राम र कृष्णका पवित्र लीलाहरूको गान गर्दै राम्रा वस्त्राभूषणले सुसज्जित गोप-गोपिनी त्यहाँको शोभा बढाइरहेका थिए ॥ ११ ॥ आगो, सूर्य, अतिथि ब्राह्मण पितृगण र देवगणको पूजा सित सम्बन्ध राख्ने धूप दीप मालाहरूले सुसज्जित गोपहरूका घरबाट त्यो भूमि मनोरम देखिइरहेथ्यो ॥ १२ ॥ त्यहाँ सबैतिर पक्षी र भ्रमरगणले गुञ्जायमान वन थिए र हंस-

श्रीशुक उवाच ॥ इत्युक्त उद्धवो राजन्संदेशं भर्तुरादृतः ॥ आदाय रथमारुह्य प्रययौ नन्दगोकुलम् ॥ ७ ॥ प्राप्तो नन्दव्रजं श्रीमान्निम्लोचति विभा-
वसौ ॥ छन्नयानः प्रविशतां पशूनां खुररेणुभिः ॥ ८ ॥ वासितार्थेऽभियुध्यद्भिर्नादितं शुष्मिभिर्वृषैः ॥ धावन्तीभिश्च वास्राभिरूधोभारैः स्ववत्सकान्
॥ ९ ॥ इतस्ततो विलंघद्भिर्गोवत्सैर्मण्डितं सितैः ॥ गोदोहशब्दाभिरवं वेणूनां निःस्वनेन च ॥ १० ॥ गायन्तीभिश्च कर्माणि शुभानि बलकृष्णयोः॥
स्वलंकृताभिर्गोपीभिर्गोपैश्च सुविराजितम् ॥ ११ ॥ अग्न्यर्कातिथिगोविप्रपितृदेवार्चनान्वितैः ॥ धूपदीपैश्च माल्यैश्च गोपावासैर्मनोरमम् ॥ १२ ॥
सर्वतः पुष्पितवनं द्विजालिकुलनादितम् ॥ हंसकारण्डवाकीर्णैः पद्मषण्डैश्च मण्डितम् ॥ १३ ॥ तमागतं समागम्य कृष्णस्यानुचरं प्रियम् ॥ नन्दः
प्रीतः परिष्वज्य वासुदेवधियाऽर्चयत् ॥ १४ ॥ भोजितं परमान्नेन संविष्टं कशिपौ सुखम् ॥ गतश्रमं पर्यपृच्छत्पादसंवाहनादिभिः ॥१५॥ कच्चिदङ्ग
महाभाग सखा नः शूरनन्दनः ॥ आस्ते कुशल्यपत्याद्यैर्युक्तो मुक्तः सुहृद्वृतः ॥ दिष्ट्या कंसो हतः पापः सानुगः स्वेन पाप्मना ॥ साधूनां
धर्मशीलानां यदूनां द्वेष्टि यः सदा ॥ १७ ॥ अपि स्मरति नः कृष्णो मातरं सुहृदः सखीन् ॥ गोपान्व्रजं चात्मनाथं गावो वृन्दावनं गिरिम्
॥ १८ ॥ अप्यायास्यति गोविन्दः स्वजनान्सकृदीक्षितुम् ॥ तर्हि द्रक्ष्याम तद्वक्त्रं सुनसं सुस्मितेक्षणम् ॥ १९ ॥ दावाग्नेर्वातवर्षाच्च वृषसर्पाच्च

कारण्डवादि पक्षीले युक्त कमलवन त्यहाँको शोभा बढाइरहेका थिए ॥ १३ ॥ हे राजन् ! श्रीकृष्णका प्रिय अनुचर उद्धव पुगेरछि नन्दजी उनीसित भेटेर निकै प्रसन्न भएर अंगमाल गरेर उनले साक्षात् वासुदेव कृष्ण ठानेर पूजा गरे ॥ १४ ॥ तिनलाई उत्तम अन्नको भोजन गराए र जब ती सुखपूर्वक शय्यामा पल्टिए, अनि खुट्टा मिच्ने आदि सत्कारले तिनको थकाई मेटे ॥१५॥ नन्दजीले भने—'हे महाभाग उद्धव ! हाम्रा सखा शूरनन्दन वसुदेवजी बन्धन-मुक्त भएर अब आफ्ना सुहृद्गण र छोराहरूका साथ सकुशल छन् ॥ १६ ॥ राम्रो भयो, त्यो पापी कंस आफ्ना अनुयायी सहित आफ्नै पापले मारियो । त्यो धर्मशील र साधु स्वभाव यादवहरूसित सर्वदा द्वेष गर्दथ्यो ॥ १७ ॥ अँ, कृष्णचन्द्र कहिले हामीहरूको, आफ्नी आमाको, सुहृद्हरूको, सखा आदिको, आफ्नै आश्रित व्रजभूमिको वृन्दावनको र गोवर्धन पर्वतको सम्झना गर्दछन् कि गर्दैनन् ? ॥ १८ ॥ के श्रीकृष्ण एक पल्ट

पनि हामी आत्मीयहरूलाई हेर्न भेट्न यहाँ आउलान् ? सुन्दर नासिका र मनोहर हास्ययुक्त तेर्सो हेराईले युक्त उनको मुखमण्डल के हामी फेरि यहीं देख्न पाउने छौं ? ॥ १९ ॥ ती महात्मा कृष्णले दावानल, आँधी, वर्षा, वृषासुर र सर्परूपी अघासुर आदि दुस्तर मृत्युहरूबाट हाम्रो बारम्बार रक्षा गरेका थिए ॥ २०-२१ ॥ हे तात ! कृष्णका विचित्र चरित्र, लीला-कटाक्षपूर्ण चितवन, मनोहर हाँसो र कुरा गरेको सम्झना हुनासाथ हाम्रा सबै क्रिया शिथिल हुन्छन्। श्रीकृष्णका चरण-चिह्नले भूषित नदी, पर्वत, वन तथा उनका क्रीडा स्थलहरू देख्नासाथ हाम्रो चित्त कृष्णमय हुन्थ्यो ॥ २२ ॥ म त गर्गजीको कथनानुसार यही मानिरहेको छु कि बलराम र कृष्ण कुनै ठूला देवता हुन् र उनले देवताहरूको ठूलो कार्य गर्नको निम्ति नै पृथ्वीमा अवतार लिएका हुन् ॥ २३ ॥ अहो ! सिंह जस्ता पशुहरूलाई मारिदिनु, त्यस्तै नै उनले हजार हात्तीको बल हुने कंस, दुवै मल्ल र कुवलयापीड हात्तीलाई ख्याल-ख्यालमै मारिदिए ॥ २४ ॥ उनले तीन ताल अ ति दुइ सय हात लामो र अत्यन्त बलियो धनुष-

रक्षिताः ॥ दुरत्ययेभ्यो मृत्युभ्यः कृष्णेन सुमहात्मना ॥ २० ॥ स्मरतां कृष्णवीर्याणि लीलापाङ्गनिरीक्षितम् ॥ हसितं भाषितं चाङ्ग सर्वा नः
शिथिलाः क्रियाः ॥ २१ ॥ सरिच्छैलवनोद्देशान्मुकुन्दपदभूषितान् ॥ आक्रीडानीक्षमाणानां मनो याति तदात्मताम् ॥ २२ ॥ मन्ये कृष्णं च
रामं च प्राप्ताविह सुरोत्तमौ ॥ सुराणां महदर्थाय गर्गस्य वचनं यथा ॥ २३ ॥ कंसं नागायुतप्राणं मल्लौ गजपतिं तथा ॥ अवधिष्टां लीलयैव
पशूनिव मृगाधिपः ॥ २४ ॥ तालत्रयं महासारं धनुर्यष्टिमिवेभराट् ॥ बभञ्जैकेन हस्तेन सप्ताहमदधाद्गिरिम् ॥ २५ ॥ प्रलम्बो धेनुकोऽरिष्ट-
स्तृणावर्तो बकादयः ॥ दैत्याः सुरासुरजिता हता येनेह लीलया ॥ २६ ॥ श्रीशुक उवाच ॥ इति संस्मृत्य संस्मृत्य नन्दः कृष्णानुरक्तधीः ॥
अत्युत्कण्ठोऽभवत्तूष्णीं प्रेमप्रसरविह्वलः ॥ २७ ॥ यशोदा वर्ण्यमानानि पुत्रस्य चरितानि च ॥ शृण्वत्यश्रूण्यवास्राक्षीत्स्नेहस्नुतपयोधरा ॥ २८ ॥
तयोरित्थं भगवति कृष्णे नन्दयशोदयोः ॥ वीक्ष्यानुरागं परमं नन्दमाहोद्धवो मुदा ॥ २९ ॥ उद्धव उवाच ॥ युवां श्लाघ्यतमौ नूनं देहिनामिह
मानद ॥ नारायणेऽखिलगुरौ यत्कृता मतिरीदृशी ॥ ३० ॥ एतौ हि विश्वस्य च बीजयोनी रामो मुकुन्दः पुरुषः प्रधानम् ॥ अन्वीय भूतेषु

लाई त्यसै गरी भाँचिदिए, जसरी हात्ती कुनै सानो काठ भाँच्तछ र ती सात दिनसम्म यौटै हातमा गिरिराज गोवर्धनलाई उचालिराखे ॥ २५ ॥ जसले देवता र असुर सबैलाई जितेका थिए, ती प्रलम्बासुर, धेनुकासुर, अरिष्टासुर तृणावर्त र बकासुर आदि दैत्यहरूलाई लीलैले मारिदिएका थिए ॥ २६ ॥ शुकदेवजी भन्दछन्–हे राजन् ! श्रीकृष्णमा जसको चित्त अनुरक्त थियो, ती नन्दजी उसको यसरी बारम्बार स्मरण गरेर प्रेमको आवेगले विह्वल भई उत्कण्ठावश चुपलागे ॥ २७ ॥ आफ्ना छोराको चरित्रहरू वर्णन गरेको सुनी माता यशोदाका नेत्रमा जल भरिए र स्नेहवश उनका स्तनबाट दूधको धारा बग्नलाग्यो ॥ २८ ॥ श्रीकृष्णमा नन्द र यशोदाको यस्तो बलियो अनुराग देखेर उद्धवजी अति प्रसन्न भएर नन्दजीसित भन्नलागे ॥ २९ ॥ उद्धव भन्दछन्—हे मानद ! यसमा संशय छैन कि हजुर दुवै स्त्री-पुरुष सबै देहधारीहरूमा प्रशंसाको योग्य हुनुहुन्छ किनकि जगद्गुरु श्रीकृष्णमा हजुरले यस प्रकार आफ्नु बुद्धि लगाउनु भएको छ ॥ ३० ॥ राम र कृष्ण नै प्रधान पुरुषरूपमा सारा संसारका मूल कारण हुन्। यिनै पुराणपुरुषरूपले प्राणिमात्रमा अनुप्रविष्ट भएर

तिनका भिन्न-भिन्न उपाधिहरू र ब्रह्मस्वरूप जीवको नियमन गर्दछन् ॥ ३१ ॥ प्राणान्तको वेलामा एकक्षण पनि उनमा आफ्नू चित्त लगाउनाले जीव वासना छाडेर ब्रह्ममय हुन्छ र सूर्य समान तेजस्वी स्वरूप धारण गरेर परमगति पाउँदछ ॥ ३२ ॥ हे महात्मन् ! सबैका आत्मा, कारण र पृथ्वीको भार टार्नको निम्ति मनुष्य रूप धारण गर्ने भएका श्रीकृष्ण भगवान्‌मा अब हजुर यस्तो बलियो अनुराग राख्नु हुन्छ, अनि हजुरको निम्ति अरु कुन शुभकर्म गर्न शेष रहन्छ ? ॥ ३३ ॥ यादवगणका स्वामी अच्युत भगवान् चाँडै नै व्रजमा आउँछन् र आफ्ना आमा बाबुलाई प्रसन्न बनाउँछन् ॥ ३४ ॥ सबै यादवको शत्रु कंसलाई रङ्गभूमिमा मारेपछि श्रीकृष्णले हजुरको नजीक आएरजे अतिमन्नुभयो, त्यो सबै सत्यपार्दछन् ॥३५॥ हे महाभाग ! हजुरहरू शोक नगर्नोस् । हजुर श्रीकृष्णलाई छिटै नै आफ्नू नजीक देख्नु हुनेछ । काठमा व्याप्त आगो झैं सबै प्राणीका अन्तःकरणमा विद्यमान रहन्छन् ॥३६॥ ती भगवान् मान रहित छन्, उनको कोही प्रिय वा अप्रिय छैनन् । ती समदर्शी छन् । अतः उनको दृष्टिमा कोही उत्तम, मध्यम वा अधम छैनन् ॥ ३७ ॥ उनको न माता, न पत्नी,

विलक्षणस्य ब्रह्मस्य चेशात इमौ पुराणौ ॥ ३१ ॥ यस्मिञ्जनः प्राणवियोगकाले क्षणं समावेश्य मनो विशुद्धम् ॥ निर्हृत्य कर्माशयमाशु याति परां गतिं ब्रह्ममयोऽर्कवर्णः ॥ ३२ ॥ तस्मिन्भवन्तावखिलात्महेतौ नारायणे कारण मर्त्यमूर्तौ ॥ भावं विधत्तां नितरां महात्मन् किंवाऽवशिष्टं युवयोः सुकृत्यम् ॥ ३३ ॥ आगमिष्यत्यदीर्घेण कालेन व्रजमच्युतः ॥ प्रियं विधास्यते पित्रोर्भगवान्सात्वतां पतिः ॥ ३४ ॥ हत्वा कंसं रङ्गमध्ये प्रतीपं सर्वसात्वताम् ॥ यदाह वः समागत्य कृष्णः सत्यं करोति तत् ॥ ३५ ॥ मा खिद्यतं महाभागौ द्रक्ष्यथः कृष्णमन्तिके ॥ अन्तर्हृदि स भूतानामास्ते ज्योतिरिवैधसि ॥ ३६ ॥ न ह्यस्यास्ति प्रियः कश्चिन्नाप्रियो वाऽस्त्यमानितः ॥ नोत्तमो नाधमो नापि समानस्यासमोऽपि वा ॥ ३७ ॥ न माता न पिता तस्य न भार्या न सुतादयः ॥ नात्मीयो न परश्चापि न देहो जन्म एव च ॥ ३८ ॥ न चास्य कर्म वा लोके सदसन्मिश्रयोनिषु ॥ क्रीडार्थः सोऽपि साधूनां परित्राणाय कल्पते ॥ ३९ ॥ सत्त्वं रजस्तम इति भजते निर्गुणो गुणान् ॥ क्रीडन्नतीतोऽत्र गुणैः सृजत्यवति हन्त्यजः ॥ ४० ॥ यथा भ्रमरिकादृष्ट्या भ्राम्यतीव महीपते ॥ चित्ते कर्त्तरि तत्रात्मा कर्तेवाहंधिया स्मृतः ॥ ४१ ॥ युवयोरेव नेवायमात्मजो भगवान्हरिः ॥ सर्वेषामात्मजो ह्यात्मा पिता माता स ईश्वरः ॥ ४२ ॥ दृष्टं श्रुतं भूतभवद्भविष्यत्स्थास्नुश्चरिष्णुर्महदल्पकं च ॥ विनाच्युताद्वस्तुतरां न वाच्यं स एव सर्वं

न सन्तान, न आफ्ना छन्, न विराना छन् र न देह वा उसको जन्म नै छ ॥ ३८ ॥ यस लोकमा उनले कुनै कर्म गर्नु पर्न रहन्न । यद्यपि साधुजनको रक्षा र केवल लीला गर्नको निम्ति नै उत्तम अर्थात् देवादि सात्विक, अधम अर्थात् मत्स्यादि तामस र मिश्र अर्थात् मनुष्यादि राजस योनिहरूमा जन्म लिन्छन् ॥ ३९ ॥ ती अजन्मा श्रीकृष्ण भगवान् वास्तवमा गुणहीन छन् तथापि केवल लीलाको निम्ति सत्व, रज र तम तीनै गुणलाई स्वीकार गर्छन् र गुणातीत भएर पनि मायाका गुणले संसारको रचना, पालन र संहार गर्दै रहन्छन् ॥ ४० ॥ जस्तै फनफनी घुम्ने व्यक्तिको दृष्टिमा पृथ्वी घुमे झैं प्रतीत हुन्छ, त्यस्तै चित्त कर्ता भएपछि पनि अहंबुद्धिले गर्दा व्यक्तिहरूलाई आत्मा नै कर्ता ज्ञात हुन्छ ॥४१॥ भगवान् श्रीकृष्ण केवल कृष्णानुगामी तिमी दुवैका मात्र पुत्र होइनन् । ती सबैका पुत्र, पिता, आत्मा र ईश्वर सबै हुन् ॥ ४२ ॥ यस्तो कुनै देखे सुनेको भूत, भविष्य, वर्तमान, स्थावर,

1052

अक्षम, महान वा अल्प वस्तु छैन, जुन अच्युत भगवान्देखि पृथक् होस् । श्रीअच्युत बाहेक 'वस्तु' कहिने योग्य केही पनि छँदैछैन । एकमात्र उनै परमार्थ वस्तु हुन् ॥४३॥ हे राजन् ! उद्धव तथा नन्दजीले यसरी कुरा गर्दागर्दै सम्पूर्ण रात बित्यो । केही रात शेष रहेपछि गोपिनीहरू उठे र बत्ती बाली घरको आँगनमा वासुदेवको पूजा गरेर दही मथ्न लागे ॥४४॥ अनि उनका नेति तानिरहेका हातमा सुवर्ण-वलय सुशोभित थिए, उनका नितम्ब, स्तन र हार हल्लिरहेका थिए तथा हल्लिरहेका कुण्डलको कान्ति पर्नाले उनका कुंकुम-मण्डित कपोल केही राता भइरहेथे, ती गोपाङ्गना बत्तीका दीप्तिले टल्कने आभूषणहरूका मणिले शोभायमान प्रतीत हुन्थे ॥ ४५ ॥ त्यस बेला कमलनयन भगवानका पवित्र चरित्रलाई जसले सबै दिशाका पाप नष्ट हुन्छन्, उच्च स्वरले गान गर्दै रहेका व्रजवनिताको ध्वनि दही मथेको शब्दमा मिलेर स्वर्गलोकसम्म पुग्यो ॥ ६ ॥ सूर्य नारायणको उदय भएपछि व्रजका गोपिनी नन्दजीको द्वारमा यौटा सुवर्णमय रथ उभिएको देखेर परस्पर भन्नलागे–'यो कसको रथ हो ?' ॥ ४७ ॥ कंसको कार्य सिद्ध पार्ने अक्रूर नै आएको हो कि !

परमार्थभूतः ॥ ४३ ॥ एवं निशा सा ब्रुवतोर्व्यतीता नन्दस्य कृष्णानुचरस्य राजन् ॥ गोप्यः समुत्थाय निरूप्य दीपान्वास्तून्समभ्यर्च्य दधीन्य-
मथ्नन् ॥ ४४ ॥ ता दीपदीप्तैर्मणिभिर्विरेजू रज्जूर्विकर्षद्भुजकङ्कणस्रजः ॥ चलन्नितम्बस्तनहारकुण्डलत्विषत्कपोलारुणकुङ्कुमाननाः ॥ ४५ ॥
उद्गायतीनामरविन्दलोचनं व्रजाङ्गनानां दिवमस्पृशद्ध्वनिः ॥ दध्नश्च निर्मन्थनशब्दमिश्रितो निरस्यते येन दिशाममङ्गलम् ॥ ४६ ॥ भगवत्युदिते
सूर्ये नन्दद्वारि व्रजौकसः ॥ दृष्ट्वा रथं शातकौम्भं कस्यायमिति चाब्रुवन् ॥ ४७ ॥ अक्रूर आगतः किं वा यः कंसस्यार्थसाधकः ॥ येन नीतो
मधुपुरीं कृष्णः कमललोचनः ॥ ४८ ॥ किं साधयिष्यत्यस्माभिर्भर्तुः प्रेतस्य निष्कृतिम् ॥ इति स्त्रीणां वदन्तीनामुद्धवोऽगात्कृताह्निकः ॥ ४९ ॥
इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे नन्दशोकापनयनं नाम षट्चत्वारिंशोऽध्यायः ॥ ४६ ॥

श्रीशुक उवाच ॥ तं वीक्ष्य कृष्णानुचरं व्रजस्त्रियः प्रलम्बबाहुं नवकञ्जलोचनम् ॥ पीताम्बरं पुष्करमालिनं लसन्मुखारविन्दं मणिमृष्टकुण्डलम्॥१॥
शुचिस्मिताः कोऽयमपीच्यदर्शनः कुतश्च कस्याच्युतवेषभूषणः ॥ इति स्म सर्वाः परिवव्रुरुत्सुकास्तमुत्तमश्लोकपदाम्बुजाश्रयम् ॥२॥ तं प्रश्रयेणावनताः

जसले पहिल्यै हाम्रा कमल नयन कृष्णलाई यहाँबाट मथुरा लगेको थियो ? त्यो के अब हामीलाई लगेर हाम्रा मालिक आफ्ना मरेका स्वामीको और्ध्वदैहिक (पिण्डदानादि) कर्म सम्पन्न गर्छ ? जब व्रजका गोपिनी यसरी कुरा गर्दै थिए, उद्धव नित्यकर्म सकेर फर्के ॥४८॥४९॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपाली भाषाटीकायां षट्चत्वारिंशोऽध्यायः ॥४६॥

'उद्धव र गोपिकाहरूको वार्तालाप र भ्रमरगीत )–श्री शुकदेव भन्दछन्—हे राजन् ! नूतन कमल झैं नेत्र हुने, पीताम्बरधारी तथा कमल-कुसुमको माला धारण गरेका तथा मणिजडित कुण्डल लगाएका, देदीप्यमान अनुहार र आजानुबाहु कृष्णानुचर उद्धवजीलाई देखेर सुन्दर हास्य हुने व्रजबालाहरू देखनमा परम सुन्दर र श्रीकृष्ण भगवान समान नै वेष-भूषाले युक्त यो पुरुष को हो ? कहाँबाट आएको हो ? कसको दूत हो ? यो जान्नको निम्ति अत्यन्त उत्कण्ठावश पवित्र-कीर्ति श्रीहरिका चरण-कमलका मात्र आश्रित उद्धवजीलाई चारैतिरबाट छेकेर ठिङ्ग उभिए ॥ १॥२ ॥ जब गोपिनीहरूले थाहा पाए कि यी श्रीकृष्णको समचार ल्याएका उनका दूत हुन्, तब तिनले विनयावनत भएर

लज्जा र मुसुक्क हाँसेर मधुर वाणीले तिनको राम्ररी सत्कार गरे र एकान्तमा लगेर भने–॥ ३ ॥ 'हामीलाई थाहा छ–हजुर यहाँ श्रीकृष्णका दूत भएर आउनुभएको हो। हजुरका स्वामीले आफ्ना माता-पिताको प्रिय गर्ने इच्छाले नै यहाँ पठाएका हुन् ॥ ४ ॥ उनी बाहेक यस गोकुलमा अरु कुनै एस्त छैनन् जसको उनलाई सम्झना होस्। अँ, आफ्ना स्वजनको स्नेहबन्धन तोड्न मुनिलाई पनि कठिन हुन्छ। त्यसैले आफ्ना माता-पिताको सम्झना उनलाई पनि अवश्य हुँदोहोला ॥ ५ ॥ स्वजन बाहेक अरुसित कुनै न कुनै प्रयोजनले नै प्रेम गरिन्छ। जबसम्म प्रयोजन रहन्छ, तबसम्म स्नेह पनि रहिरहन्छ। काम सकिनासाथ त्यो नक्कली प्रेमको पनि अन्त्य हुन्छ। प्रत्येक पुरुषको नारीसित र भ्रमराको फूलसित प्रायः यस्तै प्रेम हुनेगर्दछ ॥ ६ ॥ संसारमा यस्तै प्रीति वर्ता देखिन्छ। हेर न, वेश्या आफ्ना धनहीन प्रेमीलाई त्यागिदिन्छन्, प्रजा असमर्थ राजालाई छाडिदिन्छन्, विद्या प्राप्त गरिसकेपछि शिष्य गुरुलाई छाडिदिन्छन् र दक्षिणा पाएपछि ऋत्विक् यजमानलाई छाडेर जान्छन् ॥ ७ ॥ फल रित्तिएपछि वृक्षलाई त्यागिदिन्छन्, खाइसकेपछि अतिथि

सुसत्कृतं सव्रीडहासेक्षणसूनृतादिभिः ॥ रहस्यपृच्छन्नुपविष्टमासने विज्ञाय सन्देशहरं रमापतेः ॥ ३ ॥ जानीमस्त्वां यदुपतेः पार्षदं समुपागतम् ॥ भर्त्रेह प्रेषितः पित्रोर्भवान्प्रियचिकीर्षया ॥४॥ अन्यथा गोव्रजे तस्य स्मरणीयं न चक्ष्महे ॥ स्नेहानुबन्धो बन्धूनां मुनेरपि सुदुस्त्यजः ॥५॥ अन्येष्वर्थकृता मैत्री यावदर्थविडम्बनम् ॥ पुम्भिः स्त्रीषु कृता यद्वत्सुमनःस्विव षट्पदैः ॥६॥ निःस्वं त्यजन्ति गणिका अकल्पं नृपतिं प्रजाः ॥ अधीतविद्या आचार्यमृत्विजो दत्तदक्षिणम् ॥ ७ ॥ खगा वीतफलं वृक्षं भुक्त्वा चातिथयो गृहम् ॥ दग्धं मृगास्तथाऽरण्यं जारो भुक्त्वा रतां स्त्रियम् ॥ ८ ॥ इति गोप्यो हि गोविन्दे गतवाक्कायमानसाः ॥ कृष्णदूते व्रजं याते उद्धवे त्यक्तलौकिकाः ॥ ९ ॥ गायन्त्यः प्रियकर्माणि रुदत्यश्च गतह्रियः ॥ तस्य संस्मृत्य संस्मृत्य यानि कैशोरबाल्ययोः ॥ १० ॥ काचिन्मधुकरं दृष्ट्वा ध्यायन्ती कृष्णसङ्गमम् ॥ प्रियप्रस्थापितं दूतं कल्पयित्वेदमब्रवीत् ॥ ११ ॥ गोप्युवाच ॥ ११ ॥ मधुप कितवबन्धो मा स्पृशाङ्घ्रिं सपत्न्याः कुचविलुलितमालाकुंकुमश्मश्रुभिर्नः ॥ वहतु मधुपतिस्तन्मानिनीनां प्रसादं यदुसदसि विडम्ब्यं यस्य दूतस्त्वमीदृक् ॥ १२ ॥ सकृदधरसुधां स्वां मोहिनीं पाययित्वा सुमनस इव सद्यस्त-

छाडेर हिंडिदिन्छन्, वनमा आगो लागेपछि मृगगण भन्तै जान्छन् र लम्पट पुरुष भोग सकेपछि अतृप्त र अनुरागिणी स्त्रीलाई त्यागिदिन्छन् ॥ ८ ॥ यसरी जसको मन, वाणी र शरीर श्रीगोविन्दमै लागिरहन्थ्यो, ती गोपिनी, उद्धव व्रजमा आएपछि आफ्ना सबै लौकिक कार्यहरू छाडेर केवल उनकै चर्चा गर्नलागे ॥९॥ अन्त्यमा श्रीकृष्णको किशोर र बाल्यावस्थाको अद्भुत कर्महरू वारम्वार सम्झेर उनकै गुणगान गर्दागर्दै लज्जा त्यागेर रुनलागे ॥ १० ॥ तीमध्ये यौटी कृष्ण-समागमको स्मरण गर्दै थिई। त्यसै वेला यौटा भ्रमरा देखियो त्यसलाई आफ्ना प्रियले पठाएका दूतको कल्पना गरेर भन्नलागी ॥११॥ ए धूर्तको मित्र भ्रमर ! तेरा जुँघा मेरी सौताका स्तनमा भएको मालामा लागेको कुंकुमलिप्त छ, त्यसैले तँ हाम्रा खुट्टा न छो। यस्तो क्षणिक प्रेमी तँ जसको दूत होस्, ती कृष्ण आफ्नी मानिनीहरूको यो प्रसाद जुन यादवका सभामा उपहास पाउने योग्य छ,आफैं राखुन् ।१२॥ ऊ पनि तँजस्तै स्वःर्थी छन्

1054

किनकि उनले हामीलाई एकपटक आफ्नू अधरामृत प्याएर उसै गरी छाडिदिए, जसरी तँ रस चुसिसकेर फूललाई छाडिदिन्छस् । ती चञ्चला लक्ष्मी कसरी तिनका चरण कमलको सेवा गर्दछिन् ? सम्भवतः भगवान्‌का मीठा-मीठा कुराले तिनको चित्त आफूतिर तानिसकेको होला ॥१३॥ ए भ्रमर ! तँ हामी वनवासिनीको अघि बारम्बार पुराण-पुरुष यदुनाथ कृष्णका गुण किन गाउँछस् ! तँ यो कीर्तिकथा पार्थसखा श्रीकृष्णका मथुरावासिनी नयाँ प्रियाहरूलाई सुना । कृष्णको दर्शनले जसको हृदय-रोग शान्त भइसकेको छ तिनै यस चाटुकारिताले प्रसन्न भएर तेरो इच्छा पूर्ण गर्नन् ॥ १४ ॥ 'यस्तो नभन, मलाई कृष्णले तिमीलाई बुझाउन पठाएको हो' भन्छस भने यो कुरा पनि ठीक होइन, किनकि स्वर्ग, पृथिवी र पातालमा यस्ती कुन स्त्री छ, जो उनको कपटपूर्ण मनोहर हास्य र बक्र-भृकुटी विलासयुक्त श्यामसुन्दरलाई मिल्न सक्नैनन् । साक्षात् लक्ष्मी जसका चरण कमलको सेवन गर्दछिन् उनको निम्ति हामी गोपिनीको के गणना छ ? तर उनीसित भन्नु–हजुरको 'उत्तमश्लोक' नाम त दीनजनमा दया गर्नाले नै सार्थक हुन्छ ॥१५॥ भ्रमरलाई आफ्ना चरणनेर आएर भुँ-भुँ गरेको देखी यस्तो ठानेर कि यो क्षमा गराउन खोजिरहेछ । गोपिनी भन्नलागी–ए भ्रमर ! तँ मेरो पाउबाट आफ्नू शिर हटा । म जान्दछु कि तँ कृष्णको यो चाटुकारिता सिकेर

त्वजेऽस्मान्भवादृक् ॥ परिचरति कथं तत्पादपद्मं तु पद्मा ह्यपि तव हृतचेता उत्तमश्लोकजल्पैः ॥ १३ ॥ किमिह बहु षडङ्घ्रे गायसि त्वं यदूनामधिपतिमगृहाणामग्रतो नः पुराणम् ॥ विजयसखसखीनां गीयतां तत्प्रसङ्गः क्षपितकुचरुजस्ते कल्पयन्तीष्टमिष्टाः ॥ १४ ॥ दिवि भुवि च रसायां काः स्त्रियस्तद्दुरापाः कपटरुचिरहासभ्रूविजृम्भस्य याः स्युः ॥ चरणरज उपास्ते यस्य भूतिर्वयं का अपि च कृपणपक्षे ह्युत्तमश्लोकशब्दः ॥ १५ ॥ विसृज शिरसि पादं वेद्म्यहं चाटुकारैरनुनयविदुषस्तेऽभ्येत्य दौत्यैर्मुकुन्दात् ॥ स्वकृत इह विसृष्टापत्यपत्यन्यलोका व्यसृजदकृतचेता किं नु सन्धेयमस्मिन् ॥ १६ ॥ मृगयुरिव कपीन्द्रं विव्यधे लुब्धधर्मा स्त्रियमकृत विरूपां स्त्रीजितः कामयानाम् ॥ बलिमपि बलिमत्त्वावेष्टयद्ध्वाङ्क्षवद्यस्तदलमसितसख्यैर्दुस्त्यजस्तत्कथार्थः ॥ १७ ॥ यदनुचरितलीलाकर्णपीयूषविप्रुट्सकृददनविधूतद्वन्द्वधर्माविनष्टाः ॥ सपदि गृहकुटुम्बं दीनमुत्सृज्य दीना बहव इह विहङ्गा भिक्षुचर्यां चरन्ति ॥१८॥ वयमृतमिव जिह्मव्याहृतं श्रद्दधानाः कलितरुतमिवाज्ञाः कृष्णवध्वो हरिण्यः॥ददृशुरसकृदेतत्तन्नखस्पर्शतीव्रस्म-

आएको होस । दूतकर्म र मीठा-मीठा कुराले अनुनय-विनय गर्नमा तँ निपुण छस् । तर जुन अकृतज्ञले आफ्नै निम्ति पुत्र, पति र समस्त लोकलाई त्यागिदिने भएका हामी गोपिनीहरूलाई यस प्रकार त्यागिदिए, के तिनको फेरि विश्वास गर्न सकिन्छ ? । १६॥ हेर, कृष्ण साह्रै क्रूर छन् । उनले रामावतारमा ब्याधा झैं क्रूर बनेर निरपराध बालीलाई मारिदिए । शूर्पणखा कामवश भएर उनीकहाँ गएकी थिइ, तर उनले आफ्नी स्त्री सीताले भए र त्यस अबलाको नाक-नाक काटेर कुरूप पारिदिए । वामनावतारमा काक झैं कुटिल बनेर उनले राजा बलिको भिक्षा लिएर पनि वरुणपाशले बाँधे । अतः हामी ती काला कृष्णको मैत्रीदेखि परै बस्छौं । अब हामी तिनको चर्चा पनि गर्दैनौं ॥ १७ ॥ किनकि कानलाई अमृतको समान मधुर लाग्ने उनका लीलाहरूको एक टुक्रा पनि एकपल्ट चाखेपछि अनेक धीर वीर-वीरपुरुष राग-द्वेषादि द्वन्द्वबाट छुटेर दीनतामय घर र कुटुम्बलाई पनि तुरुन्त त्यागेर पक्षिहरूको समान भिक्षावृत्तिद्वारा जीवन-यापन गर्न थाल्दछन् ॥ १८ ॥ जस्तै काला मृगकी पत्नी अबोध मृगीहरू ब्याधाको झुम्घपानें मधुर शब्दमा विश्वास गरेर मारिन्छन्

1055

बस्या हुनो कष्ट भोग्दछन् । त्यस्तै नै कवटी कृष्णका कुराका विचार गरेर हामी पनि उनको नखस्पर्शले हुने कामव्यथा बारम्बार अनुभव गरिसकेका छौं । अतएव हे दूत ! अब अरु कुनै कुरा सुना ॥१९॥ भ्रमरा बाहिर पर गएर फेरि फर्केर आयो । त्यो देखेर गोपिनीले भनिन्—हे मेरा प्रियतमको सखा ! तँफेरि फर्केर आइस् ? के भगवानले तँलाई वास्तवमानै पठाएको हो ? हे तात ! तिमी हाम्रा माननीय हौ । भन, तिमीलाई के चाहियो ? उसको संगति छाड्न सान्है कठिन छ, तीकृष्णकहाँ हामीलाई कसरी लैजान्छौ ? किनकि हे सौम्य ! उनको वक्षस्थलमा त सदा लक्ष्मीरूपिणी नववधू बसिरहन्छिन् ॥२०॥ हे सौम्य ! के आर्यपुत्र कृष्णचन्द्र अहिले मथुरामै छन् ? के ती आफ्ना पिता नन्द र गोपालहरूलाई पनि कहिल्यै सम्झना गर्दैनन् ? ती हामी दासीहरूको पनि कुनै चर्चा चलाउँछन् ? अहो, धूपको सुगन्धले युक्त आफ्ना बाहुलाई के कहिल्यै हाम्रो मस्तकमा राख्नेछन् ? ॥२१॥ श्रीशुकदेव भन्नुहुन्छ-हे राजन् ! कृष्णचन्द्रको निम्ति छटपटाउने ती व्रजबालाका वचन सुनेर उद्धवले तिनलाई [illegible]य समाचारले सान्त्वना दिँदै भने ॥२२॥ उद्धवजी भन्दछन्–हे गोपिनी हो ! तिमीहरू

रुज उपमन्त्रिन्भण्यतामन्यवार्ता ॥ १६ ॥ प्रियसख पुनरागाः प्रेयसा प्रेषितः किं वरय किमनुरुन्धे माननीयोऽसि मेऽङ्ग ॥ नयसि कथमिहास्मान्दुस्त्यजद्वन्द्वपार्श्वं सततमुरसि सौम्य श्रीर्वधूः साकमास्ते ॥ २० ॥ अपि बत मधुपुर्यामार्यपुत्रोऽधुनाऽऽस्ते स्मरति स पितृगेहान्सौम्य बन्धूंश्च गोपान् ॥ क्वचिदपि स कथा नः किङ्करीणां गृणीते भुजमगुरुसुगन्धं मूर्ध्न्यधास्यत्कदा नु ॥ २१ ॥ श्रीशुक उवाच ॥ अथोद्धवो निशम्यैवं कृष्णदर्शनलालसाः ॥ सान्त्वयन्प्रियसन्देशैर्गोपीरिदमभाषत ॥ २२ ॥ उद्धव उवाच ॥ अहो यूयं स्म पूर्णार्था भवत्यो लोकपूजिताः ॥ वासुदेवे भगवति यासामित्यर्पितं मनः ॥ २३ ॥ दानव्रततपोहोमजपस्वाध्यायसंयमैः ॥ श्रेयोभिर्विविधैश्चान्यैः कृष्णे भक्तिर्हि साध्यते ॥ २४ ॥ भगवत्युत्तमश्लोके भवतीभिरनुत्तमा ॥ भक्तिः प्रवर्तिता दिष्ट्या मुनीनामपि दुर्लभा ॥ २५ ॥ दिष्ट्या पुत्रान्पतीन्देहान्स्वजनान्भवनानि च ॥ हित्वा वृणीत यूयं यत्कृष्णाख्यं पुरुषं परम् ॥ २६ ॥ सर्वात्मभावोऽधिगतो भवतीनामधोक्षजे ॥ विरहेण महाभागा महान्मेऽनुग्रहः कृतः ॥ २७ ॥ श्रूयतां प्रियसन्देशो भवतीनां सुखावहः ॥ यमादायागतो भद्रा अहं भर्तू रहस्करः ॥ २८ ॥ श्रीभगवानुवाच ॥ भवतीनां वियोगो मे न हि सर्वात्मना

साँच्चै नै कृतार्थ छौ । तिमी सबै संसारका पूजनीया छौ, किनकि भगवान वासुदेवमा तिम्रो चित्त यसरी लागेको छ ॥२३॥ दान, व्रत, तप, होम, जप, स्वाध्याय र इन्द्रिय-दमन तथा अनेक कल्याणकारक कर्मले केवल श्रीकृष्णको भक्ति नै सिद्ध गर्न सकिन्छ ? ॥ २४ ॥ तर सौभाग्यवश मुनिजनलाई बनि दुष्प्राप्य पवित्र-कीर्ति भगवान् कृष्णको प्रेम-लक्षणा उत्तम भक्ति प्राप्त गरेर संसारमा त्यसको प्रसार गरेका छौ ॥ २५ ॥ तिमीहरूले आफ्ना पति, देह, स्वजन र घरहरू छाडेर परमपुरुष भगवान् कृष्णलाई हृदयले रोजेका छौ । यो सानो सौभाग्यको कुरा होइन ॥२६॥ हे महाभागा गोपि हो ! कृष्णको वियोगले तिमीहरूले जुन दृढ-भक्ति पाएका थियौ, त्यो देखाएर तिमीले ममाथि ठूलो कृपा गर्‍यौ ॥२७॥ हे कल्याणी हो ! म आफ्ना स्वामी कृष्णको यौटा गुप्त कार्यकर्ता हुँ र यहाँ उनैको समाचार बोकेर आएको छु । तिमी आफ्ना प्रियतमको परमानन्ददायी समचार सुन ॥२८॥ भगवान्ले आज्ञा गर्नुभएको छ—म उनैको आत्मा हुँ । यसैले ममित तिम्रो काहल्यै वियोग हुन सक्तैन । जस्तै आकाश, वायु, अग्नि, जल र पृथिवी यी पाँच तत्त्व सबै पदार्थमा व्याप्त रहन्छन्,त्यसै

गरी म पनि मन, प्राण, जीव, इन्द्रिय र गुणका आश्रयरूप भएर सर्वत्र व्याप्त छु ॥ २९ ॥ आफ्नी मायाको प्रभावले म नै पञ्चतत्त्व, इन्द्रिय र गुणरूप भएर आफैं द्वारा आफूलाई नै रचना, पालन र लीन गरिलिन्छु ॥ ३० ॥ आत्मा माया र मायाका कार्यबाट सदा पृथक् रहन्छ । त्यो ज्ञानस्वरूप शुद्ध र गुणातीत छ । सुषुप्ति, स्वप्न र जाग्रत मायाका वृत्तिहरूलेनै त्यो प्राज्ञ, तैजस र विश्वरूप प्रतीत हुन्छ ॥३१॥ मनुष्यको यो कर्तव्य हो कि स्वप्नमा देखने पदार्थको समान मिथ्या प्रतीत हुने इन्द्रियहरूका सबै विषयहरूको जो मन द्वारा चिन्तन गर्दछ उसलाई इन्द्रिय सहित रोकेको र सुतेर उठेको मनुष्य जस्तै अज्ञान-निद्राले रहित भएर मेरो साक्षात्कार गरोस् ॥ ३२ ॥ जस्तै—सबै नदीहरू गएर समुद्रमा नै मिल्दछन्, त्यस्तै नै मनस्वी पुरुषहरू वेदाभ्यास, योग, आत्मा-अनात्मा विवेक, त्याग, तप, दम तथा सत्य आदि सबै धर्म मेरो प्राप्तिमैं समाप्त हुन्छन् ॥ ३३ ॥ म जुन तिम्रा नयनताई प्रिय भएर पनि तिमीहरू भन्दा यति पर छु, यसको यही उद्देश्य हो कि तिमीहरू निरन्तर मेरो ध्यान गर र तिमीहरूको मन सदैव ममा नै रमिरहोस् ॥ ३४ ॥ किनकि स्त्रीहरू तथा

क्वचित् ॥ यथा भूतानि भूतेषु खं वाय्वग्निर्जलं मही ॥ तथाऽहं च मनःप्राणभूतेन्द्रियगुणाश्रयः ॥ २९ ॥ आत्मन्येवात्मनाऽऽत्मानं सृजे हन्म्यनु-
पालये ॥ आत्ममायानुभवेन भूतेन्द्रियगुणात्मना ॥ ३० ॥ आत्मा ज्ञानमयः शुद्धो व्यतिरिक्तोऽगुणान्वयः ॥ सुषुप्तिस्वप्नजाग्रद्भिर्मायावृत्तिभि-
रीयते ॥ ३१ ॥ येनेन्द्रियार्थान्ध्यायेत मृषा स्वप्नवदुत्थितः ॥ तन्निरुन्ध्यादिन्द्रियाणि विनिद्रः प्रत्यपद्यत ॥ ३२ ॥ एतदन्तः समाम्नायो योगः सांख्यं
मनीषिणाम् ॥ त्यागस्तपो दमः सत्यं समुद्रान्ता इवापगाः ॥ ३३ ॥ यत्त्वहं भवतीनां वै दूरे वर्ते प्रियो दृशाम् ॥ मनसः सन्निकर्षार्थं मदनुध्यान-
काम्यया ॥ ३४ ॥ यथा दूरचरे प्रेष्ठे मन आविश्य वर्तते ॥ स्त्रीणां च न तथा चेतः सन्निकृष्टेऽक्षिगोचरे ॥ ३५ ॥ मय्यावेश्य मनः कृत्स्नं विमुक्ता
शेषवृत्ति यत् ॥ आनुस्मरन्त्यो मां नित्यमचिरान्मामुपैष्यथ ॥ ३६ ॥ या मया क्रीडता रात्र्यां वनेऽस्मिन्व्रज आस्थिताः ॥ अलब्धरासाः कल्याण्यो
मापुर्मद्वीर्यचिन्तया ॥ ३७ ॥ श्रीशुक उवाच ॥ एवं प्रियतमादिष्टमाकर्ण्य व्रजयोषितः ॥ ता ऊचुरुद्धवं प्रीतास्तत्सन्देशागतस्मृतीः ॥ ३८ ॥
गोप्य ऊचुः ॥ दिष्ट्याऽहितो हतः कंसो यदूनां सानुगोऽघकृत् ॥ दिष्ट्याप्तैर्लब्धसर्वार्थैः कुशल्यास्तेऽच्युतोऽधुना ॥ ३९ ॥ कच्चिद्गदाग्रजः सौम्य

अन्यान्य प्रेमीहरूको चित्त जस्तै पर गएका प्रियतममा निश्चल भावले लागिरहन्छ, त्यस्तो आँखाको सामुन्ने रहँदा लाग्दैन ॥३५॥ त्यस्तो जसको सङ्कल्प-विकल्पादि सबै वृत्तिहरू शान्त भइसकेका रहन्छन्, त्यो आफ्नो मनलाई पूर्णतया ममा नै लगाएर तिमी निरन्तर मेरो नै स्मरण गर्दै रहेर शीघ्र मलाई प्राप्त गर्नेछौ ॥ ३६ ॥ हे कल्याणी हो ! जब मैले वृन्दावनमा रात्रिको वेला रासक्रीडा गरेको थिएँ, तब जुन गोपिनी स्वजनले छेकेर ममित रास-विहारमा सम्मिलित हुन सकेका थिएनन्, ती केवल मेरा लीलाहरूको स्मरण गरेर नै मलाई प्राप्त गरेका थिए ॥३७॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! आफ्ना प्रियतमको सन्देश सुनेर गोपिनीहरूलाई ठूलो आनन्द भयो । प्रियको सन्देशले उनलाई तिनको स्मरण भएर आयो र ती उद्धवसित भन्नलागे ॥३८॥ गोपिनी भन्दछन–हे उद्धवजी ! यो निकै तर्कको कुरा हो—यादवहरूलाई कष्ट दिने दुष्ट कंस आफ्ना सहायक सहित मारियो । अब श्रीकृष्णचन्द्र धन-धान्यले पूर्ण भएर आफ्ना कुटुम्बहरूसित सकुशल छन्, यो पनि कम सौभाग्यको कुरा होइन ॥ ३९ ॥ तर हे सौम्य ! अब यो भन कि हाम्रा प्रियतम नन्दनन्दन श्यामसुन्दर

हाम्रो स्नेहयुक्त सलज्ज हाँसो र मनोहर दृष्टिले पूजित भएर जसरी हामीसित प्रेम गर्दथे, त्यस्तै नै अब मथुरापुरीका स्त्रीहरूसित प्रेम गर्दछन् कि गर्दैनन् ? ॥ ४० ॥ कृष्णचन्द्र ठूला रतिचतुर छन् र सबै स्त्रीहरू उनलाई मनपराउँछन् । अनि ती मथुरापुरीकी भद्र महिलाहरूको वाग्विलास र केलिकलापले सम्मानित भएर उनमा किन आसक्त नहुन् ? ॥ ४१ ॥ हे साधो ! यो त भन–जब कहिले पुरनारीहरूको सभामा कुरा चल्दछ तब आफ्नू स्वतन्त्र वार्तालापको प्रसंगमा गोविन्द कहिल्यै हामी काँठे ग्वालिनीलाई पनि सम्झन्छन् ? ॥ ४२ ॥ जब कुन्द-कुसुमले शोभित र चन्द्रिका चर्चित वृन्दावनमा रास रचाएर हामी प्रियाहरूसित चरणका नूपुरको ध्वनि गर्दै रमण गरेका थिए र हामी सबै उनकै मनमोहिनी गाथा गाउँथ्यौं, ती रात्रिको पनि ती सम्झना गर्दछन् ? ॥ ४३ ॥ हे उद्धव ! हामी सबै उनैको विरहानलमा डढीरहेका छौं । इन्द्रदेव जसरी पानी पारेर वन हरियो-भरिलो पारिदिन्छन्, त्यस्तै नै आफ्ना करस्पर्शादिले हामीलाई जीवनदान दिनका लागि कहिले यहाँ आउलान् ? ॥ ४४ ॥ यौटी गोपिनी बोली–ए सखी ! सखी ! जब उनले शत्रु

करोति पुरयोषिताम् ॥ प्रीति नः स्निग्धसव्रीडहासोदारेक्षणार्चितः ॥ ४० ॥ कथं रतिविशेषज्ञः प्रियश्च परयोषिताम् ॥ नानुबध्येत तद्वाक्यैर्विभ्रमैश्चानुभाजितः ॥ ४१ ॥ अपि स्मरति नः साधो गोविन्दः प्रस्तुते क्वचित् ॥ गोष्ठीमध्ये पुरस्त्रीणां ग्राम्याः स्वैरकथान्तरे ॥ ४२ ॥ ताः किं निशाः स्मरति यासु तदा प्रियाभिर्वृन्दावने कुमुदकुन्दशशाङ्करम्ये ॥ रेमे क्वणच्चरणनूपुररासगोष्ठ्यामस्माभिरीडितमनोज्ञकथः कदाचित् ॥ ४३ ॥ अप्येष्यतीह दाशार्हस्तप्ताः स्वकृतया शुचा ॥ सञ्जीवयन्नु नो गात्रैर्यथेन्द्रो वनमम्बुदैः ॥ ४४ ॥ कस्मात्कृष्ण इहायाति प्राप्तराज्यो हताहितः ॥ नरेन्द्रकन्या उद्वाह्य प्रीतः सर्वसुहृद्वृतः ॥ ४५ ॥ किमस्माभिर्वनौकोभिरन्याभिर्वा महात्मनः ॥ श्रीपतेराप्तकामस्य क्रियेतार्थः कृतात्मनः ॥ ४६ ॥ परं सौख्यं हि नैराश्यं स्वैरिण्यप्याह पिङ्गला ॥ तज्जानतीनां नः कृष्णे तथाप्याशा दुरत्यया ॥ ४७ ॥ क उत्सहेत सन्त्यक्तुमुत्तमश्लोकसंविदम् ॥ अनिच्छतोऽपि यस्य श्रीरङ्गान्न च्यवते क्वचित् ॥ ४८ ॥ सरिच्छैलवनोद्देशा गावो वेणुरवा इमे ॥ सङ्कर्षणसहायेन कृष्णेनाचरिताः प्रभो ॥ ४९ ॥ पुनः पुनः स्मारयन्ति नन्दगोपसुतं बत ॥ श्रीनिकेतैस्तत्पदकैर्विस्मर्तुं नैव शक्नुमः ॥ ५० ॥ गत्या ललितयोदारहासलीलावलोकनैः ॥ माध्व्या

लाई मारेर राज्य पाए । राजकन्याहरूसित विवाह गरेर आफ्ना स्वजन सहित सुखपूर्वक मथुरामा बस्तछन् अनि ती सबै भोग छाडेर यहाँ किन आउँथे ? ॥ ४५ ॥ अर्की सखी बोली–होइन, श्रीकृष्ण साक्षात् लक्ष्मीपति हुन् । ती पूर्णकाम र कृतकृत्य छन् । हामी वनवासी, र अन्य राजकन्यासित उनलाई के प्रयोजन ? ॥ ४६ ॥ कामचारिणी वेश्या पिङ्गलाले पनि भनेकी थिई 'संसारमा कसैको आशा नगर्नु नै सर्वश्रेष्ठ सुख हो । हामी यो कुरा जान्दछौं, तापनि कृष्णचन्द्रको आशा त्याग्नु हाम्रोनिम्ति कठिन काम छ ॥ ४७ ॥ पुण्यकीर्ति श्रीकृष्णको चर्चा त्याग्ने दुःसाहस कसले गर्न सक्ला ? हेर भगवानको इच्छा नभए पनि लक्ष्मी कहिल्यै पनि उनलाई छाड्न सक्तिनन् ॥ ४८ ॥ हे प्रभो ! बलरामजी र कृष्णचन्द्र द्वारा सेवित यी नदी, पर्वत वन र गाई तथा बाँसुरीको ध्वनि बारम्बार नन्द गोपसुत कृष्णको स्मरण गराउने गर्दछ । यहाँकी भूमिमा विद्यमान उनका श्रीनिकेतन चिन्हको कारण हामी उनलाई कसै गरे पनि बिर्सन सक्तैनौं ॥ ४९-५० ॥ उनको ललित चाला, उनको अत्यन्त उदार हाँसो, उनको विचित्र लीला, उनको तेर्सो हेराई र मधुर वाणीले हाम्रा मन

1058

हरेण भरेको छ, अनि हामी उनलाई कसरी बिर्सने ? ॥ ५१ ॥ हे रमानाथ ! हे व्रजनाथ ! हे आर्तिभञ्जन ! हे गोविन्द ! आज हजुरको गोकुल दुःखको सागरमा डुबिरहेछ, हजुर यसको उद्धार गर्नुहवस् ॥५२॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! भगवान् कृष्णको त्यस्तो सन्देश सुनेर व्रजका गोपिनीहरूको विरह-ताप शान्त भयो। उनीहरूले भगवान्लाई इन्द्रियदेखि अतीत तथा सबैका आत्मा जानेर उद्धवको राम्ररी स्वागत-सत्कार गरे ॥ ५३ ॥ यस प्रकार उद्धवजी गोपिनीहरूको विरह-व्यथा शान्त पार्दै केही महीनासम्म व्रजमा नै बसे र श्रीकृष्णका लीला-कथाहरू भनेर व्रजवासीहरूको मनोरञ्जन गर्दै रहे ॥ ५४ ॥ जति दिन उद्धवजी गोकुल तथा नन्दगाउँमा बसे, त्यति समयसम्म व्रजवासीहरूलाई कृष्ण-चर्चाको कारण एक क्षणको समान बिते झैं थाहा भयो ॥ ५५ ॥ भक्तवर उद्धव व्रजका नदी, वन, पर्वत, कन्दरा र फुलेका वृक्षहरू हेर्दै तथा व्रजवासीहरूलाई कृष्णचन्द्रको स्मरण गराउँदै त्यहाँ ठूलो आनन्दले बसे ॥ ५६ ॥ श्रीकृष्ण प्रेमले गर्दा गोपिनीका मनको विह्वलता देखेर उद्धवजी निकै आनन्दित भए उनलाई प्रणाम गरेर भन्न लागे ॥ ५७ ॥

गिरा हृतधियः कथं तं विस्मरामहे ॥ ५१ ॥ हे नाथ हे रमानाथ व्रजनाथार्तिनाशन ॥ मग्नमुद्धर गोविन्द गोकुलं वृजिनार्णवात् ॥ ५२ ॥ श्रीशुक उवाच ॥ ततस्ताः कृष्णसन्देशैर्व्यपेतविरहज्वराः ॥ उद्धवं पूजयाञ्चक्रुर्ज्ञात्वात्मानमधोक्षजम् ॥ ५३ ॥ उवास कतिचिन्मासान्गोपीनां विनुदञ्छुचः ॥ कृष्णलीलाकथां गायन् रमयामास गोकुलम् ॥ ५४ ॥ यावन्त्यहानि नन्दस्य व्रजेऽवात्सीत्स उद्धवः ॥ व्रजौकसां क्षणप्रायाण्या-सन्कृष्णस्य वार्तया ॥ ५५ ॥ सरिद्वनगिरिद्रोणीर्वीक्षन्कुसुमितान्द्रुमान् ॥ कृष्णं संस्मारयन्रेमे हरिदासो व्रजौकसाम् ॥ ५६ ॥ दृष्ट्वैवमादि गोपीनां कृष्णावेशात्ममिक्लवम् ॥ उद्धवः परमप्रीतस्ता नमस्यन्निदं जगौ ॥ ५७ ॥ एताः परं तनुभृतो भुवि गोपवध्वो गोविन्द एव निखिलात्मनि रूढ-भावा ॥ वाञ्छन्ति यद्भवभियो मुनयो वयञ्च किं ब्रह्मजन्मभिरनन्तकथारसस्य ॥ ५८ ॥ क्वेमाः स्त्रियो वनचरीर्व्यभिचारदुष्टाः कृष्णे क्व चैव परमात्मनि रूढभावाः ॥ नन्वीश्वरोऽनुभजतोऽविदुषोऽपि साक्षाच्छ्रेयस्तनोत्यगदराज इवोपयुक्तः ॥ ५९ ॥ नायं श्रियोऽङ्ग उ नितान्तरतेः ॥ प्रसादः स्वर्यो-षितां नलिनगन्धरुचां कुतोऽन्याः ॥ रासोत्सवेऽस्य भुजदण्डगृहीतकण्ठलब्धाशिषां य उदगाद्व्रजवल्लवीनाम् ॥ ६० ॥ आसामहो चरणरेणुजुषां

'यी गोपाङ्गनाहरू संसारका समस्त देहधारीहरू भन्दा श्रेष्ठ छन्, किनकि यिनको चित्त तो सर्वात्मा श्रीकृष्णमा नै आसक्त भइरहेछ। संसारको भयले डराउने मुनिजन र हामी भक्तजन पनि जसको इच्छा गर्दछन्। सत्य कुरा यो हो कि जो श्रीअनन्तका कथाका रसिक छन्, उनलाई ब्राह्मणको मातृगर्भबाट हुने, सावित्र अर्थात् यज्ञोपवीत संस्कार जन्य र याज्ञिक अर्थात् यज्ञ दीक्षाले हुने जन्मको के आवश्यकता छ ? ॥५८॥ अहो ! कहाँ यी व्यभिचार-दूषिता वनवासिनी स्त्री र कहाँ यिनका परमात्मा कृष्णमा यस्तो बलियो अनुराग यसले सिद्ध हुन्छ कि यदि अज्ञानी पनि भगवानको भजन गर्दछ भने त्यसको पनि कल्याण गर्दछन्। जस्तै–अमृत नजानेर पनि त्यसले पिउने व्यक्तिलाई अमरत्व दिन्छ ॥ ५९ ॥ रासो-त्सवको बेला बाँहीमा भगवानका भुजाको संगत पाएर पूर्णकाम गोपिनीलाई श्रीहरिको जुन कृपा प्राप्त भएको थियो, त्यो निरन्तर उनको वक्षःस्थलमा रमणशील लक्ष्मी र कमल झैं कान्ति र गन्धले युक्त सुर-सुन्दरीहरूलाई पनि प्राप्त हुन सकेन, अनि अरु स्त्रीको विषयमा के कुरा भन्ने ? ॥ ६० ॥ यदि म पनि वृन्दावनमै गोपिनीका चरणरजको सेवन

गर्ने लता, औषधि वा अन्य कुनै वृक्ष हुन पाए कस्तो हुन्थ्यो ! धन्य हुन् यी गोपिनी जसले आफ्ना बन्धु र आर्यधर्मसम्म त्यागेर श्रुतिहरूले खोज्ने योग्य भगवत् प्राप्तिको बाटोको अनुसरण गरेका छन् ॥६१॥ अहो ! साक्षात् लक्ष्मी जसको पूजा गर्दछिन् र ब्रह्मादि पूर्णकाम योगेश्वर पनि जसको चिन्तन गर्दछन्, भगवान् कृष्णका ती चरणको रासविलासको वेला आफ्ना स्तनमा राखेर आफ्नू विरह-व्यथा मेटेका थिए र जसका हरिकथामय गायन त्रिलोकलाई पवित्र पार्दछ. व्रजका ती गोपिनीहरूका चरणरजलाई म वारम्बार प्रणाम गर्दछु ॥६२॥६३॥ श्री शुकदेव भन्नुहुन्छ–हे राजन् ! व्रजमा केही महीना बिताएर उद्धव, गोपिनी, नन्द यशोदा र अन्य गोपगणसित सोधेर तथा उनको अनुमति लिएर रथमा बसे ॥६४॥ व्रजमा बाहिर पुगेपछि नन्दादि गोप धेरै सौगात लिएर उनीकहाँ आई प्रेमवश आँखामा आँसु ल्याएर भने ॥ ६५ ॥ 'हाम्रो इच्छा छ–हाम्रा मनका वृत्तिहरू सदैव श्रीकृष्णकै चरण-कमलमा रमिरहुन्, हाम्रा वाणी उनैको नाम सङ्कीर्तन गरुन् र हाम्रो शरीर उनैलाई प्रणामादि गर्नमा लागि रहून ॥ ६६ ॥ विविध कर्मवश घुम्दै जहाँ-जहाँ उनको इच्छाले

बहं स्यां वृन्दावने किमपि गुल्मलतौषधीनाम् ॥ या दुस्त्यजं स्वजनमार्यपथं च हित्वा भेजुर्मुकुन्दपदवीं श्रुतिभिर्विमृग्याम् ॥६१॥या वै श्रियार्चितमजादि-भिराप्तकामैर्योगेश्वरैरपि यदात्मनि रासगोष्ठ्याम् ॥ कृष्णस्य तद्भगवतश्चरणारविन्दं न्यस्तं स्तनेषु विजहुः परिरभ्य तापम् ॥६२॥ वन्देनन्दव्रजस्त्रीणां पाद-रेणुमभीक्ष्णशः ॥ यासां हरिकथोद्गीतं पुनाति भुवनत्रयम् ॥६३॥ श्रीशुक उवाच ॥ अथ गोपीरनुज्ञाप्य यशोदां नन्दमेव च ॥ गोपानामन्त्र्य दाशार्हो यास्यन्नारुरुहे रथम् ॥६४॥ तं निर्गतं समासाद्य नानोपायनपाणयः ॥ नन्दादयोऽनुरागेण प्रावोचन्नश्रुलोचनाः ॥६५॥ मनसो वृत्तयो नः स्युः कृष्ण-पादाम्बुजाश्रयाः ॥ वाचोऽभिधायिनीर्नाम्नां कायस्तत्प्रह्वणादिषु ॥६६॥ कर्मभिर्भ्राम्यमाणानां यत्र क्वापीश्वरेच्छया ॥ मङ्गलाचरितैर्दानै रतिर्नः कृष्ण ईश्वरे ॥ ६७ ॥ एवं सभाजितो गोपैः कृष्णभक्त्या नराधिप ॥ उद्धवः पुनरागच्छन्मथुरां कृष्णपालिताम् ॥ ६८ ॥ कृष्णाय प्रणिपत्याह भक्त्युद्रेकं व्रजौ-कसाम् ॥ वासुदेवाय रामाय राज्ञे चोपायनान्यदात् ॥६९॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धे उद्धवप्रतियाने सप्तचत्वारिंशोऽध्यायः॥४७॥

श्रीशुक उवाच ॥ अथ विज्ञाय भगवान्सर्वात्मा सर्वदर्शनः ॥ सैरन्ध्र्याः कामतप्तायाः प्रियमिच्छन्गृहं ययौ ॥ १ ॥ महार्होपस्करैराढ्यं कामोपायोपबृंहितम् ॥ मुक्तादामपताकाभिर्वितानशयनासनैः ॥ धूपैः सुरभिभिर्दीपैः स्रग्गन्धैरपि मण्डितम् ॥ २ ॥ गृहं तमायान्तमवेक्ष्य

हाम्रो जन्म हुन्छ, त्यहीं हाम्रा शुभकर्म र दानादिको परिणामले हामीलाई कृष्णकै भक्ति मिलोस् ।' हे राजन् ! गोप द्वारा यसरी कृष्ण भक्तिले सम्मानित उद्धव भगवान् कृष्ण द्वारा सुरक्षित मथुरा फर्के ॥६७॥६८॥ त्यहाँ पुगेर उनले श्रीकृष्णलाई प्रणाम गरेर व्रजवासीहरूको भक्तिको अतिरेकता विस्तारले वर्णन गरे । नन्दजीले जो सौगात दिएका थिए, त्यो सबै राम-कृष्ण र राजा उग्रसेनलाई अर्पण गरिदिए ॥६९॥ इति श्रीमद्भागवते दशमस्कन्धे पूर्वार्धे नेपाली-भाषाटीकायां सप्तचत्वारिंशोऽध्यायः ॥४७॥

(कुब्जा र अक्रूरको घर गएर भगवान्‌ले उनलाई हस्तिनापुर पठाउनु) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! अन्तर्यामी तथा सर्वदर्शी भगवान् गोविन्द आफ्नू प्रेममा व्याकुल कुब्जाको प्रिय गर्न उसको घर जानुभयो ॥१॥ कुब्जाको भवन कामोद्दीपक र बहुमूल्य सामग्रीहरूले सुसज्जित थियो । मोतिका माला, ध्वजा-पताका, चँदुवा, शय्या,

धरि-धरिका आसन, सुगन्धित धूप, दीप, चन्दन र पुष्प-मालाले त्यसको घरको शोभा मह्रहेको थियो ॥ २ ॥ भगवान् आउनलागेका देखेर हड्बड गर्दै शीघ्र शय्याबाट उठी र सखी-हरूका साथै अगाडि आएर स्वागत गरी । अनि राम्रो आसन दिएर विधिवत् प्रभुको पूजा गरी ॥ ३ ॥ उद्धवले पनि त्यसको पूजा ग्रहण गरे र आसनलाई केवल छोएर भूमिमै बसे । भगवान् कृष्ण लोकाचारको अनुसरण गर्दै तुरुन्त उसको बहुमूल्य शय्यामा गएर बस्नु भयो ॥ ४ ॥ अनि कुब्जा स्नान, अनुलेपन, वस्त्राभूषण, हार, गन्ध, ताम्बूल र सुरासव आदिले सुसज्जित भई लीलामयी सलज्ज हास्य र विलास-विभ्रम सहित भगवानतिर हेर्दै उनको नजीकै आई ॥ ५ ॥ श्याम सुन्दरले नवमिलनको संकोचले शंकित कुब्जालाई अङ्क लगीचै डाक्नुभयो र त्यसको कङ्कण-भूषित हात समातेर छेउमा बसाल्नुभयो । अनि चन्दन दानको पुण्यले युक्त त्यस रमणीसित विहार गर्न लागे ॥ ६ ॥

साऽऽसनात्सद्यः समुत्थाय हि जातसम्भ्रमा ॥ यथोपसङ्गम्य सखीभिरच्युतं सभाजयामास सदासनादिभिः ॥ ३ ॥ तथोद्धवः साधु तयाऽभिपूजितो न्यषीददुर्व्यामभिमृश्य चासनम् ॥ कृष्णोऽपि तूर्णं शयनं महाधनं विवेश लोकाचरितान्यनुव्रतः ॥ ४ ॥ सा मज्जनालेपदुकूलभूषण-स्रग्गन्धताम्बूलसुधाऽऽसवादिभिः ॥ प्रसाधितात्मोपससार माधवं सव्रीडलीलोत्स्मितविभ्रमेक्षितैः ॥ ५ ॥ आहूय कान्तां नवसङ्गमह्रिया विशङ्कितां कंकणभूषिते करे ॥ प्रगृह्य शय्यामधिवेश्य रामया रेमेऽनुलेपार्पणपुण्यलेशया ॥ ६ ॥ साऽनङ्गतप्तकुचयोरुरसस्तथाऽक्ष्णोर्जिघ्रन्त्यनन्तचरणेन रुजो मृजन्ती ॥ दोर्भ्यां स्तनान्तरगतं परिरभ्य कान्तमानन्दमूर्तिमजहादतिदीर्घतापम् ॥ ७ ॥ सैवं कैवल्यनाथं तं प्राप्य दुष्प्रापमीश्वरम् ॥ अङ्गरागार्पणेनाहो दुर्भगेदमयाचत ॥ ८ ॥ आहोष्यतामिह प्रेष्ठ दिनानि कतिचिन्मया ॥ रमस्व नोत्सहे त्यक्तुं संगं तेऽम्बुरुहेक्षण ॥ ९ ॥ तस्यै कामवरं दत्त्वा मानयित्वा च मानदः ॥ सहोद्धवेन सर्वेशः स्वधामगमदर्चितम् ॥१०॥ दुराराध्यं समाराध्य विष्णुं सर्वेश्वरेश्वरम् ॥ यो वृणीते मनोग्राह्यमसत्त्वात्कुमनीष्यसौ ॥ ११ ॥ अक्रूरभवनं कृष्णः सहरामोद्धवः प्रभुः ॥ किञ्चिच्चिकीर्षयन्प्रागादक्रूरप्रियकाम्यया ॥ १२ ॥ स तान्नरवर-

उसले अनन्तका चरण आफ्नू हृदय, वक्षस्थल र आँखामा टाँसेर बास्ना लिँदै आफ्नू मनःकामना पूर्ण पारी र हृदयमा प्रियतमको आनन्दमयी मूर्ति बसालेर आफ्नू चिरकालीन विरह व्यथा शान्त पारी ॥७॥ अहो ! केवल चन्दन-दानले ती अत्यन्त दुष्प्राप्य तथा मोक्षका अधीश्वर भगवान् कृष्णलाई पाएर पनि त्यस अभागिनीले केवल यही वर मागी—'हे प्रियतम ! हजुर केही दिन यहाँ बसेर मसित विहार गर्नुहवस्, किनकि हे कमलनयन ! म हजुरको संगति छाड्न सक्तिन' ॥ ८ ॥ सबैको मान राख्ने सर्वेश्वरले उसलाई अभीष्ट वर दिएर सम्मानित गरेर उसद्वारा पूजित भई प्रिय भक्त उद्धवसित घर फर्कनु भयो ॥ ९ ॥ १० ॥ ईश्वरका पनि ईश्वर र अति कष्टले आराधनीय श्रीविष्णु भगवानको आराधना गरेर पनि जो व्यक्ति उनीसित तुच्छ र मिथ्या *स्वार्थमय विषय सुख माग्दछ, त्यो साह्रै ठूलो अभागी हो ॥११॥ एक दिन श्रीकृष्ण अक्रूरका प्रिय

* दृष्टान्त ( स्वार्थको मैत्री )—बोढा वटवृक्षमा चार जीव बस्तथे—न्याउरी, उल्लु, बिरालो र मूसो । न्याउरी र मूसो आफाफ्नो प्वालमा, उल्लु पातको माझमा र बिरालो ... बस्तथे । मूसालाई तीनोटैले मार्न सक्थे र बिरालो तीनोटैको घातक थियो । अतः बिरालो निर्भय डुल्दथ्यो, तर ती तीनै अवसर पाएर नै ... । एक दिन ... बिरालो

गर्न र उनीद्वारा केही कार्य गराउने इच्छाले बलराम र उद्धवसित उनको घर गए ॥ १२ ॥ स्वजनलाई अकस्मात् सम्मुख देखेर अक्रूर आनन्दित भई जुरुक्क उठे तथा राम र कृष्णको अभिनन्दन एवं आलिङ्गन गरेर उनलाई प्रणाम गरे । उनले पनि अक्रूरलाई अभिवादन गरेर उनीहरू बसेपछि अक्रूरले उनको विधिवत् पूजा गरे ॥१३-१४॥ हे राजन् ! अक्रूरले उनको पवित्र चरणोदक शिरमा छरे र विविध पूजा सामग्री, वस्त्र, दिव्यगन्ध माला र श्रेष्ठ आभूषणहरूले पूजा गरेर नतमस्तक भई प्रणाम गरे । तब राम र कृष्णका चरण काखमा राखेर मिच्दै उनले नम्रतापूर्वक सोधे–॥१५-१६ ॥ 'सौभाग्यको कुरा हो—पापी कंस आफना सहायक समेत मारियो । त्यसलाई मारेर हजुर दुवैले आफ्नो कुललाई ठूलो

श्रेष्ठानाराद्वीक्ष्य स्वबान्धवान् ॥ प्रत्युत्थाय प्रमुदितः परिष्वज्याभिवाद्य च ॥ १३ ॥ ननाम कृष्णं रामं च स तैरप्यभिवादितः ॥ पूजयामास विधिवत्कृतासनपरिग्रहान् ॥ १४ ॥ पादावनेजनीरापो धारयञ्छिरसा नृप ॥ अर्हणेनाम्बरैर्दिव्यैर्गन्धस्रग्भूषणोत्तमैः ॥ १५ ॥ अर्चित्वा शिरसाऽऽनम्य पादावङ्कगतौ मृजन् ॥ प्रश्रयावनतोऽक्रूरः कृष्णरामावभाषत ॥ १६ ॥ दिष्ट्या पापो हतः कंसः सानुगो वामिदं कुलम् ॥ भवद्भ्यामुद्धृतं कृच्छ्राद्दुरन्ताच्च समेधितम् ॥ १७ ॥ युवां प्रधानपुरुषौ जगद्धेतू जगन्मयौ ॥ भवद्भ्यां न विना किञ्चित्परमस्ति न चापरम् ॥ १८ ॥ आत्मसृष्टमिदं विश्वमन्वाविश्य स्वशक्तिभिः ॥ ईयते बहुधा ब्रह्मञ्छ्रुतप्रत्यक्षगोचरम् ॥ १९ ॥ यथा हि भूतेषु चराचरेषु मह्यादयो योनिषु भान्ति नाना ॥ एवं भवान्केवल आत्मयोनिष्वात्मात्मतन्त्रो बहुधा विभाति ॥ २० ॥ सृजस्यथो लुम्पसि पासि विश्वं रजस्तमःसत्त्वगुणैः स्वशक्तिभिः ॥ न बध्यसे

संकटबाट झिकेर उन्नत र समृद्ध पार्नुभयो ॥ १७ ॥ हजुर दुवै जगत्का कारण र जगन्मय प्रधान पुरुष हुनुहुन्छ । संसारका कार्य-कारणरूप कुनै वस्तु पनि हजुरसित पृथक् छैन ॥१८॥ हे भगवन् ! यो स्वरचित विश्वमा मायादि शक्तिले प्रविष्ट भएर हजुर विविध रूपमा देखिनुहुन्छ ॥१९॥ जस्तै पृथ्वी आदि कारण तत्त्व आफ्ना कार्यस्वरूप–स्थावर, जङ्गम प्राणीहरूमा अनुप्रविष्ट भएर विविधरूपमा भासमान हुन्छन्, त्यस्तै हजुर स्वतन्त्र आत्मरूपले एक भएर पनि अनेक ज्ञान हुनुहुन्छ ॥ २० ॥ हजुर त्रिगुणरूपिणी शक्तिले उत्पत्ति, स्थिति तथा संहार गर्नुहुन्छ । किन्तु ती गुणहरू अथवा ती कर्म-बन्धनमा बाँधिनन्, किनकि हजुर शुद्ध ज्ञान स्वरूप हुनुहुन्छ । अतः हजुरको बन्धनको कुनै कारण नै छैन ॥ २१ ॥ यी देहादि

---

मूसाको खोबीमा निस्केकी बालमा अल्झिई । मूसो पनि बिस्तारै त्यही खेतमा पुग्यो र बिरालोलाई बालभित्र देखेर आनन्दले उफ्रन लाग्यो । त्यतिमै न्याउरी र उल्लू पनि आउनलागेका देखिए । जब ती दुवैले बिरालोलाई बालमा परेको देखे तब मूसालाई समाउने विचार गरे । मूसाले सोच्यो यदि म दगुरेर बिरालोनिर जाउँभने यी डरले उनको नजीकै आउन सक्तैनन् तर बिरालोले नै मलाई के बाँकिराख्ला र ! यदि म बिरालोभन्दा परैबसौं भने यी दुवैले मलाई मार्छन् । अनि मूसो बिस्तारै बिरालोको नजीक भएर भन्न लाग्यो—'तिमीलाई बालमा अल्झेको देखेर मलाई दुःख लागिरहेको छ । यदि तिमी नखौ भने म आफ्ना दाँतले बाल काटिदिन सक्दछु । तर तिम्रो मनमा के छ, यो विचार गरेर तिमीनेर आउन डर लागिरहेछ ।' बिरालोले भन्यो–'मित्र ! जब तिमी मेरो प्राणरक्षा गर्नेछौ, तब म पनि यस्तो कृतघ्न छैन कि आफ्नु उपकारीको कुभलो चिताउँ । छिटो ढीलो नगर, रात बिती आँटेको छ । अतएव डोरी छिटै काट ।' मूसो बिस्तार-बिस्तार दाँत चलाउन लाग्यो । त्यो जानी-जानी यस कारण ढीलो गरिरहेको थियो–खेतको स्वामी आइहालोस् । उल्लू र न्याउरीले बिरालोनिर मूसोलाई देखेर आफ्नु बाटो लगाए । रात बितेपछि जसै किसान आउन लागेको देखियो, बिरालोले भन्यो— मित्र ! छिटो गर ! मूसोले फटाफट बाल काटिदियो । बिरालो मालिकको डरले आफ्नु ज्यान बचाएर भाग्यो र मूसा मृत्युको मुखबाट बाँचेर बसो स्थानमा गयो । भोलिपल्ट बिरालोले मूसोलाई आफ्नु नजीकै डाक्यो र मूसोले उत्तर दियो—'मौकाले गर्दा कहिले काहीं शत्रु पनि मित्र बन्दछ, तर सधैं मित्रताको व्यवहार गर्दैन ।'

उपाधिहरू मिथ्या हुन् । अतः जीवात्मामा पनि जन्म वा जन्मजनित भेद सिद्ध हुन सक्तैन । अतः हजुरमा न बन्धन छ न मोक्ष । हजुरमा बन्धन-मोक्षको कल्पना गर्नु व्यक्तिको अज्ञान हो ॥२२॥ हजुरले संसारको कल्याणार्थ सनातन वेदमार्गलाई प्रकट गर्नुभयो । जब-जब यसलाई मिथ्या पाखण्डपूर्ण पन्थले कुनै क्षति पुग्दछ, तब-तब हजुर शुद्धसत्वमय शरीर धारण गर्नुहुन्छ ॥ २३ ॥ हे प्रभो ! यस बेला हजुर असुरका अंशज राजाहरूका सयौं अक्षौहिणी सेनाको संहार गरेर पृथ्वीको भारी हलुको पार्न आफ्ना अंश बलराम सहित वसुदेवकहाँ अवतार लिएर यदुकुलको यश बढाउँदै हुनुहुन्छ ॥२४॥ हे ईश्वर ! हे अधोक्षज ! पञ्चयज्ञका देवता, पितृगण र सबै राजा जसका मूर्ति हुन् र जसका चरणोदक त्रिलोक पवित्र पार्दछ, त्यस्ता जगद्गुरु भगवान् मेरोघर पाल्नुभो । अतएव म आफ्नू ठूलो सौभाग्य मान्दछु ॥२५॥ हे प्रभो ! हजुर भक्तका हितकारी; सत्यवक्ता, सुहृद् र कृतज्ञ हुनुहुन्छ । अनि कुनै बुद्धि-

तद्गुणकर्मभिर्वा ज्ञानात्मनस्ते क्व च बन्धहेतुः ॥ २१ ॥ देहाद्युपाधेरनिरूपितत्वाद्भवो न साक्षान्न भिदाऽऽत्मनः स्यात् ॥ अतो न बन्धस्तव नैव मोक्षः स्यातां निकामस्त्वयि नोऽविवेकः ॥ २२ ॥ त्वयोदितोऽयं जगतो हिताय यदा यदा वेदपथः पुराणः ॥ बाध्येत पाखण्डपथैरसद्भिस्तदा भवान्सत्त्वगुणं बिभर्ति ॥ २३ ॥ स त्वं प्रभोऽद्य वसुदेवगृहेऽवतीर्णः स्वांशेन भारमपनेतुमिहासि भूमेः ॥ अक्षौहिणीशतवधेन सुरेतरांशराज्ञाममुष्य च कुलस्य यशो वितन्वन् ॥२४ ॥ अद्येश नो वसतयः खलु भूरिभागा यः सर्वदेवपितृदेवमूर्तिः ॥ यत्पादशौचसलिलं त्रिजगत्पुनाति स त्वं जगद्गुरुरधोक्षज याः प्रविष्टः ॥२५॥ कः पण्डितस्त्वदपरं शरणं समीयाद्भक्तप्रियादृतगिरः सुहृदः कृतज्ञात् ॥ सर्वान्ददाति सुहृदो यजतोऽभिकामा-नात्मानमप्युपचयापचयौ न यस्य ॥ २६ ॥ दिष्ट्या जनार्दन भवानिह नः प्रतीतो योगेश्वरैरपि दुरापगतिः सुरेशैः ॥ छिन्ध्याशु नः सुतकलत्रधनाप्त-गेहदेहादिमोहरशनां भवदीयमायाम् ॥ २७ ॥ श्रीशुक उवाच ॥ इत्यर्चितः संस्तुतश्च भक्तेन भगवान्हरिः ॥ अक्रूरं सस्मितं प्राह गीर्भिः सम्मोहय-न्निव ॥ २८ ॥ श्रीभगवनुवाच ॥ त्वं नो गुरुः पितृव्यश्च श्लाघ्यो बन्धुश्च नित्यदा ॥ वयं तु रक्ष्याः पोष्याश्च अनुकम्प्याः प्रजा हि वः ॥२९॥ भवद्विधा महाभागा निषेव्या अर्हसत्तमाः ॥ श्रेयस्कामैर्नृभिर्नित्यं देवाः स्वार्था न साधवः ॥ ३० ॥ न ह्यम्मयानितीर्थानि न देवा मृच्छिलामयाः

मान पुरुष बाहेक अरू कसैको पनि शरणमा किन जानेछ ? हजुर आफ्ना भक्तको सबै कामना पूर्ण पार्नुहुन्छ । यति सम्म कि जसको कहिल्यै क्षति वा वृद्धि हुँदैन यस्ता स्वयंलाई पनि दिन सक्नुहुन्छ ॥२६॥ हे जनार्दन ! ठूला-ठूला योगी र सुरेश्वर पनि हजुरको गति जान्न सक्तैनन् । तर मलाई हजुरको दर्शन प्राप्त भयो, यो मेरो सौभाग्य हो । हे प्रभो ! स्त्री-पुत्र, धन, स्वजन भवन र देह आदि मेरो—मोहपाशरूपी आफ्नी मायाका हजुर सबै बन्धन काटिदिनोस ॥२७॥ श्रीशुकदेव भन्दछन् ! भक्त अक्रूरद्वारा पूजित र प्रार्थित भएर भगवान कृष्णले उनलाई आफ्नी वाणीले मोहित पार्दै मुसुक्क हाँसेर भन्नुभयो ॥२८-२९॥ हे तात ! हजुर हाम्रा गुरु, काका र प्रशंसनीय स्वजन हुनुहुन्छ । हामी हजुरका बालक हौं र सदा रक्षा, पालन तथा कृपापात्र रहँदै आएका छौं । आफ्ना शुभचिन्तक पुरुषले हजुर जस्तै परमपूजनीय महापुरुषको सदा सेवा गर्नुपर्दछ किनकि देवता स्वार्थसाधनमा निरत रहन्छन्,

1063

तर साधुजन यस्ता हुँदैनन् ॥३०॥ जलमय तीर्थ र माटो वा ढुङ्गाका देवता नै देवता हुनन् । साधुजन तीभन्दा पनि ठूला तीर्थ र देवता हुन्छन् किनकि तीर्थ र मूर्ति त धेरै दिनसम्म सेवा गर्नाले पवित्र पार्दछन्, तर साधुजन दर्शनले नै पवित्र पारिदिन्छन् ॥३१॥ हे तात ! हजुर सुहृद्हरूमा महान् हुनुहुन्छ । अतः हजुर पाण्डवहरूको कल्याणार्थ तथा तिनको कुशल-क्षेम जाँच्नका लागि हस्तिनापुर जानोस् ॥३२॥ हामीले सुनेका छौं–पिता पाण्डु मरेपछि दुःखी युधिष्ठिरादि बालक र उनकी आमा कुन्तीलाई राजा धृतराष्ट्रले हस्तिापुर लगेका छन् र ती सबै अब त्यहीं बस्तछन् ॥३३॥अम्बिकातनय महाराज धृतराष्ट्र अन्धा र हीनबुद्धि छन् । ती सदा आफ्नू कुटिल पुत्र दुर्योधनकै अधीन रहन्छन् । अतः आफ्ना भतीजा-हरूसित तिनको आफ्ना छोराहरू झैं व्यवहार हुँदैन ॥३४॥ हजुर गएर तिनको स्थिति आन्नुहवस् । उनको समाचार पाएर म यस्तो प्रयत्न गर्नेछु जसले मेरा सुहृद्लाई सुख प्राप्त होस् ॥३५॥ अक्रूरलाई यस्तो आज्ञा दिएर राम, कृष्ण र उद्धवसित आफ्नो भवनमा गए ॥३६॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपालीभाषाटीकायामष्टचत्वारिंशोऽध्यायः ॥४८॥

ते पुनन्त्युरुकालेन दर्शनादेव साधवः ॥ ३१ ॥ स भवान्सुहृदां वै नः श्रेयाञ्छ्रेयश्चिकीर्षया ॥ जिज्ञासार्थं पाण्डवानां गच्छ त्वं गजमाह्वयम् ॥ ३२ ॥ पितर्युपरते बालाः सह मात्रा सुदुःखिताः ॥ आनीताः स्वपुरं राज्ञा वसन्त इति शुश्रुम ॥ ३३ ॥ तेषु राजाऽम्बिकापुत्रो भ्रातृपुत्रेषु दीनधीः ॥ समो न वर्तते नूनं दुष्पुत्रवशगोऽन्धदृक् ॥ ३४ ॥ गच्छ जानीहि तद्वृत्तमधुना साध्वसाधु वा ॥ विज्ञाय तद्विधास्यामो यथा शं सुहृदां भवेत् ॥ ३५ ॥ इत्यक्रूरं समादिश्य भगवान्हरिरीश्वरः ॥ सङ्कर्षणोद्धवाभ्यां वै ततः स्वभवनं ययौ ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पूर्वार्धेऽष्टचत्वारिंशोऽध्यायः ॥ ४८ ॥

श्रीशुक उवाच ॥ स गत्वा हास्तिनपुरं पौरवेन्द्रयशोऽङ्कितम् ॥ ददर्श तत्राम्बिकेयं सभीष्मं विदुरं पृथाम् ॥ १ ॥ सहपुत्रं च बाह्लीकं भारद्वाजं सगौतमम् ॥ कर्णं सुयोधनं द्रौणिं पाण्डवान्सुहृदोऽपरान् ॥ २ ॥ यथावदुपसङ्गम्य बन्धुभिर्गान्दिनीसुतः ॥ सम्पृष्टस्तैः सुहृद्वार्तां स्वयं चापृच्छदव्ययम् ॥ ३ ॥ उवास कतिचिन्मासान्राज्ञो वृत्तविवित्सया ॥ दुष्प्रजस्याल्पसारस्य खलच्छन्दानुवर्तिनः ॥ ४ ॥ तेज ओजो बलं वीर्यं प्रश्रयादींश्च सद्गुणान् ॥ प्रजानुरागं पार्थेषु च महद्भिश्चिकीर्षितम् ॥५॥ कृतं च धार्तराष्ट्रैर्यद्गरदानाद्यपेशलम् ॥ आचख्यौ सर्वमेवास्मै पृथा विदुर एव च ॥६॥

(अक्रूरजीको हस्तिनापुर प्रस्थान ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! पुरुवंशी राजाहरूको सुयशले व्याप्त हस्तिपुरीमा पुगेर अक्रूर धृतराष्ट्र, भीष्म, विदुर, कुन्ती, सोमदत्त, बाह्लीक भारद्वाज, गौतम, द्रोणाचार्य, कृपाचार्य, कर्ण, दुर्योधन, अश्वत्थामा, पाण्डवगण र अन्यान्य सुहृद्लाई भेटे ॥१॥२॥ उनी जब सुहृद् जन हरूसित भेटिसके र उनकोकुशल-मंगलसोधेपछि आफ्नू पनि कुशल-क्षेम बताए ॥३॥ कर्ण आदि कुटिल मन्त्रीको सल्लाहमा हिंड्ने र दुष्ट पुत्रहरूले युक्त राजा धृतराष्ट्रको प्रवृत्ति जाँच्नको लागि ती केही महीनासम्म हस्तिनापुरमै बसे ॥४॥ त्यसै बेला कुन्ती र विदुरले उनलाई पाण्डवको तेज, शस्त्र-कौशल, बल, वीर्य र विनय आदि गुणहरूका, उनका प्रति प्रजाको अनुरागको, उनको उत्कर्ष सहन नसक्ने धृतराष्ट्र-पुत्र दुर्योधन आदि ले जति मनं खाउँदै थिए तथा 'विष-दान' आदि जो अनुचित व्यवहार तिनले पहिल्यै गरेकाका थिए, त्यो सबै वृत्तान्त सुनाए ॥ ५ ॥ ६ ॥ भाई

अक्रूरलाई देखेर कुन्ती उनीकहाँ गइन् र आफ्नो जन्म-स्थानको सम्झना भएर आँखामा आँसु भरिए तापनि भनिन्-॥७॥ हे सौम्य ! हाम्रा माता-पिता, भाई बहिनी, भतीजा, कुलका स्त्रीहरू तथा सखीहरू कहिले हामीलाई सम्झन्छन् ? ॥ ८ ॥ मेरा भ्रातृपुत्र शरणागत वत्सल, भक्त हितकारी भगवन् कृष्ण र कमलनयन बलराम के कहिले म आफ्नी फुपूका छोराहरूको पनि सम्झना गर्दछन् ? ॥९॥ बाघको माझमा परेकी मृगी झैं आफ्ना शत्रुहरूको माझमा बस्ने म ठूलो दुःखका छु। के ती कहिले यहाँ आएर मलाई र टुहुरा बालकहरूलाई सान्त्वना देलान् ? ॥१०॥ हे कृष्ण ! हे महायोगिन ! हे विश्वरूप ! हे विश्वपालक ! हे गोविन्द ! आफ्ना बालकहरूसित म ठूलो कष्ट भोगिरहेकी छु। हजुर मेरो रक्षा गर्नोस् ॥ ११ ॥ हे देव ! यस मृत्युरूपी संसारदेखि भयभीत जीवका लागि मलाई हजुर ईश्वरको मोक्षप्रद चरणकमल छाडेर अरु कुनै निर्भय आश्रय देखिइरहेको छैन ॥१२॥ हजुर शुद्धस्वरूप, ज्ञानात्मा, योगेश्वर र परब्रह्म परमात्मा भगवान् कृष्णलाई म नमस्कार गर्दछु ! हे देव ! म हजुरको शरणमा छु ॥ १३ ॥ श्रीशुकदेव भन्दछन्-हे राजन् ! यस प्रकार जगत्पति

पृथा तु भ्रातरं प्राप्तमक्रूरमुपसृत्य तम् ॥ उवाच जन्मनिलयं स्मरन्त्यश्रुकलेक्षणा॥७॥अपि स्मरन्ति नः सौम्य पितरौ भ्रातरश्च मे ॥ भगिन्यो भ्रातृपुत्राश्च जामयः सख्य एव च ॥८॥ भ्रात्रेयो भगवान्कृष्णः शरण्यो भक्तवत्सलः ॥ पैतृष्वस्रेयान्स्मरति रामश्चाम्बुरुहेक्षणः ॥९॥ सापत्नमध्ये शोचन्ती वृकाणां हरिणीमिव ॥ सान्त्वयिष्यति मां वाक्यैः पितृहीनांश्च बालकान् ॥१०॥ कृष्ण कृष्ण महायोगिन्विश्वात्मन्विश्वभावन ॥ प्रपन्नां पाहि गोविन्द शिशुभिश्चावसीदतीम्॥११॥नान्यत्तव पदाम्भोजात्पश्यामि शरणं नृणाम् ॥ बिभ्यतां मृत्युसंसारादीश्वरस्यापवर्गिकात्॥१२॥नमःकृष्णाय शुद्धाय ब्रह्मणे परमात्मने ॥ योगेश्वराय योगाय त्वामहं शरणं गता ॥१३॥ श्रीशुक उवाच॥इत्यनुस्मृत्य स्वजनं कृष्णं च जगदीश्वरम् ॥ प्रारुदद्दुःखिताराजन्भवतां प्रपितामही॥१४॥ समदुःखसुखोऽक्रूरो विदुरश्च महायशाः ॥ सान्त्वयामासतुः कुन्तीं तत्पुत्रोत्पत्तिहेतुभिः ॥१५॥ यास्यत्राजानमभ्येत्य विषमं पुत्रलालसम् ॥ अवदत्सुहृदां मध्ये बन्धुभिः सौहृदोदितम्॥१६॥ अक्रूर उवाच ॥ भो भो वैचित्रवीर्य त्वं कुरूणां कीर्तिवर्धनः ॥ भ्रातर्युपरतेपाण्डावधुनाऽऽसनमास्थितः ॥१७॥ धर्मेण पालयन्नुर्वी प्रजाः शीलेन रञ्जयन् ॥ वर्तमानः समः स्वेषु श्रेयः कीर्तिमवाप्स्यसि ॥ १८ ॥ अन्यथा त्वाचरँल्लोके गर्हितो यास्यसे तमः ॥ तस्मा·

कृष्ण र आफ्ना बन्धुहरूको सम्झना गरेर तिम्री प्रपितामही कुन्ती दुःखी भई बेसरी रुन लागिन् ॥ १४॥ अनि सुख-दुःखमा सर्वदा समान रहने अक्रूर र महायशस्वी विदुरजीले उनलाई तिनका पुत्रहरूको उत्पत्तिका कारणभूत धर्म, वायु तथा इन्द्रादि देवताहरूको सम्झना गराएर सान्त्वना दिए ॥१५॥ जब अक्रूर मथुरा फर्कन लागे तब ती भतीजाहरूसित विषम व्यवहार गर्ने भएका पुत्रवत्सल राजा धृतराष्ट्रकहाँ गए र उनलाई कृष्ण-बलराम आदि यादव बन्धुहरूको जो समचार दिएका थिए, त्यो सबै सुनाए। धृतराष्ट्र त्यसवेलाआफ्नाबन्धुहरूकोमाझमा बसेका थिए। अक्रूरले भने-हे कौरवकुलका कीर्ति र विचित्रवीर्यका पुत्र महाराज धृतराष्ट्र ! हजुरले आफ्ना दाजू पाण्डु परलोक भएपछि यो राजसिंहासन पाएको हो ॥१६। १७॥ अतः हजुर यदि पृथिवीको धर्मपूर्वक पालन गर्नोस्। आफ्नू राम्रो स्वभावले प्रजालाई प्रसन्न राख्नोस् र आफ्ना स्वजनसित उचित व्यवहार गर्नुभयो भने हजुरको अवश्य कल्याण होला र संसारमा कीर्ति फैलेला ॥ १८ ॥ यदि यस्तो गर्नुभएन भने लोकमा निन्दा हुनेछ र मरेपछि नरकगामी हुनुपर्नेछ। अतः पाण्डुका र आफ्ना छोरासित हजुर समान व्यवहार

॥१९॥ हे राजन् ! यहाँ कोही कसैसित धेरैदिन बस्तैन । सन्तानको के कुरा, आफ्नू देह पनि सधैं रहन्न ॥२०॥ जीव एक्लै जन्मन्छ र जान्छ, एक्लै आफ्ना कर्मको जाति-नजाति फल भोग्दछ ॥२१॥ स्त्री-पुत्रादि साथै भए पनि 'हामी तिमीद्वारा पालिने योग्य छौं' यही निहुँले अल्पबुद्धि पुरुषको अधर्मले एकत्रित धन खोस्तछन्, जस्तै जलमा बस्ने माछाको जीवनाधार जलमा त्यसका सन्तान आफ्नू स्वत्व स्थापित गर्छन् ॥२२॥ त्यो मूर्ख जीव जसलाई आफ्ना भनेर अधर्मले पाल्दछ, ती प्राण, धन र स्त्री पुत्रादि त्यसलाई असन्तुष्ट अवस्थामै छाडेर छुट्टिन्छन् ॥२३॥ अनि स्वधर्मविमुख र स्वार्थले अनभिज्ञ प्राणी तिनले त्याग्नाले विफल-मनोरथ र पापको भारी लिएर घोर नरकमा जाकिन्छ ॥२४॥ अतः हे राजन् ! हजुर यस राज्यलाई स्वप्न, माया र मनोराज्य झैं मिथ्या जानेर चित्त संयम गरी समदर्शी र शान्त बन्नोस् ॥ २५ ॥ धृतराष्ट्र भन्दछन्—हे अक्रूरजी ! हजुरले अति शुभ वचन भन्नुभयो,

त्समत्वे पाण्डवेष्वात्मजेषु च ॥ १९ ॥ नेह चात्यन्तसंवासः कर्हिचित्केनचित्सह ॥ राजन्स्वेनापि देहेन किमु जायात्मजादिभिः ॥ २० ॥ एकः प्रसूयते जन्तुरेक एव प्रलीयते ॥ एकोऽनुभुङ्क्ते सुकृतमेक एव च दुष्कृतम् ॥ २१ ॥ अधर्मोपचितं वित्तं हरन्त्यन्येऽल्पमेधः ॥ सम्भोजनीयापदेशैर्जलानीव जलौकसः ॥२२॥ पुष्णाति यानधर्मेण स्वबुद्ध्या तमपण्डितम् ॥ तेऽकृतार्थं प्रहिण्वन्ति प्राणा रायः सुतादयः ॥ २३ ॥ स्वयं किल्बिषमादाय तैस्त्यक्तो नार्थकोविदः ॥ असिद्धार्थो विशत्यन्धं स्वधर्मविमुखस्ततः ॥ २४ ॥ तस्माल्लोकमिमं राजन्स्वप्नमायामनोरथम् ॥ वीक्ष्यायम्यात्मनात्मानं समः शान्तो भव प्रभो ॥ २५ ॥ धृतराष्ट्र उवाच ॥ यथा वदति कल्याणीं वाचं दानपते भवान् ॥ तथाऽनया न तृप्यामिमर्त्यः प्राप्य यथामृतम् ॥ २६ ॥ तथापि सूनृता सौम्य हृदि न स्थीयते चले ॥ पुत्रानुरागविषमे विद्युत्सौदामिनी यथा ॥ २७ ॥ ईश्वरस्य विधिं को नु विधुनोत्यन्यथा पुमान् ॥ भूमेर्भारावताराय योऽवतीर्णो यदोः कुले ॥२८॥ यो दुर्विमर्शपथया निजमाययेदं सृष्ट्वा गुणान्विभजते तदनुप्रविष्टः ॥ तस्मै नमो दुरवबोधविहारतन्त्र संसारचक्रगतये परमेश्वराय ॥ २९ ॥ श्रीशुक उवाच ॥ इत्यभिप्रेत्य नृपतेरभिप्रायं स यादवः ॥ सुहृद्भिः समनुज्ञातः पुनर्यदुपुरीमगात् ॥ ३० ॥ शशंस रामकृष्णाभ्यां धृतराष्ट्रविचेष्टितम् ॥ पाण्डवान्प्रति कौरव्य यदर्थं प्रेषितः स्वयम् ॥ ३१ ॥ इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्र्यां पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे एकोनपञ्चाशत्तमोऽध्यायः ॥ ४९ ॥

त्यसले मेरो चित्त त्यसैगरी तृप्त हुँदैन जस्तै अमृत पिएर मनुष्यको तृप्ति हुन्न ॥ २६ ॥ तैपनि मेरो चित्त पुत्र-स्नेहमा यस्तो विषम भएको छ—त्यसमाथि हजुरको यो उत्तम शिक्षा बादलमा चम्कने बिजुली झैं टिक्दैन । ईश्वरको विधान टार्नसक्ने को छ ? जसले पृथ्वीको भार टार्न यदुवंशमा अवतार लिएका छन्, जो आफ्नी अचिन्त्य मायाले संसार रचेर कर्म र कर्मफलको विभाजन गर्दछन् र जसको अगम्य लीला संसार-चक्रको प्रधान कारण छ, ती परमेश्वरलाई प्रणाम छ ॥२७-२९॥ शुकदेवजी भन्दछन्—हे राजन्, यसरी महाराज धृतराष्ट्रको अभिप्राय बुझेर अक्रूर कुरुवंशीय सुहृद्‌सित बिदा भएर फेरि मथुरा फर्के । यहाँ राम-कृष्णलाई पाण्डवहरूसित राजा धृतराष्ट्रको व्यवहार को सबै हालत वर्णन गरेर सुनाए जसको निम्ति ती हस्तिनापुर गएका थिए ॥३१॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपाली भाषाटीकायामेकोनपंचाशत्तमोऽध्यायः ॥ ४९ ॥

इति 'वासिष्ठी' भाषाटीकासहिते

## श्रीमद्भागवते दशमः स्कन्धः 'पूर्वार्द्धम्'।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते दशमः स्कन्धः "उत्तरार्द्धम्"

श्रीहरि ( श्रीकृष्णको जरासन्धसित घोरयुद्ध र द्वारकापुरीको रचना )–श्रीशुकदेव भन्दछन्–हे भरत श्रेष्ठ ! पति मारिएपछि कंसका रानी अस्ति र प्राप्ति कष्टले पीडित भएर आफ्ना पिता मगधराज जरासन्धको घर गए ॥ १ ॥ त्यहाँ गएर तिनले अति दुःखित भई पितालाई आफू विधवा हुने जुन कारण थियो, सबै वृत्तान्त सुनाए ॥ २ ॥ हे राजन् ! त्यो अप्रिय समाचार सुनेर अत्यन्त शोक र रिसले राजा जरासन्धले सम्पूर्ण पृथ्वीलाई यादव-शून्य पार्ने प्रतिज्ञा गऱ्यो ॥ ३ ॥ त्यस अनुसार आफना तेईस अक्षौहिणी सेना लिएर यादवहरूको राजधानी मथुरामा युद्धार्थ आयो र चारैतिरबाट नगरलाई छेक्यो ॥ ४ ॥ उर्लने समुद्र झैं त्यो अपार सेनाको बाढीले आफ्नू नगर पूरा घेरिएपछि स्वजनलाई भयभीत देखेर कारणवश मनुष्यरूप धारी श्रीकृष्ण भगवानले देश-काल स्थितिअनुसार आफ्नू अवतारको प्रयोजनमा विचार गरे–॥ ५-६ ॥ 'मगधराज जरासन्ध आफ्नू वशवर्ती राजाहरूको पैदल, घोड्सवार, रथ र हात्तीहरूले युक्त अनेक अक्षौहिणी सेना लिएर आइरहेछ । यस्तै सारा पृथ्वीको भारी नै एकत्र भएर यहाँ आएको होस् । म यी सेना

ॐ नमो भगवते वासुदेवाय ॥ श्रीशुक उवाच ॥ अस्तिः प्राप्तिश्च कंसस्य महिष्यौ भरतर्षभ ॥ मृते भर्तरि दुःखार्ते ईयतुः स्म पितुर्गृहान् ॥ १ ॥ पित्रे मगधराजाय जरासन्धाय दुःखिते ॥ वेदयाञ्चक्रतुः सर्वमात्मवैधव्यकारणम् ॥ २ ॥ स तदप्रियमाकर्ण्य शोकामर्षयुतो नृप ॥ अयादवीं महीं कर्तुं चक्रे परममुद्यमम् ॥ ३ ॥ अक्षौहिणीभिर्विंशत्या तिसृभिश्चापि संवृतः ॥ यदुराजधानीं मथुरां न्यरुणत्सर्वतो दिशम् ॥ ४ ॥ निरीक्ष्य तद्बलं कृष्ण उद्वेलमिव सागरम् ॥ स्वपुरं तेन संरुद्धं स्वजनं च भयाकुलम् ॥ ५ ॥ चिन्तयामास भगवान्हरिः कारणमानुषः ॥ तद्देशकालानुगुणं स्वावतारप्रयोजनम् ॥६॥ हनिष्यामि बलं ह्येतद्भुवि भारं समाहितम् ॥ मागधेन समानीतं वश्यानां सर्वभूभुजाम् ॥७॥ अक्षौहिणीभिः संख्यातं भटाश्वरथकुञ्जरैः ॥ मागधस्तु न हन्तव्यो भूयः कर्ता बलोद्यमम् ॥८॥ एतदर्थोऽवतारोऽयं भूभारहरणाय मे ॥ संरक्षणाय साधूनां कृतोऽन्येषां वधाय च ॥९॥ अन्योऽपि धर्मरक्षायै देहः संभ्रियते मया ॥ विरामायाप्यधर्मस्य काले प्रभवतः क्वचित् ॥ १० ॥ एवं ध्यायति गोविन्द आकाशात्सूर्यवर्चसौ ॥ रथावुपस्थितौ सद्यः ससूतौ सपरिच्छदौ ॥११॥ आयुधानि च दिव्यानि पुराणानि यदृच्छया ॥ दृष्ट्वा तानि हृषीकेशः सङ्कर्षणमथा ब्रवीत ॥१२॥ पश्यार्य व्यसनं प्राप्तं यदूनां त्वावतां प्रभो ॥ एष ते रथ आयातो दयितान्यायुधानि च ॥१३॥ यानमास्थाय जह्येतद्व्यसनात्स्वान्समुद्धर ॥ एतदर्थं हि नौ जन्म

मार्नेछु, तर अहिल्यै जरासन्धलाई मार्नु उचित हुँदैन किनकि यो अरु सेना संचित गर्ने उद्योग गर्नेछ ॥ ७-८ ॥ मेरो अवतार साधु-सज्जनको रक्षा तथा अनेक दुष्टहरूको संहार गर्न र पृथ्वीको भारी हल्का पार्न भएको छ ॥ ९ ॥ म जब अवतार लिन्छु, तब मेरो देह-धारणको प्रयोजन धर्मको सुरक्षा र समयानुसार बढ्ने अधर्मको नाश गर्नु नै हुन्छ' ॥१०॥ भगवान् कृष्ण यस्तो विचार गर्दै थिए, उसैबेला त्यहाँ सारथी र सबै युद्ध-सामग्रीले सम्पन्न सूर्य झैं देदीप्यमान दुइ रथ आकाशबाट वलिए ॥ ११ ॥ त्यसै अवसरमा उनका सनातन दिव्यायुध पनि त्यहीं आएर स्वयं उपस्थित भए । तिनलाई देखेर श्रीकृष्णले दाजूलाई भने–॥१२॥ 'हे राम ! हेर्नुहोस्, जसका हजुर नै एकमात्र रक्षक हुनुहुन्छ, ती यादवमाथि ठूलो विपत्ति आइलाग्यो । हे प्रभो ! हजुरका प्रिय शस्त्र र रथ पनि उपस्थित छन् ॥ १३ ॥ अब हजुर रथमा चढेर शत्रुसेनाको संहार गर्नोस् र आफना बन्धुको यस

विपत्तिबाट रक्षा गर्नोस् । हे ईश ! हामी दुवैको जन्म साधुजनको कल्याणका निम्ति भएका हो ॥ १४ ॥ हजुर पृथ्वीका तेइस अक्षौहिणी सेनाका संहार गर्नोस् । यस्तो सल्लाह गरेर दुवै यदुवीर कवच धारण गरी रथमा बसे र आफ्ना आयुधसहित थोरै सेना लिएर मथुरानगर-बाहिर निस्के । तब दारुक सारथी हुने कृष्णले पाञ्चजन्य शङ्ख बजाए ॥१-१६॥ त्यो शङ्खनादको कठोर र विलक्षण ध्वनिले भयभीत विपक्षको हृदय कम्पनलाग्यो । प्रभुलाई देखेर जरासन्धले भने–ए पुरुषाधम कृष्ण ! तँ बालकै छस् तँसित लड्न मलाई लाज लाग्दैछ । अतः सबैका माझमा लुकेको तँसित लड्दीन । हे मन्द ! यद्यपि तैंले मेरो बन्धु कंसलाई मारिस् तापनि म तँसित लड्न चाहन्न । अतः तँ यहाँबाट भागेर जा ॥ १७-१८ ॥ अँ, बलराम यदि तेरो इच्छा भए साहसपूर्वक मसित युद्ध गर । अनि किन मेरा बाणले छिन्न-भिन्न आफ्नू शरीर छाडेर स्वर्ग जा वा मलाई मारिदे' ॥ १९ ॥ श्रीकृष्णले भन्नुभयो–हे राजन् ! शूरवीर संग्राम भूमिमा प्रलाप गर्दैनन्, युद्धमा पुरुषार्थ देखाउँछन् ? तिमी अहिले धेरै

साधूनामीश शर्मकृत् ॥ १४ ॥ त्रयोविंशत्यनीकाख्यं भूमेर्भारमपाकुरु ॥ एवं सम्मंत्र्य दाशार्हौ दंशितौ रथिनौ पुरात् ॥१५॥ निर्जग्मतुः स्वायुधाढ्यौ बलेनाल्पीयसा वृतौ ॥ शंखं दध्मौ विनिर्गत्य हरिर्दारुकसारथिः ॥१६॥ ततोऽभूत्परसैन्यानां हृदि वित्रासवेपथुः ॥ तावाह मागधो वीक्ष्य हे कृष्ण पुरुषाधम ॥१७॥ न त्वया योद्धुमिच्छामि बालेनैकेन लज्जया ॥ गुप्तेन हि त्वया मन्द न योत्स्ये याहि बन्धुहन् ॥१८॥तव राम यदि श्रद्धा युध्यस्व धैर्यमुद्वह ॥ हित्वा वा मच्छरैश्छिन्नं देहं स्वर्याहि मां जहि मां जहि ॥१९॥ श्रीभगवाच न वै शूरा विकत्थन्ते दर्शयन्त्येव पौरुषम् ॥ न गृह्णीमो वचो राजन्नातुरस्य मुमूर्षतः ॥२०॥ श्रीशुक उवाच ॥ जरासुतस्तावभिसृत्य महाबलौघेन बलीयसाऽऽवृणोत् ॥ ससैन्ययानध्वजवाजिसारथी सूर्यानलौ वायुरिवाभ्ररेणुभिः ॥ २१ ॥ सुपर्णतालध्वजचिह्नितौ रथावलक्षयन्त्यो हरिरामयोर्मृधे ॥ स्त्रियः पुराट्टालकहर्म्यगोपुरं समाश्रिताः संमुमुहुः शुचार्दिताः ॥२२॥ हरिः परानीकपयोमुचां मुहुः शिलीमुखात्युल्बणवर्षपीडितम् ॥ स्वसैन्यमालोक्य सुरासुरार्चितं व्यस्फूर्जयच्छार्ङ्गशरासनोत्तमम् ॥२३॥ गृह्णन्निषङ्गादथ सन्दधच्छरान् विकृष्य मुञ्चञ्शितबाणपूगान ॥ निघ्नन्रथान्कुञ्जरवाजिपत्तीन्निरन्तरं यद्वदलातचक्रम् ॥ २४ ॥ निर्भिन्नकुम्भाः

आतुर छौ र अड्ड मर्न खोज्दैछौ । अतः म तिम्रो कुराको नजाति मान्दिन ॥ २० ॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! जस्तै वायु मेघमण्डल र धूलोले सूर्य तथा अग्निलाई ढाकिदिन्छ, त्यस्तै नै जरासुत मगधराजले बलराम र श्रीकृष्णको सामुन्ने आएर आफ्ना प्रचण्ड सेनाको प्रहारले रथ, ध्वजा, अश्व र सारथीसमेत ढाकिदियो ॥ २१ ॥ त्यस बखत मथुरापुरीका नारीहरू आफाफ्ना महलको अटालीमा उक्लेर युद्धको भीषण दृश्य हेरिरहेथे । राम र कृष्णको गरुड र तालचिह्न युक्त ध्वजा हुने त्वरित गति हुने रथ नदेखेर शोकयुक्त र मूर्च्छित जस्तै भए ॥ २२ ॥ श्रीकृष्ण भगवान्‌ले आफ्ना सेनालाई शत्रु सेनारूपी मेघमण्डलबाट आएको तथा प्रचण्ड पाषाणवर्षाले पीडित देखेर आफ्नू सुरपूजित शार्ङ्गधनुको अत्यन्त भीषण टङ्कार गरे ॥ २३ ॥ बारम्बार ठोकाबाट झिकेर तीखा बाणहरूको समूहले वर्षा गर्दै भगवान् कृष्ण रथ, हात्ती, र पैदल सेनाका संहार गर्नलागे । त्यस वेला उनको विशाल धनुष निरन्तर भ्रमने अलात चक्रको समान देखिईरहेको थियो ॥ २४ ॥ अनेक हात्ति, अश्व र सेनाका शिर काटिकाले मरेर

1070

ढलका र बाण-प्रहारले अनेक अश्वका शिर डिंडबाट छुट्टिएर पल्टिए । घोडा, ध्वजा, सारथी र रथीहरू मारिनाले रित्तिएका अनेक रथहरू घुजो भए र पैदल सिपाहीहरूका भुजा र मस्तकादि अङ्ग छिन्न-भिन्न भए ॥ २५ ॥ त्यस युद्धमा अतुल तेजस्वी बलरामले आफ्नू मुसल द्वारा अनेक मदमत्त शत्रुलाई मारेर, मनुष्य, रथ तथा हाती र घोडाका काटिएका अङ्गहरूबाट उत्पन्न रगतका अनेक नदी बगाए । ती नदी मनुष्यका भुजारूप सर्प र शिररूपी कछुवाले भरिएका झैं देखिइरहेका थिए । तिनमा हात्तीका शरीर द्वीपजस्ता र घोडा ग्राह झैं देखिन्थे । ती नदी हात र तिघ्राहरूपी माछा तथा मनुष्यका केशरूपी सेवाल ( झ्याऊ ), धनुषरूपी तरङ्ग र अस्त्र-शस्त्ररूपी गुल्मले भरिएका थिए । तिनमा ढाल भ्रमर समान र मणिहरूका आभूषण ढुङ्गाका टुक्रा समान देखिन्थे । ती नदी भीरुलाई भयभीत र वीरहरूलाई अत्यन्त उत्साहित पार्दथे ॥ २६ २८ ॥ हे राजन् ! मगधराज द्वारा सुरक्षित त्यो समुद्र जस्तै दुर्गम, भयावह र अपार सेनालाई वसुदेवनन्दन बलराम र श्रीकृष्णले केही बेरमै नष्ट-भ्रष्ट पारिदिए । ती जगदीश्वरका निम्ति त्यो एक साधारण खेल

करिणो निपेतुरनेकशोऽश्वाः शरवृक्णकन्धराः ॥ रथा हताश्वध्वजसूतनायकाः पदातयश्छिन्नभुजोरुकन्धराः ॥ २५ ॥ संछिद्यमानद्विपदेभवाजिनामङ्गप्रसूताः शतशोऽसृगापगाः ॥ भुजाहयः पूरुषशीर्षकच्छपा हतद्विपद्वीपिहयग्रहाकुलाः ॥२६॥ करोरुमीना नरकेशशैवला धनुस्तरङ्गायुधगुल्मसङ्कुलाः ॥ अच्छूरिकावर्तभयानका महामणिप्रवेकाभरणाश्मशर्कराः ॥ २७ ॥ प्रवर्तिता भीरुभयावहा मृधे मनस्विनां हर्षकरीः परस्परम् ॥ विनिघ्नतारीन्मुसलेन दुर्मदान् सङ्कर्षणेनापरिमेयतेजसा ॥ २८ ॥ बलं तदङ्गार्णवदुर्गभैरवं दुरन्तपारं मगधेन्द्रपालितम् ॥ क्षयं प्रणीतं वसुदेवपुत्रयोर्विक्रीडितं तज्जगदीशयोः परम् ॥ २९ ॥ स्थित्युद्भवान्तं भुवनत्रयस्य यः समीहतेऽनन्तगुणः स्वलीलया ॥ न तस्य चित्रं परपक्षनिग्रहस्तथापि मर्त्यानुविधस्य वर्ण्यते ॥ ३० ॥ जग्राह विरथं रामो जरासन्धं महाबलम् ॥ हतानीकावशिष्टासुं सिंहः सिंहमिवौजसा ॥३१॥ बोध्यमानं हतारातिं पाशैर्वारुणमानुषैः ॥ वारयामास गोविन्दस्तेन कार्यचिकीर्षया ॥३२॥ स मुक्तो लोकनाथाभ्यां व्रीडितो वीरसम्मतः ॥ तपसे कृतसङ्कल्पो वारितः पथि राजभिः ॥ ३३ ॥ वाक्यैः पवित्रार्थपदैर्नयनैः प्राकृतैरपि ॥ स्वकर्मबन्धप्राप्तोऽयं यदुभिस्ते पराभवः ॥ ३४ ॥ हतेषु सर्वानीकेषु नृपो बार्हद्रथ-

जस्तै थियो ॥ २९ ॥ जुन अनन्तगुणसम्पन्न कृष्ण लीलाले नै त्रैलोक्यको उत्पत्ति, स्थिति र संहार गर्दछन्, तिनको निम्ति विपक्षको दमन गर्नु केही ठूलो कुरा थिएन । तथापि उनले मानव चरित्रको अनुसरण गरेका थिए । यसै निम्ति उनका यी कर्मको वर्णन गरिन्छ ॥ ३० ॥ यसरी जरासन्धका सबै सेना मारिए, रथ भाँचिए र केवल त्यसको आफ्नू जीवन मात्र शेष रह्यो । अनि त्यस महाबली वीरलाई, पाँठा सिंह जसरी अर्को सिंहलाई पक्रन्छ, त्यसै गरी श्रीबलरामले बलपूर्वक समाए ॥ ३१ ॥ ३२ ॥ त्यस जरासन्धले धेरै विपक्षी राजाहरूलाई मारेको थियो, त्यसै कारण वध-योग्य थियो, तर बलरामले त्यसलाई मार्नको निम्ति वारुण र मनुष्य पाशले बाँध्न लागे, तब श्रीकृष्णचन्द्रले त्यसै द्वारा आफ्नू कार्य सम्पन्न गराउने इच्छाले दाजुलाई छेक्नु भयो । जरासन्ध वीरहरूमा माननीय थियो । अतः ती जगदीश्वरका हात बाट छुटेर, लज्जित भई उसले तपस्या गर्ने निश्चय गर्‍यो, तर बाटोमा उसका मित्र राजाहरूले—'प्रारब्धले नै तुच्छ यादवहरूका मार्फत आज हजुरले न्यून हुनु पर्‍यो ।' भन्ने यस्तै शिक्षापूर्ण अन्यान्य वाक्यहरूले र लौकिक नीतिले बुझाएर रोकि-

सेनाको थोटा सैनिक पनि घायल भएको थिएन, ती नन्दनन्दन भगवान् श्रीकृष्णचन्द्र शत्रुसेनारूपी समुद्रलाई सहजै पारी तरेर भयमुक्त भएका र प्रसन्न चित्त मथुरानिवासीआई भेटे। त्यसै वेला देवताहरूले पुष्प-वर्षा गरे तथा सूत, मागध, बन्दीजन उनको विजयगाथा गान गरिरहेका थिए ॥ ३६ ॥ ३७ ॥ त्यसपछि भगवान् नगरमा पस्ता शङ्ख, भेरी, दुन्दुभी, वीणा र मृदङ्गादि अनेक बाजाको घोष हुन लाग्यो ॥ ३८ ॥ त्यसै वेला मथुरापुरीका बाटोहरूमा जल छर्कियो। सर्वत्र प्रसन्न भएका नागरिकको हर्षध्वनि भइरहेको थियो। सारा नगर ध्वजा-पताकाले सुसज्जित, वेदध्वनिले गुञ्जायमान र उत्सवले गर्दा चँदुवा आदिले मथुरा नगरीका सबै मूलबाटोहरू अलंकृत थिया ॥ ३९ ॥ स्त्रीहरूले अनन्य प्रीतिपूर्वक

स्तदा ॥ उपेक्षितो भगवता मगधान्दुर्मना ययौ ॥ ३५ ॥ मुकुन्दोऽप्यक्षतबलो निस्तीर्णारिबलार्णवः ॥ विकीर्यमाणः कुसुमैस्त्रिदशैरनुमोदितः ॥ ३६ ॥ माथुरैरुपसङ्गम्य विज्वरैर्मुदितात्मभिः ॥ उपगीयमानविजयः सूतमागधवन्दिभिः ॥ ३७ ॥ शङ्खदुन्दुभयो नेदुर्भेरीतूर्याण्यनेकशः ॥ वीणा-वेणुमृदङ्गानि पुरं प्रविशति प्रभौ ॥ ३८ ॥ सिक्तमार्गां हृष्टजनां पताकाभिरलंकृताम् ॥ निर्घुष्टां ब्रह्मघोषेण कौतुकाबद्धतोरणाम् ॥ ३९ ॥ निचीय-मानो नारीभिर्माल्यदध्यक्षताङ्कुरैः ॥ निरीक्ष्यमाणः सस्नेहं प्रीत्युत्कलितलोचनैः ॥ ४० ॥ आयोधनगतं वित्तमनन्तं वीरभूषणम् ॥ यदुराजाय तत्सर्वमाहृतं प्रादिशत्प्रभुः ॥ ४१ ॥ एवं सप्तदशकृत्वस्तावत्यक्षौहिणीबलः ॥ युयुधे मागधो राजा यदुभिः कृष्णपालितैः ॥४२॥ अक्षिण्वंस्तद्बलं सर्वं वृष्णयः कृष्णतेजसा ॥ हतेषु स्वेष्वनीकेषु त्यक्तोऽयादरिभिर्नृपः ॥ ४३ ॥ अष्टादशमसंग्रामे आगामिनि तदन्तरा ॥ नारदप्रेषितो वीरो

नेत्रले हेर्दै बलरामलाई पुष्पमाला, दही, अक्षता र यवाङ्कुरादिले ढाकिदिए ॥ ४० ॥ श्रीकृष्णले रणभूमिबाट वीरहरूका जो धेरै धन, वस्त्र, अलङ्कार र रत्नादि ल्याएका थिए, त्यो सबै उनले राजा उग्रसेनलाई सुम्पिदिए ॥ ४१ ॥ त्यसै गरी पहिले जस्तै सेना जम्मा पारेर राजा जरासन्धले श्रीकृष्णचन्द्र द्वारा रक्षित मथुरा पुरीका समस्त यादवहरूसित सत्रपल्ट युद्ध गन्यो ॥ ४२ ॥ तर यादवहरूले श्रीकृष्णको प्रभावद्वारा सबै पल्ट उसका सेना नष्ट पारिदिए र जरासन्ध आफ्ना सेना मारिएपछि खिन्नचित्त तथा हताश र हेलाँ भएर नै आफ्नू राजधानी फर्कियो ॥ ४३ ॥ फेरि जब अठारौँ पल्ट युद्ध हुने तयारी भयो तब नारद मुनिले पठाएको कालयवन वीर देखियो। युद्धमा त्यसका साम्ने टिक्नसक्ने वीर संसारमा

* दृष्टान्त (आद्रो ऋणि —एक व्यक्तिको अर्को व्यक्तिमाथि सय रुपियाँको ऋण थियो। ऋणी थ्याद्रो र लोभी हुनाले रुपियाँ भएर पनि तिर्दैनथ्यो। एक दिन साहूले गएर भन्यो—'रुपियाँ दिने भए देऊ, नभए एक सय प्याज खा।' लोभीले स्वीकार गरेर प्याज खान थाल्यो। तर सात आठ प्याज भन्दा बढी खान सकेन। अनि साहूले भन्या—'उसो भए एक सय खुर्सानी खा।' लोभी त्यो पनि स्वीकार गरेर खान लाग्यो तर त्यो पनि पूरा पार्न सकेन। अनि साहूले भन्यो—'रुपियाँ दे, नभए सय जुत्ता हिर्काउन दे।' लोभीले त्यो पनि स्वीकार गन्यो, तर पाँच-दस जुत्ता खाने बित्तिकै कराउन लाग्यो। अनि साहूले भन्यो—'तँ रुपियाँ दिन्नस र जुत्ता पनि खान्नस् भने म यो कुरा स्वीकार गर्न तयार छैन। दिन्नस् भने अदालतमा नालिस गरेर लिन्छु।' बल्ल लोभीले रुपियाँ गनिदियो र जुत्ता खायो व्याजमा। यसको तात्पर्य यो हो—मनुष्य अनेक थरिका कष्ट भोगेर अन्त्यमा ईश्वरको भर पर्दछ र त्यसलाई मुक्ति लाभ हुन्छ। अनि आरम्भदेखि नै ईश्वरको आश्रय लिएर मुक्ति पाउने प्रयत्न किन नगर्नु।

कोही थिएन ॥ ४४ ॥ उसले यादवहरूलाई आफूसमान बलवान् छन् भन्ने सुनेर तीन करोड म्लेच्छसेना लिई मथुरामा आयो र चारैतिरबाट नगरलाई छेक्यो ॥ ४५ ॥ त्यो अपार सैन्य समुद्र देखेर श्रीकृष्णले दाजूसित भन्नुभयो–'अहो ! अहिले यादवहरूमाथि दोहोरो विपत्ति आइलाग्यो ॥ ४६ ॥ आज यो दुष्टात्मा, बलवान र कालयवनले पनि हामीलाई घेरयो । मगधराज जरासन्ध पनि आजै-भोलि सम्म अवश्य आउनेछ ॥ ४७ ॥ यदि योसित युद्ध गर्दा बलवान जरासन्ध पनि आइपुग्यो भने उसले कि त हामीद्वारा रक्षित हाम्रा बन्धुहरूलाई समाप्त पार्छ या थुनेर आफ्नू नगरमा लैजान्छ ॥ ४८ ॥ अतः आज म यस्तो बलियो दुर्गको रचना गर्दछु, जहाँ कुनै पनि मनुष्य पुग्न कठिन हुनेछ । अनि आफ्ना स्वजनलाई त्यहाँ बस्न्याएर म यस पापी कालयवनलाई मार्ने छु' ॥ ४९ ॥ यसरी दाजूसित सल्लाह गरी भगवान्ले अपार समुद्रको माझमा बाह्र योजन ठूलो दुर्गम दुर्ग तयार गराउनुभयो, त्यो सबै विचित्रताहरूले पूर्ण थियो ॥ ५० ॥ त्यसमा विश्वकर्माको सारा विज्ञान र शिल्प चातुर्य स्पष्ट देखिन्थ्यो । त्यो नगर शिल्प शास्त्रानुसार समस्त राजमार्ग

यवनः प्रत्यदृश्यत ॥ ४४ ॥ रुरोध मथुरामेत्य तिसृभिर्म्लेच्छकोटिभिः ॥ नृलोके चाप्रतिद्वन्द्वो वृष्णीञ्छ्रुत्वात्मसम्मितान् ॥४५॥ तं दृष्ट्वाऽचिन्तयत्कृष्णः संकर्षणसहायवान् ॥ अहो यदूनां वृजिनं प्राप्तं ह्युभयतो महत् ॥४६॥ यवनोऽयं निरुद्धेऽस्मानद्य तावन्महाबलः ॥ मागधोऽप्यद्य वा श्वो वा परश्वो वाऽऽगमिष्यति ॥४७॥ आवयोर्युध्यतोरस्य यद्यागन्ता जरासुतः ॥ बन्धून्वधिष्यत्यथवा नेष्यते स्वपुरं बली ॥ ४८ ॥ तस्मादद्य विधास्यामो दुर्गं द्विपददुर्गमम् ॥ तत्र ज्ञातीन्समाधाय यवनं घातयामहे ॥ ४९ ॥ इति सम्मन्त्र्य भगवान्दुर्गं द्वादशयोजनम् ॥ अन्तःसमुद्रे नगरं कृत्स्नाद्भुतमचीकरत् ॥५०॥ दृश्यते यत्र हि त्वाष्ट्रं विज्ञानं शिल्पनैपुणम् ॥ रथ्याचत्वरवीथीभिर्यथावास्तु विनिर्मितम् ॥ ५१ ॥ सुरद्रुमलतोद्यानविचित्रोपवनान्वितम् ॥ हेमशृङ्गैर्दिविस्पृग्भिः स्फटिकाट्टालगोपुरैः ॥५२॥ राजतारकुटैःकोष्ठैर्हेमकुम्भैरलंकृतैः ॥ रत्नकूटैर्गृहैर्हैमैर्महामरकतस्थलैः ॥ ५३ ॥ वास्तोष्पतीनां च गृहैर्वल्लभीभिश्च निर्मितम् ॥ चातुर्वर्ण्यजनाकीर्णं यदुदेवगृहोल्लसत् ॥५४॥ सुधर्मां पारिजातं च महेन्द्रः प्राहिणोद्धरेः ॥ यत्र चावस्थितो मर्त्यो मर्त्यधर्मैर्न युज्यते ॥५५॥ श्यामैककर्णान्वरुणो हयाञ्छुक्लान्मनोजवान् ॥ अष्टौ निधिपतिः कोशाँल्लोकपालो निजोदयान् ॥ ५६ ॥ यद्यद्भगवता दत्तमाधिपत्यं स्वसिद्धये ॥ सर्वं प्रत्यर्पयामासुर्हरौ भूमिगते नृप ॥५७॥ तत्र योगप्रभावेण नीत्वा सर्वजनं हरिः ॥ प्रजापालेन रामेण कृष्णः समनुमन्त्रितः ॥

चौबाटो र गोरेटोको विभाजन गरेर बनाइएको थियो ॥ ५१ ॥ त्यसको चारैतिर देववृक्ष पुष्पित तथा लता, कुञ्ज, उद्यान र बगैंचाहरू थिए । गगनस्पर्शी शिखर, स्फटिकका खाँबाहरू एवं ढोका उसको शोभा बढाइरहेका थिए ॥ ५२ ॥ त्यसमा सुवर्ण कलशले सुशोभित चाँदी र पीतलका अन्नकोष्ठ र आश्वशालाहरू थिए । रत्नजडित शिखर मणियुक्त भूमि भएका सुवर्ण-निर्मित भवन बनेका थिए ॥ ५३ ॥ त्यस नगरमा वास्तु-देवताका मन्दिर, चन्द्रशाला र अट्टालिकाहरू बनाएका थिए । त्यहाँ चारै वर्णका व्यक्ति सानन्द बस्थे र माझमा श्रीकृष्णको महल त्यस नगरको शोभा बढाइरहेको थियो ॥ ५४ ॥ इन्द्रले श्रीकृष्णकहाँ कल्पवृक्ष र सुधर्मा सभा पठाइदिए । त्यस सुधर्मा सभामा बस्ने व्यक्ति भोक-प्यास आदि मानव-धर्मले युक्त हुँदैनथे ॥ ५५-५६ ॥ वरुणले, जसको एउटा कान श्याम वर्णको थियो, यस्तो मन झैं वेग हुने अनेक घोडा त्यहाँ पठाए । धनपति कुबेरले अष्टसिद्धि–नवनिधिहरू पठाए र अन्यान्य लोकपालहरूले पनि आफ्आफ्ना विभूतिहरू भगवान यशोदानन्दनकहाँ पठाइदिए । हे राजन् ! यसरी भिन्न-भिन्न लोकपाललाई आफ्आफ्ना अधिकार चलाउनको निम्ति

जुन सिद्धिहरूको प्रशुल्न दिएका थिए, ती सबै भगवान भूलोकमा आएपछि फर्काइदिए ॥ ५७ ॥ श्रीकृष्ण भगवानूले आफ्नू योगबलले मथुरा निवासी सबै प्रजाहरूलाई त्यहीं नगरमा पुऱ्याइदिए र प्रजा-पालनको लागि बलरामलाई नियुक्त गरेर स्वयं नगरको द्वारबाट बाहिर निस्किए । त्यस बेला भगवानूले कमल-पुष्पको माला पहिरेका थिए र उनीसित कुनै पनि शस्त्रास्त्र थिएन ॥ ५८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायां पञ्चाशत्त मोऽध्यायः ॥ ५० ॥

( राजा मुचुकुन्दको कथा ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! नगरबाट निस्कँदा श्रीकृष्ण यस्तो देखिइरहेथे मानो पूर्वतिर उदाएका सूर्य हुन् । उनको तमाम शरीर सान्है राम्रो थियो र ती रेशमी पीताम्बर लहिरेका 'वक्षस्थलमा श्री वत्स र घाँटीमा देदीप्यमान कौस्तुभ मणि शोभित थियो । चारै भुजा विशाल र नेत्र रक्त-कमलको समान अरुण वर्णका थियो । उनको सदा प्रसन्न र शोभायुक्त मुख, कपोल र मनोहर हास्यले शोभित थियो । उनका कानमा मकराकृत कुण्डल हल्लिरहेथे । उनलाई देखेर पराक्रमी म्लेच्छ कालयवनले

निर्जगाम पुरद्वारात्पद्ममाली निरायुधः ॥ ५८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे दुर्गनिवेशनं नाम पञ्चाशत्तमोऽध्यायः ॥ ५० ॥

श्रीशुक उवाच ।। तं विलोक्य विनिष्क्रान्तमुज्जिहानमिवोडुपम् ॥ दर्शनीयतमं श्यामं पीतकौशेयवाससम् ॥ १ ॥ श्रीवत्सवक्षसं भ्राजत्कौस्तुभामुक्तकन्धरम् ॥ पृथुदीर्घचतुर्बाहुं नवकञ्जारुणेक्षम् ॥ २ ॥ नित्यप्रमुदितं श्रीमत्सुकपोलं शुचिस्मितम् ॥ मुखारविन्दं बिभ्राणं स्फुरन्मकरकुण्डलम् ॥ ३ ॥ वासुदेवो ह्ययमिति पुमाञ्छ्रीवत्सलाञ्छनः ॥ चतुर्भुजोऽरविन्दाक्षो वन्यमाल्यतिसुन्दरः ॥ ४ ॥ लक्षणैर्नारदप्रोक्तैर्नान्यो भवितुमर्हति ॥ निरायुधश्चलन्पद्भ्यां योत्स्येऽनेन निरायुधः ॥ ५ ॥ इति निश्चित्य यवनः प्राद्रवन्तं पराङ्मुखम् ॥ अन्वधावज्जिघृक्षुस्तं दुरापमपि योगिनाम् ॥ ६ ॥ हस्तप्राप्तमिवात्मानं हरिणा स पदे पदे ॥ नीतो दर्शयता दूरं यवनेशोऽद्रिकन्दरम् ॥ ७ ॥ पलायनं यदुकुले जातस्य तव नोचितम् ॥ इति क्षिपन्ननुगतो नैनं प्रापाहताशुभः ॥ ८ ॥ एवं क्षिप्तोऽपि भगवानविशद्गिरिकन्दराम् ॥ सोऽपि प्रविष्टस्तत्राथ शयानं ददृशे नरम् ॥ ९ ॥ नन्वसौ दूरमानीय शेते मामिह साधुवत् ॥ इति मत्वाऽच्युतं मूढस्तं पदा समताडयत् ॥ १० ॥ स उत्थाय चिरं सुप्तः

ठान्यो—यिनै वसुदेव-नन्दन कृष्ण हुन् किनकि नारदले बताएका लक्षण अनुसार श्रीवत्स चिह्नयुक्त, चार भुजा, कमल-नयन र वनमालाधारी सुन्दर पुरुष अरु कोही पनि हुन सक्तैनन । यी शस्त्रास्त्र नलिई पैदल आइरहेका छन् । अतः म पनि यीसित हतियार नलिई बसै लड्दछु ॥ १–५ ॥ यस्तो निश्चय गरेर कालयवन, योगीहरूलाई पनि दुर्लभ आफ्नू साम्न्ने मागिरहेका श्रीहरिलाई पक्रन पछि-पछि दगुऱ्यो ॥ ६ ॥ भगवान् पनि अब समातिएँ, अब समातिएँ भने जस्तो पारी त्यस यवनलाई निकै पर यौटा पर्वतको गुफामा लैजानुभयो ॥ ७ ॥ अनि पापी कालयवन भन्दछ—'ए कृष्ण ! तँ यदुकुलमा जन्मेको वीर होस् । यसरी भाग्नु कदापि उचित छैन ।' यस्तो आक्षेप गर्दै भगवानको पछि-पछि दगुर्दै गयो, तर समाउन सकेन ॥ ८ ॥ यसरी यवनले बारम्बार आक्षेप गर्दा पनि भगवान् भाग्दै जानुभयो र पर्वतको यौटा कन्दरामा पस्नुभयो । कालयवन पनि पछि-पछि त्यही गुफामा पस्यो र त्यहाँ उसले सुतेका एक अन्य महापुरुषलाई देख्यो ॥९॥ अनि उनैलाई मूर्ख कालयवनले कृष्ण भन्ने ठानेर तथा—'मलाई यति पर ल्याई यहाँ आएर कस्तो साधु जस्तो

सुनिरहेछ' भन्दै उनलाई लात्तिले हिर्कायो ॥१०॥ ती महापुरुष त्यहाँ धेरै दिनदेखि सुतेका थिए। तिनले उठेर बिस्तारै आँखा खोलो सर्वतिर हेरे, नजीकै उभिएको त्यो वीर कालयवनलाई देखे ॥ ११ ॥ हे भारत ! ती क्रुद्ध पुरुषको दृष्टि पर्नासाथ कालयवन आफ्नै अंगबाट उत्पन्न अग्निद्वारा जलेर एक क्षणमै भस्म खरानी भयो ॥ १२ ॥ यति कथा सुनेर परीक्षितले सोधे—हे ब्रह्मन् ! त्यो यवनलाई भस्म पार्ने ती को थिए ? कसका पुत्र थिए ? उनको पराक्रम र तेज कस्तो थियो ? ती किन त्यस गुफामा आएर सुतेका थिए ? ॥१३॥ श्रीशुकदेव भन्दछन्—हे राजन् ! ती इक्ष्वाकु वंशमा उत्पन्न महाराज मान्धाताका छोरा, ब्रह्मण्यदेव र वीर महाराज मुचुकुन्द थिए ॥१४॥ एकपल्ट स्वर्गमा इन्द्रादि देवताहरूले दैत्यद्वारा त्रस्त भएर उनीसित आफ्नु रक्षाका लागि प्रार्थना गरे। अनि उनले धेरै दिनसम्म स्वर्गमा सबै देवताको रक्षा गरेका थिए ॥ १५ ॥ पछि देवगणलाई स्वर्गको रक्षा गर्ने देवसेनापति कार्तिकेय भेटिए। अनि उनले मुचुकुन्दसित भने—'राजन् ! अब तपाईं हाम्रो रक्षाबाट निवृत्त हुन सक्नुहुन्छ ॥ १६ ॥ किनभने हे वीर ! तपाईं मर्त्यलोकको आफ्नु

शनैरुन्मील्य लोचने ॥ दिशो विलोकयन्पार्श्वे तमद्राक्षीदवस्थितम् ॥ ११ ॥ स तावत्तस्य रुष्टस्य दृष्टिपातेन भारत ॥ देहजेनाग्निना दग्धो भस्मसादभवत्क्षणात् ॥ १२ ॥ राजोवाच ॥ को नाम स पुमान्ब्रह्मन्कस्य किंवीर्य एव च ॥ कस्माद्गुहां गतः शिश्ये किंतेजा यवनार्दनः ॥ १३ ॥ श्रीशुक उवाच ॥ स इक्ष्वाकुकुले जातो मान्धातृतनयो महान् ॥ मुचुकुन्द इति ख्यातो ब्रह्मण्यः सत्यसङ्गरः ॥ १४ ॥ स याचितः सुरगणैरिन्द्राद्यैरात्मरक्षणे ॥ असुरेभ्यः परित्रस्तैस्तद्रक्षां सोऽकरोच्चिरम् ॥ १५ ॥ लब्ध्वा गुहं ते स्वःपालं मुचुकुन्दमथाब्रुवन् ॥ राजन्विरमतां कृच्छ्राद्भवान्नः परिपालनात् ॥ १६ ॥ नरलोके परित्यज्य राज्यं निहतकण्टकम् ॥ अस्मान्पालयतो वीर कामास्ते सर्वे उज्झिताः ॥ १७ ॥ सुता महिष्यो भवतो ज्ञातयोऽमात्यमन्त्रिणः ॥ प्रजाश्च तुल्यकालीया नाधुना सन्ति कालिताः ॥ १८ ॥ कालो बलीयान्बलिनां भगवानीश्वरोऽव्ययः ॥ प्रजाः कालयते क्रीडन्पशुपालो यथा पशून् ॥ १९ ॥ वरं वृणीष्व भद्रं ते ऋते कैवल्यमद्य नः ॥ एक एवेश्वरस्तस्य भगवान्विष्णुरव्ययः ॥ २० ॥ एवमुक्तः स वै देवानभिवन्द्य महायशाः ॥ अशयिष्ट गुहाविष्टो निद्रया देवदत्तया ॥ २१ ॥ स्वापं यातं यस्तु मध्ये बोधयेत्त्वामचेतनः ॥ स त्वया दृष्टमात्रस्तु भस्मीभवतु तत्क्षणात् ॥ २२ ॥ यवने भस्मसान्नीते भगवान्सात्वतर्षभः ॥ आत्मानं दर्शयामास मुचुकुन्दाय धीमते ॥ २३ ॥ तमालोक्य घन·

निष्कण्टक राज्य छाडेर हामीहरूको पालन गरेर सम्पूर्ण भोग त्यागि दिनुभयो ॥ १७ ॥ अब तपाईंका आफ्ना स्त्री, पुत्र, जाति-बन्धु, अमात्य एवं समकालीन प्रजावर्गमध्ये अब त्यहाँ कोही पनि बाँचेको छैनन्, ती सबै कालका मुखमा गइसकेका छन् ॥ १८ ॥ काल सबैभन्दा बलियो छ । त्यही अविनाशी ईश्वर हो। जसरी गोपगण पशुहरूको संचालन गर्छन्, त्यसै गरी काल ठट्टामै प्रजाको नियन्त्रण गर्दछ ॥ १९ ॥ हे राजन् ! हजुर मोक्ष बाहेक अरु कुनै पनि वरदान माग्नुहवस्, दिन्छौं किनकि मोक्ष दिने सामर्थ्य ती एकमात्र अव्यय भगवान् विष्णुमा नै छ' ॥ २० ॥ यस प्रकार देवताहरूले भनेपछि महायशस्वी मुचुकुन्दले उनलाई प्रणाम गरेर धेरै दिनदेखि थाकेकाले निद्राको वरदान मागे। देवताहरूले भने—'हे राजन् ! असले सुतेका हजुरलाई उठाउला, त्यो तुरुन्त भस्म हुनेछ !' यस प्रकार देवताले दिएको निद्राका वशीभूत भएर मुचुकुन्द त्यही गुफामा गएर सुतेका थिए ॥ २१ ॥ २२ ॥

कालयवन भस्मीभूत भएपछि भगवान् कृष्णले बुद्धिमान राजा मुचुकुन्दलाई दर्शन दिनुभयो ॥ २३ ॥ भगवान्को शरीर मेघ जस्तै श्यामवर्णको थियो । ती रेशमी पीताम्बर पहिरेका र वक्षस्थलमा श्रीवत्सचिह्न एवं कौस्तुभ मणि धारण गरेका थिए । उनका लामा-लामा चार बाहु थिए र घाँटीमा वैजयन्ती मालाले विभूषित थिए । उनको सुन्दर मुख प्रसन्न थियो । उनका कानमा मकराकृत कुण्डल टल्किरहेका थिए । उनको हेराई हास्य-पूर्ण थियो । ती मनुष्यमात्रका निम्ति दर्शनीयथिए । तरुण अवस्था भएका ती भगवान् मृगराज जस्तै उनमा प्रबल पराक्रम थियो । भगवान्को त्यो तेजयुक्त दिव्यरूप देखेर बुद्धिमान राजा मुचुकुन्दले त्यस तेजले प्रतिहत र सशंकित चित्त भएर विस्तारै सोधे— ॥ २४ ॥ २५ ॥ २६ ॥ २७ ॥ मुचुकुन्दले सोधे—'हजुर को हुनुहुन्छ ? कंटकपूर्ण यस वनमा आफ्ना कमलदल समान सुकुमार चरणारविन्दले डुल्दै यस गिरिकन्दरामा किन आउनुभयो ? ॥ २८ ॥ हजुर सबै तेजस्वीहरूका तेज साक्षात् अग्निदेव त हुनुहुन्न ? सूर्य, चन्द्र, इन्द्र अथवा अन्यान्य लोकपालमध्ये कोही हुनुहुन्छ ? ॥२९॥ मेरो विचारमा हजुर सबै

श्यामं पीतकौशेयवाससम् ॥ श्रीवत्सवक्षसं भ्राजत्कौस्तुभेन विराजितम् ॥ २४ ॥ चतुर्भुजं रोचमानं वैजयन्त्या च मालया ॥ चारुप्रसन्नवदनं स्फुरन्मकरकुण्डलम् ॥२५॥ प्रेक्षणीयं नृलोकस्य सानुरागस्मितेक्षणम् ॥ अपीच्यवयसं मत्तमृगेन्द्रोदारविक्रमम् ॥ २६ ॥ पर्यपृच्छन्महाबुद्धिस्तेजसा तस्य धर्षितः ॥ शङ्कितः शनकै राजा दुर्धर्षमिव तेजसा ॥ २७ ॥ मुचुकुन्द उवाच ॥ को भवानिह सम्प्राप्तो विपिने गिरिगह्वरे ॥ पद्भ्यां पद्मपलाशाभ्यां विचरस्युरुकण्टके ॥ २८ ॥ किंस्वित्तेजस्विनां तेजो भगवान्वा विभावसुः ॥ सूर्यः सोमो महेन्द्रो वा लोकपालोऽपरोऽपि वा ॥ २९ ॥ मन्ये त्वां देवदेवानां त्रयाणां पुरुषर्षभम् ॥ यद्बाधसे गुहाध्वान्तं प्रदीपः प्रभया यथा ॥ ३० ॥ शुश्रूषतामव्यलीकमस्माकं नरपुङ्गव ॥ स्वजन्म कर्म गोत्रं वा कथ्यतां यदि रोचते ॥ ३१ ॥ वयं तु पुरुषव्याघ्र ऐक्ष्वाकाः क्षत्रबन्धवः ॥ मुचुकुन्द इति प्रोक्तो यौवनाश्वात्मजः प्रभो ॥ ३२ ॥ चिरप्रजागरश्रान्तो निद्रयापहतेन्द्रियः ॥ शयेऽस्मिन्विजने कामं केनाप्युत्थापितोऽधुना ॥ ३३ ॥ सोऽपि भस्मीकृतो नूनमात्मीयेनैव पाप्मना ॥ अनन्तरं भवाञ्छ्रीमाँल्लक्षितोऽमित्रशातनः ॥ ३४ ॥ तेजसा तेऽविषह्येण भूरि द्रष्टुं न शक्नुमः ॥ हतौजसो महाभाग माननीयोऽसि देहिनाम् ॥ ३५ ॥

देवताहरूका पनि देवता ब्रह्मा, विष्णु र शिव यी मध्ये साक्षात् नारायण नै हुनुहुन्छ, किनकि प्रज्वलित बत्ती समान आफ्नू तेजले यस गुफाको अन्धकार नष्ट पारिरहनुभएको छ॥३०॥ हे नरश्रेष्ठ ! यदि हजुरको इच्छा भए मलाई आफ्नू जन्म, कर्म र गोत्र बताउनु हवस् । त्यो सुन्ने मेरो ठूलो इच्छा छ ॥ ३१ ॥ हे पुरुषसिंह ! म त इक्ष्वाकु कुलमा उत्पन्न योटा क्षत्रिय हुँ । हे प्रभो ! मेरो नाम मुचुकुन्द हो र म युवनाश्वनन्दन महाराज मान्धाताको छोरो हुँ ॥ ३२ ॥ म धेरै दिनसम्म नसुत्नाले थाकेको थिएँ र निद्राले अचेत भएर यस निर्जन स्थानमा इच्छानुसार सुतेको थिएँ । अहिले मलाई कसैले उठाइदियो ॥ ३३ ॥ त्यो आफ्नै पापले डढेर भस्म भयो अनि मैले आफ्ना शत्रुहरूलाई नष्ट पार्ने हजुरको दर्शन पाएँ ॥ ३४ ॥ हे महाभाग ! हजुर समस्त देहधारीहरूमा माननीय हुनुहुन्छ । हजुरको असह्य तेजले आँखा तिरिमिरि भएर म धेरै बेरसम्म हजुरतिर हेरिरहन सकिरहेको छैन ॥३५॥

1076

प्रजावत्सल* राजा मुचुकुन्दले त्यति भनेपछि भगवान् कृष्णले मेघ झैं गम्भीर वाणीमा भन्नुभयो ॥ ३६ ॥ भगवान् आज्ञा हुन्छ—हे तात ! मेरो जन्म-कर्म र नाम हजारौं छन् । त्यसको कुनै अन्त्य छैन । स्वयं म पनि तिनको गणना गर्न सक्तिन ॥ ३७ ॥ कोही व्यक्ति अनेक जन्ममा पृथ्वीका रजकणहरू गन्न सकला, तर मेरो जन्म, गुण, कर्म र नामहरू कोही कदापि गन्न सक्तैन ॥ ३८ ॥ हे राजन् ! सबै महर्षि पनि मेरो त्रिकालसि जन्म-कर्मन गर्दै रहेर पनि कहिल्यै तिनको अन्त्य भेट्न उन्नन ॥ ३९ ॥ तैपनि म आफ्नो वर्तमान जन्म-कर्म र नामको वर्णन गर्दछु, सुन–पूर्वकालमा मसित ब्रह्माले धर्मको रक्षा तथा पृथ्वीका भाररूप दैत्यगणको संहार गर्ने प्रार्थना गरेका थिए

एवं सम्भाषितो राज्ञा भगवान्भूतभावनः ॥ प्रत्याह प्रहसन्वाण्या मेघनादगभीरया ॥ ३६ ॥ श्रीभगवानुवाच ॥ जन्मकर्माभिधानानि सन्ति मेऽङ्ग सहस्रशः ॥ शक्यन्तेऽनुसंख्यातुमनन्तत्वान्मयाऽपि हि ॥३७॥ क्वचिद्रजांसि विममे पार्थिवान्पुरुजन्मभिः ॥ गुणकर्माभिधानानि न मे जन्मानि कर्हिचित् ॥ ३८ ॥ कालत्रयोपपन्नानि जन्मकर्माणि मे नृप ॥ अनुक्रमन्तो नैवान्तं गच्छन्ति परमर्षयः ॥ ३९ ॥ तथाप्यद्य तनान्यङ्ग शृणुष्व गदतो मम ॥ विज्ञापितो विरिञ्चेन पुराऽहं धर्मगुप्तये ॥ भूमेर्भारायमाणानामसुराणां क्षयाय च ॥ ४० ॥ अवतीर्णो यदुकुले गृह आनकदुन्दुभेः ॥ वदन्ति वासुदेवेति वसुदेवसुतं हि माम् ॥ ४१ ॥ कालनेमिर्हतः कंसः प्रलम्बाद्याश्च सद्द्विषः ॥ अयं च यवनो दग्धो राजंस्ते तिग्मचक्षुषा ॥ ४२ ॥ सोऽहं तवानुग्रहार्थं गुहामेतामुपागतः ॥ प्रार्थितः प्रचुरं पूर्वं त्वयाऽहं भक्तवत्सलः ॥ ४३ ॥ वरान्वृणीष्व राजर्षे सर्वान्कामान्ददामि ते ॥ मां प्रपन्नो जनः कश्चिन्न भूयोऽर्हति शोचितुम् ॥ ४४ ॥ श्रीशुक उवाच ॥ इत्युक्तस्तं प्रणम्याह मुचुकुन्दो मुदान्वितः ॥ ज्ञात्वा नारायणं देवं गर्गवाक्यमनुस्मरन्

॥ ४० ॥ उनको प्रार्थनाले नै म यदुकुलमा वसुदेवकहाँ अवतार लिएँ । वसुदेवको छोरो हुनाले सबै मलाई वासुदेव भन्दछन् ॥ ४१ ॥ आजसम्म मेरो हातबाट कालनेमीको दोस्रो अवतार कंस र प्रलम्बासुर आदि अनेक सज्जन-द्रोही मारिइसके । हे राजन् ! अहिले पनि यो कालयवन मेरै प्रेरणाले तीम्रो तीक्ष्ण दृष्टि द्वारा भस्म भएको हो ॥ ४२ ॥ म तिमीमाथि कृपा गर्नको निम्ति नै यस गुफामा आएको हुँ । म भक्तवत्सल हुँ र तिमीले पहिल्यै मेरो धेरै आराधना गरेका थियौ ॥४३॥ हे राजन् ! तिमी मसित इच्छित वर माग, म तिम्रा सबै इच्छा पूर्ण पारिदिन्छु । जुन व्यक्ति मेरो शरणमा आउँछ, त्यसलाई कुनै चिन्ता रहन्न॥४४॥ शुकदेव भन्नुहुन्छ–भगवानको यस्ता वचन सुनेर राजालाई ठूलो आनन्द भयो

---

* उदाहरण ( राजाको प्रजाप्रेम )–दिल्लीका बादशाह जहाँगीरको समयमा एक वर्ष मालपोत कालामा धेरै घट बध्या भयो । राजाले मन्त्रीसित सोध्यो 'अघ वर्ष त यति बढी आमदानी भएको थिएन, अनि यस वर्ष यति फरक किन भयो ?' वजीरले भन्यो–'जहाँपनाह ! हामीले अनुचित काइदाले किसानलाई दुःख दिएको होइन, बरू स्वाभाविक रीतिले यसपाली गङ्गाको पानी बढी पर गयो, बढी भूमि खेतीका निम्ति पाइयो र फसल राम्रो भयो । यसैले आमदनी बढ्यो ।' बादशाह त्यस बेला त केही बोलेन, राती महलमा गएपछि निद्रा लागेन । राति नै ऊ मन्त्रीकहाँ गयो र भन्यो–राज्यको अपराधले नै गङ्गाजीमा पानी घटेको थियो । त्यसमाथि पनि तिमीले गङ्गाद्वारा छाडिएको भूमिको पनि मालपोत लियौ । यसरी त अर्को वर्ष गङ्गाजीमा पानी नै रहने छैन । यस अपराधको निम्ति परमा मासित प्रार्थना गर्दछु–गंगाजीलाई सदा बलले भरिएको राखून् । तिमी पनि त्यस्तै प्रार्थना गर । बढी आएको मालपोत राज्यको काममा नलगाएर गङ्गातटका निवासी कुलहरूमा बाँडिदिनु बससा तिनको आशीर्वाद प्राप्त भएर आफ्नो राज्य टिकीरहोस् । राज्यका आधार कृषक आबाद रहे भने राज्य पनि आबाद रहने छ ।'

उनले गर्गमुनिको वाक्य अर्थात् 'अट्ठाइसौं द्वापर युगमा विष्णु भगवान् वसुदेव कहाँ अवतार लिनेछन्' स्मरण गर्दै उनलाई साक्षात् नारायण माने र भन्न लागे॥४५॥मुचुकुन्द भन्दछन् हे ईश ! हजुरकी मायाले मोहित भएर संसारका नर-नारी हजुरलाई भज्दैनन् । तिनको दृष्टि अनर्थरूप संसारमै लागिरहन्छ र यौटा अर्को द्वारा परस्पर ठगिएर पनि सुखको आशाले दुःखपूर्ण गार्हस्थ्यमा गाडिरहन्छन् ॥ ४६ ॥ हे अनघ ! यस कर्म भूमिमा सम्पूर्ण अङ्गले युक्त अतिशय दुर्लभ मनुष्य शरीर पाएर पनि जीव तुच्छ विषय-सुखमा आसक्त रहनाले हजुरका चरणकमलको भजन गर्दैनन् र तृणको लो भले अँध्यारो कूपमा परेको पशु झैं गृहरूपी अन्धकूपमा गाडिन्छन् ॥४७॥ हे अजित ! म राजा थिएँ, राज्यलक्ष्मीको मदले मलाई उन्मत्त पारिदिएको थियो । म आफ्नू देहलाई नै आत्मा मान्दथें र स्त्री-पुत्र, राजकोषमा मेरो ठूलो आसक्ति थियो । यस्तो दुरन्त चिन्तामा लागेर मेरो धेरै समय व्यर्थ बितेर गयो ॥ ४८ ॥ घडा र भित्ता झैं यस शरीरमा 'म राजा हुँ, यस्तो दृढ अभिमान मलाई भइसकेको थियो । म हजुरको स्मरण गर्न छाडेर रथ, हात्ती, घोडा र पैदल चतुरङ्गिणी सेना सहित अत्यन्त मदान्ध भएर पृथ्वीमा डुल्दथें ॥ ४९ ॥ 'मैले के गर्नु छ' यस चिन्तामा मनुष्य उन्मत्त रहन्छ, किनकि उसलाई विषयहरूको अत्यन्त लालसा

॥ ४५ ॥ मुचुकुन्द उवाच ॥ विमोहितोऽयं जन ईश मायया त्वदीयया त्वां न भजत्यनर्थदृक् ॥ सुखाय दुःखप्रभवेषु सज्जते गृहेषु योषित्पुरुषश्च वञ्चितः ॥ ४६ ॥ लब्ध्वाजनो दुर्लभमत्र मानुषं कथञ्चिदव्यङ्गमयत्नतोऽनघ ॥ पदारविन्दं न भजत्यसन्मतिर्गृहान्धकूपे पतितो यथा पशुः ॥ ४७ ॥ ममैषकालोऽजित निष्फलो गतो राज्यश्रियोन्नद्धमदस्य भूपतेः ॥ मर्त्यात्मबुद्धेः सुतदारकोशभूष्वासज्जमानस्य दुरन्तचिन्तया ॥ ४८ ॥ कैलेवरेऽस्मिन्घटकुड्यसन्निभे निरूढमानो नरदेव इत्यहम् ॥ वृतो रथेभाश्वपदात्यनीकपैर्गां पर्यटंस्त्वांऽगणयन्सुदुर्मदः ॥४९॥ प्रमत्तमुच्चैरितिकृत्यचिन्तया प्रवृद्धलोभं विषयेषु लालसम् ॥ त्वमप्रमत्तः सहसाऽभिपद्यसे क्षुल्लेलिहानोऽहिरिवाखुमन्तकः ॥५०॥ पुरा रथैर्हेमपरिष्कृतैश्चरन्मतङ्गजैर्वा नरदेवसंज्ञितः ॥ स एव कालेन दुरत्ययेन ते कलेवरो विट्कृमिभस्मसंज्ञितः ॥ ५१ ॥ निर्जित्य दिक्चक्रमभूतविग्रहो वरासनस्थः समराजवन्दितः ॥ गृहेषु मैथुन्यसुखेषु योषितां क्रीडामृगः पूरुष ईश नीयते ॥ ५२ ॥ करोति कर्माणि तपःसु निष्ठितो निवृत्तभोगस्तदपेक्षया ददत् ॥ पुनश्च भूयेयमहं स्वराडिति प्रवृद्धतर्षो न सुखाय कल्पते ॥ ५३ ॥ भवापवर्गो भ्रमतो यदा भवेज्जनस्य तर्ह्यच्युत सत्समागमः ॥ सत्सङ्गमो यर्हि तदैव सद्गतौ परावरेशे त्वयि जायते मतिः

रहन्छ र विषय प्राप्त भएपछि पनि प्रतिदिन उसको तृष्णा बढ्दै जान्छ तर जस्तै क्षुधावश जिब्रो भित्र-बाहिर पार्ने सर्प असावधान मूसालाई पक्रन्छ, त्यस्तै नै सदैव सावधान रहने कालरूपी हजुर त्यसलाई अकस्मात् आएर पक्रिलिनु हुन्छ ॥ ५० ॥ पहिले जुन देह 'राजा' बनेर सुवर्णमय रथमा र मदमत्त हात्तीहरूमा चढेर हिड्थ्यो, उही एक दिन दुर्निवार कालको ग्रास भएर विष्ठा, कृमि वा भस्म बन्दछ ॥ ५१ ॥ हे ईश ! मर्न भन्दा पहिले जो सबै दिशाहरू जितेर युद्ध समाप्त गरिसकेको हुन्छ र श्रेष्ठ सिंहासनमा बसेर आफ्ना समकक्ष राजाहरूसित पूजित हुन्छ, त्यही व्यक्ति विषय-सुखको निम्ति नारीहरूको क्रीडामृग ( पालतु पशु ) बन्दछ ॥ ५२ ॥ फेरि त्यो उही राज्यादि भोगहरूको इच्छाले दान-पुण्य गर्दछ । पछि भोगहरू छाडेर तपस्यामा स्थित रही त्यो 'म अर्को जन्ममा स्वतन्त्र सम्राट् हुन पाउँ' यस अभिलाषाले नाना थरिका कर्म गर्दछ । यस प्रकार तृष्णा बढ्नाले जतिकति पनि शान्ति पाउन्न । हे अच्युत ! अब संसार-बन्धनको अन्त्य नजीक आउँछ, तब प्राणीलाई सत्सङ्ग प्राप्त हुन्छ, अनि सत्पुरुषहरूको आश्रय एवं कार्य-

कारणका नियन्ता हजुरमा उसको मन लाग्दछ ॥ ५३-५४ ॥ हे ईश ! मेरो राज्य-बन्धन स्वयं टुटिसकेको छ । यो म हजुरको अनुग्रह नै मान्दछु, किनकि जो सार्वभौम चक्रवर्ती राजा राज्य छाडेर तपस्या गर्नका लागि वनमा जान खोज्दछन् ती पनि यो राज्यानुरागबाट मुक्त हुनको निम्ति हजुरसित प्रार्थना गर्दछन् ॥५५॥ हे विभो ! निरभिमानी पुरुष जो अत्यन्त प्रार्थनीय छ, त्यो हजुरका चरण-सेवा बाहेक म केही पनि वर माग्दिन । हे हरे ! हजुर जस्ता मोक्षप्रद प्रभुको आराधना गरेर कुनै पनि विचारवान् पुरुष आफूलाई बन्धनमा पार्ने वरदान कसरी माग्न सक्तछ ? ॥ ५६ ॥ हे ईश ! म सत्त्वगुण, रजोगुण र तमोगुणले सम्बद्ध सबै कामनाहरू छाडेर हजुर निर्मल, अद्वय र विशुद्ध चिन्मात्र परम पुरुषको शरण पर्दछु ॥५७॥ म चिरकालीन आफ्ना कर्मफलले पीडित थिएँ । तिनका दुःखद परिणाम मलाई निरन्तर पोलिरहेका थिए । आफ्ना छ शत्रुहरू अर्थात् पाँच ज्ञानेन्द्रिय र छैठौं मनको तृष्णा शान्त नहुनाले मलाई शान्ति प्राप्त भइरहेको छैन । हे परमात्मन् ! अब म भय, मृत्यु र शोकले रहित हजुरका चरणकमलको शरणमा आएको छु । हे ईश ! हजुर म

॥ ५४ ॥ मन्ये ममानुग्रह ईश ते कृतो राज्यानुबन्धापगमो यदृच्छया ॥ यः प्रार्थ्यते साधुभिरेकचर्यया वनं विविक्षद्भिरखण्डभूमिपैः ॥ ५५ ॥ न कामयेऽन्यं तव पादसेवनादकिञ्चनप्रार्थ्यतमाद्वरं विभो ॥ आराध्य कस्त्वां ह्यपवर्गदं हरे वृणीत आर्यो वरमात्मबन्धनम् ॥ ५६ ॥ तस्माद्वि· सृज्याशिष ईश सर्वतो रजस्तमःसत्त्वगुणानुबन्धनाः ॥ निरञ्जनं निर्गुणमद्वयं परं त्वां ज्ञाप्तिमात्रं पुरुषं व्रजाम्यहम् ॥ ५७ ॥ चिरमिह वृजिनार्तस्त· प्यमानोऽनुतापैरवितृषषडमित्रोऽलब्धशान्तिः कथञ्चित् ॥ शरणद समुपेतस्त्वत्पदाब्जं परात्मन्नभयमृतमशोकं पाहि मापन्नमीश ॥ ५८ ॥ श्रीभग· वानुवाच ॥ सार्वभौम महाराज मतिस्ते विमलोर्जिता ॥ वरैः प्रलोभितस्यापि न कामैर्विहता यतः ॥ ५९ ॥ प्रलोभितो वरैर्यत्त्वमप्रमादाय विद्धि तत् ॥ न धीर्मय्येकभक्तानामाशीर्भिर्भिद्यते क्वचित् ॥ ६० ॥ युञ्जानानामभक्तानां प्राणायामादिभिर्मनः ॥ अक्षीणवासनं राजन्दृश्यते पुनरुत्थितम् ॥ ६१ ॥ विचरस्व महीं कामं मय्यावेशितमानसः ॥ अस्त्वेवं नित्यदा तुभ्यं भक्तिर्मय्यनपायिनी ॥६२॥ क्षात्रधर्मस्थितो जन्तून्न्यवधीर्मृगयादिभिः ॥ समाहितस्तत्तपसा जह्यघं मदुपाश्रितः ॥ ६३ ॥ जन्मन्यनन्तरे राजन्सर्वभूतसुहृत्तमः ॥ भूत्वा द्विजवरस्त्वं वै मामुपैष्यसि केवलम् ॥ ६४ ॥ इति

शरणागतको रक्षा गर्नुहवस् ॥ ५८ ॥ भगवानले भन्नुभयो—हे सार्वभौम महाराज ! तिम्रो बुद्धि निर्मल र उच्च छ । त्यसैले मद्वारा वरको निम्ति लोभ देखाउँदा पनि त्यो कामनाहरू-को वशमा परिनौ ॥ ५९ ॥ मैले तिमीलाई वरदान दिने जुन लोभ देखाएको थिएँ, त्यो तिम्रो आफ्नो सावधानीको परीक्षाको निम्ति नै जान । किनकि मेरो अनन्य भक्तहरूको बुद्धि कहिल्यै कामनाहरूले ग्रसित हुँदैन ॥ ६० ॥ जो भक्त हुन्छन्, उनको मन प्राणायामादि साधन द्वारा आफ्नु वशमा गर्ने उद्योग गर्दै रहे पनि वासनाहरूको क्षय नभएर विषयतिर नै दगुरिरहन्छ ॥६१॥ अब तिमी मन लगाएर स्वेच्छानुसार पृथ्वीमा विचरण गर । ममा तिम्रो अनपायनी भक्ति बनिरहने छ ॥६२॥ तिमीले क्षात्रधर्मको आचरण गर्न देलामा मृगया आदिमा अनेक जीव मार्यौ । अब समाहित चित्तले मेरो उपासना गर्दै कठोर तपस्या द्वारा त्यस पापलाई क्षीण पार । हे राजन् ! अर्को जन्ममा तिमी सबैका परम सुहृद र श्रेष्ठ

ब्राह्मण हुनेछौ । त्यस बेला म कैवल्यस्वरूप परमात्मालाई पाउने छौ ॥ ६३-६४ ॥ इति श्रीमद्भागवते महापुराणे नेपाली भाषाटीकायामेकपञ्चाशत्तमोऽध्यायः ॥ ५१ ॥

( भगवानको द्वारका गमन, बलरामको विवाह र श्रीकृष्णले रुक्मिणीको विवाह-समचार पाउनु ) श्रीशुकदेव भन्दछन्–हे तात ! इक्ष्वाकुतनय महाराज मुचुकुन्द श्रीकृष्णसित त्यसरी अनुगृहीत भई प्रदक्षिणा र प्रणाम गरेर गुफाबाट निस्के ॥ १ ॥ उसले बाहिर आएर देखे–पूर्व मनुष्य, लता र वृक्ष साना आकारका भइसकेका छन् । यी लक्षणहरूले अब कलियुग आइसकेछ भन्ने जानी ती तपस्या गर्न उत्तराखण्ड गए ॥ २२ ॥ महाराज मुचुकुन्द श्रद्धा-सम्पन्न परमत्र परम धीर र सबै संगति तथा संशयबाट रहित थिए । ती श्री कृष्णको चिन्तन गर्दै गन्धमादन पर्वतमा पुगे ॥ ३ ॥ त्यहाँ नर-नारायणको तपोभूमि बद्रिकाश्रममा गई सबै द्वन्द्व सहँदै शान्तभावले तपस्या द्वारा श्रीकृष्णको

श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे मुचुकुन्दस्तुतिर्नामैकपञ्चाशत्तमोऽध्यायः ॥ ५१ ॥

श्रीशुक उवाच ॥ इत्थं सोऽनुगृहीतोऽङ्ग कृष्णेनेक्ष्वाकुनन्दनः ॥ तं परिक्रम्य सन्नम्य निश्चक्राम गुहामुखात् ॥१॥ स वीक्ष्य क्षुल्लकान्मर्त्यान्पशून्वीरुद्वनस्पतीन् ॥ मत्वा कलियुगं प्राप्तं जगाम दिशमुत्तराम् ॥२॥तपः श्रद्धायुतो धीरो निःसङ्गो मुक्तसंशयः॥समाधाय मनःकृष्णेप्राविशद्गन्धमादनम् ॥३॥ बदर्याश्रममासाद्य नरनारायणालयम् ॥ सर्वद्वन्द्वसहः शान्तस्तपसाराधयद्धरिम् ॥४॥ भगवान्पुनराव्रज्य पुरीं यवनवेष्टिताम् ॥ हत्वा म्लेच्छबलं निन्ये तदीयं द्वारकां धनम् ॥५॥ नीयमाने धने गोभिर्नृभिश्चाच्युतचोदिते॥आजगामजरासन्धस्त्रयोविंशत्यनीकपः ॥६॥ विलोक्यवेगरभसंरिपुसैन्यस्यमाधवौ ॥ मनुष्यचेष्टामापन्नौ राजन्दुद्रुवर्द्रुतम् ॥७॥ विहाय वित्तं प्रचुरमभीतौ भीरुभीतवत् ॥ पद्भ्यां पद्मपलाशाभ्यां चेलतुर्बहुयोजनम् ॥८॥ पलायमानौ तौ दृष्ट्वा मागधः प्रहसन्बली ॥ अन्वधावद्रथानीकैरीशयोरप्रमाणवित् ॥९॥ प्रद्रुत्य दूरं संश्रान्तौ तुङ्गमारुहतां गिरिम् ॥ प्रवर्षणाख्यं भगवान्नित्यदा यत्र वर्षति ॥१०॥ गिरौ निलीनावाज्ञाय नाधिगम्य पदं नृप ॥ ददाह गिरिमेधोभिः समन्तादग्निमुत्सृजन् ॥ ११ ॥ तत उत्पत्य तरसा दह्यमानतटादुभौ ॥

आराधना गर्न लागे ॥ ४ ॥ यता भगवान वासुदेव मथुरा फर्केर आए र म्लेच्छदलको संहार गरेर सबै धन लिई द्वारका हिंडे ॥ ५ ॥ श्रीकृष्णको आज्ञाले जब त्यो धन ज्यामी र गोरुमाथि राखेर लगिरहेका थिए, तब सेनाले घेरिएको मथुरापुरीमा फेरि जरासन्ध तेईस अक्षौहिणी सेना लिएर आयो ॥ ६ ॥ हे राजन् ! शत्रु-सेनाको प्रबल वेग देखेर श्रीराम र कृष्ण मानवी लीलाको अनुसरण गर्दै त्यसको साम्नेबाट भागे ॥ ७ ॥ यद्यपि उनलाई केही डर थिएन, तापनि अत्यन्त डराए जस्तै भई, त्यो सारा सम्पत्ति त्यहीं छाडेर कमलदल समान सुकुमार चरणले पैदल नै भागे ॥ ८ ॥ उनलाई भागिरहेका देखेर मगधराज जरासन्ध, ती ईश्वरको प्रभाव जान्न नसक्नाले गर्दा आफ्ना रथी सैनिकहरू सहित पछि लाग्यो ॥ ९ ॥ जब निकै परसम्म दगुरेर भगवान थाके, तब अग्लो प्रवर्षण नामको पर्वतमा उक्लिए, त्यहाँ नित्य पानी परिरहन्थ्यो ॥ १० ॥ हे राजन् ! उनलाई पर्वतमा लुकेका भन्ने जानेर तथा उनको कतै पत्तो नपाई जरासन्धले काठ बटुल्न लगाई पर्वतको चारैतिर आगो

लगाइदियो ॥ ११ ॥ जब पर्वतको पार्श्वभाग बल्न लाग्यो अनि दुवै भाई वेगले हाम्फालेर एघार योजन अग्लो पर्वतबाट तल आए ॥१२॥ हे राजन् ! ती यदुश्रेष्ठ जरासन्धसित लुकेर आफ्ना मित्र सहित द्वारकापुरी पुगे, जसको चारैतिर समुद्र थियो ॥ १३ ॥ यता जरासन्ध 'कृष्ण र राम दुवै डढे' भन्ने ठानेर आफ्ना समस्त सेना लिई मगधदेश फर्कियो ॥ १४ ॥ हे राजन् ! यो कुरा पहिले नै भनिसकेको छ कि आनर्त नरेश श्रीमान् रैवतले ब्रह्माजीको मनाइअनुसार आफ्नी छोरी रेवतीको विवाह बलरामसित गरेका थिए ॥ १५ ॥ त्यसपछि हे कुरुनन्दन ! श्रीकृष्णले पनि स्वयंवरमा आएका शिशुपालका पक्षधर शाल्वादि अनेक राजाको मानमर्दन गरेर गरुडले अमृत हरण गरे झैं ती सबैको सामुन्नेबाट विदर्भ देशमा जन्मेकी महाराज भीष्मककी कन्या लक्ष्मीकी अंशावतार रुक्मिणीको हरण गरेका थिए ॥ १६ ॥ १७ ॥ यति सुनेर राजा परीक्षितले सोधे—मैले त सुनेको छ—भगवान् श्रीकृष्णले महाराज भीष्मकी सुन्दरी छोरी रुक्मिणीसित राक्षस-विवाहको विधिले बिहे गरेका थिए ॥ १८ ॥ हे भगवन् ! अमित पराक्रमी भगवान् कृष्णले

दशैकयोजनोत्तुङ्गान्निपेततुरधो भुवि ॥ १२ ॥ अलक्ष्यमाणौ रिपुणा सानुगेन यदूत्तमौ ॥ स्वपुरं पुनरायातौ समुद्रपरिखां नृप ॥ १३ ॥ सोऽपि दग्धाविति मृषा मन्वानो बलकेशवौ ॥ बलमाकृष्य सुमहन्मगधान्मागधो ययौ ॥१४॥ आनर्ताधिपतिः श्रीमान्रैवतो रेवतीं नृप ॥ ब्रह्मणा चोदितः प्रादाद्बलायेति पुरोदितम् ॥ १५ ॥ भगवानपि गोविन्द उपयेमे कुरूद्वह ॥ वैदर्भीं भीष्मकसुतां श्रियो मात्रां स्वयंवरे ॥१६॥ प्रमथ्य तरसा राज्ञः शाल्वादींश्चैद्यपक्षगान् ॥ पश्यतां सर्वलोकानां तार्क्ष्यपुत्रः सुधामिव ॥ १७ ॥ राजोवाच ॥ भगवान्भीष्मकसुतां रुक्मिणीं रुचिराननाम् ॥ राक्षसेन विधानेन उपयेम इति श्रुतम् ॥ १८ ॥ भगवञ्छ्रोतुमिच्छामि कृष्णस्यामिततेजसः ॥ यथा मागधशाल्वादीञ्जित्वा कन्यामुपाहरत् ॥१९॥ ब्रह्मन्कृष्णकथाः पुण्या माध्वीर्लोकमलापहाः ॥ को नु तृप्येत शृण्वानः श्रुतज्ञो नित्यनूतनाः ॥२०॥ श्रीशुक उवाच ॥ राजाऽऽसीद्भीष्मको नाम विदर्भाधिपतिर्महान् ॥ तस्य पञ्चाभवन्पुत्राः कन्यैका च वरानना ॥ २१ ॥ रुक्म्यग्रजो रुक्मरथो रुक्मबाहुरनन्तरः ॥ रुक्मकेशो रुक्ममाली रुक्मिण्येषां स्वसा सती ॥२२॥ सोपश्रुत्य मुकुन्दस्य रूपवीर्यगुणश्रियः ॥ गृहागतैर्गीयमानास्तं मेने सदृशं पतिम् ॥२३॥ तां बुद्धिलक्षणौदार्यरूपशीलगुणाश्रयाम् ॥ कृष्णश्च सदृशीं भार्यां समुद्वोढुं मनो दधे ॥ २४ ॥ बन्धूनामिच्छतां दातुं कृष्णाय भगिनीं नृप ॥ ततो निवार्य कृष्णद्विड् रुक्मी चैद्य-

जरासन्ध शाल्वादि वीरलाई जितेर कसरी कन्या-हरण गरे, यो वृत्तान्त म सुन्न चाहन्छु ॥ १९ ॥ हे ब्रह्मन् ! कृष्ण-भगवान्का गाथाहरू अतिशय पवित्र, मधुर र संसाररूपी मलको मार्जन गर्ने हुन्छन् । ती नित्य नयाँ कथाहरू सुन्दै रहनाले कुन कथा-मर्मज्ञ श्रोता तृप्त हुन सक्छ ? ॥ २० ॥ शुकदेवजीले भने—हे राजन् ! महाराज भीष्मक विदर्भदेशका स्वामी थिए । तिनका पाँच पुत्र र यौटा सुमुखी कन्या थिइन् ॥ २१ ॥ ती सन्तानमा रुक्मी जेठा थिए । तीबाहेक रुक्मरथ, रुक्मबाहु, रुक्मकेश र रुक्ममाली यी चार भाई र सती रुक्मिणी तिनकी बहिनी थिइन् ॥ २२ ॥ रुक्मिणीले आफ्नू घरमा आउने पाहुनाहरू द्वारा श्रीकृष्णको रूप, बल, गुण र वैभवको प्रशंसा सुनेर उनलाई नै आफ्नू अनुरूप पति मानिराखेकी थिइन् ॥ २३ ॥ यता श्रीकृष्णले पनि बुद्धि, लक्षण, उदारता, रूप, शील र गुणकी खानी रुक्मिणीलाई आफ्नू योग्य भार्या ठानेर मनमनै उनैसित विवाह गर्ने निश्चय गरिसकेका थिए ॥ २४ ॥ कृष्ण-द्रोही रुक्मीले जब देखे—माता-पिता र बन्धुजन बहिनी रुक्मिणीको विवाह श्रीकृष्णसित नै गरिदिन चाहन्छन्

अनि उनले सबैलाई छेकेर चेदिराज शिशुपाललाई रुक्मिणीको वर माने ॥ २५ ॥ दाजूको विचार जानेर श्यामलोचना विदर्भराजकुमारी रुक्मिणी मनमनै साह्रै दुःखी भइन् । उनले विचार गरेर यौटा विश्वासपात्र ब्राह्मणलाई तुरुन्त श्रीकृष्णकहाँ द्वारका पठाइन् ॥ २६ ॥ उहाँ पुगेपछि ती विप्रलाई द्वारपालले राजभवन भित्र लग्यो । त्यहाँ उनले आदिपुरुष भगवान् कृष्णलाई सुनको सिंहासनमा बसेका देखे ॥ २७ ॥ ब्रह्मण्य भगवान् कृष्ण ती ब्राह्मणलाई देख्नासाथ आसानबाट उठेर उनलाई आफ्नू आसनमा बसाले र जसरी देवता भगवान्‌को पूजा गर्दछन्, उसै गरी ती ब्राह्मणको पूजा गरे ॥ २८ ॥ ब्राह्मण देवताले खान-पान सकेर केही बेर विश्राम गरिसकेपछि सज्जनहरूका एकमात्र गति भगवान् कृष्ण उनीकहाँ पाल्नुभयो र आफ्ना कोमल हातले तिनका खुट्टा मिच्दै शान्त भावले सोध्नुभयो—॥ २९ ॥ 'हे विप्रवर ! हजूरको चित्त सदा प्रसन्न रहन्छ ? हजुरलाई आफ्ना पूर्वपुरुषहरू द्वारा निश्चित नियम पालन गर्न कुनै कष्ट त हुँदैन ? ॥ ३० ॥ जे-जति पाइन्छ त्यसैमा सन्तुष्ट रहेर यदि ब्राह्मण आफ्नू धर्मबाट हट्दैन भने उसका

समन्यत ॥२५॥ तदवेत्यासितापाङ्गी वैदर्भी दुर्मना भृशम् ॥ विचिन्त्याप्तं द्विजं कञ्चित्कृष्णाय प्राहिणोद् द्रुतम् ॥ २६ ॥ द्वारकां स समभ्येत्य प्रती-हारैः प्रवेशितः ॥ अपश्यदाद्यं पुरुषमासीनं काञ्चनासने ॥ २७ ॥ दृष्ट्वा ब्रह्मण्यदेवस्तमवरुह्य निजासनात् ॥ उपवेश्यार्हयाञ्चक्रे यथात्मानं दिवौकसः ॥ २८ ॥ तं भुक्तवन्तं विश्रान्तमुपगम्य सतां गतिः ॥ पाणिनाऽभिमृशन्पादावव्यग्रस्तमपृच्छत ॥ २९ ॥ कच्चिद्द्विजवरश्रेष्ठ धर्मस्ते वृद्धसम्मतः ॥ वर्तते नातिकृच्छ्रेण संतुष्टमनसः सदा ॥३०॥ संतुष्टो यर्हि वर्तेत ब्राह्मणो येन केनचित् ॥ अहीयमानः स्वाद्धर्मात्स ह्यस्याखिलकामधुक् ॥ ३१ ॥ असन्तुष्टोऽसकृल्लोकानाप्नोत्यपि सुरेश्वरः ॥ अकिञ्चनोऽपि संतुष्टः शेते सर्वाङ्गविज्वरः ॥३२॥ विप्रान्स्वलाभसंतुष्टान्साधून्भूतसुहृत्तमान् ॥ निरहंका-रिणः शान्तान्नमस्ये शिरसाऽसकृत् ॥३३॥ कच्चिद्वः कुशलं ब्रह्मन्राजतो यस्य हि प्रजाः ॥ सुखं वसन्ति विषये पाल्यमानाः स मे प्रियः ॥ ३४ ॥ यतस्त्वमागतो दुर्गं निस्तीर्येह यदिच्छया ॥ सर्वं नो ब्रूह्यगुह्यं चेत्किं कार्यं करवाम ते ॥ ३५ ॥ एवं सम्पृष्टसम्प्रश्नो ब्राह्मणः परमेष्ठिना ॥ लीलागृही-तदेहेन तस्मै सर्वमवर्णयत् ॥ ३६ ॥ रुक्मिण्युवाच ॥ श्रुत्वा गुणान्भुवनसुन्दर शृण्वतां ते निर्विश्य कर्णविवरैर्हरतोऽङ्गतापम् ॥ रूपं दृशां

सबै कामना पूर्ण हुन्छन् ॥ ३१ ॥ यदि सन्तोष छैन भने देवराज इन्द्रलाई पनि सुखको खोजीमा एक लोकबाट अर्को लोकमा भौंतारिनु पर्दछ । यसको विपरीत सन्तोष छ भने जोसित केही पनि छैन, त्यो पनि सबै प्रकारका सन्ताप रहित भएर सदा सुखी रहन्छ ॥ ३२ ॥ जो आफूमा भएको लाभमा सन्तुष्ट साधुस्वभाव, समस्त प्राणीका सुहृद्, अहङ्कार हीन र शान्तस्वभाव छन्, ती ब्राह्मणलाई म बारम्बार शिर न्युराएर प्रणाम गर्दछु ॥ ३३ ॥ हे ब्रह्मन् ! हजूर जसको राज्यमा बस्नुहुन्छ, त्यसको तर्फबाट सबै जना कुशल छन् ? जुन राजाका राज्यमा प्रजाको उचित पालन हुन्छ र प्रजा आनन्दपूर्वक रहन्छन्, त्यही राजा मलाई मनपर्छ ॥ ३४ ॥ हे विप्र ! अब हजूर जुन कामको निम्ति यो समुद्रको खाल्डो नाघेर यस दुर्गमा आउनु भयो, त्यो सबै वृत्तान्त यदि गोपनीय छैन भने मलाई भन्नुहवस् । हजूरको म के सेवा गरौं भन्नोस् ? ॥ ३५ ॥ लीलादेहधारी श्रीकृष्णले यसरी सोधेपछि ब्राह्मणले सबै वृत्तान्त सुनाउँदै भने—॥ ३६ ॥ रुक्मिणीजीले भनेकीछन्—हे भुवन-सुन्दर ! हे गोविन्द ! सुन्नेहरूका कर्ण विवरमा प्रविष्ट भएर सबैको शारीरिक

सन्ताप शान्त पार्ने हजूरका गुण र नेत्र हुनेको सम्पूर्ण लाभ दिने हजूरको रूपको महिमा सुनेर हे अच्युत ! मेरो चित्त लाज छाडेर हजुरमै रमिएको छ ॥ ३७ ॥ हे मुकुन्द ! हजुर कुल, शील, रूप, विद्या, अवस्था र धन-धर्मादिमा आफ्नै तुल्य हुनुहुन्छ ! हजूर मनुष्य मात्रको मनलाई आनन्द दिनुहुन्छ । हे पुरुषसिंह ! विवाहको वेला यस्ती कुन कुलवती परम गुणवती र धैर्यवती कन्या होली, जो हजुरलाई पतिरूपमा वरण नगर्ली ॥३८॥ यसै निम्ति हे नाथ ! म हजूरलाई आत्मसमर्पण गरिसकेकी छु । हे विभो ! हजूर यहाँ आएर मलाई आफ्नी पत्नी तुल्याउनोस् । हे कमलनयन ! जसरी सिंहको भाग स्याल लैजान सक्तैन त्यसै गरी हे वीर ! म हजूरकी भाग हुँ । हेर्नुहोस् *अभिमानी शिशुपाल मेरो नजीक आएर

दृशिमतामखिलार्थलाभं त्वय्यच्युताविशति चित्तमपत्रपं मे ॥३७॥ का त्वां मुकुन्द महती कुलशीलरूपा विद्यावयोद्रविणधामभिरात्मतुल्यम् ॥ धीरा पतिं कुलवती न वृणीत कन्या काले नृसिंह नरलोकमनोऽभिरामम् ॥३८॥ तन्मे भवान्खलु वृतः पतिरङ्ग जायामात्मार्पितश्च भवतोऽत्र विभो विधेहि ॥ मा वीर भागमभिमर्शतु चैद्य आराद्गोमायुवन्मृगपतेर्बलिमम्बुजाक्ष ॥३९॥ पूर्तेष्टदत्तनियमव्रतदेवविप्रगुर्वर्चनादिभिरलं भगवान् परेशः ॥ आराधितो यदि गदाग्रज एत्य पाणिं गृह्णातु मे न दमघोषसुतादयोऽन्ये ॥ ४० ॥ श्वोभाविनि त्वमजितोद्वहने विदर्भान् गुप्तः समेत्य पृतनापतिभिः परीतः ॥ निर्मथ्य चैद्यमगधेन्द्रबलं प्रसह्य मां राक्षसेन विधिनोद्वह वीर्यशुल्काम् ॥ ४१ ॥ अन्तःपुरान्तरचरीमनिहत्य बन्धूँस्त्वामुद्वहे कथमिति प्रवदाम्युपायम् ॥ पूर्वे

मलाई छुन नपाओस् ॥ ३९ ॥ पूर्त अर्थात् कूपादि खनाउनु इष्ट अर्थात् यज्ञादि गर्नु, व्रत यथा देवता, ब्राह्मण र गुरु आदिको पूजाद्वारा मैले यदि भगवान परमेश्वरको केही पनि आराधना गरेकी भए श्रीकृष्ण आएर मेरो पाणि-ग्रहण गरुन् । तीबाहेक दमघोषतनय शिशुपाल आदि अन्य कोही पुरुष मलाई छुन नसकुन् ॥ ४० ॥ हे अजित ! मेरो विवाह हुनु भन्दा अघिल्लो दिन यादव-सेनापतिहरूका साथै गुप्तरूले विदर्भदेशमा पाल्नुहवस् र शिशुपाल तथा जरासन्धादिका सेनालाई बलपूर्वक नष्ट पारेर केवल पराक्रमरूपी मूल्य दिएर मसित राक्षस विधिको अनुसार विवाह गर्नुहवस् ॥ ४१ ॥ यदि हजूर भन्नुहोला—म अन्तःपुरमा बस्तछु, म तिम्रा बन्धुहरूलाई नमारी कसरी विवाह गर्न

* दृष्टान्त ( अभिमानीको एकान्तवास )—यौटा साधकको मनमा अहङ्कार पस्यो र त्यो विचार गर्न लाग्यो—'भजन साधनामा मेरो उन्नति भयो । अतः अब गएर कुनै निर्जन स्थानमा बस्नु पर्दछ ।' यस्तो विचारेर यौटा निर्जन स्थानमा बस्न थाल्यो । त्यहाँ दिनहुँ रातिमा यौटा ऊँट आएर साधकसित भन्दथ्यो—'हिंड, तिमीलाई स्वर्ग लैजान्छु ।' त्यो अस्वीकार गर्दथ्यो र ऊँट उसलाई यौटा रमणीक स्थानमा लैजान्थ्यो । त्यहाँ गएर त्यो मीठो पक्वान्न र दास-दासीहरूसित सेवा गराउँथ्यो । रातभरि त्यहाँ सुख भोगेर बिहानै उठेर हेर्दा आफूलाई उही निर्जन स्थानमा पाउँथ्यो । 'मलाई सधैं देवता स्वर्ग लैजान्छन् !' यस्तो ठानेर त्यो अझ बढ्ता अभिमानी भयो । त्यसका गुरुले त्यो समचार सुनेर उसको झुपडीमा आए । उसको अभिमानको सीमा छैन भन्ने रङ्ग देखे । सोधेपछि साधकले सबै कुरा सुनाइदियो । त्यसमा गुरुले भने—'आज राति ढाक्न आयो भने तीनपल्ट भन्नु—छि, छि धिक्कार छ, तिमीलाई ।' सधैं यस्तो राती आयो र उही स्थानमा पुग्यो । त्यहाँ पुगेर गुरुले सिकाए झैं तीन पल्ट छिः छिः शब्द गर्‍यो । एकपल्टमै त्यहाँका सबै वस्तु बिच्छाएर बेपत्ता भए । त्यो अहङ्कारी साधक एक्लै रह्यो । उसले देख्यो—त्यो पनि निकृष्ट स्थान रहेछ । मरेका जीवहरूको हाड थुप्रिएको छ र दुर्गन्ध आइरहेको छ । अब उसलाई आफ्नू भूल थाहा भयो र फेरि गुरुको शरणमा गयो । काँचो शिष्यले एक्लै बस्नु भयङ्कर भूल हो भन्ने कुरा साधकले नक्ल बुझ्यो ।

सक्तछु–त्यसको य यौटा युक्ति भन्दछु । हामीकहाँ विवाहको दिन कुलदेवीको यात्रा हुन्छ । त्यसमा नववधू नगर बाहिर पार्वती-मन्दिरमा पूजा गर्न जान्छन् । उसै बेला हजुर मलाई हरेर लैजान सक्नुहुन्छ ॥ ४२ ॥ हे अम्बुज-नयन ! शंकर भगवान् जस्ता महापुरुष पनि अन्तःअज्ञान नष्ट गर्नका लागि जसको चरणरजले स्नान गर्न खोज्दछन् हजुरको त्यो प्रसाद यदि पाउन सकिन भने व्रतद्वारा शरीर सुकाएर प्राण त्यागिदिनेछु । सय जन्ममा त हजुरको कृपा हुन्यैछ ॥४३॥ ब्राह्मण भन्छन्–हे यदुदेव ! म हजुरकहाँ यही गुप्त समचार ल्याएको छु । यस विषयमा जे गर्नुछ, त्यसमा तत्काल विचार गरेर हजुर निर्णय गर्नोस् ॥ ४४ ॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपाली भाषाटीकायां द्विपञ्चाशतमोऽध्यायः । ५२ ॥

( रुक्मिणीहरण )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! विदर्भकुमारी रुक्मिणीको यो समचार सुनेर यदुनन्दन कृष्णचन्द्रले ब्राह्मणको हात आफ्नू हातमा लिएर हाँस्तै भने–
॥ १ ॥ भगवान् भन्नुहुन्छ–हे विप्रवर ! जसरी विदर्भराजकुमारीको चित्त ममा लागेको छ, उसैगरी मेरो पनि मन उनैमा आसक्त छ । मलाई राती निद्रा लाग्दैन । फेरि यो पनि

युरस्ति महती कुलदेवियात्रा यस्यां बहिर्नववधूर्गिरिजामुपेयात् ॥४२॥ यस्यांघ्रिपङ्कजरजः स्नपनं महान्तो वाञ्छन्त्युमापतिरिवात्मतमोपहत्यै ॥ यर्ह्य-
म्बुजाक्ष न लभेय भवत्प्रसादं जह्यामसून्व्रतकृशाञ्छतजन्मभिः स्यात् ॥४३॥ ब्राह्मण उवाच ॥ इत्येते गुह्यसन्देशा यदुदेव मयाऽऽहृताः ॥ विमृश्य
कर्तुं यच्चात्र क्रियतां तदनन्तरम् ॥४४॥ इति श्रीमद्भागवते महापुणे दशमस्कन्धे उत्तरार्धे रुक्मिण्युद्वाहप्रस्तावे द्विपञ्चाशत्तमोऽध्यायः ॥ ५२ ॥
श्रीशुक उवाच ॥ वैदर्भ्याः तु स सन्देशं निशाम्य यदुनन्दनः ॥ प्रगृह्य पाणिना पाणिं प्रहसन्निदमब्रवीत् ॥ १ ॥ श्रीभगवानुवाच ॥ तथाऽहमपि
तच्चित्तो निद्रां च न लभे निशि ॥ वेदाहं रुक्मिणो द्वेषान्ममोद्वाहो निवारितः ॥ २ ॥ तामानयिष्य उन्मथ्य राजन्यापसदान्मृधे ॥
मत्परामनवद्याङ्गीमेधसोऽग्निशिखामिव ॥ ३ ॥ श्रीशुक उवाच ॥ उद्वाहर्क्षं च विज्ञाय रुक्मिण्या मधुसूदनः ॥ रथः संयुज्यतामाशु दारुकेत्याह
सारथिम् ॥ ४ ॥ स चाश्वैः शैब्यसुग्रीवमेघपुष्पवलाहकैः ॥ युक्तं रथमुपानीय तस्थौ प्राञ्जलिरग्रतः ॥ ५ ॥ आरुह्य स्यन्दनं शौरिर्द्विजमारोप्य
तूर्णगैः ॥ आनर्तादेकरात्रेण विदर्भानगमद्धयैः ॥ ६ ॥ राजा स कुण्डिनपतिः पुत्रस्नेहवशं गतः ॥ शिशुपालाय स्वां कन्यां दास्यन्कर्माण्य-

मलाई थाहा छ–रुक्मी द्वेषवश गर्दा उनको विवाह सम्बन्ध हुन दिन चाहन्न ॥२॥ तर केही चिन्ताको कुरा छैन, जस्तै अरणी काठ मथेर मनुष्य त्यसबाट आगो निकाल्दछन्, त्यसै गरी म पनि सबै अधम राजाहरूलाई युद्धमा पराजित पारेर ती एकमात्र मलाई नै भज्ने परमा सुन्दरी राजकन्यालाई अवश्य हरेर ल्याउँछु ॥३॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! रुक्मिणीको विवाह मुहूर्त पर्सि रातीको नै छ । यो जानेर भगवान्ले सारथीलाई डाकेर भन्नुभयो–'हे दारुक ! शीघ्र रथ तयार पारेर ल्याऊ' ॥ ४ ॥ भगवान्को आज्ञा पाएर दारुक शैब्य, सुग्रीव, मेघपुष्प र बलाहक नामका चार जोडा जोतिएका रथ ल्याए र हात जोरेर सामुन्ने उभिए ॥ ५ ॥ भगवान् ती ब्राह्मणलाई रथमा चढाएर आफू पनि चढ्नु भयो र द्रुतगामी अश्व द्वारा एक रातमै आनर्तबाट विदर्भ देश पुगे ॥ ६ ॥ यता कुण्डिनपुर-पति महाराज भीष्मक पुत्र-स्नेहवश आफ्नी गुणवती कन्या शिशुपाललाई नै

दिनको निम्ति विवाहोत्सवको तयारीमा लागे ॥ ७ ॥ नगरका राजपथ, गल्ली-गोरेटो र चौबाटोहरू बढारी पानी छर्कन लगाए । तिनका चित्र-विचित्र ध्वजा, पताका र तोरणादिले राम्ररी सुसज्जित तुल्याए । सारा नगर माला, चन्दन, हार, आभूषण र स्वच्छ वस्त्रादिले विभूषित नर नारीहरूले सुशोभित थियो । त्यहाँका भव्य भवन धूपको धूवाँले सुवासित भएर त्यस नगरको शोभा बढाइरहेका थिए ॥ ८-९ ॥ राजा भीष्मकले पितृ र देवताहरूको यथाविधि पूजा गरेर ब्राह्मणहरूलाई भोजन गराए र तीमार्फत यथानियम मङ्गल पाठ गराए ॥ १० ॥ ती ब्राह्मणहरूले राम्ररी स्नान गराएर मङ्गलमय सूत्र, नयाँ वस्त्र र विविध आभूषणहरूले विभूषित ती राम्रा दाँत हुने राजकन्या रुक्मिणीलाई साम-ऋक् र यजुर्वेदका मन्त्रले अभिमन्त्रित गरी उनको रक्षा गरे । अथर्व वेदका ज्ञाता पुरोहितले ग्रहशान्तिको निम्ति हवन गरे ॥ ११-१२ ॥ सबै वेदविधि जान्नेहरूमा श्रेष्ठ

कारयत् ॥ ७ ॥ पुरं सम्मृष्टसंसिक्तमार्गरथ्याचतुष्पथम् ॥ चित्रध्वजपताकाभिस्तोरणैः समलंकृतम् ॥ ८ ॥ स्रग्गन्धमाल्याभरणैर्विरजोऽम्बरभूषितैः ॥ जुष्टं स्त्रीपुरुषैः श्रीमद्गृहैरगुरुधूपितैः ॥ ९ ॥ पितॄन्देवान्समभ्यर्च्य विप्रांश्च विधिवन्नृप ॥ भोजयित्वा यथान्यायं वाचयामास मङ्गलम् ॥ १० ॥ सुस्नातां सुदतीं कन्यां कृतकौतुकमङ्गलाम् ॥ अहतांशुकयुग्मेन भूषितां भूषणोत्तमैः ॥ ११ ॥ चक्रुः सामर्ग्यजुर्मन्त्रैर्वध्वा रक्षां द्विजोत्तमाः ॥ पुरोहितोऽथर्वविद्वै जुहाव ग्रहशान्तये ॥ १२ ॥ हिरण्यरूप्यवासांसि तिलांश्च गुडमिश्रितान् ॥ प्रादाद्धेनूश्च विप्रेभ्यो राजा विधिविदां वरः ॥ १३ ॥ एवं चेदिपती राजा दमघोषः सुताय वै ॥ कारयामास मन्त्रज्ञैः सर्वमभ्युदयोचितम् ॥ १४ ॥ मदच्युद्भिर्गजानीकैः स्यन्दनैर्हेममालिभिः ॥ पत्त्यश्वसङ्कुलैः सैन्यैः परीतः कुण्डिनं ययौ ॥ १५ ॥ तं वै विदर्भाधिपतिः समभ्येत्याभिपूज्य च ॥ निवेशयामास मुदा कल्पितान्यनिवेशने ॥ १६ ॥ तत्र शाल्वो जरासन्धो दन्तवक्त्रो विदूरथः ॥ आजग्मुश्चैद्यपक्षीयाः पौण्ड्रकाद्याः सहस्रशः ॥ १७ ॥ कृष्णरामद्विषो यत्ताः कन्यां चैद्याय साधितुम् ॥ यद्यागत्य हरेत्कृष्णो रामाद्यैर्यदुभिर्वृतः ॥ १८ ॥ योत्स्यामः संहतास्तेन इति निश्चितमानसाः ॥ आजग्मुर्भूभुजः सर्वे समग्रबलवाहनाः ॥ १९ ॥ श्रुत्वैतद्भगवान्रामो विपक्षीयनृपोद्यमम् ॥ कृष्णं चैकं गतं हर्तुं कन्यां कलहश-

राजा भीष्मकले ब्राह्मणहरूलाई सुन, चाँदी, वस्त्र, तिल-गुण तथा अनेक गाई दान दिए ॥१३॥ उता चेदिपति महाराज दमघोषले मन्त्रविद् ब्राह्मणहरू द्वारा शिशुपालका अभ्युदय योग्य सबै कृत्य गराए ॥१४॥ शिशुपाल पनि मद चुहाउने हात्ती, सुवर्णमाला-मण्डित रथ र पैदल एवं घोडा चढेका सेना लिएर कुण्डिनपुर पुगे ॥ १५ ॥ विदर्भराज महाराज भीष्मकले परम्म गएर उनको पूजा गरे र उनलाई निकै आनन्दले पूर्वनिश्चित यौटा भवनमा स्थान दिए ॥ १६ ॥ त्यस अन्तीमा शाल्व, जरासन्ध, दन्तवक्त्र, विदूरथ र पौण्ड्रक आदि शिशुपालका हजारौँ मित्र राजा आएका थिए ॥ १७ ॥ ती सबै राजा राम र कृष्णका विरोधी थिए । तिनले मित्र शिशुपाललाई नै कन्या दिलाउनको निम्ति यस्तो निश्चय गरेका थिए—'यदि यादवहरू आएर कन्या हरण गरे भने हामी सबै मिलेर युद्ध गर्नेछौं ।' यसै निम्ति सबै आफ्ना सेनाले सुसज्जित भएर आएका थिए ॥ १८-१९ ॥

1085

द्वारकामा जब बलरामले विपक्षी राजाहरूका विचार र श्रीकृष्ण एक्लै नै कन्या-हरणको निम्ति गएको समचार सुनेर कलहको भयले भ्रातृ-स्नेहवश हात्ती, घोडा, रथ र पदाति (पैदल) को चतुरंगिणी सेना लिएर तुरुन्त कुण्डिनपुर जान हिंडे ॥ २० २१ ॥ यता भीष्मकसुता रुक्मिणी कृष्णको आगमनको बाटो हेरिरहेकी थिइन् । ती आफूले पठाएका ब्राह्मण नफर्केका देखेर विचार गर्नलागिन्-॥२२॥ 'अहो ! अब म अभागिनीको विवाह हुनमा केवल एक रात शेष छ, तर कमलनयन श्रीकृष्णचन्द्र अझसम्म पनि आएनन्—यसको कुनै कारण पनि जान्न सकिन । जुन ब्राह्मण-देवता मेरो समचार लिएर गएका थिए, ती पनि अझसम्म फर्कनन् ॥ २३ ॥ ज्ञात भइरहेको छ—अनिन्दितात्मा भगवान् कृष्ण ममा केही दोष देखेर नै मेरो पाणिग्रहण गर्न कुनै प्रयत्न गरेर आइरहेका छैनन् ॥ २४ ॥ विधाता र शिवजी पनि म अभागिनीको अनुकूल छैनन् भने झैं लागिरहेको छ र रुद्रपत्नी गिरिराजकुमारी पार्वती पनि मदेखि विमुख छन्' ॥ २५ ॥ भगवानद्वारा हृदय हरिएकी र समयको गति जान्ने राजकन्या रुक्मिणीले यस्तै चिन्तन गर्दै आफ्ना अश्रुपूर्ण आँखा

क्षितः ॥ २० ॥ बलेन महता सार्धं भ्रातृस्नेहपरिप्लुतः ॥ कुण्डिनं प्रागादगजाश्वरथपत्तिभिः ॥ २१ ॥ भीष्मकन्या वरारोहा काङ्क्षन्त्यागमनं हरेः ॥ प्रत्यापत्तिमपश्यन्ती द्विजस्याचिन्तयत्तदा ॥ २२ ॥ अहो त्रियामाऽन्तरिता उद्वाहो मेऽल्पराधसः ॥ सोऽपि नावर्ततेऽद्यापि मत्सन्देशहरो द्विजः ॥ २३ ॥ अपि मय्यनवद्यात्मा दृष्ट्वा किञ्चिज्जुगुप्सितम् ॥ मत्पाणिग्रहणे नूनं नायाति हि कृतोद्यमः ॥ २४ ॥ दुर्भगाया न मे धाता नानुकूलो महेश्वरः ॥ देवी वा विमुखा गौरी रुद्राणी गिरिजा सती ॥ २५ ॥ एवं चिन्तयती बाला गोविन्दहृतमानसा ॥ न्यमीलयत कालज्ञा नेत्रे चाश्रुकलाकुले ॥ २६ ॥ एवं वध्वाः प्रतीक्षन्त्या गोविन्दागमनं नृप ॥ वाम ऊरुर्भुजो नेत्रमस्फुरन्प्रियभाषिण ॥ २७ ॥ अथ कृष्णविनिर्दिष्टः स एव द्विजसत्तमः ॥ अन्तःपुरचरीं देवीं राजपुत्रीं ददर्श ह ॥ २८ ॥ सा तं प्रहृष्टवदनमव्यग्रात्मगतिं सती ॥ आलक्ष्य लक्षणाभिज्ञा समपृच्छच्छुचिस्मिता ॥२९॥ तस्या आवेदयत्प्राप्तं शशंस यदुनन्दनम् ॥ उक्तं च ॥ उक्तं च सत्यवचनमात्मोपनयनं प्रति ॥३०॥ तमागतं समाज्ञाय वैदर्भी हृष्टमानसा ॥ न पश्यन्ती ब्राह्मणाय प्रियमन्यन्ननाम सा ॥ ३१ ॥ प्राप्तौ श्रुत्वा स्वदुहितुरुद्वाहप्रेक्षणोत्सुकौ । अभ्ययात्तूर्यघोषेण

चिम्लिन् ॥ २६ ॥ हे राजन् ! जब नववधू रुक्मिणी यसरी भगवान्‌का आगमनको प्रतीक्षा गर्दै थिइन्, उसै बेला तिनको बायाँ तिघ्रा, हात र आँखा कुनै मंगल सूचना दिंदै फरफराउन लागे ॥२७॥ त्यतिमै श्रीकृष्णले पठाएका ती ब्राह्मण अन्तःपुरमा व्यग्र राजकुमारी रुक्मिणीलाई भेट्न आए ॥ २८ ॥ लक्षणहरूकी ज्ञाता सती रुक्मिणीले तिनलाई प्रसन्नमुख र नआत्तिएका देखेर मुसुक्क हाँस्तै कामको सफलताका विषयमा सोधिन् ॥ २९ ॥ तब ब्राह्मणले कृष्णको प्रशंसा गर्दै उनी तत्काल आउने शुभ समाचार सुनाएर र कृष्ण भगवान्‌ले रुक्मिणीलाई लैजाने जो सत्य प्रतिज्ञा गरेका थिए, त्यो पनि सुनाए ॥ ३० ॥ भगवान् आइपुगे भन्ने जानेर विदर्भनन्दिनी रुक्मिणी धेरै प्रसन्न भइन् र ब्राह्मणलाई त्यस बेला दिने योग्य कुनै प्रिय वस्तु नदेखेर केवल नमस्कार मात्र गरिन् ॥ ३१ ॥ महाराज भीष्मकले बलराम तथा श्रीकृष्णलाई आफ्नी कन्याको विवाहोत्सव

हर्नको लागि आए भन्ने सुनेर तूयनाद सहित पूजा-सामग्रीले उनको स्वागत गरे ॥ ३२ ॥ मधुपर्क, निर्मल वस्त्र र उत्तम उपहार आदि अर्पण गरेर विधिपूर्वक उनको पूजा गरे ॥ ३३ ॥ ३४ ॥ राजा भीष्मकले सेना साथीहरू सहित श्रीकृष्णलाई सर्वभोगसम्पन्न निवासस्थान दिएर यथायोग्य आतिथ्य-सत्कार गरे ! यसै गरी विदर्भराजले आफूकहाँ निम्तामा आएका सबै राजाहरूको उनको पराक्रम, अवस्था, बल र धनको अनुसार अभिलषित वस्तु दिएर राम्ररी सत्कार गरे ॥ ३५ ॥ भगवान् कृष्णको आगमन सुनेर विदर्भ-नगरमा बस्ने सबै जना उनको निवासस्थानमा आए र आफ्ना नयनाञ्जलिले उनको मुखारविन्दको मकरन्द पिउन लागे ॥ ३६ ॥ तिनले भने–'रुक्मिणी इनैकी स्त्री हुन योग्य छन् र यी अनिन्दितात्मा रुक्मिणीको योग्य वर छन् । अरु कुनै पनि कन्या यिनकी स्त्री हुन योग्य छैनन् ॥ ३७ ॥ यदि हामीहरूबाट केही पनि पुण्य गरिएको छ भने तीनैलोकका विधाता श्रीविष्णु भगवान् प्रसन्न भएर यस्तो कृपा गरुन् कि श्रीकृष्ण नै विदर्भराजकुमारीको पाणिग्रहण गरुन्' ॥३८॥ श्रीकृष्णको प्रेमपाशमा बाँधिएका पुरवासीगण जब यस्तो भनिरहेका थिए,

रामकृष्णौ समर्हणैः ॥ ३२ ॥ मधुपर्कमुपानीतं वासांसि विरजांसि सः ॥ उपायनान्यभीष्टानि विधिवत्समपूजयत् ॥३३॥ तयोर्निवेशनं श्रीमदुपकॢप्य महामतिः ॥ ससैन्ययोः सानुगयोरातिथ्यं विदधे यथा ॥ ३४ ॥ एवं राज्ञां समेतानां यथावीर्यं यथा वयः ॥ यथाबलं यथावित्तं सर्वैः कामैः समर्हयत् ॥३५॥ कृष्णमागतमाकर्ण्य विदर्भपुरवासिनः ॥ आगत्य नेत्राञ्जलिभिः पपुस्तन्मुखपङ्कजम् ॥३६॥ अस्यैव भार्या भवितुं रुक्मिण्यर्हति नापरा ॥ असावप्यनवद्यात्मा भैष्म्याः समुचितः पतिः ॥३७॥ किञ्चित्सुचरितं यन्नस्तेन तुष्ट स्त्रिलोककृत् ॥ अनुगृह्णातुगृह्णातु वैदर्भ्याः पाणिमच्युतः ॥ ३८ ॥ एवं प्रेमकलाबद्धा वदन्तिस्म पुरौकसः ॥ कन्या चान्तःपुरात्प्रागाद्भटैर्गुप्ताऽम्बिकालयम् ॥ ३९ ॥ पद्भ्यां विनिर्ययौ द्रष्टुं भवान्याः पादपल्लवम् ॥ सा चानुध्यायती सम्यङ्मुकुन्दचरणाम्बुजम् ॥ ४० ॥ यतावाङ्मातृभिः सार्धं सखीभिः परिवारिता ॥ गुप्ता राजभटैः शूरैः सन्नद्धैरुद्यतायुधैः ॥ मृदङ्गशङ्खपणवास्तूर्यभेर्यश्च जघ्निरे ॥ ४१ ॥ नानोपहारबलिभिर्वारमुख्यः सहस्रशः ॥ स्रग्गन्धवस्त्राभरणैर्द्विजपत्न्यः स्वलंकृताः ॥४२॥ गायन्तश्च स्तुवन्तश्च गायका वाद्यवादकाः ॥ परिवार्य वधूं जग्मुः सूतमागधवन्दिनः ॥ ४३ ॥ आसाद्य देवीसदनं धौतपादकराम्बुजा ॥ उपस्पृश्य शुचिः शान्ता प्रविवेशाम्बिकान्तिकम् ॥ ४४ ॥ तां वै प्रवयसो बालां विधिज्ञा विप्रयोषितः ॥ भवानीं वन्दयाञ्चक्रुर्भवपत्नीं भवा·

उसैबेला राजकन्या रुक्मिणी अन्तःपुरबाट निस्केर वीर सैनिकहरूको संरक्षणमा अम्बिकादेवीको मन्दिर हिंडिन ॥ ३९ ॥ ती मनमनै श्रीकृष्णको ध्यान गर्दै श्रीपार्वतीजीको पाद-पल्लवको दर्शन गर्नका लागि पैदल नै गइरहेकी थिइन् ॥ ४० ॥ त्यस बेला उनले मौन धारण गरेकी थिइन् र ती माता आदि वृद्धा र सखीहरूले घेरिएर हातमा खुला हतियार लिएका सन्नद्ध शूरवीर राजसैनिकहरूको रक्षामा हिंडिरहेकी थिइन् । त्यसबेला मृदङ्ग, शङ्ख, पणव, तूर्य र भेरी आदि बाजाको तुमुल निनाद भइरहेथ्यो । ४१॥ माला,चन्दन,वस्त्रालंकार, विविध उपहार र पूजन-सामग्री सहित राम्ररी अलंकृत द्विजपत्नीहरू, हजारौं गणिका, गान र स्तुति गर्ने गायक, बाजा बजाउने र सूत, मागध र बन्दीजन–ती सबै नववधू रुक्मिणीको वरिपरिबाट छेकेर गइरहेका थिए ॥ ४२ ॥ ४३ ॥ देवीको मन्दिरमा पुगेर रुक्मिणीले हात-पाउ धोइन् र आचमन गरेर पवित्र भई शान्तभावले अम्बिका

देवीका नजीक गइन् ॥ ४४ ॥ अनि विधिविधान जान्ने वृद्धा ब्राह्मणीहरूले शङ्कर भगवान् र पार्वतीलाई प्रणाम गर्न लगाए ॥ ४५ ॥ रुक्मिणी प्रार्थना गर्द भन्न लागिन्— 'हे अम्बिके ! हजुरका पुत्र गणेश र हजूर कल्याणकारिणी देवीलाई म बारम्बार प्रणाम गर्दछु । हजूर मलाई यस्तो आशिर्वाद दिनोस्–उनले भगवान् कृष्ण नै मेरा पति हउन्' ॥४६॥ अनि रुक्मिणीले जल, चन्दन, अक्षता, धूप, वस्त्र, माला, आभूषण, अनेक प्रकारका उपहार, भेटी, दीप माला आदि सामग्रीले अम्बिका देवीको पूजा गरिन् ॥ ४७ ॥ त्यसपछि त्यही सामग्री र नुनिलो, पूआ, पान, कण्ठसूत्र, फल, उखुले सधवा ब्राह्मणीहरूको पूजा गरिन् ॥ ४८ ॥ ब्राह्मणीहरूले उनलाई प्रसाद र आशीर्वाद दिए । नववधू रुक्मिणीले ब्राह्मणी तथा देवीलाई नमस्कार गरेर प्रसाद खाइन् ॥ ४९ ॥ अनि मौनव्रत भङ्ग गरेर रत्नमुद्रिका-शोभित करकमलले यौटी सखीको हात समाती त्यहाँबाट बाहिर निस्किन् ॥५०॥ देवमाया समान सुन्दर रुक्मिणी ठूलठूला वीर-वीरलाई पनि मोहित पार्दथिन् । उनको कटि अति राम्रो र मुखमण्डल कुण्डलका कान्तिले सुशोभित थियो । उनको नूतन अवस्था

न्विताम् ॥४५॥ नमस्ये त्वाऽम्बिकेऽभीक्ष्णं स्वसन्तानयुतां शिवाम् ॥ भूयात्पतिर्मे भगवान्कृष्णस्तदनुमोदताम् ॥४६॥ अद्भिर्गन्धाक्षतैर्धूपैर्वासःस्रङ्माल्यभूषणैः ॥ नानोपहारबलिभिः प्रदीपावलिभिः पृथक् ॥ ४७ ॥ विप्रस्त्रियः पतिमतीस्तथा तैः समपूजयत् ॥ लवणापूपताम्बूलकण्ठसूत्रफलेक्षुभिः ॥४८॥ तस्यै स्त्रियस्ताः प्रददुः शेषा युयुजुराशिषः ॥ ताभ्यो देव्यै नमश्चक्रे शेषां च जगृहे वधूः ॥ ४९ ॥ मुनिव्रतमथ त्यक्त्वा निश्चक्रामाम्बिकागृहात् ॥ प्रगृह्य पाणिना भृत्यां रत्नमुद्रोपशोभिना ॥५०॥ तां देवमातामिव वीरमोहिनीं सुमध्यमां कुण्डलमण्डिताननाम् ॥ श्यामां नितम्बार्पितरत्नमेखलां व्यञ्जत्स्तनीं कुन्तलशङ्कितेक्षणाम् ॥५१॥ शुचिस्मितां बिम्बफलाधरद्युति शोणायमानद्विजकुन्दकुड्मलाम् ॥ पदा चलन्तीं कलहंसगामिनीं सिञ्जत्कलानूपुरधामशोभिना ॥ विलोक्य वीरा मुमुहुः समागता यशस्विनस्तत्कृतहृच्छयार्दिताः ॥ ५२ ॥ तां वीक्ष्य ते नृपतयस्तदुदारहासव्रीडावलोकहृतचेतस उज्झितास्त्राः ॥ पेतुः क्षितौ गजरथाश्वगता विमूढा यात्राच्छलेन हरयेऽर्पयतीं स्वशोभाम् ॥ ५३ ॥ सैवं शनैश्चलयती चलपद्मकोशौ प्राप्तिं तदा भगवतः प्रसमीक्षमाणा ॥ उत्सार्य वामकरजैरलकानपाङ्गैः प्राप्तान् ह्रियैक्षत नृपान्ददृशेऽच्युतं सा ॥ ५४ ॥ तां राजकन्यां रथमारुरुक्षतीं

थियो । कटि भागमा रत्न जडित मेखला थियो । पीन पयोधर व्यञ्जित भइरहेथे । उनको मुखमा अलकावली छरिएका थिए । ती सशंक हेराइले यता-उता हेर्थिन् । उनको हास्य मनोहारिणी थियो । बिम्बफल समान अरुण अधरको कान्तिले उनको कुन्दकलिका झैं दन्तावली केही अरुणवर्ण भएका थिए । ती नूपुरको कान्तिले शोभित आफ्ना सुकुमार चरणकमल द्वारा राजहंसको चालले पैदल नै हिँडिरहेकी थिइन् । उनको त्यो अपूर्व तथा मनोहर छवि देखेर उत्तेजित कामदेवले त्यहाँ उपस्थित सर्व वीर मोहित भए ॥५१॥५२॥ रुक्मिणी जब हिड्ने निहुँले श्रीहरिलाई आफ्नू शोभा देखाइरहेकी थिइन्, अनि उनलाई देखेर उनको मनोहर हास्य र लज्जा हेराइले त्यहाँ आएका राजागणको चित्त हरियो । उनका हातबाट शस्त्रास्त्र झरे र ती स्वयं मोहित भएर हात्ती, रथ र घोडाबाट भूमिमा लडे ॥ ५३ ॥ यसरी चकित रुक्मिणी भगवान् कृष्णचन्द्रको आगमनको प्रतीक्षामा कमल कोष जस्तै आफ्ना सुकुमार चरण बिस्तार-बिस्तार अघि सार्दै गइरहेकी थिइन् । उनै बेला तिनले आफ्नू बायाँ हातका औंलाले मुखमा छरिएका सुन्दर अलक पन्छाएर त्यहाँ उपस्थित राजाहरूतिर

IC 85

लज्जापूर्ण नेत्रले हेर्दा श्रीकृष्ण देखिए ॥ ५४ ॥ राजकन्या रुक्मिणी आफ्नू रथमा गएर बस्नै आँटेकी थिइन् तर श्रीकृष्णचन्द्रले झम्टेर सबै शत्रुहरूले देख्दा-देख्दै उनलाई उचालेर समस्त क्षत्रियमण्डलीको तिरस्कार गरी आफ्नू गरुड चिह्न अङ्कित ध्वजा भएको रथमा बसाले। सिंहले स्यालसित आफ्नू भाग खोसे झैं रुक्मिणीलाई लिएर श्रीकृष्णचन्द्र दाजू बलराम आदि यादवसित उहाँबाट हिंडे ॥५५॥५६॥ जरासन्धका अधीन अन्य अभिमानी राजा आफ्नू पराजय र अपकीर्ति सहन नसकेर भन्नलागे—'अहो ! हामीलाई धिक्कार छ। आज हामी धनुर्धारीहरूको यश ती ग्वालाले यसरी लगिदिए, जस्तै सिंहको भाग मृगले खोसोस्' ॥५७॥ इति श्रीमद्भागवते दशमस्कन्धे भाषाटीकायां त्रिपञ्चाशत्तमोऽध्यायः ॥ ५३ ॥

( शिशुपाल पक्षका राजा र रुक्मीको पराजय, रुक्मिणीको विवाह ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! यसरी ती सबै राजाहरू रिसाई कवच धारण गरेर आफ्ना-आफ्ना वाहनमा चढेर आफ-फ्ना सैनिक सहित धनुष धारण गरी श्रीकृष्णलाई लखेट्दै गए ॥ १ ॥ तिनलाई आएका देखेर यादव सेनाका नायक उनैतिर फर्केर ठिङ्ग उभिए

जहार कृष्णो द्विषतां समीक्षताम् ॥ रथं समारोप्य सुपर्णलक्षणं राजन्यचक्रं परिभूय माधवः ॥ ५५ ॥ ततो ययौ रामपुरोगमैः शनैः शृगालमध्यादिव भागहृद्धरिः ॥ ५६ ॥ तं मानिनः स्वाभिभवं यशःक्षयं परे जरासन्धवशा न सेहिरे ॥ अहो धिगस्मान्यश आत्तधन्वनो गोपैर्हृतं केसरिणां मृगैरिव ॥ ५७ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे रुक्मिणीहरणं नाम त्रिपञ्चाशत्तमोऽध्यायः ॥ ५३ ॥

श्रीशुक उवाच ॥ इति सर्वे सुसंरब्धा वाहानारुह्य दंशिताः ॥ स्वैः स्वैर्बलैः परिक्रान्ता अन्वीयुर्धृतकार्मुकाः ॥१॥ तानापतत आलोक्ययादवानीकयूथपाः ॥ तस्थुस्तत्संमुखा राजन्विस्फूर्ज्य स्वधनूंषि ते ॥२॥ अश्वपृष्ठे गजस्कन्धे रथोपस्थे च कोविदाः ॥ मुमुचुः शरवर्षाणि मेघा अद्रिष्वपो यथा ॥३॥ पत्युर्बलं शरासारैश्छन्नं वीक्ष्य सुमध्यमा ॥ सव्रीडमैक्षत्तद्वक्त्रं भयविह्वललोचना ॥४॥ प्रहस्य भगवानाह मा स्म भैर्वामलोचने ॥ विनंक्ष्यत्यधुनैवैतत्तावकैः शात्रवं बलम् ॥५॥ तेषां तद्विक्रमं वीरा गदसङ्कर्षणादयः ॥ अमृष्यमाणा नाराचैर्जघ्नुर्हयगजान्रथान् ॥६॥पेतुः शिरांसि रथिनामश्विनां गजिनां भुवि ॥ सकुण्डलकिरीटानि सोष्णीषाणि च कोटिशः ॥ ७ ॥ हस्ताः सासिगदेष्वासाः करभा ऊरवोऽङ्घ्रयः ॥ अश्वाश्वतरनागोष्ट्रखरमर्त्यशिरांसि च ॥ ८ ॥ हन्यमानबलानीका वृष्णिभिर्जयकांक्षिभिः ॥ राजानो विमुखा जग्मुर्जरासन्धपुरःसराः ॥ ९ ॥ शिशुपालं समभ्येत्य हृतदारमिवा-

र आफ्ना धनुषको टङ्कार गर्नलागे ॥२॥ घोडा र हात्तीमाथि तथा रथमा बसेका शस्त्र-प्रहारमा कुशल राजा यादव-सेनामा यस प्रकार बाण-वर्षा गर्नलागे, जस्तै—मेघ पर्वतमा जल वर्षाउँछन् ॥ ३ ॥ आफ्ना पति श्रीकृष्णका सेना बाणवर्षाले ढाकिएका देखेर राम्रो कम्मर हुने रुक्मिणीले डरले चञ्चल नेत्रद्वारा भगवान् कृष्णतिर लज्जापूर्वक हेर्न लागिन् ॥ ४ ॥ अनि भगवान् कृष्णले हाँस्तै भन्नुभयो—'हे सुनयनी ! तिम्रा सेनाद्वारा तिम्रा शत्रुपक्षका समस्त सेना शीघ्र नष्ट हुनेछन्' ॥ ५ ॥ ६ ॥ यता गद र सङ्कर्षण आदि यादव वीर आफ्ना शत्रुको पराक्रम अझ बढ्ता सहन सकेनन् र तिनका हात्ती, अश्व तथा रथहरूलाई आफ्ना बाणले छिन्न-भिन्न पार्न लागे ॥ ७ ॥ तिनका बाणले रथ र हात्तीमाथि बसेका विपक्षी वीरहरूका कवच, कुण्डल, किरीट र फेटाहरूले सुशोभित करोडौं शिर—खड्ग, गदा र धनुषयुक्त हात, कुहुना, ऊरु र पाऊ छिमलिएर पृथ्वीमा धमाधम झर्नलागे। यसै प्रकार घोड़ा, खच्चर, हात्ती, ऊँट गदहा र मनुष्यहरूका शिर पनि टुक्रा-टुक्रा भई युद्धभूमिमा पल्टिन लागे। अन्त्यमा जयका इच्छुक यादवहरूद्वारा आफ्ना सेना नष्टप्राय देखेर

जरासन्ध आदि राजा युद्धबाट मुख फर्काएर भागे ॥ ८ ॥ ९ ॥ ती सबै श्री, तेज, वीरता खोसिनाले आतुर, तेजहीन, हतोत्साह र शुष्क-मुख सरासर शिशुपालकहाँ पुगेर भन्नलागे—
॥ १० ॥ 'हे पुरुषसिंह ! खिन्नता त्याग, किनकि हे राजन् ! जीवको कुनै प्रिय वा अप्रिय सधैँ उपस्थित देखिंदन ॥ ११ ॥ जस्तै—काठको पुतली नटको इच्छानुसार नाचिरहन्छ,
त्यस्तै यो जीव ईश्वराधीन रहेर सुख-दुःख प्राप्त गर्दछ' ॥ १२ ॥ जरासन्ध भन्छ—'हेर, इनै कृष्णले तेइस अक्षौहिणी सेना सहित मलाई सत्रपल्ट युद्धमा पराजित गरे र
अठारौं पल्ट मैले उनलाई जितें ॥ १३ ॥ यसैले न म कहिल्यै शोक गर्दछु न हर्ष नै मान्दछु । किनकि म जान्दछु—सारा जगत् दैव-प्रेरित सदैव काल द्वारा नै भिन्न-भिन्न
अवस्थाहरूमा पर्दछ ॥ १४ ॥ यस वेला हामी वीर युथपका युथपति उपस्थित रहेर पनि कृष्णद्वारा सुरक्षित यादवका थोरै सेनासित परास्त भयौं ॥ १५ ॥ यसपल्ट फेरि हाम्रा शत्रुलेनै
जिते । किनकि समय उनकै अनुकूल थियो । जब समय हाम्रो अनुकूल हुनेछ, तब हामी उनलाई जितौंला ॥ १६ ॥ यसरी मित्रगणले बुझाएपछि चेदिराज आफ्ना समस्त अनुचर

तुरम् ॥ नष्टत्विषं गतोत्साहं शुष्यद्वदनमब्रुवन् ॥१०॥ भो भोः पुरुषशार्दूल दौर्मनस्यमिदं त्यज ॥ नैव प्रियाप्रियो राजन्निष्ठा देहिषु दृश्यते ॥११॥
यथा दारुमयी योषिन्नृत्यते कुहकेच्छया ॥ एवमीश्वरतन्त्रोऽयमीहते सुखदुःखयोः ॥ १२ ॥ शौरेः सप्तदशाहं वै संयुगानि पराजितः ॥ त्रयोविंश-
तिभिः सैन्यैर्जिग्य एकमहं परम् ॥ १३ ॥ तथाप्यहं न शोचामि न प्रहृष्यामि कर्हिचित् ॥ कालेन दैवयुक्तेन जानन्विद्रावितं जगत् ॥ १४ ॥
अधुनाऽपि वयं सर्वे वीरयूथपयूथपाः ॥ पराजिताः फल्गुतन्त्रैर्यदुभिः कृष्णपालितैः ॥ १५ ॥ रिपवो जिग्युरधुना काल आत्मानुसारिणि ॥ तदा
वयं विजेष्यामो यदा कालः प्रदक्षिणः ॥ १६ ॥ एवं प्रबोधितो मित्रैश्चैद्योऽगात्सानुगः पुरम् ॥ हतशेषाः पुनस्तेऽपि ययुः स्वं स्वं पुरं नृपाः
॥ १७ ॥ रुक्मी तु राक्षसोद्वाहं कृष्णद्विडसहन्स्वसुः ॥ पृष्ठतोऽन्वगमत्कृष्णमक्षौहिण्याऽऽवृतो बली ॥ १८ ॥ रुक्म्यमर्षी सुसंरब्धः शृण्वतां सर्व-
भूभुजाम् ॥ प्रतिजज्ञे महाबाहुर्दंशितः सशरासनः ॥ १९ ॥ अहत्वा समरे कृष्णमप्रत्यूह्य च रुक्मिणीम् ॥ कुण्डिनं न प्रवेक्ष्यामि सत्यमेतद्‌ब्रवीमि
वः ॥ २० ॥ इत्युक्त्वा रथमारुह्य सारथिं प्राह सत्वरः ॥ चोदयाश्वान् यतः कृष्णस्तस्य मे संयुगं भवेत् ॥ २१ ॥ अद्याहं निशितैर्बाणैर्गोपालस्य
सुदुर्मतेः ॥ नेष्ये वीर्यमदं येन स्वसा मे प्रसभं हृता ॥ २२ ॥ विकत्थमानः कुमतिरीश्वरस्याप्रमाणवित् ॥ रथेनैकेन गोविन्दं तिष्ठ तिष्ठेत्यथा-

सहित राजधानी फर्किए । उसका मित्र राजाहरूमध्ये जो मारिनबाट जोगिएका थिए, ती पनि आफ्आफ्ना नगरमा फर्किए ॥ १७ ॥ तर कृष्ण-द्रोही रुक्मी आफ्नी बहिनाको
यसरी राक्षसी विवाह विधिले हरण गरिनु सहन सकेनन् र एक अक्षौहिणी सेना साथमा लिएर भगवान्‌को पछि-पछि गए ॥ १८ ॥ यस अपमानलाई असह्य ठान्ने महाबली रुक्मीले
कवच र धनुष-बाण धारण गरेर सबैलाई सुनाउँदै अत्यन्त क्रोधपूर्वक भने— ॥ १९ ॥ 'म सबैको सामुन्ने सत्य प्रतिज्ञा गर्दछु—संग्राममा कृष्णलाई मारेर बैन्हा रुक्मिणीलाई नलिई
म कुण्डिनपुर फर्केर आउन्न' ॥ २० ॥ सबैसित यसरी प्रतिज्ञा गरेर ती रुक्मी रथमा बसी आफ्नो सारथीलाई आज्ञा दिए—'जततिर त्यो कृष्ण गएको छ, उतैतिर घोडा
हरू लिएर हिंड, किनकि आज मेरो उनैसित युद्ध हुनेछ ॥ २१ ॥ म आफ्ना तीक्ष्ण बाणले त्यो दुर्बुद्धि ग्वालाको वीर्यमद, सैन्य-बल सबै धूलो परिदिनेछु, जसले उन्मत्त भएर त्यो

मेरी बहिनीलाई बलपूर्वक हरेर लगेको छ' ॥ २२ ॥ ईश्वरको महिमा नजान्ने मन्दमति रुक्मी यसरी निकै बर्ता कुरा गरेर एक्लै रथमा बसेर वेगले दगुर्दै भगवान्‌कहाँ पुग्यो र पर्खी-पर्खी मन्दै हकार्न लाग्यो ॥ २३ ॥ उसले आफ्नु बलियो धनुष खैंचेर भगवान्‌लाई तीन बाण हान्यो र भन्यो—ए यदुकुल-कलङ्क ! एक छिन पर्खेर अडिई ॥ २४ ॥ हे दुष्ट ! कागले जसरी हवि चोर्दछ, त्यसै गरी मेरी बहिनीलाई लिएर तँ कहाँ भागिरहेको छस् ? हे मन्द ! तँ ठूलो मायावी पनि छस् । तँ कपट-युद्धमा कुशल छस् । आज म तेरो सारा गर्व धूलो पारिदिन्छु ॥ २५ ॥ हेर, मेरो बाणले तँ मरेर भूमिमा नढल्दै यो बालिकालाई छाडिदे । यति आक्षेप सुनेर पनि श्रीकृष्णचन्द्र मुसुक्क हाँसे र अन्तर्यामी प्रभुले रुक्मीको धनुष काटेर उसलाई छ बाणले घायल पारिदिए ॥ २६ ॥ हरिले अरु आठ बाणले त्यसका चारै घोडा, दुइटाले सारथीलाई र तीन बाणले रथको ध्वजा काटिदिए । अनि रुक्मीले झट्ट अर्को धनुष लिएर कृष्णलाईलाई पाँच बाण हान्यो ॥२७॥ ती बाण लाग्नासाथ अच्युतले उसको त्यो धनुष पनि काटिदिए । अनि रुक्मीले अर्को धनुष लियो, तर प्रभुले त्यो पनि

ह्वयत् ॥ २३ ॥ धनुर्विकृष्य सुदृढं जघ्ने कृष्णं त्रिभिः शरैः ॥ आह चात्र क्षणं तिष्ठ यदूनां कुलपांसन ॥ २४ ॥ कुत्र यासि स्वसारं मे मुषित्वा ध्वाङ्क्षवद्धविः ॥ हरिष्येऽद्य मदं मन्द मायिनः कूटयोधिनः ॥ २५ ॥ यावन्न मे हतो बाणैः शयीथा मुञ्च दारिकाम् ॥ स्मयन्कृष्णो धनुश्छित्त्वा षड्भिर्विव्याध रुक्मिणम् ॥२६॥ अष्टभिश्चतुरो वाहान्द्वाभ्यां सूतं ध्वजं त्रिभिः ॥ स चान्यद्धनुरादाय कृष्णं विव्याध पञ्चभिः ॥ २७ ॥ तैस्ताडितः शरौघैस्तु चिच्छेद धनुरच्युतः ॥ पुनरन्यदुपादत्त तदप्यच्छिनदव्ययः ॥ २८ ॥ परिघं पट्टिशं शूलं चर्मासी शक्तितोमरौ ॥ यद्यदायुधमादत्त तत्सर्वं सोऽच्छिनद्धरिः ॥ २९ ॥ ततो रथादवप्लुत्य खड्गपाणिर्जिघांसया ॥ कृष्णमभ्यद्रवत्क्रुद्धः पतङ्ग इव पावकम् ॥ ३० ॥ तस्य चापततः खड्गं तिलशश्चर्म चेषुभिः ॥ छित्त्वाऽसिमाददे तिग्मं रुक्मिणं हन्तुमुद्यतः ॥ ३१ ॥ दृष्ट्वा भ्रातृवधोद्योगं रुक्मिणी भयविह्वला ॥ पतित्वा पादयो-र्भर्तुरुवाच करुणं सती ॥ ३२ ॥ योगेश्वराप्रमेयात्मन्देवदेव जगत्पते ॥ हन्तुं नार्हसि कल्याण भ्रातरं मे महाभुज ॥ ३३ ॥ श्रीशुक उवाच ॥ तया परित्रासविकम्पिताङ्ग्या शुचाऽवशुष्यन्मुखरुद्धकण्ठया ॥ कातर्यविस्रंसितहेममालया गृहीतपादः करुणो न्यवर्तत ॥ ३४ ॥ चैलेन बद्ध्वा

काटिदिए ॥ २८ ॥ यसरी रुक्मीले परिघ, पट्टिश, ढाल, तरवार र तोमरादि जे-जे अस्त्र उचाल्यो, ती सबैलाई श्रीहरिले काटिदिए ॥ २९ ॥ अन्त्यमा श्रीकृष्णचन्द्रलाई मार्ने इच्छाले त्यो हातमा तरवार लिएर रथबाट हाम्फाली बत्तीमा पुतली दगुरे जस्तै अतिशय क्रोधित भई श्रीकृष्णतिर झम्टियो ॥ ३० ॥ त्यो रुक्मीलाई आफूतिर निकै वेगले आउन लागेको देखेर भगवान्‌ले बाण-वर्षा गरी त्यसका हातको ढाल-तरवार धूलो-पीठो पारेर काटिदिए र त्यसलाई मार्नको निम्ति तत्पर भएर धौटा तीक्ष्ण तरवार झिके ॥ ३१ ॥ आफ्नू दाजुको तयारी देखेर रुक्मिणी डरले व्याकुल भइन् र ती परम साध्वीले पतिको चरण समातेर विनयपूर्वक भनिन् ॥ ३२ ॥ 'हे अप्रमेयात्मन् ! हे देवदेव ! हे जगत्पते ! हे प्रभो ! हे कल्याण-स्वरूप ! हे महाबाहो ! यी मेरा दाजू हुन् । यिनलाई हजुरले मार्नु उचित छैन ॥ ३३ ॥ श्रीशुकदेव भन्दछन्—रुक्मिणीको शरीर डरले काँपिरहेको थियो । शोकले तिनको मुख सुकेर आयो, घाँटी अवरुद्ध भयो र आतुरतावश सुवर्णको माला तिनको घाँटीबाट तल खस्यो । जब उनको चरण समातेर प्रार्थना गरिन् तब करुणामय भगवान्‌ले

रुक्मीको वध गर्ने विचार त्यागिदिए ॥३४॥ उनले कुकर्मीलाई रुमालले बाँधेर दाह्री र कपाल आधा काटी उसलाई कुरूप पारिदिए। उसै वेला ती यादववीरहरूले हात्ती जसरी कमल
वनलाई फाँडिदिन्छ, त्यसै गरी त्यो अद्भुत सेनालाई किचि-मिची पारिदिए ॥ ३५ ॥ अनि ती भगवान् कृष्णकहाँ आएर उनले रुक्मीलाई मरेजस्तै अवस्थामा उपस्थित देखे। उसलाई
त्यस्तो स्थितिमा देखेर भगवान् सङ्कर्षणलाई दया लाग्यो। उनले बन्धन फुकाएर उसलाई छाडिदिनुभयो र श्रीकृष्णसित भन्नुभयो—॥ ३६ ॥ 'हे कृष्ण! तिमीले यो राम्रो गरेनौ।
हाम्रो निम्ति यो निन्दाको कुरा हो। आफ्नू सम्बन्धीको दाह्री-कपाल काटेर कुरूप पारिदिनु उसको वध गरे समान हो' ॥ ३७ ॥ फेरि रुक्मिणीसित भने-'हे साध्वी! दाजुलाई
कुरूप पारिदिए भनी हामीमाथि दोषारोपण नगरे। कुनै व्यक्तिलाई सुख-दुःख दिने अरु कोही हुँदैन, त्यो आफ्नै कर्मको फल भोग्दछ' ॥ २८ ॥ श्रीकृष्णसित उनले भने—'आफ्नू
कुनै बंधुले यदि वधको योग्य आपराध गरे पनि त्यो बन्धुकै द्वारा मारिने योग्य हुँदैन। उसलाई छाडिदिनु पर्दछ, किनकि त्यो त आफ्नू दोषले नै मरे झैं भएको हुन्छ। फेरि
त्यसलाई मार्नमा के पुरुषार्थ छ?' ॥ ३९ ॥ फेरि रुक्मिणीसित भने-'प्रजापति ब्रह्माले क्षत्रियको धर्म नै यस्तो बनाएका छन्—जसले भाई-भाईलाई मार्दछ। अतः यो धर्म

तमसाधुकारिणं सश्मश्रुकेशं प्रवपन्व्यरूपयत् ॥ तावन्ममर्दुः परसैन्यमद्भुतं यदुप्रवीरा नलिनीं यथा गजाः ॥ ३५ ॥ कृष्णान्तिकमुपव्रज्य ददृ-
शुस्तत्र रुक्मिणम् ॥ तथाभूतं हतप्रायं दृष्ट्वा सङ्कर्षणो विभुः ॥ विमुच्य बद्धं करुणो भगवान्कृष्णमब्रवीत् ॥ ३६ ॥ असाध्विदं त्वया कृष्ण कृतमस्म-
ज्जुगुप्सितम् ॥ वपनं श्मश्रुकेशानां वैरूप्यं सुहृदो वधः ॥ ३७ ॥ मैवास्मान्साध्व्यसूयेथा भ्रातुर्वैरूप्यचिन्तया ॥ सुखदुःखदो न चान्योऽस्ति यतः
स्वकृतभुक्पुमान् ॥ ३८ ॥ बन्धुर्वधार्हदोषोऽपि न बन्धोर्वधमर्हति ॥ त्याज्यः स्वेनैव दोषेण हतः किं हन्यते पुनः ॥ ३९ ॥ क्षत्रियाणामयं धर्मः
प्रजापतिविनिर्मितः ॥ भ्राताऽपि भ्रातरं हन्याद्येन घोरतरस्ततः ॥ ४० ॥ राज्यस्य भूमेर्वित्तस्य स्त्रियो मानस्य तेजसः ॥ मानिनोऽन्यस्य वा हेतोः श्री
मदान्धाः क्षिपन्ति हि ॥४१॥ तवेयं विषमा बुद्धिः सर्वभूतेषु दुर्हृदाम् ॥ यन्मन्यसे सदाऽभद्रं सुहृदां भद्रमज्ञवत् ॥४२॥ आत्ममोहो नृणामेषकल्प्यते
देवमायया ॥ सुहृद्दुर्हृदुदासीन इति देहात्ममानिनाम् ॥४३॥ एक एव परो ह्यात्मा सर्वेषामपि देहिनाम् ॥ नानेव गृह्यते मूढैर्यथा ज्योतिर्यथा नभः
॥४४॥ देह आद्यन्तवानेव द्रव्यप्राणगुणात्मकः ॥ आत्मन्यविद्यया क्लृप्तः संसारयति देहिनम् ॥४५॥ नात्मनोऽन्येन संयोगो वियोगश्चासतः सति ॥

अत्यन्त कठोर छ' ॥ ४० ॥ फेरि कृष्णसित भन्नलागे—'हे भाई! यो उचित हो—जो अभिमानी धनमदले अन्धा भइरहेछन् ती राज्य, पृथ्वी, धन, स्त्री, मान, तेज वा कुनै अरु
कारणवश आफ्ना बन्धुको पनि तिरस्कार गर्दछन् तर हामीले त्यसो गर्नु अनुचित हो ॥ ४१ ॥ फेरि रुक्मिणीसित भने—हे शुभे! समस्त प्राणीसित द्रोह गर्ने आफ्ना बन्धु जनको
निम्ति मङ्गलमय दण्डविधानलाई पनि तिमीले अज्ञानी झैं अमङ्गल मानिरहीछौ, यो तिम्रो बुद्धिको प्रभाव हो ॥ ४२-४३ ॥ जो व्यक्ति देहलाई नै आत्मा मान्दछन् उनलाई नै
'यो मित्र हो, यो शत्रु र यो उदासीन' यस्तो आत्मविषयक मोह भगवान्को मायाले उत्पन्न हुन्छ। सबै देहधारीका आत्मा एक हुन् र त्यो अत्यन्त शुद्ध छ। सुन—जल र घटादि
उपाधिले जस्तै सूर्य-चन्द्रादि ज्योति र आकाश अनेक झैं प्रतीत हुन्छन्, त्यस्तै नै अज्ञानीजन ती एकमात्र शुद्ध आत्मालाई नै अनेक छन् भन्ने देख्दछन् ॥ ४४ ॥ यो शरीर
द्रव्य, प्राण र गुणमय छ तथा आदि-अन्त्य युक्त छ। यो आत्मामा अविद्याले कल्पित छ र देहधारी जीवलाई संसार-चक्रमा पारिदिन्छ ॥ ४५ ॥ हे सती! सूर्यनारायण द्वारा नै

प्रकाशित हुनाले नेत्र र रूपसित उसको संयोग वा वियोग हुँदैन, त्यस्तै नै आत्माको अन्य असत् पदार्थसित संयो-वियोग हुँदैन, किनकि उनका प्रसिद्धि त आत्माको नै अधीन रहन्छ ॥४६॥-मृत्यु पनि देहका विकार नै हुन्, आत्माका होइनन्, तथापि आत्माको मृत्यु कहिन्छ । जसरी दिनहुँ क्षय-वृद्धि कलाहरूको नै हुन्छ, चन्द्रमाको होइन । तथापि औंसीको दिन चन्द्रमाको नै क्षय मानिन्छ ॥ ४७ ॥ जस्तै—सुतेको व्यक्ति नै पदार्थ नभए पनि स्वप्नमा भोक्ता, भोग्य र भोगका फलहरूको अनुभव गर्दछ, त्यसै प्रकार अज्ञानी जन मिथ्या संसार-चक्रमा पर्दछन् ॥ ४८ ॥ अतः हे शुचिस्मिते ! चित्तलाई सुखाउने र मोहित पार्ने यस अज्ञानजनित शोकलाई तत्त्वज्ञानले पर फालेर तिमी शान्त होऊ' ॥ ४९ ॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! बलरामले यसरी बुझाएपछि कृशाङ्गी रुक्मिणीले आफ्नू वैमनस्य हटाइन् र विवेक-बुद्धिले चित्तलाई शान्त पारिन् ॥ ५० ॥ जसको तेज र सेना नष्ट भइसकेका थिए तथा जसको प्राणमात्र शेष रहेका थियो, त्यस रुक्मीले शत्रुका हातबाट मुक्त भएर कृष्ण द्वारा आफू सार्है विरूप पारिएको स्मरण गरेर

तद्धेतुत्वात्तत्प्रसिद्धेर्दृग्रूपाभ्यां यथा रवेः ॥ ४६ ॥ जन्मादयस्तु देहस्य विक्रिया नात्मनः क्वचित् ॥ कलानामिव नैवेन्दोर्मृतिर्ह्यस्य कुहूरिव ॥ ४७ ॥ यथा शयान आत्मानं विषयान्फलमेव च ॥ अनुभुङ्क्तेऽप्यसत्यर्थे यथाप्नोत्यबुधो भवम् ॥ ४८ ॥ तस्मादज्ञानजं शोकमात्मशोषविमोहनम् ॥ तत्त्वज्ञानेन निर्हृत्य स्वस्था भव शुचिस्मिते ॥४९॥ श्रीशुक उवाच ॥ एवं भगवता तन्वी रामेण प्रतिबोधिता ॥ वैमनस्यं परित्यज्य मनो बुद्धया समादधे ॥५०॥ प्राणावशेष उत्सृष्टो द्विड्भिर्हतबलप्रभः ॥ स्मरन्विरूपकरणं वितथात्ममनोरथः ॥ ५१ ॥ चक्रे भोजकटं नाम निवासाय महत्पुरम् ॥ अहत्वा दुर्मतिं कृष्णमप्रत्यूह्य यवीयसीम् ॥ कुण्डिनं न प्रवेक्ष्यामीत्युक्त्वाऽत्रासवद्रुषा ॥५२॥ भगवान्भीष्मकसुतामेवं निर्जित्य भूमिपान् ॥ पुरमानीय विधिवदुपयेमे कुरूद्वह ॥ ५३ ॥ तदा महोत्सवो नृणां यदुपुर्यां गृहे गृहे अभूदनन्यभावानां कृष्णे यदुपतौ नृप ॥ ५४ ॥ नरा नार्यश्च मुदिताः प्रमृष्टमणिकुण्डलाः ॥ पारिबर्हमुपाजह्रुर्वरयोश्चित्रवाससोः ॥५५॥ सा वृष्णिपर्युत्तभितेन्द्रकेतुभिर्विचित्रमाल्याम्बररत्नतोरणैः ॥ बभौ प्रतिद्वार्युपक्लृप्तमङ्गलैरापूर्णकुम्भागुरुधूपदीपकैः ॥५६॥ सिक्तमार्गा मदच्युद्भिराहूतप्रेष्ठभूभुजाम् ॥ गजैर्द्वाःसुपरामृष्टरम्भापूगोपशोभिता ॥५७॥ कुरुसृञ्जयकैकेयविदर्भ-

त्यहीं नै आफू बस्नको निम्ति भोजकट नामको यौटा ठूलो नगर बसाए, किनकि ती यस्तो प्रतिज्ञा गरेर आएका थिए—दुर्बुद्धि कृष्णलाई नमारी तथा आफ्नी कांछी बहिनीलाई नलुटाई म कुण्डिनपुरमा प्रवेश गर्नेछैन । यसै कारण ती रोषपूर्वक भोजकटमै बस्नलागे ॥ ५१ ॥ ५२ ॥ हे राजन् ! यसरी सबै राजालाई जितेर भगवान् कृष्ण राजा भीष्मककी पुत्री रुक्मिणीलाई आफ्नू नगरमा ल्याए र त्यहाँ उनीसित विधिपूर्वक विवाह गरे ॥ ५३ ॥ त्यस वेला द्वारका मित्र यदुनाथ कृष्णमा अनन्य प्रेम राख्ने यादवहरूको घर-घरै ठूलो उत्सव मनाए ॥ ५४ ॥ मणिमय कुण्डल धारण गरेका द्वारकाका प्रसन्न-चित्त नर-नारीहरूले विचित्र वस्त्र धारण गरेकी वधूलाई अनेक उपाहार भेटी टक्राए ॥ ५५ ॥ अग्लोमा फर्फराइरहेका ठूला-ठूला पताका, रङ्गी-चङ्गी माला, वस्त्र र रत्नका बन्दनवार, ढोका-ढोकामा राखिएका लावा-दूर्वादि माङ्गलिक वस्तुहरू, जलपूर्ण कलश, अगरु, धूप र दीपादिले यदपुरी द्वारकाको अपूर्व शोभा भइरहेको थियो ॥५६॥ निमन्त्रित इष्ट-मित्र र राजाका मदस्रावी हात्तीहरूको मदले बाटोभरि जल छर्के जैं भयो । ढोकामा लगाइएका कदलीस्तम्भ र सुपारीका

1593

गुच्छाले द्वारकापुरी राम्रो देखिइरहेको थियो ॥५७॥ त्यस उत्सवमा कुतूहलवश यता-उता दगुर्ने आफ्ना बन्धु-वर्ग, कुरु, सृञ्जय, कैकेय, विदर्भ, यदु र कुन्तिभोज आदि वंशका व्यक्ति सबै काम छाडेर परस्पर आनन्द मनाइरहेका थिए ॥३८॥ जतातते रुक्मिणीहरणको चर्चा सुनेर राजाहरू र राजकन्याहरूलाई विस्मय भयो ॥५९॥ हे राजन् ! लक्ष्मीपति कृष्णलाई लक्ष्मीकी अवतार रुक्मिणीसित देखेर नगरका नागरिक अत्यन्त प्रसन्न भए ॥६०॥ इति श्रीमद्भागवते दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायां चतुष्पञ्चाशत्तमोऽध्यायः ॥ ५४ ॥

( प्रद्युम्नको जन्म र शम्बरासुर-वध ) शुकदेव भन्नुहुन्छ—हे राजन् ! वासुदेवका अंश कामदेवले—जो भगवान् शङ्करको क्रोधले भस्म भएका थिए—फेरि शरीर प्राप्तिको निम्ति उनै वासुदेवको आश्रय लिएर ॥१॥ उनै कामदेव श्रीकृष्णको वीर्यद्वारा रुक्मिणीको गर्भबाट उत्पन्न भएर प्रद्युम्न नामले विख्यात भए । ती आफ्ना पिताभन्दा कुनै पनि कुरामा

यदुकुन्तयः ॥ मिथो मुमुदिरे तस्मिन्संभ्रमात्परिधावताम् ॥ ५८ ॥ रुक्मिण्या हरणं श्रुत्वा गीयमानं ततस्ततः ॥ राजानो राजकन्याश्च बभूवुर्भृशविस्मिताः ॥५९॥ द्वारकायामभूद्राजन्महामोदः पुरौकसाम् ॥ रुक्मिण्या रमयोपेतं दृष्ट्वा कृष्णं श्रियः पतिम् ॥६०॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे रुक्मिण्युद्वाहे चतुःपञ्चाशत्तमोऽध्यायः ॥ ५४ ॥

श्रीशुक उवाच ॥ कामस्तु वासुदेवांशो दग्धः प्राग्रुद्रमन्युना ॥ देहोपपत्तये भूयस्तमेव प्रत्यपद्यत ॥ १ ॥ स एव जातो वैदर्भ्यां कृष्णवीर्यसमुद्भवः ॥ प्रद्युम्न इति विख्यातः सर्वतोऽनवमः पितुः ॥२॥ तं शम्बरः कामरूपी हृत्वा तोकमनिर्दशम् ॥ स विदित्वात्मनः शत्रुं प्रास्योदन्वत्यगाद्गृहम् ॥ ३ ॥ तं निर्जगार बलवान्मीनः सोऽप्यपरैः सह ॥ वृतो जालेन महता गृहीतो मत्स्यजीविभिः ॥ ४ ॥ तं शम्बराय कैवर्ता उपाजह्रुरुपायनम् ॥ सूदा महानसं नीत्वाऽवद्यन्स्वधितिनाऽद्भुतम् ॥५॥ दृष्ट्वा तदुदरे बालं मायावत्यै न्यवेदयन् ॥ नारदोऽकथयत्सर्वं तस्याः शङ्कितचेतसः ॥

कम थिएनन् ॥२॥ बालक प्रद्युम्न दस दिनका पनि नहुँदै उनलाई यथेच्छ रूपधारी शम्बरासुरले आफ्ना पूर्वशत्रु जानेर हऱ्यो र समुद्रमा फ्याँकेर आफ्नू घर फर्कियो ॥३॥ शिशुलाई यौटा माछाले निल्यो र त्यो माछालाई यौटा माझीले जालमा अल्झायो ॥ ४ ॥ माझीले माछा शम्बरासुरकहाँ लग्यो र उपहारमा माछा टक्र्याइदियो । अनि शम्बरासुरको भान्सेले त्यो अद्भुत माछा भान्सामा लगेर चिऱ्यो ॥ ५ ॥ त्यसको पेटबाट यौटा बालक पाएर त्यो भान्सेले मायावतीलाई सुम्पिदियो । त्यसको सबै वृत्तान्त जानेर मायावतीलाई ठूलो विस्मय भयो । अनि देवर्षि नारद आएर ती बालकको उत्पत्ति र माछाको पेटमा जाने सबै भेद मायावतीलाई सुनाइदिए । तिनै मायावती कामदेवकी यशस्विनी पत्नी रति थिइन् ।

※ दृष्टान्त ( ईश्वरको काम पहिले गर )—एक दिन मक्का शहरमा यौटा हजाम धुनै गृहस्थको कपाल काट्दै थियो । उसै बेला जुनैद फकीर त्यहाँ आएर भने—'खुदाको निम्ति मेरो कपाल पनि बनाइदेऊ ।' खुदाको नाम सुनेर हजामका आँखामा जल भरियो । उसले गृहस्थ ग्राहकसित भन्यो—'अब म हजुरको कपाल बनाउन सक्तिन । एक छिनको लागि हजुर ठहरनुहवस् । अहिले म खुदाको निम्ति यी फकीरको कपाल बनाउँछु । खुदाको काम पहिले गर्नुपर्दछ, किनकि उनको दयाले नै हाम्रो व्यवहार चल्दछ ।' यति भनेर उसले गृहस्थलाई उठाइदियो र फकीरलाई बसाली कपाल बनाइदियो र नमस्कार गरी बिदा गऱ्यो । त्यसपछि गृहस्थको कपाल बनाइदियो । केही दिनपछि बसराका यौटा धनीले उनै फकीरलाई रुपियाँको तोडा दिए । यो लिएर फकीर हजामलाई दिन पुगे, तर हजामले लिएन र भन्यो—'तिमीलाई लाज लाग्दैन ? तिमीले खुदाको निम्ति कपाल बनाउन भन्यौ, रुपियाँको निम्ति होइन ।' आफ्ना भक्त मण्डलीमा जुनैद भन्ने गर्दथे—'निष्काम ईश्वर भक्ति मैले यौटा हजामसित सिकेको हुँ ।'

ती शङ्कर भगवान्‌को कोपानलमा डढेका पतिको प्रतीक्षा गर्दै थिइन् ॥ ६-७ । मायावतीलाई शम्बरासुरले भान्सामा खटाइराखेको थियो । ती बालकलाई पति कामदेवको अवतार जानेर ती बराबर आफ्नो स्नेह बढाउन लागिन् ॥ ८ ॥ केहीपछि कृष्ण-कुमार प्रद्युम्न युवावस्थामा पुगे र हेर्ने नारीहरूको मनलाई मोहित पार्न लागे ॥ ९ ॥ हे राजन् ! मायावती कमलदलको समान विशाल नयन, आजानुबाहु र नरलोक-सुन्दर स्वामीलाई लज्जापूर्ण हाँसो र बाँगो दृष्टिले हेर्दथिन् तथा रतिकालोचित चेष्टा प्रदर्शन गर्दै स्वच्छ मनले तिनको चाकरी गर्नलागिन् ॥ १० ॥ तिनको भावना परिवर्तन देखेर कृष्ण-तनय भगवान प्रद्युम्नले भने—'हे माता ! तिम्रो बुद्धि अर्कै थरिको विपरीत किन भइरहेको छ ? म देखि-

बालस्य तत्त्वमुत्पत्तिं मत्स्योदरनिवेशनम् ॥६॥ सा च कामस्य वै पत्नी रतिर्नाम यशस्विनी ॥ पत्युर्निर्दग्धदेहस्य देहोत्पत्तिं प्रतीक्षती ॥७॥ निरूपिता शम्बरेण सा सूपौदनसाधने ॥ कामदेवं शिशुं बुद्ध्वा चक्रे स्नेहं तदाऽर्भके ॥८॥ नातिदीर्घेण कालेन स कार्ष्णी रूढयौवनः ॥ जनयामास नारीणां वीक्षन्तीनां च विभ्रमम् ॥६॥ सा तं पतिं पद्मदलायतेक्षणं प्रलम्बबाहुं नरलोकसुन्दरम् ॥ सव्रीडहासोत्तभितभ्रुवेक्षती प्रीत्योपपस्थे रतिरङ्गसौरतैः ॥ १० ॥ तामाह भगवान्कार्ष्णिर्मातस्ते मतिरन्यथा ॥ मातृभावमतिक्रम्य वर्तसे कामिनी यथा ॥११॥ रतिरुवाच ॥ भवान्नारायणसुतः शम्बरेणाहृतो गृहात् ॥ अहं तेऽधिकृता पत्नी रतिः कामो भवान्प्रभो ॥१२॥ एष त्वाऽनिर्दशं सिन्धावाक्षिपच्छम्बरोऽसुरः ॥ मत्स्योऽग्रसीत्तदुदरादितः प्राप्तो भवान्प्रभो ॥१३॥ तमिमं जहि दुर्धर्षं दुर्जयं शत्रुमात्मनः ॥ मायाशतविदं त्वं च मायाभिर्मोहनादिभि ॥१४॥ परिशोचति ते माता कुररीव गतप्रजा ॥ पुत्रस्नेहाकुलादीना विवत्सा गौरिवातुरा ॥ १५ ॥ प्रभाष्यैवं ददौ विद्यां प्रद्युम्नाय महात्मने ॥ मायावती महामायां सर्वमायाविनाशिनीम् ॥ १६ ॥ स च सम्बरमभ्येत्य

रहेको छु—तिमी सतित मातृभाव छाडेर कामिनी झैं आचरण गरिरहेकी छौ ।' ॥ ११ । अनि रति बोलिन्—हे प्रभो ! हजुर साक्षात् नारायणका छोरा हुनुहुन्छ । शम्बरासुर हजुरकै घरबाट ल्यायो । हजुर साक्षात् कामदेव र म हजुरकी धर्मपत्नी रति हुँ ॥ १२ ॥ हजुर दस दिनका पनि नपुग्दै शम्बरासुरले हरण गरेर समुद्रमा फालिदिएको थियो । त्यहाँ हजुरलाई यौटा माछाले निल्यो र त्यसैको पेटबाट हजुर यहाँ निस्कनु भयो ॥ १३ ॥ अब हजुर यो अत्यन्त दुर्दम्य, दुर्जय र सयकडौं माया जान्ने शत्रुलाई मोहन आदि मायामय शस्त्रले मार्नुहवस् ॥ १४ ॥ बाछो हराएकी गाई जसरी व्याकुल हुन्छिन्, त्यस्तै आफ्नू पुत्र हजुर हराउनाले पुत्र-स्नेहले आकुल माता रुक्मिणी दीन र दुःखी भई कुररी पक्षी

दृष्टान्त ( सत्यको खाँदो ) सन् १९१० मा सहारनपुर जिल्लाका नहरको यौटा गोरा अफिसरको सुनका गिन्नीले भरिएको थैली बाटोमा खस्यो । त्यहींबाट यौटा बद्धुवा गइरहेको थियो, त्यसले थैली भेट्यो । गोरा साहेबले निकै खोज्दा पनि पाउन सकेन । अब त्यो गोरा दगुराउँदै कर्कियो । त्यस बेला बद्धुवा वृक्षको छायामा बसेको थियो । उसले थैली अफिसरलाई बुझायो । उसले गिन्नी गनेर भन्यो—'तीन गिन्नी छैन । बद्धुवाले भन्यो—'मलाई थाहा छैन ।' तर साहेबले त्यसलाई समातेर सहारनपुरको अदालतमा हाजिर गरायो । हाकिमले बद्धुवाको बयान लियो । त्यसका कुराले यो मानिस ईमानदार छ भन्ने हाकिमले बुझ्यो । अनि उसले तीन गिन्नी भराई अफिसरलाई दियो र भन्यो—'ओ, यो तीन गिन्नी थैलीमा राख !' थैली पूरा भरिएको हुनाले तीन गिन्नी पनि अटाएन । न्यायाधीशले फैसला सुनायो—तिम्रो थैली तीन गिन्नी अरू अटाउने स्थान भएको थियो । अतः जाऊ, त्यो थैली खोज । यो तिम्रो थैली होइन !' यति भनेर थैली बद्धुवालाई दियो । बद्धुवाले थैली लिन मानेन, तर न्यायाधीशले बलपूर्वक उसैलाई दियो । गोरा अधिकारी यो निर्णय सुनेर लज्जित भयो ।

1095

झैं विलाप गर्छिन् ॥१५॥ प्रद्युम्नसित त्यति कुरा गरेर मायावतीले उनलाई सबै माया नष्ट पार्ने महामाया नामको विद्या सिखाइन् ॥ १६ ॥ अनि प्रद्युम्नले शम्बरासुरको सामुन्ने गएर असह्य कठोर वचनले तिरस्कार गर्दै कलहपूर्वक उत्तेजित पारी युद्धको निम्ति हाँक दिए ॥ १७ ॥ शम्बरासुर पाद प्रहारले रिसाएको सर्प झैं तिनका कटुवचनले क्षुब्ध भई रिसले राता-राता आँखा पारेर हातमा गदा लिई बाहिर निस्क्यो ॥ १८ ॥ उसले त्यो गदा ठूलो वेगले बेसरी घुमाई प्रद्युम्न माथि प्रहार गरिदियो र बिजुलीको चर्को स्वर झैं चिच्याउन लाग्यो ॥ १९ ॥ गदा आफूतिर आउन लागेको देखेर भगवान् प्रद्युम्नले त्यसलाई आफ्नू गदाले नष्ट पारिदिए र रिसाई शत्रुमाथि आफ्नू उत्तम गदा प्रहार गरे ॥ २० ॥ अनि त्यो बलवान् दैत्य मयासुरले आसुरी मायाको आश्रय लिएर आकाशमा उड्यो र प्रद्युम्न माथि विविध शस्त्रास्त्रको वर्षा गर्नलाग्यो ॥ २० ॥ त्यो अस्त्र-वर्षाले व्यथित भएर महारथी प्रद्युम्नले सबै मायालाई शान्त पार्ने सत्त्वमयी महामाया विद्याको प्रयोग गरे ॥ २२ ॥ अनि शम्बरासुरले यक्ष, गन्धर्व, पिशाच, सर्प र राक्षसका

संयुगाय समाह्वयत् ॥ अविषह्यैस्तमाक्षेपैः क्षिपन्सञ्जनयन्कलिम् ॥ १७ ॥ सोऽधिक्षिप्तो दुर्वचोभिः पदा हत इवोरगः ॥ निश्चक्राम गदापाणिरमर्षात्ताम्रलोचनः ॥ १८ ॥ गदामाविध्य तरसा प्रद्युम्नाय महात्मने ॥ प्रक्षिप्य व्यनदन्नादं वज्रनिष्पेषनिष्ठुरम् ॥ १९ ॥ तामापतन्तीं भगवान्प्रद्युम्नो गदया गदाम् ॥ अपास्य शत्रवे क्रुद्धः प्राहिणोत्स्वगदां नृप ॥ २० ॥ स च मायां समाश्रित्य दैतेयीं मयदर्शिताम् ॥ मुमुचेऽस्त्रमयं वर्षं कार्ष्णौ वैहायसोऽसुरः ॥ २१ ॥ बाध्यमानोऽस्त्रवर्षेण रौक्मिणेयो महारथः ॥ सत्त्वात्मिकां महाविद्यां सर्वमायोपमर्दिनीम् ॥ २२ ॥ ततो गौह्यकगान्धर्वपैशाचोरगराक्षसीः ॥ प्रायुङ्क्त शतशो दैत्यः कार्ष्णिर्व्यधमयत्स ताः ॥ २३ ॥ निशातमसिमुद्यम्य सकिरीटं सकुण्डलम् ॥ शम्बरस्य शिरः कायात्ताम्रश्मश्र्वोजसाऽहरत् ॥ २४ ॥ आकीर्यमाणो दिविजैः स्तुवद्भिः कुसुमोत्करैः ॥ भार्ययाऽम्बरचारिण्या पुरं नीतो विहायसा ॥ २५ ॥ अन्तःपुरवरं राजन्ललनाशतसङ्कुलम् ॥ विवेश पत्न्या गगनाद्विद्युतेव बलाहकः ॥ २६ ॥ तं दृष्ट्वा जलदश्यामं पीतकौशेयवाससम् ॥ प्रलम्बबाहुं ताम्राक्षं सुस्मितं रुचिराननम् ॥ २७ ॥ स्वलङ्कृतमुखाम्भोजं नीलवक्रालकालिभिः ॥ कृष्णं मत्वा स्त्रियो ह्रीता निलिल्युस्तत्र तत्र ह ॥ २८ ॥ अवधार्य शनैरीषद्वैलक्षण्येन योषितः ॥ उपजग्मुः प्रमुदिताः सस्त्रीरत्नं सुविस्मिताः ॥ २९ ॥ अथ तत्रासितापाङ्गी वैदर्भी वल्गुभाषिणी ॥

सयकडौं मायाहरू एकैपल्ट प्रयोग गरिदियो, तर कृष्णकुमार प्रद्युम्नले ती सबै तत्काल शान्त पारे ॥ २३ ॥ त्यसपछि पैँठा तीक्ष्ण र धारिलो तरवार लिएर शम्बरासुरको किरीट तथा कुण्डल सहितको र अरुण वर्णको दाह्री-जुँघा हुने शिर घाँटीबाट छुट्याइदिए ॥ २४ ॥ अनि स्तुति गरिरहेका स्वर्ग निवासी समस्त देवताको पुष्पवृष्टिले ढाकिई प्रद्युम्नलाई उनकी आकाशचारिणी भार्या मायावतीले आकाशमार्गबाट द्वारकापुरी लगिन् ॥ २५ ॥ हे राजन् ! दामिनी विमण्डित श्याम मेघ झैं राम्रा प्रद्युम्नले मायावती सहित आकाशबाट वलेर अनेकौं रमणी-रत्नले भरिएको द्वारकाको राजभवनमा प्रवेश गरे ॥ २६ ॥ मेघ झैं श्यामवर्ण, पीताम्बरधारी, विशाल बाहु, अरुण-नयन हास्ययुक्त मुख तथा नीलो र घुगुरिएको अलकावलीरूपी भ्रमरले अलङ्कृत मुखारविन्दयुक्त प्रद्युम्नलाई देखेर महिलाहरूले साक्षात् कृष्ण ठाने । अतः लाज मानेर यताउता लुक्नलागे ॥ २७ ॥ २८ ॥ विस्तार-विस्तार

1076

केही विलक्षणता देखेर कृष्ण होइनन् भन्ने जाने। अनि ती अतिशय आनन्दित र विस्मित भएर आफ्नी सौतिसित आएका ती पुरुषरत्न कहाँ आए ॥२९॥ उसै वेला श्यामनयना र मंजुभाषिणी रुक्मिणीलाई आफ्नो हराएको बालक स्मरण भयो र पुत्र स्नेहले तिनका स्तनबाट दूधको धारा बग्यो ॥३०॥ उनले विचार गरिन्–यो नर-रत्न को हो ? यो कमल नयन पुत्र कसको हो ? कुन भाग्यमानीले यसलाई आफ्नू गर्भमा धारण गरेकी होली ? यसले कुन स्त्री भेट्यो ॥३१॥ मेरो छोरो पनि, जुन सूतिकागृहबाट नै हराएको थियो, त्यो कहीं बाँचेको भए उसको अवस्था र आकृति पनि यस्तै होला ॥३२॥ अङ्गहरूको गठन र चाल-ढाल, बोल-चाल, हाँसो र हेराई श्रीकृष्ण झैं कसरी प्राप्त भयो ? ॥३३॥ यो मैले गर्भमा धारण गरेको बालक नै हो कि ? किनकि यसमाथि मेरो स्नेह किन हो, बारम्बार बढिरहेको छ र मेरो बायाँ अङ्ग फर्फराइरहेछ' ॥३४॥ जब महारानी रुक्मिणी यस्तै तर्कना गरेकी थिइन् त्यसै वेला माता देवकी र वसुदेवका पुण्यकीर्ति पुत्र भगवान् कृष्ण उहीं आइपुगे ॥३५॥ श्रीजनार्दन यो सबै रहस्य जान्दथे तर उनले केही पनि भनेनन्। त्यतिमै देवर्षि आइपुगे र उनले प्रद्युम्न सूतिका-

अस्मरत्स्वसुतं नष्टं स्नेहस्नुतपयोधरा ॥ ३० ॥ को न्वयं नरवैदूर्यः कस्य वा कमलेक्षणः ॥ धृतः कया वा जठरे केयं लब्धा त्वनेन वा ॥३१॥ मम चाप्यात्मजो नष्टो नीतो यः सूतिकागृहात् ॥ एतत्तुल्यवयोरूपो यदि जीवति कुत्रचित् ॥ ३२ ॥ कथं त्वेनेन संप्राप्तं सारूप्यं शार्ङ्गधन्वनः ॥ आकृत्यावयवैर्गत्या स्वरहासावलोकनैः ॥३३॥ स एव वा भवेन्नूनं यो मे गर्भे धृतोऽर्भकः ॥ अमुष्मिन्प्रीतिरधिका वामः स्फुरति मे भुजः ॥ ३४॥ एवं मीमांसमानायां वैदर्भ्यां देवकीसुतः ॥ देवक्यानकदुन्दुभ्यामुत्तमश्लोक आगमत् ॥३५॥ विज्ञातार्थोऽपि भगवाँस्तूष्णीमास जनार्दनः ॥ नारदोऽकथयत्सर्वं शम्बराहरणादिकम् ॥३६॥ तच्छ्रुत्वा महदाश्चर्यं कृष्णान्तःपुरयोषितः ॥ अभ्यनन्दन्बहूनब्दान्नष्टं मृतमिवागतम् ॥ ३७ ॥ देवकी वसुदेवश्च कृष्णरामौ तथा स्त्रियः ॥ दम्पती तौ परिष्वज्य रुक्मिणी च ययुर्मुदम् ॥ ३८ ॥ नष्टं प्रद्युम्नमायातमाकर्ण्य द्वारकौकसः ॥ अहो मृत इवायातो बालो दिष्ट्येति चाब्रुवन् ॥ ३९ ॥ यं वै मुहुः पितृसरूपनिजेशभावास्तन्मातरो यदभजन् रहरूढभावाः ॥ चित्रं न तत्खलु रमास्पदबिम्बबिम्बेकामे स्मरेऽ-

गृहबाट शम्बरासुर द्वारा हरण गरिएका सबै कुरा सुनाए ॥ ३६ ॥ नारदबाट यो विचित्र वृत्तान्त सुनेर कृष्णका अन्तःपुरका नारीहरू, कुनै मरेको सुहृद् फेरि जीवित भएर आए झैं उनलाई धेरै वर्षपछि देखेर प्रसन्न भए ॥ ३७ ॥ श्रीकृष्णचन्द्र र बलराम, देवकी, वसुदेव, रुक्मिणी र अन्तःपुरका अन्य स्त्रीहरू नववधू सहित वीर बालक प्रद्युम्नलाई अंकमाल गर्दै प्रसन्न मनले भेटे ॥ ३८ ॥ हराएका प्रद्युम्न फर्केर आए भन्ने सुनेर सबै द्वारकावासी भन्नलागे—'अहो ! कस्तो सौभाग्यको कुरा छ–जुन बालक हराएका थिए, ती फेरि मरेर फर्के झैं आइपुगे !' ॥ ३९ ॥ यस बखत प्रद्युम्नलाई देखेर पिताकै समान स्वरूप हुनाले उनमा आफ्ना पतिदेव अर्थात् श्रीकृष्णचन्द्रकै भावना भएको थियो त्यसैले तिनकी गुणवती आमा रुक्मिणी आदि नारीहरू मधुर भावमा निमग्न भएर त्यहाँबाट अन्तै एकान्तमा गए । लक्ष्मी निवास श्रीकृष्ण भगवान्‌का प्रतिबिम्बस्वरूप र स्मरणमात्रले क्षोभ उत्पन्न पार्ने कामदेवका अवतार प्रद्युम्न भेटिएपछि यस्तो हुनु कुनै ठूलो आश्चर्यको कुरा थिएन। जब तिनलाई देखेर माताहरूलाई पनि भावोदय भयो भने अरु साधारण स्त्रीहरूको के

1077

कुरा ? ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां पञ्चपञ्चाशत्तमोऽध्यायः ॥५५॥

( स्यमन्तकोपाख्यान, जाम्बवती र सत्यभामासित श्रीकृष्णको विवाह ) श्रीशुकदेव भन्दछन्—हे राजन् ! सत्राजित नामका यादवले एकचोट कृष्णलाई असङ्ग लगाएका थिए । त्यस अपराधको शान्तिका लागि स्यमन्तक मणि र आफ्नी छोरी पनि दिएका थिए ॥ १ ॥ तब राजा परीक्षितले सोधे—हे ब्रह्मन् ! श्रीकृष्णले सत्राजितको के अपराध गरेका थिए ? उसलाई स्यमन्तक मणि कहाँबाट र कसरी प्राप्त भएको थियो ? र किन उनले मणी र आफ्नी छोरी श्रीकृष्णलाई दिए ? ॥ २ ॥ श्रीशुकदेवजी भन्दछन्—सूर्यनारायण आफ्ना भक्त सत्राजितको भक्तिले उनका मित्र भए । उनले सत्राजितको तपस्यामा खुसी भएर स्यमन्तक मणि दिएका थिए ॥ ३ ॥ त्यो मणि लगाएर ती सत्राजित सूर्यजस्तै देदीप्यमान भएर एक दिन द्वारकापुरी पुगे । त्यस मणिको प्रचण्ड तेजले तिनलाई कसैले चिह्न सकेनन् ॥ ४ ॥ पश्चात् देखेर सबैका आँखा तिर्मिराए र मणि पहिरेका सूर्यका भक्त ती सत्राजित

क्षितिषये किमुतान्यनार्यः ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे प्रद्युम्नोत्पत्तिनिरूपणं नाम पञ्चपञ्चाशत्तमोऽध्यायः ॥ ५५ ॥

श्रीशुक उवाच ॥ सत्राजितः स्वतनयां कृष्णाय कृतकिल्बिषः ॥ स्यमन्तकेन मणिना स्वयमुद्यम्य दत्तवान् ॥ १ ॥ राजोवाच ॥ सत्राजितः
किमकरोद्ब्रह्मन्कृष्णस्य किल्बिषम् ॥ स्यमन्तकः कुतस्तस्य कस्माद्दत्ता सुता हरेः ॥ २ ॥ शुक उवाच ॥ आसीत्सत्राजितः सूर्यो भक्तस्य परमः
सखा ॥ प्रीतस्तस्मै मणिं प्रादात्सूर्यस्तुष्टः स्यमन्तकम् ॥ ३ ॥ स तं बिभ्रन्मणिं कण्ठे भ्राजमानो यथा रविः ॥ प्रविष्टो द्वारकां राजँस्तेजसा
नोपलक्षितः ॥ ४ ॥ तं विलोक्य जना दूरात्तेजसा मुष्टदृष्टयः ॥ दीव्यतेऽक्षैर्भगवते शशंसुः सूर्यशङ्किताः ॥ ५ ॥ नारायण नमस्तेऽस्तु
शङ्खचक्रगदाधर ॥ दामोदरारविन्दाक्ष गोविन्द यदुनन्दन ॥ ६ ॥ एष आयाति सविता त्वां दिदृक्षुर्जगत्पते ॥ मुष्णन्गभस्तिचक्रेण नृणां चक्षूंषि
तिग्मगुः ॥ ७ ॥ नन्वन्विच्छन्ति ते मार्गं त्रिलोक्यां विबुधर्षभाः ॥ ज्ञात्वाऽद्य गूढं यदुषु द्रष्टुं त्वां यात्यजः प्रभो ॥ ८ ॥ श्रीशुक उवाच ॥
निशम्य बालवचनं प्रहस्याम्बुजलोचनः ॥ प्राह नासौ रविर्देवः सत्राजिन्मणिना ज्वलन् ॥ ९ ॥ सत्राजित्स्वगृहं श्रीमत्कृतकौतुकमङ्गलम् ॥
प्रविश्य देवसदने मणिं विप्रैर्न्यवेशयत् ॥ १० ॥ दिने दिने स्वर्णभारानष्टौ स सृजति प्रभो ॥ दुर्भिक्षमार्यरिष्टानि सर्पाधिव्याधयोऽशुभाः ॥

लाई सूर्य ठानेर पासा खेलिरहेका श्रीकृष्णसित भने— ॥ ५ ॥ 'हे नारायण ! हे शङ्ख-चक्र-गदाधर ! हे कमलनयन ! हे गोविन्द ! हे यदुनन्दन ! हे अच्युत ! हजुरलाई नमस्कार छ ॥ ६ ॥ हे जगत्पते ! हेर्नोस्, आफ्ना किरणले हामीहरू सबैका आँखा तिरिमिरि पार्दै प्रचण्डरश्मि सूर्यनारायण हजुरको दर्शन गर्न आइरहेका छन् ॥ ६ ॥ हे प्रभो ! त्रिलोकका सबै देवता हजुरलाई सदा खोजिरहन्छन् । आज यदुकुलमा लुकेका जानेर सूर्य हजुरको दर्शनका निम्ति स्वयं आइरहेका छन् ॥ ८ ॥ शुकदेवजी भन्दछन्—हे राजन् ! ती अनभिज्ञ व्यक्तिका कुरा सुनेर कमल-नयन श्रीकृष्णले हाँसेर भन्नुभयो—'यी सूर्य होइनन्, मणिले देदीप्यमान भएर सत्राजित आउँदैछन् ।' सत्राजितले मङ्गलोत्सवका द्वारा शोभायमान आफ्नू घरको देवमन्दिरमा ब्राह्मणद्वारा त्यस मणिको प्रतिष्ठा गराए ॥ ९ ॥ हे राजन् ! त्यो मणि दिनहुँ आठ भार सुन दिन्थ्यो । जहाँ त्यसको भक्तिपूर्वक पूजा गरिन्थ्यो, त्यहाँ

दुर्भिक्ष, महामारी, ग्रहपीडा, मानसिक र शारीरिक कष्ट, मायावी हरूको उपद्रवादि अशुभ हुँदैनथे ॥ १० ॥ ११ ॥ एक दिन कृष्णले त्यो मणि राजा उग्रसेनलाई दिन सत्राजितसित मागे, किन्तु ती धनका लोभीले उनको आज्ञा-भङ्गको विचारै नगरी मणि दिएनन् ॥ १२ ॥ अर्को दिन सत्राजितको भाई प्रसेन त्यो प्रकाशमय मणि आफ्नू घाँटीमा लगाएर तथा घोडामा चढी वनमा शिकार खेल्न लागे ॥ १३ ॥ त्यहाँ यौटा सिंहले घोडा समेत प्रसेनलाई मारिदियो । अनि त्यो अपूर्व मणि लिएर ऊ यौटा गिरिगुफामा पस्न आँटेको बेला मणिको इच्छा राख्ने जाम्बवानले सिंहलाई बीचमै मारिदिए ॥ १४ ॥ अनि मणि उनले आफ्नू गुफामा लगेर त्यो मणि आफ्नू बालकलाई खेल्न दिए । प्रसेनका दाजु सत्राजित प्रसेनलाई नदेखेर शोक गर्नलागे ॥ १५ ॥ उनले कसैसित कुरा पनि गरे—'मेरो भाई मणि लगाएर वनमा गएको थियो । सम्भवतः उसलाई कृष्णले मार्न लगाए र मणि लिए होलान् ।' यो कुरा कानेखुसी गर्दागर्दै फैलियो र ॥ १६ ॥ जब भगवानले यो कलङ्क लागेको कुरा सुने तब त्यो मेट्न द्वारकावासीलाईं साथै लिएर वनमा सत्राजितको भाई प्रसेनलाई

न सन्ति मायिनस्तत्र यत्रास्तेऽभ्यर्चितो मणिः ॥११॥ स याचितो मणिं दातुं यदुराजाय शौरिणा ॥ नैवार्थकामुकः प्रादाद्याच्ञाभङ्गमतर्कयन् ॥१२॥ तमेकदा मणिं कण्ठे प्रतिमुच्य महाप्रभम् ॥ प्रसेनो हयमारुह्य मृगयां व्यचरद्वने ॥ १३ ॥ प्रसेनं सहयं हत्वा मणिमाच्छिद्य केसरी ॥ गिरिं विशञ्जाम्बवता निहतो मणिमिच्छता ॥ १४ ॥ सोऽपि चक्रे कुमारस्य मणिं क्रीडनकं बिले ॥ अपश्यन्भ्रातरं भ्राता सत्राजित्पर्यतप्यत ॥१५॥ प्रायः कृष्णेन निहतो मणिग्रीवो वनं गतः ॥ भ्राता ममेति तच्छ्रुत्वा कर्णे कर्णेऽजपञ्जनाः ॥१६॥ भगवांस्तदुपश्रुत्य दुर्यशो लिप्तमात्मनि ॥ मार्ष्टुं प्रसेनपदवीमन्वपद्यत नागरैः ॥ १७ ॥ हतं प्रसेनमश्वं च वीक्ष्य केसरिणा वने ॥ तं चाद्रिपृष्ठे निहतमृक्षेण ददृशुर्जनाः ॥ १८ ॥ ऋक्षराजबिलं भीममन्धेन तमसाऽऽवृतम् ॥ एको विवेश भगवानवस्थाप्य बहिः प्रजाः ॥ १९ ॥ तत्र दृष्ट्वा मणिश्रेष्ठं बालक्रीडनकं कृतम् ॥ हर्तुं कृतमतिस्तस्मिन्नवतस्थेऽर्भकान्तिके ॥ २० ॥ तमपूर्वं नरं दृष्ट्वा धात्री चुक्रोश भीतवत् ॥ तच्छ्रुत्वाऽभ्यद्रवत्क्रुद्धो जाम्बवान्बलिनां वरः ॥ २१ ॥ स वै भगवता तेन युयुधे स्वामिनात्मनः ॥ पुरुषं प्राकृतं मत्वा कुपितो नानुभाववित् ॥ २२ ॥ द्वन्द्वयुद्धं सुतुमुलमुभयोर्विजिगीषतोः ॥ आयुधाश्मद्रुमैर्दोर्भिः क्रव्यार्थे श्येनयोरिव ॥ २३ ॥ आसीत्तदष्टाविंशाहमितरेतरमुष्टिभिः ॥ वज्रनिष्पेषपरुषैरविश्रममहर्निशम् ॥ २४ ॥ कृष्णमुष्टिविनिष्पातनिष्पिष्टाङ्गोरुबन्धनः ॥

खोज्न गए ॥ १७ ॥ वनमा खोज्दा सिंहद्वारा मारिएको प्रसेन र उसको घोडा मरेको तथा जाम्बवान्को हातबाट पर्वतमा मारिएको सिंहलाई पनि देखे ॥ १८ ॥ अनि श्रीकृष्ण सबैलाई बाहिर छाडेर अन्धकारपूर्ण ऋक्षराजको डरलाग्दो गुफामा एक्लै पसे ॥ १९ ॥ भित्र पुगेर देवकीनन्दन श्रीकृष्ण भगवान्ले देखे—त्यो श्रेष्ठ मणि बालकको खेल्ने वस्तु बनेको छ । त्यो लिने इच्छाले भगवान् बालकको नजीकै पुगे ॥ २० ॥ त्यहाँ यौटा मनुष्य देखेर बालकको धाई डराएर बेपरी चिच्याई । त्यसको चीत्कार सुनेर बलवान्हरूमा श्रेष्ठ जाम्बवान् रिसाई आइपुगे ॥ २१ ॥ २२ ॥ श्रीकृष्णलाई साधारण मनुष्य ठानेर उनको प्रभाव जान्न नसकेर जाम्बवान् आफ्ना प्रभु भगवान् श्रीकृष्णचन्द्रसित बेसरी कुपित भएर युद्ध गर्न लागे । जस्तै मासुको लागि दुइ बाज परस्पर लड्छन्, त्यसै गरी जयका अभिलाषी ती दुवै वीर शस्त्रास्त्र, वृक्ष, ढुङ्गा, मुड्की आदिले घोर द्वन्द्वयुद्ध गर्नलागे ॥ २३ ॥

त्यसै गरी अट्ठाइस दिनसम्म रात-दिन वज्र झैं कठोर मुड्कीले परस्पर युद्ध हुँदै रह्यो ॥ २४ ॥ अन्त्यमा भगवान् कृष्णको मुड्की लागेर जाम्बवान्‌का अङ्ग-बन्धन धूलो भए झैं भयो उत्साह नष्ट भयो, शरीर पसीनाले भिज्यो र ती छक्क परेर भन्न लागे— ॥ २५ ॥ 'हे प्रभो ! मैले बुझ जानें—हजुर सबै जीवका स्वामी, प्रतिपालक र पुराण-पुरुष उनै भगवान् विष्णु हुनुहुन्छ । हजुर नै सबै प्राणीमात्रका प्राण, इन्द्रियबल, मनोबल र शारीरिक बल हुनुहुन्छ ॥ २६ । हजुर विश्वका रचयिता ब्रह्मादिलाई पनि उत्पन्न गर्ने, सृष्टिका कारण, नाश गर्नेहरूका नियामक काल र आत्माहरूका परमात्मा हुनुहुन्छ ॥२७॥ हे प्रभो ! जपको पाँटा सान् रोषपूर्ण कटाक्षले सिन्धुका नक्र र तिमिङ्गिलादि क्षुब्ध भएपछि समुद्रले लङ्का जाने बाटो छाडिदिएथ्ये । अनि असले त्यसमाथि आफ्नू कीर्ति स्वरूप सेतु बाँधेर लङ्का विध्वंस गरे, जसका बाणहरूले काटिएर रावणका शिर पृथ्वीमा पल्टन लागेका थिए, ती भगवान् राम हजुर नै हुनुहुन्छ । हे महाराज ! ऋक्षपति जाम्बवानले मेरो भगवत्‌रूप जाने भन्ने देखेर देवकी-नन्दन गोविन्दले तिनको पीडा शान्त पार्नेका लागि आफ्ना कल्याणकारी

क्षीणसत्त्वः स्विन्नगात्रस्तमाहातीव विस्मितः ॥ २५ ॥ जाने त्वां सर्वभूतानां प्राण ओजः सहो बलम् ॥ विष्णुं पुराणपुरुषं प्रभविष्णुमधीश्वरम् ॥ २६ ॥ त्वं हि विश्वसृजां स्रष्टा सृज्यानामपि यच्च सत् ॥ कालः कलयतामीशः पर आत्मा अथात्मनाम् ॥ २७ ॥ यस्येषदुत्कलितरोषकटाक्ष-मोक्षैर्वर्त्मादिशत्क्षुभितनक्रतिमिङ्गिलोऽब्धिः ॥ सेतुः कृतः स्वयश उज्ज्वलिता च लङ्का रक्षःशिरांसि भुवि पेतुरिषुक्षतानि ॥ २८ ॥ इति विज्ञात-विज्ञानमृक्षराजानमच्युतः ॥ व्याजहार महाराज भगवान्देवकीसुतः ॥ २९ ॥ अभिमृश्यारविन्दाक्षः पाणिना शङ्करेण तम् ॥ कृपया परया भक्त्या प्रेमगम्भीरया गिरा ॥ ३० ॥ मणिहेतोरिह प्राप्ता वयमृक्षपते बिलम् ॥ मिथ्याभिशापं प्रमृजन्नात्मनो मणिनाऽमुना ॥ ३१ ॥ इत्युक्तः स्वां दुहितरं कन्यां जाम्बवतीं मुदा ॥ अर्हणार्थं स मणिना कृष्णायोपजहार ह ॥ ३२ ॥ अदृष्ट्वा निर्गमं शौरेः प्रविष्टस्य बिलं जनाः ॥ प्रतीक्ष्य द्वादशाहानि दुःखिताः स्वपुरं ययुः ॥ ३३ ॥ निशम्य देवकी देवी रुक्मिण्यानकदुन्दुभिः ॥ सुहृदो ज्ञातयोऽशोचन्बिलात्कृष्णमनिर्गतम् ॥ ३४ ॥ सत्राजितं शपन्तस्ते दुःखिता द्वारकौकसः ॥ उपतस्थुर्महामायां दुर्गां कृष्णोपलब्धये ॥३५॥ तेषां तु देव्युपस्थानात्प्रत्यादिष्टाशिषा स च ॥ प्रादुर्बभूव सिद्धार्थः सदारो हर्षयन्हरिः ॥३६॥ उपलभ्य हृषीकेशं मृतं पुनरिवागतम् ॥ सह पत्न्या मणिग्रीवं सर्वे जातमहोत्सवाः ॥३७॥ सत्राजितं समाहूय सभायां

हातले देह मुसारिदिए र प्रेम गम्भीर वाणीमा ती आफ्ना भक्तप्रति भन्नुभयो— ॥ २८ ॥ २९ ॥ ३० ॥ हे ऋक्षराज ! म यो मणिद्वारा आफ्नो मिथ्या कलङ्क हटाउन र यही मणि लिनको निम्ति तिम्रो कन्दरामा आएको हुँ' ॥ ३१ ॥ भगवानले त्यति भनेपछि जाम्बवान् अति प्रसन्न भएर उनको सम्मान गर्दै त्यो अमूल्य मणि र आफ्नी कन्या जाम्बवती उनलाई अर्पण गरिदिए ॥ ३२ ॥ यता कन्दरामा गएका कृष्ण त्यसबाट बाहिर ननिस्केका हुनाले तिनका द्वारका निवासी समस्त साथी बाह्र दिनसम्म पर्खेर अत्यन्त दुःखी भई नगरमा फर्केर गए ॥ ३३ ॥ कृष्णचन्द्र गुफाबाट आएनन् भन्ने सुनेर वसुदेव, माता देवकी र रुक्मिणी आदि सुहृद्‌गण तथा अन्य बन्धु-बान्धवहरूलाई ठूलो शोक पर्‍यो ॥ ३४ ॥ सबै द्वारका निवासी दुःखी भएर सत्राजितलाई भन्नु-नभन्नु भन्दै श्रीकृष्णलाई प्राप्त गर्न महामाया दुर्गादेवीको श्रद्धा-भक्तिपूर्वक उपासना गर्नलागे ॥ ३५ ॥ उपासनाले प्रसन्न भएर

देवीले उनलाई इच्छित आशिर्वाद दिइन् । उसै बेला भगवान् कृष्ण सफल मनोरथ भएर सबैलाई प्रसन्न पार्दै नववधू जाम्बवती सहित त्यहीं आइपुगे ॥३६॥ सबै द्वारकावासी कोही मरेको व्यक्ति फर्केर आए झैं घाँटीमा मणि लगाई यौटी सुन्दरी स्त्रीसित श्रीकृष्ण आएका देखेर निकै प्रसन्न भए ॥ ३७ ॥ अनि भगवान्ले सत्राजित्लाई राजा उग्रसेनको सभामा डाकेर मणि प्राप्त भएको वृत्तान्त सुनाई त्यो मणि बुम्पिदिए ॥ ३८ ॥ सत्राजितले संकोच मान्दै मणि लिए तर आफ्नू अपराधको निम्ति अत्यन्त पश्चात्ताप गर्दैनबोली शिर न्यूराई घर फर्किए ॥ ३९ ॥ आफ्नू अपराधमा विचार गर्दै र यौटा बलियो व्यक्तिसित विरोध गरेकोमा मनमनै निकै व्याकुल भई ती विचार गर्नलागे—'म कसरी आफ्नू अपराध परिमार्जन गरौं ? श्रीहरि कसरी मसित प्रसन्न हुनन्* ॥ ४० ॥ म यस्तो के शुभकर्म गरौं, जसले मेरो कल्याण होस् र म क्षुद्र, मूर्ख तथा अर्थको लोभीलाई भन्नु-नभन्नु

राजसन्निधौ ॥ प्राप्तिं चाख्याय भगवान्मणिं तस्मै न्यवेदयत् ॥ ३८ ॥ स चातिव्रीडितो रत्नं गृहीत्वाऽवाङ्मुखस्ततः ॥ अनुतप्यमानो भवनमगमत्स्वेन पाप्मना ॥ ३९ ॥ सोऽनुध्यायंस्तदेवाघं बलवद्विग्रहाकुलः ॥ कथं मृजाम्यात्मरजः प्रसीदेद्वाऽच्युतः कथम् ॥ ४० ॥ किं कृत्वा साधु मह्यं स्यान्न शपेद्वा जनो यथा ॥ अदीर्घदर्शनं क्षुद्रं मूढं द्रविणलोलुपम् ॥ ४१ ॥ दास्ये दुहितरं तस्मै स्त्रीरत्नं रत्नमेव च ॥ उपायोऽयं समीचीनस्तस्य शान्तिर्न चान्यथा ॥ ४२ ॥ एवं व्यवसितो बुद्ध्या सत्राजित्स्वसुतां शुभाम् ॥ मणिं च स्वयमुद्यम्य कृष्णायोपजहार ह ॥ ४३ ॥ तां सत्यभामां भगवानुपयेमे यथाविधि ॥ बहुभिर्याचितां शीलरूपौदार्यगुणान्विताम् ॥ ४४ ॥ भगवानाह न मणिं प्रतीच्छामो वयं नृप ॥ तवास्तां देवभक्तस्य वयं च फलभागिनः ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे स्यमन्तकोपाख्याने षट्पञ्चाशत्तमोऽध्यायः ॥ ५६ ॥

नभन्नुन् ॥ ४१ ॥ हुन्छ, म श्रीकृष्णलाई स्त्रीहरूमा रत्नस्वरूपा आफ्नी कन्या सत्यभामा र यो मणि दिन्छु । अँ, यही युक्ति ठीक छ । यस विरोधको शान्ति अरु कुनै उपायले हुन सक्तैन' ॥ ४२ ॥ मनमा यस्तो अठोट गरेर सत्राजित्ले आफ्नी शुभलक्षणा कन्या र स्यमन्तक मणि स्वयं उद्योग गरेर श्री कृष्णलाई बुम्पिदिए ॥ ४३ ॥ सत्राजित्की कन्या सत्यभामा शील, रूप र गुणले युक्त थिइन् । अनेक राजाहरूले सत्राजित्सित कन्या मागेका थिए । अतः सत्यभामासित भगवान्ले प्रसन्न भई विधिवत् विहाह गरे ॥ ४४ ॥ हे राजन् ! अनि भगवान्ले सत्राजितसित भने—'यो मणि म लिन्न । तिमी सूर्यका भक्त छौ । अतः यो उनको प्रसाद तिमीसित नै रहनु पर्दछ । हामी त केवल यसको फलको नै भागी हुन सक्छौं अर्थात् यसबाट प्राप्त सुवर्ण दिनुहोला ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे 'वासिष्ठी' भाषाटीकायां षट्पंचाशत्तमोऽध्यायः ॥ ५६ ॥

दृष्टान्त ( मेरो उद्धार कसरी हुन्छ ? )—यौटा भक्त नियमपूर्वक भगवान्को भजन पूजन र दान पुण्य गर्दथे । एक दिन नारद आइपुगे । नारदजीलाई देखेर तपस्वीले भने—यदि तिमी भगवानकहाँ गयौ भने उनीसित सोधेर आउनु मेरो मुक्ति कहिले हुन्छ ? किनकि मैले तपस्या गरेको अनेक वर्ष बितिसक्यो र यो पनि सोध्नु कि भक्तहरूमा मेरो कुन स्थान छ ?' नारदजीले भने—म उहीं गइरहेको छु, भगवानसित सोधौंला ।' नारदजी भगवानकहाँ गई कुन काम थियो, त्यो गरेर त्यो भक्तको विषयमा चर्चा चलाएर सोधे—त्यसको उद्धार कहिले हुन्छ र भक्तहरूमा उसको कुन स्थान छ ?' भगवानले आज्ञा भयो—हिसाबको बही छ, स्वयं हेर ।' नारदले दुइ पल्ट बही हेरे, त्यस भक्तको नाम कहीं पाइएन । नारदले सोधे—'प्रभो ! के हजुरको दरबारमा पनि अन्याय हुन्छ ! त्यती ठूलो भक्तको नाम बहीमा कतै छैन, किन ?' भगवानले आज्ञा भयो—'कोही जतिसुकै ठूलो पुण्यात्मा वा तपस्वी भए पनि यदि त्यो अभिमानी छ भने भक्तहरूमा आउन सक्तैन ।' नारदजीले आएर तपस्वीलाई सबै कुरा सुनाए । नारदको कुरा सुनेर त्यसलाई ठूलो पछुतो भयो र त्यसले उसै दिनदेखि त्यो निरभिमान भएर भगवद्भजन गर्नलाग्यो ।

( स्यमन्तकहरण, शतधन्वा वध र अक्रूरलाई द्वारका ल्याउनु )–श्रीशुकदेव भन्दछन्—हे राजन् ! भगवान्‌लाई पाण्डव बाँचे भन्ने थाहा थियो तापनि कुन्ती र पाण्डवहरू लाक्षाभवनमा डढे भन्ने सुनेर कुलोचित व्यवहार गर्न दाजु सहित कुरुदेश गए ॥ १ ॥ त्यहाँ भीष्म, कृपाचार्य, विदुर, गान्धारी र द्रोणाचार्यतथा कर्णसित पनि भेटे र उनीहरू से दुःखित भएर राम-कृष्णले भने–'हरे ! त्यो कस्तो कष्टको कुरा छ !' ॥२॥ त्यसै बेला यता मौका पाएर अक्रूर र कृतवर्माले शतधन्वासित भने—'तिमी सत्राजितसित त्यो मणि किन खोसेर लिन्नौ ? ॥ ३ ॥ उसले मलाई आफ्नी कन्या दिन्छु भनेर हाम्रो तिरस्कार गरी कृष्णलाई दिए, त्यो मरेर चाँडै नै आफ्नू भाई प्रसेनको अनुकरण किन नगरोस् ? ॥ ४ ॥ जसको जीवन क्षीण भइसकेको थियो, त्यो, पापाचारी र दुष्ट शतधन्वाले यसरी अर्काको उक्साइमा परेर त्यो मणिको लोभवश राती सुतेका सत्राजितलाई मार्‍यो ॥ ५ ॥ जसरी कसाई पशुलाई मार्दछ, त्यसै गरी सत्राजितलाई मारेर अनाथ स्त्रीहरूलाई रुँदै छाडेर आफू मणि लिई हिंड्यो । आफ्ना पितालाई त्यसरी मरेका देखेर सत्यभामा अत्यन्त शोकाकुल

श्रीशुक उवाच ॥ विज्ञातार्थोऽपि गोविन्दो दग्धानाकर्ण्य पाण्डवान् ॥ कुन्तीं च कुल्यकरणे सहरामो ययौ कुरून् ॥ १ ॥ भीष्मं कृपं सविदुरं
गान्धारीं द्रोणमेव च ॥ तुल्यदुःखौ च सङ्गम्य हा कष्टमिति होचतुः ॥२॥ लब्ध्वैतदन्तरं राजञ्शतधन्वानमूचतुः ॥ अक्रूरकृतवर्माणौ मणिः कस्मान्न
गृह्यते ॥३॥ योऽस्मभ्यं संप्रतिश्रुत्य कन्यारत्नं विगर्ह्यनः ॥ कृष्णायादान्न सत्राजित्कस्माद्भ्रातरमन्वियात् ॥ ४ ॥ एवं भिन्नमतिस्ताभ्यां सत्राजितस-
त्तमः ॥ शयानमवधील्लोभात्स पापः क्षीणजीवितः ॥ ५ ॥ स्त्रीणां विक्रोशमानानां क्रन्दन्तीनामनाथवत् ॥ हत्वा पशून्सौनिकन्मणिमादाय जग्मि-
वान् ॥ ६ ॥ सत्यभामा च पितरं हतं वीक्ष्य शुचाऽर्दिता ॥ व्यलपत्तात तातेति हा हताऽस्मीति मुह्यती ॥ ७ ॥ तैलद्रोण्यां मृतं प्रास्य जगाम गज-
साह्वयम् ॥ कृष्णाय विदितार्थाय तप्ताऽऽचख्यौ पितुर्वधम् ॥ ८ ॥ तदाकर्ण्येश्वरौ राजन्ननुसृत्य नृलोकताम् ॥ अहो नः परमं कष्टमित्यस्राक्षौ विले-
पतुः ॥ ९ ॥ आगत्य भगवांस्तमात्सभार्यः साग्रजः पुरम् ॥ शतधन्वानमारेभे हन्तुं हर्तुं मणिं ततः ॥ १० ॥ सोऽपि कृष्णोद्यमं ज्ञात्वा भीतः प्राण-
परीप्सया ॥ साहाय्ये कृतवर्माणमयाचत स चाब्रवीत् ॥११॥ नाहमीश्वरयोः कुर्यां हेलनं रामकृष्णयोः ॥ को नु क्षेमाय कल्पेत तयोर्वृजिनमाचरन्

भई बारम्बार मूर्च्छा परेर 'हे तात ! म मारिएँ' भन्दै विलाप गर्न लागिन् । अनि शवलाई तेलमा राखन लगाई ती हस्तिनापुर हिंडिन् । त्यहाँ पुगेर पहिलेदेखि नै सबै वृत्तान्त जान्ने भगवान् कृष्णासित कष्टपूर्वक पिता बधको समचार उनले सुनाइन् ॥ ६-८ ॥ हे राजन् ! त्यो अशुभ समचार सुनेर राम र कृष्ण ईश्वर भएर पनि मनुष्य-लीलाको अनुसरण गर्दै–'हरे ! हामी माथि यो ठूलो विपत्ति आइलाग्यो' भन्दै आँसु टलपल पारी विलाप गर्नलागे ॥ ९ ॥ अनि भगवान् कृष्ण दाजू बलराम र सत्यभामासित हस्तिनापुरबाट द्वारका आए र शतधन्वाई मार्ने र मणि खोस्ने उपाय गर्नलागे ॥ १० ॥ श्रीकृष्णले आफुलाई मार्ने उद्योग गर्दैछन् भन्ने जानेर शतधन्वा डरायो र उसले आफ्नू प्राणरक्षाको निम्ति कृतवर्मालाई भन्यो—॥ ११ ॥ 'हे मित्र ! सुन, म सर्वसमर्थ भगवान् कृष्ण र बलरामको अवहेलना गर्न सक्तिन । उनको अपराध गरेर को जीवित रहन सक्छ ! जोसित द्वेष गरेर पराक्रमी कंसले सहयोगी समेत प्राण दिनुपर्‍यो र जरासन्ध जस्तो शूरवीर प्रतापी पनि सत्रपल्ट युद्धमा हार खायो र

रथहीन भएर फर्कनु परेथ्यो ? ॥ १२ ॥ १३ ॥ कृतवर्माबाट त्यस्तो स्पष्ट उत्तर पाएपछि ऊ अक्रूरसित सहायताको प्रार्थनागर्न गयो, अक्रूरले भने—'भाइ ! ती ईश्वरहरूको बल
जान्नसक्ने कुन पुरुष होला, जो तीसित शत्रुता गरोस् ? ॥ १४ ॥ जो लीलैले सम्पूर्ण विश्वको रचना, पालन र संहार गर्दछन् । जसका चेष्टा विश्वरचयिता ब्रह्माजी पनि
उनकै मायाले मोहित भई कारण जान्न सक्तैनन् र जसले सात वर्षको उमेरमै गिरिराज गोवर्धनलाई उखेलेर, जसरी बालक गोबरे छाता उचाल्छन्, उसै गरी सात दिनसम्म
लीलापूर्वक हातमा उचालेका थिए । ती अद्भुतकर्मा, अनन्त सबैका आदिकारण र कूटस्थ आत्मा श्रीकृष्णलाई म बारम्बार नमस्कार गर्दछु' ॥ १५॥१७ ॥ अक्रूरले
पनि सहायता नदिएपछि शतधन्वाले मणि उनैलाई सुम्पिई दिनको सय योजन जाने घोडामा चढी त्यहाँबाट भाग्यो ॥ १८ ॥ हे राजन् ! अनि राम र कृष्णले
पनि गरुडध्वजा युक्त दिव्य रथमा चढेर वेगवान् अश्वद्वारा आफ्ना ससुरासित द्रोह गरेर उनको हत्या गर्ने त्यो शतधन्वालाई लखेटे ॥ १९ ॥ त्यसै वेला मिथिलापुरीको नजीक यौटा

॥ १२ ॥ कंसः सहानुगोऽपीतो यद्द्वेषात्त्याजितः श्रिया ॥ जरासन्धः सप्तदश संयुगान्विरथो गतः ॥ १३ ॥ प्रत्याख्यातः स चाक्रूरं पार्ष्णिग्राह-
मयाचत ॥ सोऽप्याह को विरुध्येत विद्वानीश्वरयोर्बलम् ॥ १४ ॥ य इदं लीलया विश्वं सृजत्यवति हन्ति च ॥ चेष्टां विश्वसृजो यस्य न विदुर्मोहि-
ताजया ॥ १५ ॥ यः सप्तहायनः शैलमुत्पाट्यैकेन पाणिना ॥ दधार लीलया बाल उच्छिलीन्ध्रमिवार्भकः ॥ १६ ॥ नमस्तस्मै भगवते कृष्णाया-
द्भुतकर्मणे ॥ अनन्तायादिभूताय कूटस्थायात्मने नमः ॥ १७ ॥ प्रत्याख्यातः स तेनापि शतधन्वा महामणिम् ॥ तस्मिन्न्यस्याश्वमारुह्य शतयोज-
नगं ययौ ॥१८॥ गरुडध्वजमारुह्य रथं रामजनार्दनौ ॥ अन्वयातां महावेगैरश्वै राजन्गुरुद्रुहम् ॥ १९ ॥ मिथिलायामुपवने विसृज्य पतितं हयम् ॥
पद्भ्यामधावत्सन्त्रस्तः कृष्णोऽप्यन्वद्रवद्रुषा ॥ २० ॥ पदातेर्भगवांस्तस्य पदातिस्तिग्मनेमिना ॥ चक्रेण शिर उत्कृत्य वाससो व्यचिनोन्मणिम्
॥ २१ ॥ अलब्धमणिरागत्य कृष्ण आहाग्रजान्तिकम् ॥ वृथा हतः शतधनुर्मणिस्तत्र न विद्यते ॥ २२ ॥ तत आह बलो नूनं स मणिः शतध-
न्वना ॥ कस्मिंश्चित्पुरुषे न्यस्तमन्वेषार्थं पुरं व्रज ॥ २३ ॥ अहं विदेहमिच्छामि द्रष्टुं प्रियतमं मम ॥ इत्युक्त्वा मिथिलां राजन्विवेश यदुनन्दनः
॥ २४ ॥ तं दृष्ट्वा सहसोत्थाय मैथिलः प्रीतमानसः ॥ अर्हयामास विधिवदर्हणीयं समर्हणैः ॥ २५ ॥ उवास तस्यां कतिचिन्मिथिलायां समा विभुः ॥

उपवनमा पुगेर शतधन्वाको घोडा पल्टियो । अनि त्यो दुष्ट साह्रै भयभीत भएर घोडा छाडी पैदल नै भाग्यो । अनि श्रीकृष्ण रिसाएर पैदल नै लखेटे ॥ २० ॥ शतधन्वा पैदल नै
भागिरहेको थियो, त्यसैले भगवान् पनि पैदल नै लखेटेर तीक्ष्ण धार हुने चक्रले त्यसको शिर काटिदिए र त्यसको लुगामा मणि खोज्नलागे ॥२१॥ जब त्योसित मणि
पाइएन तब दाजुकहाँ गएर उनले भने—'मैले शतधन्वालाई व्यर्थ मारें, किनकि स्यमन्तक मणि त्योसित छैन' ॥ २२ ॥ बलरामले भन्नुभयो—'सुन—शतधन्वाले अवश्य
पनि त्यो मणि कसै कहाँ नासोरूपमा राखिदियो होला । अब तिमी द्वारका गएर त्यस व्यक्तिको पत्तो लगाऊ ॥२३॥ अहिले म आफ्ना परम मित्र विदेहराजसित भेट गर्न जान्छु'
यति भनेर बलरामजी मिथिलापुरी गए । पूजनीय बलरामलाई आएका देखेर मिथिला नरेशले राजोचित विविध सामग्री द्वारा रामको विधिवत् पूजा गरे ॥ २४ ॥ २५ ॥

महात्मा जनक द्वारा प्रीतिपूर्वक सम्मानित भएर बलराम केही वर्ष मिथिलापुरीमै बस्नुभयो। उसै बेला अवसर पाएर धृतराष्ट्रपुत्र दुर्योधनले उनीसित गदायुद्ध सीखे ॥ २६ ॥ यता आफ्नी प्रियाको प्रिय गर्ने कृष्णले द्वारका आएर प्रियतमा सत्यभामालाई शतधन्वाको वध गरेको र मणि नपाइएको वृत्तान्त सुनाउनु भयो ॥ २७॥ अनि जुन-जुन कर्म मृतकको शुभगतिका लागि आवश्यक हुन्छन्, भगवान्‌ले सत्राजित्‌को ती सबै और्ध्वदैहिक कर्म उनकै सुहृद्‌द्वारा गराए॥ २८ ॥ अक्रूर र कृतवर्माले शतधन्वालाई सत्राजित्‌को वधको निम्ति उचालेका थिए। अतः शतधन्वा मरेको समचार सुनेर सार्‍है डराए र द्वारकाबाट परदेश भागे ॥ २९ ॥ हे राजन् ! कसैको मनाइ छ–अक्रूर गएपछि द्वारकानिवासीमा अनेक कष्ट आए र ती निरन्तर शारीरिक, मानसिक, दैविक र भौतिक तापहरूले सन्तप्त रहन लागे। यी उपद्रवहरूको शान्तिका निम्ति अक्रूरलाई डाकियो ॥ ३० ॥ तर भगवान्‌मा पूर्वोक्त महात्म्य बिर्सेर नै यस्तो कहिएको हो। नभए जसमा सदा मुनिगण निवास गर्दछन्, ती कृष्णभगवान् गएपछि के कहिल्यै

मानितः प्रीतियुक्तेन जनकेन महात्मना ॥ ततोऽशिक्षद्‌गदां काले धार्तराष्ट्रः सुयोधनः ॥ २६ ॥ केशवो द्वारकामेत्य निधनं शतधन्वनः ॥ अप्राप्ति
च मणेः प्राह प्रियायाः प्रियकृद्विभुः ॥ २७ ॥ ततः स कारयामास क्रिया बन्धोर्हतस्य वै ॥ साकं सुहृद्भिर्भगवान्या याः स्यु साम्परायिकाः ॥२८॥
अक्रूरः कृतवर्मा च श्रुत्वा शतधनोर्वधम् ॥ व्यूषतुर्भयवित्रस्तौ द्वारकायाः प्रयोजकौ ॥ २९ ॥ अक्रूरे प्रोषितेऽरिष्टान्यासन्वै द्वारकौकसाम् ॥ शारीरा
मानसास्तापा मुहुर्दैविकभौतिकाः ॥ ३० ॥ इत्यङ्गोपदिशन्त्येके विस्मृत्य प्रागुदाहृतम् ॥ मुनिवासनिवासे किं घटेतारिष्टदर्शनम् ॥ ३१ ॥ देवेऽव-
र्षति काशीशः श्वफल्कायागताय वै ॥ स्वसुतां गान्दिनीं प्रादात्ततोऽवर्षत्स्म काशिषु ॥३२॥ तत्सुतस्तत्प्रभावोऽसावक्रूरो यत्र यत्र ह ॥ देवोऽभिव-
र्षते तत्र नोपतापा न मारिकाः ॥ ३३ ॥ इति वृद्धवचः श्रुत्वा नैतावदिह कारणम् ॥ इति मत्वा समानाय्य प्राहाक्रूरं जनार्दनः ॥ ३४ ॥ पूज-
यित्वाऽभिभाष्यैनं कथयित्वा प्रियाः कथाः ॥ विज्ञाताखिलचित्तज्ञः स्मयमान उवाच ह ॥ ३५ ॥ ननु दानपते न्यस्तस्त्वय्यास्ते शतधन्वना ॥
स्यमन्तको मणिः श्रीमान्विदितः पूर्वमेव नः ॥ ३६ ॥ सत्राजितोऽनपत्यत्वाद्‌गृह्णीयुर्दुहितुः सुताः ॥ दायं निनीयापः पिण्डान्विमुच्यर्णं च शेषितम्
॥ ३७ ॥ तथापि दुर्धरस्त्वन्यस्त्वय्यास्तां सुव्रते मणिः ॥ किन्तु मामग्रजः सम्यङ् न प्रत्येति मणिं प्रति ॥ ३८ ॥ दर्शयस्व महाभाग बन्धूनां

कुनै अनर्थ हुन सक्तछ ? ॥ ३१ ॥ द्वारकाका वयोवृद्धको कथन छ—'पूर्व समयमा एकपल्ट काशीराज्यमा पानी परेन र काशीनरेशले आफ्नू नगरमा आएका महात्मा श्वफल्कसित गान्दिनी नामकी आफ्नी कन्याको विवाह गरिदिए, अनि त्यहाँ पानी पर्‍यो ॥ ३२ ॥ तिनका पुत्र अक्रूरको पनि त्यस्तै प्रभाव छ। ती जहाँ बस्तछन्, त्यहाँ खुब पानी पर्छ र कुनै कष्ट या महामारी आदि उपद्रव त्यस स्थानमा हुँदैनन्' ॥ ३३ ॥ वृद्धजनको कुरा सुनेर भगवान्‌ले यो कुरा जानेर पनि—यो उपद्रवको मुख्य कारण केवल अक्रूरको अनुपस्थिति मात्र होइन—तैपनि अक्रूरलाई डाकेर तीसित कुरा गर्नुभयो ॥ ३४ ॥ सबैका मनको कुरा जान्ने भगवान् कृष्णले अक्रूरको सत्कार गरेर उनीसित निकै प्रिय गर्दै भन्नुभयो—॥ ३५ ॥ 'हे दानपते ! शतधन्वाले तिमीलाई स्यमन्तक मणि सुम्पेको थियो र मणि तिमीसितै छ–यो कुरा म पहिल्यैदेखि राम्ररी जान्दथें

॥३६॥ त्यागितृका छोरा छैनन् । अतः तिनकी छोरीका छोराले तिलोदक र पिण्डदान गरेर उनको ऋणतिरी रहेको धन पाउन सक्छन् ॥३७॥ तर तिमीबाहेक अन्य कसैले पनि त्यो राख्न कठिन छ । तिमी सदा उत्तम व्रतको पालन गर्दछौ । अतः त्यो मणि तिमीसित रहनुपर्दछ । तर मेरा दाजु बलरामलाई मणिको सम्बन्धमा मेरा कुराको विश्वास छैन । अतः हे महाभाग ! तिमी त्यो मणि देखाएर मेरा बन्धुहरूको सन्देह निवारण गरिदेऊ । त्यस मणिको प्रतापले नै तिमीकहाँ सुवर्णमयी वेदी हुने अखण्ड यज्ञ भइरहन्छन् ।' यसरी सामनीतिले बुझाएपछि अक्रूरले लुगामा बेरेको सूर्य सदृश देदीप्यमान मणि झिकेर भगवान् श्रीकृष्णलाई सुम्पिदिए ॥ ३८-४० ॥ अनि भगवान्ले स्यमन्तक मणि आफ्ना ज्ञाति-बान्धवलाई देखाई आफ्नू, कलङ्क मेटे र मणि फेरि अक्रूरलाई नै फर्काइदिए ॥ ४१ ॥ जो प्राणी विष्णु भगवान्को पराक्रमले भरिएको यो पापनाशक र मङ्गलमय आख्यान सुन्छन् र पढ्छन् स्मरण गर्दछन्, ती सबै पापबाट मुक्त भएर शान्ति पाउँदछन् ॥४२॥ इति श्रीमद्भागवते महापुराणे उत्तरार्धे पं० गौरीशंकर'वशिष्ठ'कृत नेपाली भाषाटीकायां सप्तपञ्चाशतमोऽध्याय॥५७॥

शान्तिमावह ॥ अव्युच्छिन्नमखास्तेऽद्य वर्तन्ते रुक्मवेदयः ॥३६॥ एवं साममिरालब्धः श्वफल्कतनयो मणिम् ॥ आदाय वाससाऽऽच्छन्नं ददौ सूर्यसमप्रभम् ॥ ४० ॥ स्यमन्तकं दर्शयित्वा ज्ञातिभ्यो रज आत्मनः ॥ विमृज्य मणिना भूयस्तस्मै प्रत्यर्पयत्प्रभुः ॥ ४१ ॥ यस्त्वेतद्भगवत ईश्वरस्य विष्णोर्वीर्याढ्यं वृजिनहरं सुमङ्गलं च ॥ आख्यानं पठति शृणोत्यनुस्मरेद्वा दुष्कीर्तिदुरितमपोह्य याति शान्तिम् ॥ ४२ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे स्यमन्तकोपाख्याने सप्तपञ्चाशत्तमोऽध्यायः ॥ ५७ ॥

श्रीशुक उवाच ॥ एकदा पाण्डवान्द्रष्टुंप्रतीतान्पुरुषोत्तमः ॥ इन्द्रप्रस्थं गतः श्रीमान्युयुधानादिभिर्वृतः ॥१॥ दृष्ट्वा तमागतं पार्था मुकुन्दमखिलेश्वरम्॥ उत्तस्थुर्युगपद्वीराः प्राणं मुख्यमिवागतम् ॥२॥ परिष्वज्याच्युतं वीरा अङ्गसङ्गहतैनसः ॥ सानुरागस्मितं वक्त्रं वीक्ष्य तस्य मुदं ययुः ॥३॥ युधिष्ठिरस्य भीमस्य कृत्वा पादाभिवन्दनम् ॥ फाल्गुनं परिरभ्याथ यमाभ्यां चाभिवन्दितः ॥ ४ ॥ परमासन आसीनं कृष्णा कृष्णमनिन्दिता ॥ नवोढा व्रीडिता किञ्चिच्छनैरेत्याभ्यवन्दत ॥ ५ ॥ तथैव सात्यकिः पार्थैः पूजितश्चाभिवन्दितः ॥ निषसादासनेऽन्ये च पूजिताः पर्युपासतः ॥ ६ ॥ पृथां समागत्य

( भगवान कृष्णका अन्यान्य विहाह ) श्रीशुकदेव भन्दछन्—हे राजन ! एक दिन श्रीकृष्ण भगवान् सत्यकि आदि यादवहरू लिएर पाण्डवलाई हेर्न गएर भगवान् कृष्णलाई देख्नासाथ वीर पाण्डव जुरुक्क उठे–जस्तै कुनै मृतकको प्राण आउनाले त्यसका अचेत इन्द्रियसचेत भएका हुन् । तिनले अच्युतलाई अङ्कमाल गरे । भगवान्को अङ्गसङ्गले पाण्डवका सबै पाप पखालिएर उनको मन्दहास्ययुक्त मुखारविन्द देखेर ती प्रसन्न भए ॥ १-३ ॥ भगवान्ले युधिष्ठिर र भीमसेनको पाउ छोएर प्रणाम गरे, सखा अर्जुनलाई अङ्कमाल गरेर नकुल र सहदेवले कृष्णका चरण-वन्दना गरे । अनि नवविवाहिता सुन्दरी द्रौपदीले लज्जापूर्वक बिस्तार–बिस्तार आएर सिंहासनमा विराजमान श्रीकृष्णचन्द्रलाई प्रणाम गरिन् । यसरी पाण्डवसित सम्मानित र अभिवादित भएर सात्यकि पनि आसनमा बसेर अन्य यादव पनि यथायोग्य सत्कृत भएर बसे ॥ ४-६ ॥ अनि भगवान्ले

कुन्तीकहाँ गएर उनलाई प्रणाम गरे । कुन्तीले स्नेहवश नेत्रमा जल भरी भगवान्‌लाई घाँटीमा टाँसिन् र आफ्ना बन्धु-बान्धवको क्षेम-कुशल सोधिन् । भगवान्‌ले पनि फुपूसित उनका र बुहारीहरूका कुशल सोधे । प्रेमका उद्वेगले अवरुद्ध घाँटी र आँखामा प्रेमाश्रु भरी कुन्ती पहिलेका क्लेश सम्झन्दै भक्तका क्लेश मेट्नको निम्ति त्यसरी आउने भएका कृष्णसित भनिन्—हे कृष्ण ! जब तिमीले हामी स्वजनको सम्झना गरेर मेरो भाई अक्रूरलाई हाम्रो कुशल जान्न पठाएका थियौ उसै, बेला हामी सबै सकुशल भइसकेका थियौं र तिमीले सनाथ पारिदिएका थियौ ॥ ७-९ ॥ तिमी जगत्‌का सुहृद् र आत्मा हौ तिमीलाई आफ्नू बिरानूको भ्रम छैन तापनि जो सदा तिम्रो स्मरण गर्दछन्, तिनको हृदयमा सदैव बसेर तिमी उनको कष्ट निवारण गर्दछौ ॥१०॥ युधिष्ठिरले भने–'हे अधीश्वर ! मलाई थाहा छैन कि हामीले यस्तो कुन पुण्य गरेका छौं, जसले योगेश्वरलाई पनि निकै ठूलो कष्टले देखिने हजुरले हामी कुटुम्बीहरूलाई दर्शन दिनुभयो ॥ ११ ॥ यसरी भगवान् कृष्ण युधिष्ठिर द्वारा सम्मानित भएर इन्द्रप्रस्थ निवासीहरूका नेत्रलाई आनन्दित पार्दै वर्षा ऋतुका केही

कृताभिवादनस्तयातिहार्द्रार्द्रदृशाऽभिरम्भितः ॥ आपृष्टवांस्तांकुशलं सहस्नुषां पितृष्वसारं परिपृष्टबान्धवः ॥७॥ तमाह प्रेमवैक्लव्यरुद्धकण्ठाश्रुलोचना ॥
स्मरन्ती तान्बहून्क्लेशान्क्लेशापायात्मदर्शनम् ॥८॥ तदैव कुशलं नोऽभूत्सनाथास्ते कृता वयम् ॥ ज्ञातीन्नः स्मरता कृष्ण भ्राता मे प्रेषितस्त्वया
॥ ९॥ न तेऽस्ति स्वपरभ्रान्तिर्विश्वस्य सुहृदात्मनः ॥ तथापि स्मरतां शश्वत्क्लेशान्हंसि हृदि स्थितः ॥१०॥ युधिष्ठिर उवाच ॥ किं न आचरितं श्रेयो
न वेदाहमधीश्वर ॥ योगेश्वराणां दुर्दर्शो यन्नो दृष्टः कुमेधसाम् ॥११॥ इति वै वार्षिकान्मासान्राज्ञा सोऽभ्यर्थितः सुखम् ॥ जनयन्नयनानन्दमिन्द्रप्रस्थौ-
कसां विभुः ॥१२॥ एकदा रथमारुह्य विजयी वानरध्वजम् ॥ गाण्डीवं धनुरादाय तूणौ चाक्षयसायकौ ॥ १३ ॥ साकं कृष्णेन सन्नद्धो विहर्तुं गहनं
वनम् ॥ बहुव्यालमृगाकीर्णं प्राविशत्परवीरहा ॥ १४ ॥ तत्राविध्यच्छरैर्व्याघ्रान्सूकरान्महिषान्रुरून् ॥ शरभान्गवयान्खड्गान्हरिणान् शशशल्लकान्
॥ १५ ॥ तान्निन्युः किङ्करा राज्ञे मेध्यान्पर्वण्युपागते ॥ तृट्परीतः परिश्रान्तो बीभत्सुर्यमुनामगात् ॥ १६ ॥ तत्रोपस्पृश्य विशदं पीत्वा वारि
महारथौ ॥ कृष्णौ ददृशतुः कन्यां चरन्तीं चारुदर्शनाम् ॥ १७ ॥ तामासाद्य वरारोहां सुद्विजां रुचिराननाम् ॥ पप्रच्छ प्रेषितः सख्या फाल्गुनः
प्रमदोत्तमाम् ॥ १८ ॥ का त्वं कस्यासि सुश्रोणि कुतोऽसि किं चिकीर्षसि ॥ मन्ये त्वां पतिमिच्छन्ती सर्वं कथय शोभने ॥ १९ ॥ कालिन्द्युवाच ॥

महीना त्यहीं बस्नुभयो ॥ १२ ॥ एकपल्ट वीरवर अर्जुन आफ्नू गाण्डीव धनु र अक्षय दुइ ठोका लिएर कवच धारण गरी वानर-चिन्हले अंकित ध्वजायुक्त रथमा भगवान् कृष्णसित बसेर अनेक सिंह र मृगादिले भरिएका यौटा वनमा शिकार खेल्न गए ॥ १३-१४ ॥ त्यहाँ अनेक व्याघ्र, शूकर, राँगा, कृष्णमृग, शरभ, गैडा, हरिण, खरायो र दुम्सो आदि जीवलाई उनले आफ्ना बाणले मारे ॥ १५ ॥ तीमध्ये कति यज्ञयोग्य पशुलाई तिनका सेवक पर्वकाल उपस्थित भएपछि युधिष्ठिरकहाँ लगे । त्यस बेला अर्जुन शिकारको परिश्रमले थाकेका थिए र प्यास लागिरहेका थिया । अतः ती यमुनातटमा गए । यहाँ कृष्णार्जुन दुवैले हात-पाउ धोएर यमुनाको निर्मल जल पिए । त्यहीं उनलाई यमुनाको तटमा डुलिरहेकी यौटी सुन्दरी कन्या देखिइन् ॥ १६-१७ ॥ आफ्ना सखा कृष्णले पठाएपछि वीरवर अर्जुनले राम्रा उरु सुन्दर दाँत एवं राम्रो मुख हुने यौटी रमणीकहाँ गएर सोधे—

॥ १८ ॥ 'हे सुश्रोणी ! तिमी को हौ ? कसरी छोरी हौ ? कहाँबाट आएकी र के गर्न इच्छा छ ? मेरो अनुमानले त तिमी यहाँ आएर आफ्नू योग्य पति खोजिरहेकी छौ। अब तिमी आफ्नु सबै वृत्तान्त भन। कालिन्दीले भनिन्–'म भगवान् सूर्यकी छोरी हुँ र श्रेष्ठतम वरदायक विष्णु भगवान्‌लाई आफ्नू पति बनाउने इच्छाले यहाँ बसेर कठोर तपस्या गरिरहेकी छु ॥ १९ ॥२०॥ हे वीर ! लक्ष्मीका आश्रयस्थान श्रीकृष्ण भगवान् बाहेक म अरु कसैलाई वरण गर्न सक्दिन। ती अनाथका नाथ कृष्ण भगवान् ममाथि प्रसन्न होउन् ॥२१॥ मेरो नाम कालिन्दी हो। जबसम्म मलाई अच्युतको दर्शन हुँदैन, तबसम्म म यमुनाजलमा आफ्ना पिताले बनाइदिएको विशाल भवनमै बस्तछु ॥ २२ ॥ अनि पार्थले सबै वृत्तान्त भगवान्‌लाई सुनाए। उनी त सबै कुरा पहिलेदेखि नै जान्दथे। अतएव कालिन्दीको नजीकै गए र उनलाई आफ्नू रथमा बसालेर *सत्यप्रेमी महाराज युधिष्ठिरकहाँ लगे ॥ २३ ॥

अहं देवस्य सवितुर्दुहिता पतिमिच्छती ॥ विष्णुं वरेण्यं वरदं तपः परममास्थिता ॥ २० ॥ नान्यं पतिं वृणे वीर तमृते श्रीनिकेतनम् ॥ तुष्यतां मे स भगवान्मुकुन्दोऽनाथसंश्रयः ॥२१॥ कालिन्दीति समाख्याता वसामि यमुनाजले ॥ निर्मिते भवने पित्रा यावदच्युतदर्शनम् ॥२२॥ तथाऽवदद्गुडाकेशो वासुदेवाय सोऽपि ताम् ॥ रथमारोप्य तद्विद्वान्धर्मराजमुपागमत् ॥ २३ ॥ यदैव कृष्णः सन्दिष्टः पार्थानां परमाद्भुतम् ॥ कारयामास नगरं विचित्रं विश्वकर्मणा ॥ २४ ॥ भगवांस्तत्र निवसन्स्वानां प्रियचिकीर्षया ॥ आग्नये खाण्डवं दातुमर्जुनस्यास सारथिः ॥ २५ ॥ सोऽग्निस्तुष्टो धनुरदाद्धयाञ्छ्वेतान् रथं नृप ॥ अर्जुनायाक्षयौ तूणौ वर्म चाभेद्यमस्त्रिभिः ॥ २६ ॥ मयश्च मोचितो वह्नेः सभां सख्य उपाहरत् ॥ यस्मिन्दुर्योधनस्यासीज्जलस्थलदृशिभ्रमः ॥ २७ ॥ स तेन समनुज्ञातः सुहृद्भिश्चानुमोदितः ॥ आययौ द्वारकां भूयः सात्यकिप्रमुखैर्वृतः ॥ २८ ॥ अथोपयेमे

पाण्डवले प्रार्थना गरेपछि भगवान् कृष्णले तिनीहरू बस्नको लागि यौटा अद्भुत र विचित्र नगर बनाए ॥ २४ ॥ त्यसै गरी आफ्ना स्वजनको हित गर्न भगवान् श्रीकृष्ण त्यहाँ धेरै दिनसम्म बसे। उसै बेला अग्निलाई खाण्डव वन दिलाउनको लागि इन्द्र र पार्थको संग्राममा ती अर्जुनका सारथी बने ॥ २५ ॥ खाण्डवदाहले प्रसन्न अग्निले अर्जुनलाई गाण्डीव धनु, चार सेता अश्व, दुइ अक्षय बाण भएका ठोक्रा र अस्त्रधारी द्वारा अभेद्य कवच दिए ॥ २६ ॥ खाण्डवदाहमा अर्जुनले मयदानवलाई बचाएका थिए। त्यसैको साटो तिनले उनसँग मित्रता गरेर उनको लागि यौटा यस्तो भवन बनायो, जसमा दुर्योधनलाई जलमा स्थल र स्थलमा जलको भ्रम भएको थियो ॥ २७ ॥ अनि सखा विजयको आज्ञा र अन्यान्य बन्धुको अनुमति लिएर श्रीकृष्ण, सात्यकि आदि यादवसित फेरि द्वारकापुरी फर्किए ॥ २८ ॥ यहाँ आएर विवाहको पुनीत नक्षत्र उपस्थित भएपछि स्वजनहरूलाई परमानन्द तथा

* दृष्टान्त (सत्य प्रेमी) इङ्लैंडको अन्यायी राजा चार्ल्सको राज्य-प्रबन्धले बाक्क भएर तिनको विरुद्ध प्रजासत्तात्मक आन्दोलन चल्दै थियो र राजा पदभ्रष्ट गरिएका थिए। त्यस काममा धुन महापुरुषले अधि बढेर भाग लिएका थिए, तिनमा 'पीम नामका यौटा सद्गृहस्थ निकै सत्यप्रेमी थिए।' एक पल्ट पार्लियामेण्टमा उनले केही भन्नु थियो, तर सत्य भन्नाले उनको निकै हानि हुन्थ्यो। अतएव तिनका मित्रगणले सल्लाह दिए–'यस्तो मौकामा ईमानदार बन्नाले कुनै लाभ छैन। केही पनि नभनिकन मनैमैं गरेर मौन रहनु नै बुद्धिमत्ता हो। तर वीर पुरुषका निम्ति त सत्य नै सबैभन्दा असलो नीति रहन्छ। पीमले आफ्ना हितैषीहरूको सल्लाहलाई लात्ताएर भने–'मेरो हानि भए होस्, तर सत्यको हानि भविष्य हुन सक्तैन। यसै निम्ति म सत्य बोल्नेछु। जे हुनु छ, त्यो होस्।'

मङ्गल प्रदान गर्दै उनले कालिन्दीसित विधिपूर्वक विवाह गरे ॥ २९ ॥ अवन्तिदेशका राजा विन्द र अनुविन्द दुर्योधनका अधीन सामन्त थिए। उनले स्वयंवरमा श्रीकृष्णचन्द्रलाई पतिरूपमा रोज्न खोज्ने आफ्नी बहिनीलाई छेकिदिएका थिए ॥ ३० ॥ हे राजन् ! तर आफ्नी फुपू राजाधिदेवीकी कन्या मित्रविन्दालाई कृष्णले सबै राजाहरूले देख्दा-देख्दा हठात् हरण गरे ॥ ३१ ॥ हे राजन् ! यसै गरी कोशल देशका नग्नजित् नामका धार्मिक राजा थिए। तिनकी नाग्नजिती सत्या नामकी यौटी पुत्री थिइन् ॥ ३२ ॥ तीखा सींग हुने दुर्दम्य र वीरको गन्ध पनि सहन नसक्ने सात गोरुलाई जित्न नसक्नाले कोही पनि राजा उनीसित विवाहको साहस गर्न सकेका थिएनन् ॥ ३३ ॥ यो समाचार सुनेर–त्यो कन्या गोरुलाई जित्नेले नै पाउन सक्छ, भगवान् कृष्ण साथमा निकै सेना लिएर कोशलपुरी पुगे ॥ ३४ ॥ कोशलनरेश महाराज नग्नजित्ले प्रसन्न भएर उनको प्रत्युत्थान र आसनादि विविध सामग्रीले भगवान्को सत्कार गरे र भगवान्ले पनि उनको अभिनन्दन सादर स्वीकार गर्नुभयो ॥ ३५ ॥ राजकन्या सत्याले आफ्नू अभिलषित वर लक्ष्मीपति कृष्णलाई देखेर

कालिन्दीं सुपुण्यर्त्वर्क्ष ऊर्जिते ॥ वितन्वन्परमानन्दं स्वानां परममङ्गलम् ॥ २९ ॥ विन्दानुविन्दावावन्त्यौ दुर्योधनवशानुगौ ॥ स्वयम्वरे स्वभगिनीं कृष्णे सक्तां न्यषेधताम् ॥ ३० ॥ राजाधिदेव्यास्तनयां मित्रविन्दां पितृष्वसुः ॥ प्रसह्य हृतवान्कृष्णो राजन्राज्ञां प्रपश्यताम् ॥ ३१ ॥ नग्नजिन्नाम कौशल्य आसीद्राजाऽतिधार्मिकः ॥ तस्य सत्याऽभवत्कन्या देवी नाग्नजिती नृप ॥ ३२ ॥ न तां शेकुर्नृपा वोढुमजित्वा सप्त गोवृषान् ॥ तीक्ष्णशृङ्गान्सुदुर्धर्षान्वीरगन्धासहा खलान् ॥ ३३ ॥ तां श्रुत्वा वृषजिल्लभ्यां भगवान्सात्वतां पतिः ॥ जगाम कौशल्यपुरं सैन्येन महता वृतः ॥ ३४ ॥ स कोशलपतिः प्रीतः प्रत्युत्थानासनादिभिः ॥ अर्हणेनापि गुरुणा पूजयन्प्रतिनन्दितः ॥ ३५ ॥ वरं विलोक्याभिमतं समागतं नरेन्द्रकन्या चकमे रमापतिम् ॥ भूयादयं मे पतिराशिषोऽमलाः करोतु सत्या यदि मे धृतो व्रतैः ॥ ३६ ॥ यत्पादपङ्कजरजः शिरसा बिभर्ति श्रीरब्जजः सगिरिशः सहलोकपालैः ॥ लीलातनूः स्वकृतसेतुपरीप्सयेशः काले दधत्स भगवान्मम केन तुष्येत् ॥ ३७ ॥ अर्चितं पुनरित्याह नारायण जगत्पते ॥ आत्मानन्देन पूर्णस्य करवाणि किमल्पकः ॥ ३८ ॥ श्रीशुक उवाच ॥ तमाह भगवान्हृष्टः कृतासनपरिग्रहः ॥ मेघगम्भीरया वाचा सस्मितं कुरुनन्दनः ॥ ३९ ॥ श्रीभगवानुवाच ॥ नरेन्द्र याच्ञा कविभिर्विगर्हिता राजन्यबन्धोर्निजधर्मवर्तिनः ॥ तथापि याचे तव सौहृदेच्छया कन्यां त्वदीयां

मनमनै भनिन्–यदि मैले कुनै व्रत नियम गरेकी भए यिनै मेरा पति होउन् र भगवान् मेरो शुद्ध कामना सत्य पारून् ॥ ३६ ॥ जसका चरण कमलको रज लक्ष्मी, ब्रह्मा, शिव तथा अन्य लोकपाल समेत आफ्नू मस्तकमा धारण गर्दछन् र आफुले बाँधेका धर्म-मर्यादाको रक्षाका लागि जो धर्मह्रासको बेला लीलावतार धारण गर्दछन्, ती परमपुरुष भगवान् ममाथि कसरी प्रसन्न हुनन् ? ॥ ३७ ॥ यता कृष्णको सत्कार भइसकेपछि राजा नग्नजित् भन्दछन्–'हे नारायण ! हे जगत्पते ! हजुर आत्मानन्द हुनुहुन्छ। म तुच्छ मनुष्य के सेवा गर्नसक्छु ?' ॥ ३८ ॥ शुकदेव भन्नुहुन्छ––हे कुरुनन्दन ! आसनादि ग्रहण गरिसकेपछि भगवान् कृष्णचन्द्र प्रसन्न भएर मेघ झैं गम्भीर वाणीमा बोल्नुभयो ॥ ३९ ॥ श्रीभगवान भन्नुहुन्छ––हे राजन् ! आफ्नू धर्ममा रहने क्षत्रियको निम्ति विद्वान्ले कहीं पनि माग्न निषेध गरेका छन्, तापनि हजुरसित सम्बन्ध जोर्न इच्छाले म आज हजुरकी कन्या माग्दछु, किन्तु

हामीकहाँ कन्याको कुनै मूल्य दिइन्न ॥ ४० ॥ राजा नग्नजित् बोले—हे नाथ ! जसको अङ्गमा निरन्तर लक्ष्मीको निवास रहिरहन्छ, ती एकमात्र गुणका खानी हजुरभन्दा ठूलो मेरी कन्याको निम्ति अरु कुन राम्रो वर हुनसक्छ ? ॥ ४१ ॥ तर हे सात्वतर्षभ ! मैले कन्याको वर छान्नका लागि बलको परीक्षार्थ यौटा साम् प्रतिज्ञा गरिराखेको छु ॥४२ ॥ हे वीर ! मसित यी दुर्दमनीय र नसधाएका सात गोरू छन् । यिनले अनेक राजकुमारको अङ्ग-भङ्ग पारेर असफल तथा उत्साहहीन तुल्याइ सकेका छन् ॥ ४३ ॥ हे यदुनन्दन ! यदि हजुर यिनलाई आफ्नू वशमा पार्न सक्नुहुन्छ भने हे लक्ष्मीपते ! हजुर मेरी कन्याको इच्छित वर हुन सक्नुहुन्छ ॥ ४४ ॥ राजाको प्रतिज्ञा सुनेर कृष्णले कम्मर कसी आफ्नू सात रुप धारण गरेर ख्याल-ख्यालमै सातै गोरूलाई नाथिदिए ॥ ४५ ॥ यसले तिनको दर्प धूलो भयो र ती तेजहीन भए । अनि कृष्णले ती सबैलाई डोरीले बाँधेर जस्तै बालक काठका गोरू तान्छन्, त्यसै गरी ताने ॥ ४६ ॥ अनि राजा नग्नजित् छक्क परेर प्रसन्न भई आफ्नी कन्या श्रीकृष्णलाई सुम्पे र समर्थ भगवान्‌ले पनि आफ्नू अनुरूप गुणवती

न हि शुल्कदा वयम् ॥ ४० ॥ राजोवाच ॥ कोऽन्यस्तेऽभ्यधिको नाथ कन्यावर इहेप्सितः ॥ गुणैकधाम्नो यस्याङ्गे श्रीर्वसत्यनपायिनी ॥ ४१ ॥ किन्त्वस्माभिः कृतः पूर्वं समयः सात्वतर्षभ ॥ पुंसां वीर्यपरीक्षार्थं कन्यावरपरीप्सया ॥ ४२ ॥ सप्तैते गोवृषा वीर दुर्दान्ता दुरवग्रहाः ॥ एतैर्भग्नाः सुबहवो भिन्नगात्रा नृपात्मजाः ॥ ४३ ॥ यदीमे निगृहीताः स्युस्त्वयैव यदुनन्दन ॥ वरो भवानभिमतो दुहितुर्मे श्रियः पते ॥ ४४ ॥ एवं समयमाकर्ण्य बद्ध्वा परिकरं प्रभुः ॥ आत्मानं सप्तधा कृत्वा न्यगृह्णाल्लीलयैव तान् ॥ ४५ ॥ बद्ध्वा तान्दामभिः शौरिर्भग्नदर्पान्हतौजसः ॥ व्यकर्षल्लीलया बद्धान्बालो दारुमयान्यथा ॥४६॥ ततः प्रीतः सुतां राजा ददौ कृष्णाय विस्मितः ॥ तां प्रत्यगृह्णाद्भगवान्विधिवत्सदृशीं प्रभुः ॥ ४७ ॥ राजपत्न्यश्च दुहितुः कृष्णं लब्ध्वा प्रियं पतिम् ॥ लेभिरे परमानन्दं जातश्च परमोत्सवः ॥ ४८ ॥ शङ्खभेर्यानका नेदुर्गीतवाद्यद्विजाशिषः ॥ नरा नार्यः प्रमुदिताः सुवासःस्रगलङ्कृताः ॥ ४९ ॥ दशधेनुसहस्राणि पारिबर्हमदाद्विभुः ॥ युवतीनां त्रिसाहस्रं निष्कग्रीवसुवाससाम् ॥५०॥ नवनागसहस्राणि नागाच्छतगुणान्रथान् ॥ रथाच्छतगुणानश्वानश्वाच्छतगुणान्नरान् ॥ ५१ ॥ दम्पती रथमारोप्य महत्या सेनया वृतौ ॥ स्नेहप्रक्लिन्नहृदयो यापयामास कोशलः ॥ ५२ ॥ श्रुत्वैतद्रुरुधुर्भूपा नयन्तं पथि कन्यकाम् ॥ भग्नवीर्याः सुदुर्मर्षा यदुभिर्गोवृषैः पुरा ॥ ५३ ॥ तानस्यतः

भार्यालाई विधिवत् स्वीकार गरे ॥ ४७ ॥ आफ्नी कन्याको योग्य पति श्रीकृष्ण प्राप्त भएको देखेर राजपत्नीलाई पनि अपार हर्ष भयो । त्यस बेला सर्वत्र ठूलो उत्सव मनाइयो ॥४८॥ उत्सवको उपलक्ष्यमा शङ्ख, भेरी, ढोल आदि बाजा बज्न लागे । सबैतिर नाच-गान आरम्भ भयो । ब्राह्मणहरू आशीर्वाद दिन लागे र नगरका नर-नारीहरू अति आनन्दित भएर राम्रा लुगा र माला आदिले अलंकृत भए ॥ ४९ ॥ राजा नग्नजितले दस हजार गाई, राम्रा लुगा तथा गहना लगाएका तीन हजार दासी, नौ हजार हात्ती, हात्ती भन्दा सय गुना (नौ लाख) रथ, रथका सयगुना अर्थात् नौ करोड घोडा, घोडाभन्दा सयगुना अर्थात् नौ अरब सेवक दाइजो दिए ॥५०॥५१॥ कोशलपति राजा नग्नजित्‌ले छोरी-ज्वाइँलाई रथमा बसालेर धेरै सेनासहित स्नेहार्द्र हृदयले बिदा गरे ॥ ५२ ॥ यो समचार सुनेर अनेक देशका राजाहरूले जसको पराक्रम यादव र गोरूहरूले नष्ट पारिदिएका थिए, भगवान्‌का

विजय सहन नसकेर कन्या लिएर जाँदा उनलाई बाटोमा छेके ॥ ५३ ॥ अनि बाणको वर्षा गर्दै ती राजागणलाई आफ्ना बन्धुको प्रिय गर्ने गाण्डीवधारी अर्जुनले, स-साना पशुलाई सिंह जसरी भगाउँछ, उसै गरी चूट-चाट पारेर यता-उता पारिदिए ॥ ५४ ॥ यदुश्रेष्ठ भगवान् देवकीनन्दन ठूलो दाइजो र शीलवती पत्नी सत्यासित द्वारकापुरी पुगे र त्यहीं बसेर आनन्द भोग्नलागे ॥ ५५ ॥ त्यसपछि श्रीकृष्णले आफ्नो फुपूकी छोरी केकयदेशीया भद्रासित विवाह गरे, जसलाई उनका दाजू सन्तर्दनादिले स्वयं विधिपूर्वक भगवान्‌लाई अर्पण गरिदिएका थिए ॥ ५६ ॥ त्यसपछि जसरी गरुडले अमृत खोसेर ल्याएथे, उसै गरी श्रीकृष्णले मद्रराजकी कन्या लक्ष्मणालाई एक्लै गएर उसको स्वयंवरबाट हरेर ल्याए ॥ ५७ ॥ ती बाहेक भगवान् कृष्णका अरू पनि ती हजारौं पत्नीहरू थिए, जुन सुन्दरीहरूलाई उनले भौमासुरलाई मारेर उसको बन्दीगृहबाट मुक्त पारेर ल्याएका थिए ॥ ५८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायामष्टपञ्चाशत्तमोऽध्यायः ॥ ५८ ॥

शरव्रातान्बन्धुप्रियकृदर्जुनः ॥ गाण्डीवी कालयामास सिंहः क्षुद्रमृगानिव ॥ ५४ ॥ पारिबर्हमुपागृह्य द्वारकामेत्य सत्यया ॥ रेमे यदूनामृषभो भगवान्देवकीसुतः ॥ ५५ ॥ श्रुतकीर्तेः सुतां भद्रामुपयेमे पितृष्वसुः ॥ कैकेयीं भ्रातृभिर्दत्तां कृष्णः सन्तर्दनादिभिः ॥ ५६ ॥ सुतां च मद्राधिपतेर्लक्ष्मणां लक्षणैर्युताम् ॥ स्वयंवरे जहारैकः स सुपर्णः सुधामिव ॥ ५७ ॥ अन्याश्चैवंविधा भार्याः कृष्णस्यासन्सहस्रशः ॥ भौमं हत्वा तन्निरोधादाहताश्चारुदर्शनाः ॥ ५८ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे अष्टमहिष्युद्वाहो नामाष्टपञ्चाशत्तमोऽध्यायः ॥ ५८ ॥

राजोवाच ॥ यथा हतो भगवता भौमो येन च ताः स्त्रियः ॥ निरुद्धा एतदाचक्ष्व विक्रमं शार्ङ्गधन्वनः ॥१॥ श्रीशुक उवाच ॥ इन्द्रेण हृतछत्रेण हृतकुंडलबन्धुना ॥ हृतमराद्रिस्थानेन ज्ञापितो भौमचेष्टितम् ॥ सभार्यो गरुडारूढःप्राग्ज्योतिषपुरं ययौ ॥२॥ गिरिदुर्गैः शस्त्रदुर्गैर्जलाग्न्यनिलदुर्गमम् ॥ मुरपाशायुतैर्घोरैर्दृढैः सर्वत आवृतम् ॥३॥ गदया निर्बिभेदाद्रीञ्छस्त्रदुर्गाणि सायकैः ॥ चक्रेणाग्निं जलं वायुं मुरपाशांस्तथाऽसिना ॥४॥ शङ्खनादेन यन्त्राणि हृदयानि मनस्विनाम् ॥ प्राकारं गदया गुर्व्या निर्बिभेद गदाधरः ॥ ५ ॥ पाञ्चजन्यध्वनिं श्रुत्वा युगान्ताशनिभीषणम् ॥ मुरः शयान

( श्रीकृष्णको भौमासुरलाई मारेर सोह्र हजार एक सय राजकन्यासित विवाह )—यति कथा सुनिसकेर राजा परीक्षितले सोधे—हे भगवन् ! श्रीकृष्णले भौमासुरलाई जसले हजारौं स्त्रीलाई ह्यालखानमा थुनेको थियो, किन र कसरी मारे ? शार्ङ्गधन्वा भगवान्‌को यो चरित्र मलाई सुनाउनोस् ॥ १ ॥ शुकदेव भन्नलागे—हे राजन् ! भौमासुर द्वारा वरुणको छत्र, माता अदितिको कुण्डल र मेरुपर्वत माथिको देवगणको मणिपर्वत स्थान खोसिएपछि देवराज इन्द्रले द्वारकापुरी गएर त्यसका सबै चेष्टा कृष्णलाई सुनाए, अनि भगवान् आफ्नी भार्या सत्यभामा सहित गरुडमा चढेर प्राग्ज्योतिषपुर गए ॥ २ ॥ त्यो नगर गिरि-दुर्ग, शस्त्र दुर्ग, जल, अग्नि र वायुको आवरणले दुर्गम थियो र त्यो सबैतिरबाट बलवान् मुरदैत्यको दस हजार बलियो पाशले घेरिएको थियो ॥ ३ ॥ भगवान् त्यहाँ पुग्नासाथ पर्वतहरू आफ्ना गदाले, शस्त्रदुर्ग बाणले, अग्नि, जल र वायुका समस्त आवरणहरू आफ्नो सुदर्शन चक्रले, मुरदैत्यका पाशहरू खड्गले, यन्त्र र वीरहरूका हृदय शङ्खनादले र नगरका परखालहरू आफ्नो ठूलो गदाले चूलो-पीठो पारी भाँचिदिए ॥४॥५॥ श्रीकृष्णको पाँचजन्य

शङ्खको प्रलयकालीन वज्र झैं भयानक ध्वनि सुनेर जलभित्र सुतेको पाँच मस्तक हुने मुर दैत्य पानीबाट बाहिर निस्क्यो ॥ ६ ॥ हे राजन् ! त्यो दैत्य प्रलयकालका सूर्य र अग्नि झैं प्रचण्ड तेजोमय र कठिनले देखिने योग्य थियो। त्रिशूल उचालेर आफ्ना पाँचै मुखले तीनलोक निल्ला झैं यस प्रकार ठूलो वेगले सर्पसमान प्रभुका वाहन गरुडतिर झम्टियो ॥ ७ ॥ उसले फुर्तिसाथ गरुडलाई ताकेर त्रिशूल फ्याँक्यो र पाँचै मुखले चिच्यायो। त्यो मुर दैत्यको घोर शब्द अन्तरिक्ष, सबै दिशा र आकाश-मण्डलमा फैलिएर सारा ब्रह्माण्ड प्रतिध्वनित भयो ॥ ८ ॥ त्रिशूल गरुडतिर आउन लागेको देखेर श्रीहरिले आफ्नू शस्त्र-कौशल देखाउँदै दुइ बाण छाडेर त्यसको तीन टुक्रा पार्नुभयो र दैत्यको फैलिएको मुखमा अनेक बाण मारे। अनि मुरले रिसाएर भगवान्माथि आफ्नू गदा चलायो ॥ ९ ॥ विकराल गदा आफूतिर आउन लागेको देखेर श्रीकृष्णले आफ्नू गदाद्वारा त्यस गदाको सयकडौं टुक्रा पारिदिए। अनि त्यो दुवै बाहु फिंजाएर भगवान्तिर दगुर्‍यो र श्रीहरिले सुदर्शन चक्र द्वारा त्यसका पाँचै शिर काटिदिए ॥ १० ॥ सबै शिर काटिएपछि

उत्तस्थौ दैत्यः पञ्चशिरा जलात् ॥ ६ ॥ त्रिशूलमुद्यम्य सुदुर्निरीक्षो युगान्तसूर्यानलरोचिरुल्बणः ॥ ग्रसंस्त्रिलोकीमिव पञ्चभिर्मुखैरभ्यद्रवत्तार्क्ष्यसुतं यथोरगः ॥ ७ ॥ आविध्य शूलं तरसा गरुत्मते निरस्य वक्त्रैर्व्यनदत्स पञ्चभिः ॥ स रोदसी सर्वदिशोऽम्बरं महानापूरयन्नण्डकटाहमावृणोत् ॥८॥ तदा पतत्त्रिशिखं गरुत्मते हरिः शराभ्यामभिनत्त्रिधौजसा ॥ मुखेषु तं चापि शरैरताडयत्तस्मै गदां सोऽपि रुषा व्यमुञ्चत ॥ ६ ॥ तामापतन्तीं गदया गदां मृधे गदाग्रजो निर्बिभिदे सहस्रधा ॥ उद्यम्य बाहूनभिधावतोऽजितः शिरांसि चक्रेण जहार लीलया ॥ १० ॥ व्यसुः पपाताम्भसि कृत्तशीर्षो निकृत्तशृङ्गोऽद्रिरिवेन्द्रतेजसा ॥ तस्यात्मजाः सप्त पितुर्वधातुराः प्रतिक्रियामर्षजुषः समुद्यताः ॥ ११ ॥ ताम्रोऽन्तरिक्षः श्रवणो विभावसुर्वसुर्नभस्वानरुणश्च सप्तमः ॥ पीठं पुरस्कृत्य चमूपतिं मृधे भौमप्रयुक्ता निरगन्धृतायुधाः ॥ १२ ॥ प्रायुञ्जतासाद्य शरानसीन्गदाः शक्त्यृष्टिशूलान्यजिते रुषोल्बणाः॥तच्छस्त्रकूटं भगवान्स्वमार्गणैरमोघवीर्यस्तिलशश्चकर्त ह ॥ १३ ॥ तान्पीठमुख्याननयद्यमक्षयं निकृत्तशीर्षोरुभुजांघ्रिवर्मणः ॥ स्वानीकपानच्युतचक्रसायकैस्तथा निरस्तान्नरको धरासुतः ॥ १४ ॥ निरीक्ष्य दुर्मर्षण आस्रवन्मदैर्गजैः पयोधिप्रभवैर्निराक्रमत् ॥ दृष्ट्वा सभार्यं

त्यो प्राणहीन भएर, इन्द्रको तेजले जसका शिखर ढलेका छन्, त्यस्तै पर्वत समान जलमा पर्‍यो। अनि त्यसका सात छोरा ताम्र, अन्तरिक्ष, श्रवण, विभावसु, वसु, नभस्वान् र अरुण पिताको वधले व्याकुल भएर क्रोधपूर्वक साटो फेर्नका लागि उद्यत भौमासुरको आज्ञाले पीठ नामक असुरलाई सेनापति तुल्याई शस्त्रास्त्रले सज्जित भई रणाङ्गणमा आइलागे ॥ ११ ॥ १२ ॥ त्यहाँ आएर श्रीअच्युतमाथि बाण, खड्ग, गदा, शक्ति, ऋष्टि र त्रिशूल आदि प्रचण्ड शस्त्रास्त्र वर्षा गर्नलागे। अमोघवीर्य भगवान्ले त्यसका शस्त्र आफ्ना बाणले टुक्र-टुक्रा पारिदिए ॥१३॥ अनि जसका शिर, ऊरु, भुजा, चरण र कवच काटिइसकेका थिए, ती पीठ आदि शूरवीर सबैलाई यमपुरी पठाइदिए। श्रीकृष्णको चक्र र अमोघ बाणहरूले आफ्ना सेनापति सबै मरेका देखेर पृथ्वीको छोरा नरकासुर अर्थात् भौमासुर* झोंक्किएर समुद्रबाट उत्पन्न मदस्रावी हात्तीका सेनाको साथ नगर बाहिर निस्क्यो। त्यो बेला

* उदारण (व्यर्थको फर्को-फर्को)—यौटा पसले आफ्नू पसलमा बसेर व्यवहार शास्त्रको कुनै पुस्तक पढिरहेको थियो। त्यसै बेला यौटा सीधा साधा सज्जन डुल्दै आइपुगे। कुतूहलवश उनले पसलमा बस्नेसित सोधे—'तपाईं यो कुन ग्रन्थ पढि रहनु भएको छ ?' झर्किएर पसलेले उत्तर दियो—'तिमी मूर्ख यस ग्रन्थको अर्थ के बुझ्न सक्तछौ ?' सज्जनले मुसुक्क हाँस्तै भने—'मैले तपाईंका ग्रन्थको विषय बुझें। तपाईंको ग्रन्थको विषय ज्योतिषशा

माथिर बिजुलीयुक्त श्याम मेघ सुशोभित भए झैं भगवान् कृष्णलाई सत्यभामासित गरुडमा बसेका देख्नासाथ यौटा शतघ्नी प्रहार गर्‍यो, त्योदेखेर त्यसका सबै सैनिकले एकैचल्ट कृष्णमाथि हमला गरे ॥१४॥१५॥ अनि भगवान्‌ले पनि आफ्ना तीखा प्वाँख हुने बाणहरूले भौमासुरको सेनाका प्रधान सैनिकहरूको हात, तिघ्रा, घाँटी र शरीर काटिदिए र तिनका घोडा, हात्ती नष्ट पारिदिए ॥ १६ ॥ हे कुरुनन्दन ! ती सैनिकले जे जे शस्त्रास्त्र चलाए, तीमध्ये प्रत्येक शस्त्रलाई भगवान्‌ले बीचमै आफ्ना अग्नि जस्ता बाणले काटिदिए ॥ १७ ॥ भगवान् आफ्ना प्वाँखले नै हात्ती मार्ने गरुड माथि बसेका थिए। गरुडका चुच्चो, प्वाँख र नङ्ग्राको प्रहारले पीडित भएर ती हात्ती फर्केर नगरमा पसे। अनि नरकासुर एक्लै भूमिमा उभिएर लड्दै रह्यो। उसले आफ्ना सेना गरुडको प्रहारले पीडित भएर भागेका देखी गरुडलाई यौटा ठूलो शक्तिले हिर्कायो, जसले इन्द्रको अमोघ

गरुडोपरि स्थितं सूर्योपरिष्टात्सतडिद्घनं यथा ॥ कृष्णं स तस्मै व्यसृजच्छतघ्नीं योधाश्च सर्वे युगपत्स्म विव्यधुः ॥ १५ ॥ तद्भौमसैन्यं भगवान्ग-
दाग्रजो विचित्रवाजैर्निशितैः शिलीमुखैः ॥ निकृत्तबाहूरुशिरोध्रविग्रहं चकार तर्ह्येव हताश्वकुञ्जरम् ॥ १६ ॥ यानि योधैः प्रयुक्तानि शस्त्रास्त्राणि
कुरूद्वह ॥ हरिस्तान्यच्छिनत्तीक्ष्णैः शरैरेकैकशस्त्रिभिः ॥ १७ ॥ उह्यमानः सुपर्णेन पक्षाभ्यां निघ्नता गजान् ॥ गरुत्मता हन्यमानास्तुण्डपक्षन-
खैर्गजाः ॥ १८ ॥ पुरमेवाविशन्नार्ता नरको युध्ययुध्यत ॥ दृष्ट्वा विद्रावितं सैन्यं गरुडेनार्दितं स्वकम् ॥ १९ ॥ तं भौमः प्राहरच्छक्त्या वज्रः
प्रतिहतो यतः ॥ नाकम्पत तया विद्धो मालाहत इव द्विपः ॥ २० ॥ शूलं भौमोऽच्युतं हन्तुमाददे वितथोद्यमः ॥ तद्विसर्गात्पूर्वमेव नरकस्य शिरो
हरिः ॥ अपाहरद्गजस्थस्य चक्रेण क्षुरनेमिना ॥ २१ ॥ सकुण्डलं चारुकिरीटभूषणं बभौ पृथिव्यां पतितं समुज्ज्वलत् ॥ हाहेति साध्वित्यृषयः
सुरेश्वरा माल्यैर्मुकुन्दं विकिरन्त ईडिरे ॥ २२ ॥ ततश्च भूः कृष्णमुपेत्य कुण्डले प्रतप्तजाम्बूनदरत्नभास्वरे ॥ सवैजयन्त्या वनमालयाऽर्पयत्प्रा-
चेतसं छत्रमथो महामणिम् ॥ २३ ॥ अस्तौषीदथ विश्वेशं देवी देववरार्चितम् ॥ प्राञ्जलिः प्रणता राजन्भक्तिप्रवणया धिया ॥ २४ ॥ नमस्ते देव-

वज्र पनि विफल पारिदिएको थियो। तर पक्षिराज गरुड पुष्पमालाले आहत हात्ती झैं अचल रहे ॥ १८ ॥ १९ ॥ यसरी आफ्नू उपाय विफल भएको देखेर दुष्ट भौमासुरले भगवान्‌माथि प्रहार गर्न त्रिशूल उचाल्यो। त्यो छाड्नभन्दा पहिल्यै श्रीकृष्णले हात्तीमा बसेको नरकासुरको शिर छूरा झैं तीक्ष्ण धार हुने सुदर्शनचक्रले काटिदिनुभयो ॥२०॥२१॥ नरकासुरका टल्कने कुण्डल र सुन्दर किरीटले शोभित तथा जगमगाउँदो शिर पृथ्वीमा गिरेको देखेर उसका सबै सम्बन्धी हाहाकार गर्नलागे। ऋषिगण 'साधु-साधु' भन्नलागे र देवता भगवान् माथि पुष्पवर्षा गर्दै स्तुति गर्नलागे ॥२२॥ उसैबेला भूमिले भगवान्‌कहाँ आई उनलाई खारेको सुनले बनेको रत्न जडित कुण्डल, वैजयन्ती माला, वनमाला र वरुणको छाता अनि महामणि यो सबै वस्तु कृष्णलाई दिइन्। अनि हे राजन् ! पृथ्वीले अत्यन्त भक्तियुक्त हृदयले हात जोरी प्रणाम गरेर देवगण द्वारा वन्दित श्रीकृष्णको यस प्रकार स्तुति गर्न

हो। त्यसैले त एकाएक भुल्नुभयो–म मूर्ख हुँ !' यति सुनेर यसले लज्जित भई भन्नलाग्यो–'होइन, श्रीमान् ! म ज्योतिषशास्त्रको होइन, व्यवहार शास्त्रको अध्ययन गरिरहेको छु।' सज्जनले हाँसेर भने–'त्यसैले त तपाईंको व्यवहार यति राम्रो छ !' जो अकारण अर्कालाई अपमानित गर्दछन्, ती स्वयं पनि अपमानित हुन्छन्।

लागिन् ॥ २३ ॥ २४ ॥ पृथिवीले भनिन्—हे शङ्ख-चक्र-गदाधर र देवदेवेश्वर ! हजुरलाई नमस्कार छ । आफ्ना भक्तको इच्छानुसार हजुर विविध रूप धारण गर्नुहुन्छ । हे परमात्मन् ! हजुरलाई प्रणाम छ ॥२५॥ जसको नाभिबाट कमल उत्पन्न भएको थियो, जो कमल-पुष्पको माला धारण गरेका छन् र जसका चरण पनि कमल-पुष्प समान राम्रा छन्, त्यस्ता देवदेवलाई प्रणाम छ ॥२६॥ हजुर षडैश्वर्य पूर्ण, समस्त विश्वका आश्रय र व्यापक हुनुहुन्छ । हजुर सबै कार्य वर्गबाट पूर्वसिद्ध कारण हुनुहुन्छ । हजुर जगत्‌का आदिकारण र कारणका पनि कारण तथा पूर्ण बोधरूपलाई वारम्बार नमस्कार छ ॥ २७ ॥ जो स्वयं जन्म रहित छन् तथा यस संसारको उत्पत्ति गर्दछन्, ती अनन्त शक्ति ब्रह्मलाई नमस्कार छ । हे कार्य-कारणरूप, सर्वभूतमय परमात्मन ! हजुरलाई वारम्बार नमस्कार छ ॥२८॥ हे प्रभो ! जब हजुर जगत् रच्न खोज्नुहुन्छ, तब रजोगुण स्वीकार्नु हुन्छ र संसारको निम्ति तमोगुण र पालनको निम्ति सत्त्वगुण स्वीकार्नु हुन्छ, तापनि यी सामयिक गुणमा हजुर लिप्त रहनु हुन्न । हे जगत्पते ! हजुर काल, पुरुष र प्रधान भएर पनि तीबाट पर हुनुहुन्छ ॥ २९ ॥

देवेश शङ्खचक्रगदाधर ॥ भक्तेच्छोपात्तरूपाय परमात्मन्नमोऽस्तु ते ॥ २५ ॥ नमः पङ्कजनाभाय नमः पङ्कजमालिने ॥ नमः पङ्कजनेत्राय नमस्ते पङ्कजाङ्घ्रये ॥ २६ ॥ नमो भगवते तुभ्यं वासुदेवाय विष्णवे ॥ पुरुषायादिबीजाय पूर्णबोधाय ते नमः ॥ २७ ॥ अजाय जनयित्रेऽस्य ब्रह्मणेऽनन्तशक्तये ॥ परावरात्मन् भूतात्मन् परमात्मन्नमोऽस्तु ते ॥ २८ ॥ त्वं वै सिसृक्षू रज उत्कटं प्रभो तमोनिरोधाय बिभर्ष्यसंवृत ॥ स्थानाय सत्त्वं जगतो जगत्पते कालः प्रधानं पुरुषो भवान्परः ॥ २९ ॥ अहं पयो ज्योतिरथानिलो नभो मन्त्राणि देवा मन इन्द्रियाणि ॥ कर्ता महानित्यखिलं चराचरं त्वय्यद्वितीये भगवन्नयं भ्रमः ॥३०॥ तस्यात्मजोऽयं तव पादपङ्कजं भीतः प्रपन्नार्तिहरोपसादितः ॥ तत्पालयैनं कुरु हस्तपङ्कजं शिरस्यमुष्याखिलकल्मषापहम् ॥ ३१ ॥ श्रीशुक उवाच ॥ इति भूम्यार्थितो वाग्भिर्भगवान्भक्तिनम्रया ॥ दत्त्वाऽभयं भौमगृहं प्राविशत्सकलर्द्धिमत् ॥ ३२ ॥ तत्र राजन्यकन्यानां षट्सहस्राधिकायुतम् ॥ भौमाहृतानां विक्रम्य राजभ्यो ददृशे हरिः ॥३३॥ तं प्रविष्टं स्त्रियो वीक्ष्य नरवीरं विमोहिताः ॥ मनसा वव्रिरेऽभीष्टं पतिं दैवोपसादितम् ॥ ३४ ॥ भूयात्पतिरयं मह्यं धाता तदनुमोदताम् ॥ इति सर्वाः पृथक् कृष्णे भावेन हृदयं दधुः ॥ ३५ ॥ ताः प्राहि-

हे भगवन् ! म पृथ्वी, जल, अग्नि, वायु, आकाश, भूततन्मात्रा, इन्द्रियाधिष्ठाता देवता, मन, इन्द्रिय, अहङ्कार र महत्तत्त्वमय चराचर जगत्‌का हजुर अद्वितीय ब्रह्ममा नै भ्रम भइरहेको छ ॥ ३० ॥ हे शरणागत वत्सल ! यो भौमासुरको छोरो भगदत्त अत्यन्त भयभीत छ र हजुरको शरणमा ल्याइएको छ । हे प्रभो ! हजुर यसको रक्षा गर्नोस् र यसको शिरमा विश्व आफ्नु सर्वकल्याणकारी करकमल राख्नोस् ॥ ३१ ॥ शुकदेवजी भन्नुहुन्छ—भक्ति विनम्र पृथिवीले प्रार्थना गरेपछि भगवान् कृष्ण भगदत्तलाई अभय दान दिएर भौमासुरको भवनमा गए ॥ ३२ ॥ त्यहाँ श्रीकृष्णले भौमासुरद्वारा राजाहरूसित बलपूर्वक हरेर ल्याइएका सोह हजार राजकन्या देख्नुभयो ॥ ३३ ॥ श्रीकृष्ण अन्तःपुरमा आउनुभएको देखेर सबै रमणीहरू मोहित भए र तिनले दैववश प्राप्त श्रीकृष्णलाई मनमनै आफ्नु पति रोजे* ॥ ३४ ॥ 'विधाता मेरो यस इच्छालाई छिटै नै पूर्ण गरुन् र यी नरश्रेष्ठ मेरा पति होऊन्' यही भावले

* उदाहरण ( तिमी के गर्दछौ ? )—धोटी नारी प्रेमले भगवान्‌को पूजा गर्दथी, तर आफ्ना कुटुम्ब र दरिद्र प्रति उसको व्यवहार ठीक थिएन। त्यो भगवान्‌लाई राम्रा लुगा लगाईदिन्थी, राम्रा पदार्थहरूको नैवेद्य

ती सबै कन्याहरूले भिन्ना भिन्नै आफ्नू मन श्रीकृष्णमा लगाए ॥३५॥ भगवानूले ती राम्रा र निर्मल वस्त्रधारिणी राजकन्याहरूलाई उत्तम-उत्तम स्थानमा चढालेर द्वारकापुरी पठाइ-दिनुभयो र उनैसित धेरै छुट्टी, रथ, घोडा, अटूट वैभव र ऐरावतको कुलमा उत्पन्न चार दाँत भएका शुक्लवर्णका चौंसट्ठी हात्ती र रथ पनि द्वारकापुरी पठाउनु भयो ॥ ३६ ॥ ॥ ३७ ॥ अनि भगवानूले इन्द्र-भवनमा गएर अदितिलाई उनको कुण्डल दिए र इन्द्राणी सहित इन्द्रले उनको र सत्यभामाको पूजा गरे ॥ ३८ ॥ त्यहाँबाट फर्कन्दा उनले सत्यभामाले भनेपछि पारिजात उखेलेर गरुडको पिठिउँमा राखे र इन्द्रसहित सबै देवतालाई जितेर त्यो द्वारकापुरी ल्याए ॥ ३९ ॥ त्यहाँ ल्याएर पारिजात सत्यभामाको महलको बगैचामा लगाइ-दिए । त्यसले त्यो बगैचाको शोभा निकै बढ्यो । पारिजातको संगसंगै उसको गन्ध-मकरन्दका लोभी भ्रमरा पनि स्वर्गबाट उहीं आए ॥४०॥ हे राजन् ! हेर जुन इन्द्रले आफ्नू

णोद्धारवतीं सुमृष्टविरजोऽम्बराः ॥ नरयानैर्महाकोशान्रथाश्वान्द्रविणं महत् ॥३६॥ ऐरावतकुलेभांश्च चतुर्दन्तांस्तरस्विनः ॥ पाण्डुरांश्च चतुःषष्टिं प्रेषयामास केशवः ॥३७॥ गत्वा सुरेन्द्रभवनं दत्त्वाऽदित्यै च कुण्डले ॥ पूजितस्त्रिदशेन्द्रेण सहेन्द्राण्या च सप्रियः ॥३८॥ चोदितो भार्ययोत्पाट्य पारिजातं गरुत्मति ॥ आरोप्य सेन्द्रान्विबुधान्निर्जित्योपानयत्पुरम् ॥३९॥ स्थापितः सत्यभामाया गृहोद्यानोपशोभनः ॥ अन्वगुर्भ्रमराः स्वर्गात्तद्गन्धासवलम्पटाः ॥४०॥ ययाच आनम्य किरीटकोटिभिः पादौ स्पृशन्नच्युतमर्थसाधनम् ॥ सिद्धार्थ एतेन विगृह्यते महानहो सुराणां च तमो धिगाढ्यताम् ॥ ४१ ॥ अथो मुहूर्त एकस्मिन्नानागारेषु ताः स्त्रियः ॥ यथोपयेमे भगवांस्तावद्रूपधरोऽव्ययः ॥४२॥ गृहेषु तासामनपाय्यतर्क्यकृन्निरस्तसाम्यातिशयेष्ववस्थितः ॥ रेमे रमाभिर्निजकामसम्प्लुतो यथेतरो गार्हकमेधिकांश्चरन् ॥ ४३ ॥ इत्थं रमापतिमवाप्य पतिं स्त्रियस्ता ब्रह्मादयोऽपि न

काम बनाउनको निम्ति शिर न्युराएर आफ्नू मुकुटको टुप्पाले श्रीकृष्णका चरण स्पर्श गरेर प्रार्थना गरेका थिए,उनैले काम सकिएपछि उनैसित विरोध गरे । अहो ! देवताहरूको प्रकृति पनि कति तामसी हुन्छ, इनको आढ्यतालाई धिक्कार छ ॥४१॥ अनि भगवानूले भिन्न-भिन्न भवनहरूमा भिन्न-भिन्न रूप धारण गरेर ती सबै राजकन्यासित एकै मुहूर्तमा विधिवत् विवाह गरे ॥४२॥ अनि उसको समान र ओभन्दा बढ्ता भोग-सामग्री अरु कहीं पनि थिएन, ती सोह्र हजार एक सय आठ रानीहरूका महलहरूमा, उसका कर्म अचिन्त्य थिए, ती निजानन्दपूर्ण श्रीकृष्ण अन्य साधारण गृहस्थहरूकै समान व्यवहार गर्दै लक्ष्मीका अंशस्वरुपा आफ्नी भार्याहरूसित आनन्दपूर्वक रमण गर्न लागे ॥ ४३ ॥ उसको प्रतिज्ञा मार्ग

गर्दाइँथी, प्रातः सबेरै उठेर स्नान गरी भगवानलाई पनि स्नान गराउँथी । बस्तो गर्दा त्यो आफूलाई धमेड बिर्संथी । यस्तो भक्ति यद्यपि निकै प्रेमपूर्वक गर्दथी, तापनि त्यो अभिमानिनी थिई । अयस्ति त्यो कठोर वाणी बोल्थी, र ताना बालकलाई नराम्रो गाली गर्दथी र एक पल्ट रिसाई भने दुइ दिनसम्म त्यसको रिस शान्त हुँदैनथ्यो । एक दिन थोटा उत्तम वैष्णव त्यसको घर आए । उनले त्यस स्त्रीलाई दुःख दै भने–'आज तिम्रा भगवान स्वप्नमा मसित भेटिएका थिए !' स्त्रीले भनी–'तिम्रो हुला भाग्यमानी रहेछौ ! मलाई त कहिल्यै पनि दर्शन मिलेको छैन । अँ, उनले के भने !' वैष्णवले उत्तर दिए–'उनले भनेका छन्–म धेरै दिनदेखि भोको छु । तिमी मलाई आफ्नू घर लिएर हिंड । मैले भनें–'नाथ ! यो स्त्री नित्य तिमीलाई नैवेद्य चढाउँछे, तापनि किन यस्तो भनिरहेका छौ ?' भगवानूले भने–'म त्यस नारीको नैवेद्यतिर फर्केर पनि हेर्दिन, त्यो मेरा बालकहित सबाई गर्दछे–तिनलाई मन्नु न मन्नु भन्दछे । यसैले मलाई त्यसले दिएको नैवेद्य मनपर्दैन । यदि तिम्रो छोरोलाई कसैले इच्छाओस् अथवा कुटोस् र त्यो मन लाग्यो भने के त्यो भेंका चौरासी व्यञ्जन पनि तिमीलाई मनपर्ने छ ?' यति भनेर भगवान् अन्तर्धान भए । वैष्णवको भनाई त्यसले बुझी र उसै दिनदेखि सबैसित राम्रो व्यवहार गर्न थाली ।

ब्रह्मादि देवता पनि जान्दैनन्, तीं लक्ष्मीपतिलाई पतिरूपमा पाएर ती सबै सुन्दरीहरू अनुरागमय हास्य, विलासपूर्ण हेराई र नवसङ्गमका कुराकानीले मनमनैलाज मान्दै निरन्तर बढ्ने प्रसन्नताले भगवान्‌को सेवा गर्न लागे ॥ ४४ ॥ तीमध्ये प्रत्येक सुन्दरीको सेवामा सयकडौं दासीहरू रहन्थे तापनि भगवान् पाल्नुभएपछि उनलाई गएर आदरपूर्वक ल्याउनु, आसन दिनु, अर्घ्यादिले पूजा गर्नु, पाउ पखाल्नु, पान दिनु, पाउ मिचेर श्रम हरण गर्नु, पङ्खा हम्कनु, चन्दन-मालादिले शृङ्गार गरेर कपाल कोर्नु, स्नान र शयन गराउनु तथा विविध उपहार दिनु आदि उपचारले स्वयं नै उनको सेवा गर्दथे ॥४५॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे 'वासिष्ठी' नेपाली भाषाटीकायामेकोनषष्टितमोऽध्यायः ॥५९॥

( श्रीकृष्ण-रुक्मिणी वार्तालाप )—श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! एक दिन आफ्ना सखी सहित रुक्मिणी शय्यामा सुखपूर्वक बसेका आफ्ना पति भगवान् कृष्णलाई पङ्खा हम्किई उनको सेवा गरिरहेकी थिइन् ॥१॥ जो लीलाले नै विश्वको रचना, पालन र संहार गर्दछन्, ती स्वयं अजन्मा भगवान् नै आफूले निश्चित गरेको धर्ममर्यादाको रक्षा गर्नको लागि

विदुः पदवीं यदीयाम् ॥ भेजुर्मुदाविरतमेधितयाऽनुरागहासावलोकनवसङ्गमजल्पलज्जाः ॥ ४४ ॥ प्रत्युद्गमासनवरार्हणपादशौचताम्बूलविश्रमणवीजनगन्धमाल्यैः ॥ केशप्रसारशयनस्नपनोपहार्यैर्दासीशता अपि विभोर्विदधुः स्म दास्यम् ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पारिजातहरणनरकवधो नाम एकोनषष्टितमोऽध्यायः ॥ ५९ ॥

श्रीशुक उवाच ॥ कर्हिचित्सुखमासीनं स्वतल्पस्थं जगद्गुरुम् ॥ पतिं पर्यचरद्भैष्मी व्यजनेन सखीजनैः ॥ १ ॥ यस्त्वेतल्लीलया विश्वं सृजत्यत्त्यवतीश्वरः ॥ स हि जातः स्वसेतूनां गोपीथाय यदुष्वजः ॥२॥ तस्मिन्नन्तर्गृहे भ्राजन्मुक्तादामविलम्बिना ॥ विराजिते वितानेन दीपैर्मणिमयैरपि ॥३॥ मल्लिकादामभिः पुष्पैर्द्विरेफकुलनादितैः ॥ जालरन्ध्रप्रविष्टैश्च गोभिश्चन्द्रमसोऽमलैः ॥४॥ पारिजातवनामोदवायुनोद्यानशालिना ॥ धूपैरगुरुजै राजञ्जालरन्ध्रविनिर्गतैः ॥५॥ पयःफेननिभे शुभ्रपर्यङ्के कशिपूत्तमे ॥ उपतस्थे सुखासीनं जगतामीश्वरं पतिम् ॥६॥ वालव्यजनमादाय रत्नदण्डं सखीकरात् ॥ तेन वीजयती देवी उपासाञ्चक्र ईश्वरम् ॥७॥ सोपाच्युतं क्वणयतीमणिनूपुराभ्यां रेजेऽङ्गुलीयवलयव्यजनाग्रहस्ता ॥ वस्त्रान्तगूढकुचकुङ्कुमशोणहारभासा नितम्बधृतया च परार्ध्यकाञ्च्या ॥८॥ तां रूपिणीं श्रियमनन्यगतिं निरीक्ष्य या लीलया धृततनोरनुरूपरूपा ॥ प्रीतः स्मयन्नलककुण्डलनिष्ककण्ठवक्त्रो

यदुकुलमा अवतीर्ण भएका थिए ॥२॥ हे राजन् ! जो मोतिका झालर भएको चँदुवाले, मणिमय दीपले, मल्लिकाको मालाहरूले, भ्रमरहरूद्वारा गुन्जायमान पुष्पबाट, आँखीझ्यालको छिद्रबाट आएका निर्मल चन्द्रकिरण द्वारा, पारिजातको उपवनको मीठो सुगन्धले, सुवासित वायुको वेगले र स-सानाझ्यालबाट निस्कने अगरुको धुवाँले सुशोभित थियो । त्यस भवनमा दुग्धफेन झैं उज्ज्वल र उत्तम बिछौनाले युक्त राम्रो पलंगमा सानन्द बसेका आफ्ना पति यदुनाथको रुक्मिणी स्वयं सेवा गर्दै थिइन् ॥३–६॥ अनि रुक्मिणीले यौटी सखीको हातबाट रत्नदण्डयुक्त चँवर लिइन् र स्वयं हम्कन्दै पतिको सेवा गर्न लागिन् ॥७॥ त्यस बेला रुक्मिणीका हातमा रत्नजडित औंठी, कङ्कन र पङ्खा धारण गरिराखेकी थिइन् । ती श्रीकृष्णको नजीक आफ्ना मणि जडित नूपुरको सुमधुर ध्वनि गर्दै अंचलमा छोपिएका स्तनको कुङ्कुम र अरुणवर्ण हारको कान्ति एवं नितम्बमा सुण्डिएको बहुमूल्य कन्धनीले सान्दै राम्री देखिएकी

थिइन् ॥ ८ ॥ तिनको मुखचन्द्र अलक, कुण्डल, पदक विभूषित कण्ठा एवं मधुर मुस्कानमय अमृतले सुशोभित थियो । जसले लीलाद्वारा मानवरूपधारी श्रीकृष्णको अनुरूप रूपधारण गरेकी थिइन्, ती कहिल्यै पृथक् नहुने मूर्तिमती लक्ष्मीलाई देखेर श्रीकृष्ण प्रसन्नतापूर्वक मुलुक्क हाँसेर बोले ॥९॥ भगवान् भन्नुहुन्छ—हे राजकुमारी ! रूप उदारता र बलादि गुणमा ठूला अनेक श्रीमान् र लोकपाल जस्तै ऐश्वर्यशाली महानुभाव राजा तिमीसित विवाह गर्न खोज्दथे ॥१०॥ तिम्रा पिता र दाजूलाई पनि तिनैसित तिम्रो विवाह गरिदिने इच्छा थियो । तैपनि तिमीले विवाह गर्न आएका कामोन्मत्त शिशुपालादिलाई छाडेर जुन कुनै प्रकार तिम्रो सदृश छैन, त्यो म जस्तोलाई किन पति रोज्यौ ? ॥११॥ हे सुभ्रू ! हामी त राजाहरूसित डराएर यो समुद्रको शरणमा आएर बसेका छौं । धेरै बलवान्हरूसित हामीले वैरत्व बाँधिराखेका छौं र प्रायः हाम्रो राज्य-सिंहासनको अधिकारबाटपनि च्युत छौं ॥१२॥ हे प्रेयसि ! जसको कुनै स्पष्ट मार्ग छैन, जो सदा अलौकि बाटोमा हिंड्दछन् अर्थात् जो स्त्रीहरूका वशवर्ती हुँदैनन्, ती महापुरुषको अनुसरण गर्ने स्त्रीहरूले प्रायः कष्ट नै भोग्नु

लसत्स्मितसुधां हरिरावभाषे ॥९॥ श्रीभगवानुवाच ॥ राजपुत्रीप्सिता भूपैर्लोकपालविभूतिभिः ॥ महानुभावैः श्रीमद्भीरूपौदार्यबलोर्जितैः॥१०॥तान्प्राप्तानर्थिनो हित्वा चैद्यादीन्स्मरदुर्मदान् ॥ दत्ता भ्रात्रा स्वपित्रा च कस्मान्नो ववृषेऽसमान् ॥११॥ राजभ्योबिभ्यतः सुभ्रूः समुद्रं शरणं गतान्॥बलवद्भिः कृतद्वेषान्प्रायस्त्यक्तनृपासनान् ॥१२॥ अस्पष्टवर्त्मनां पुंसामलीकपथमीयुषाम्॥ आस्थिताः पदवीं सुभ्रूः प्रायः सीदन्ति योषितः॥१३॥ निष्किञ्चना वयं शश्वन्निष्किञ्चनजनप्रियाः॥ तस्मात्प्रायेण न ह्याढ्या मां भजन्ति सुमध्यमे ॥१४॥ ययोरात्मसमं वित्तं जन्मैश्वर्याकृतिर्भवः ॥ तयोर्विवाहो मैत्री च नोत्तमाधमयोः क्वचित् ॥१५॥वैदर्भ्येतदविज्ञाय त्वयाऽदीर्घसमीक्षया ॥ वृता वयं गुणैर्हीना भिक्षुभिः श्लाघिता मुधा ॥१६॥ अथात्मनोऽनुरूपं वै भजस्व क्षत्रियर्षभम् ॥ येन त्वमाशिषः सत्या इहामुत्र च लप्स्यसे ॥१७॥ चैद्यशाल्वजरासन्धदन्तवक्रादयो नृपाः ॥ मम द्विषन्ति वामोरु रुक्मी चापि तवाग्रजः ॥१८॥ तेषां वीर्यमदान्धानां दृप्तानां स्मयनुत्तये ॥ आनीतासि मया भद्रे तेजोऽपहरता सताम् ॥१९॥ उदासीना वयं नूनं न स्त्र्यपत्यार्थकामुकाः॥ आत्मलब्ध्यास्महे पूर्णा गेहयोर्ज्योतिरक्रियाः ॥२०॥ श्रीशुक उवाच ॥ एतावदुक्त्वा भगवानात्मानंवल्लभामिव ॥ मन्यमानामविश्लेषात्तद्दर्पघ्न उपारमत्

पर्दछ ॥१३॥ हे सुमध्यमे ! हामी त सदादेखि नै अकिञ्चन रहँदै आएका छौं र अकिञ्चनसित नै प्रेम राख्दछौं । अतएव सम्पत्तिशाली पुरुष प्रायः हामीलाई भज्दैनन् ॥१४॥ जसको धन, जात, ऐश्वर्य, रूप र आयु समान हुन्छ, विवाह अथवा मित्रताको सम्बन्ध प्रायः उनैमा हुन्छ । उत्तममा र मध्यममा हुनु राम्रो मानिन्न ॥१५॥ हे विदर्भ-नन्दिनी ! तिमीले आफ्नु अदूरदर्शिताले यी सबै कुराका राम्ररी विचार नपुऱ्याई नारद आदि भिक्षुकहरू द्वारा प्रशंसित हामीजस्ता गुणहीन वरलाई रोज्यौ ॥ १६ ॥ अतएव तिमीले अब पनि आफ्नु अनुरूप कुनै क्षत्रियश्रेष्ठलाई रोजे अमल हुनेछ । यसले तिम्रा सबै दुर्लभ कामनाहरू पूर्ण हुने छन् ॥१७॥ हे राम्रा तिघ्रा हुने सुन्दरी ! शिशुपाल, शाल्व, जरासन्ध र दन्तवक्त्रादि राजा र स्वयं तिम्रो दाजु रुक्मि—यी सबै मसित द्रोह गर्छन्॥१८॥ हे भद्रे ! ती वीर्यमदले अन्धा र मतवाला राजाहरूको मानमर्दन गर्नको निम्ति नै मैले तिमीलाई हरेर ल्याएको हुँ । किनकि म दुष्टको दर्प दलन गर्ने व्यक्ति हुँ ॥१९॥ हामी आत्मलाभले नै सन्तुष्ट रहन्छौं । हामीलाई स्त्री-पुत्रादिको इच्छा छैन । हामी देह-गेहबाट उदासीन र दीपकादिको ज्योति झैं

निश्चल र केवल साक्षी मात्र छौं ॥२०॥ शुकदेवजी भन्दछन्—हे राजन् ! भगवान् रुक्मिणीसित कहिल्यै छुट्टिन्दैनथे । यसैनिम्ति रुक्मिणीलाई यो ठानेर मनमा केही बर्ता अभिमान भएको थियो—म नै उनलाई सबै भन्दा बर्ता मनपरेकी छु । अतः तिनको दर्प नाश गर्नका लागि भगवान्‌ले त्यति भनेर मौन हुनुभयो ॥२१॥ तिनैलोकका स्वामी र आफ्ना पतिको मुखबाट, जस्तो पहिले कहिल्यै सुनेको थिएन, त्यस्तो अप्रिय कुरा सुनेर देवीरुक्मिणीलाई निकै डर लाग्यो । उनको मुटु काम्न लाग्यो र ती रोएर अपार चिन्तामा डुबिन् ॥ २२ ॥ ती आफ्ना नङ्को आभायुक्त सुन्दर चरणले पृथ्वीतिर हेर्दै तथा अञ्जनरञ्जित आँसुका धाराले कुङ्कुममण्डित कुचद्वय भिजाउँदै अपार दुःखले मस्तक निहुराई मौन रहिन् ॥ २३ ॥ अत्यन्त दुःख, भय र शोकले तिनैको बुद्धि नष्ट भयो । उनको हातबाट, जसमा कङ्कण खस्किसकेको थियो, पङ्खा झर्‍यो र बुद्धि व्याकुल हुनाले उनको शरीर पनि सहसा मूर्छित भएर वायुले उखेलेको कदली स्तम्भ झैं ढल्यो । त्यस बेला उनको वेणी फुस्केको र कपाल छरिएका थिए ॥ २४ ॥ त्यस्तो ठट्टाको अभिप्राय

॥ २१ ॥ इति त्रिलोकेशपतेस्तदात्मनः प्रियस्य देव्यश्रुतपूर्वमप्रियम् ॥ आश्रुत्य भीता हृदि जातवेपथुश्चिन्तां दुरन्तां रुदती जगाम ह ॥ २२ ॥ पदा सुजातेन नखारुणश्रिया भुवं लिखन्त्यश्रुभिरञ्जनासितैः ॥ आसिञ्चती कुङ्कुमरूषितौ स्तनौ तस्थावधोमुख्यतिदुःखरुद्धवाक् ॥ २३ ॥ तस्याः सुदुःखभयशोकविनष्टबुद्धेर्हस्ताच्छ्लद्वलयतो व्यजनं पपात ॥ देहश्च विक्लवधियः सहसैव मुह्यन् रम्भेव वायुविहता प्रविकीर्य केशान् ॥२४॥ तद्दृष्ट्वा भगवान्कृष्णः प्रियायाः प्रेमबन्धनम् ॥ हास्यप्रौढिमजानन्त्याः करुणः सोऽन्वकम्पत ॥२५॥ पर्यङ्कादवरुह्याशु तामुत्थाप्य चतुर्भुजः ॥ केशान्समुह्य तद्वक्त्रं प्रामृजत्पद्मपाणिना ॥ २६ ॥ प्रमृज्याश्रुकले नेत्रे स्तनौ चोपहतौ शुचा ॥ आश्लिष्य बाहुना राजन्ननन्यविषयां सतीम् ॥ २७ ॥ सान्त्वयामास सान्त्वज्ञः कृपया कृपणां प्रभुः ॥ हास्यप्रौढिभ्रमच्चित्तामतदर्हां सतां गतिः ॥ २८ ॥ श्रीभगवानुवाच ॥ मा मा वैदर्भ्यसूयेथा जाने त्वां मत्परायणाम् ॥ त्वद्वचः श्रोतुकामेन क्ष्वेल्याचरितमङ्गने ॥ २९ ॥ मुखं च प्रेमसंरम्भस्फुरिताधरमीक्षितुम् ॥ कटाक्षेपारुणापाङ्गं सुन्दरभ्रुकुटीतटम् ॥ ३० ॥ अयं हि परमो लाभो गृहेषु गृहमेधिनाम् ॥ यन्नर्मैरीयते यामः प्रियया भीरु भामिनि ॥ ३१ ॥ श्रीशुक उवाच ॥ सैवं भगवता

नजान्ने आफ्नी प्रियाको त्यो प्रगाढ अनुराग देखेर करुणामय भगवान् श्रीकृष्णले उनीमाथि दया गर्नुभयो ॥ २५ ॥ ती तुरुन्त चतुर्भुजी भई पलंगबाट ओर्लेर उनलाई उचाली उनका कपाल सम्हाल्दिँदै आफ्ना करकमलले मुख पुछिदिए ॥२६॥ हे राजन् ! अश्रुपूर्ण नेत्र र शोकाश्रुमिश्रित स्तन पुछेर श्रीकृष्ण भगवान्‌ले जसको, कुनै अरु आश्रय थिएन, ती सती-शिरोमणि रुक्मिणीलाई आफ्ना भुजाले अकडे ॥ २७ ॥ अनि कुरा बुझाउन सिपालु र सज्जनका एकमात्र आश्रय भगवान् कृष्णले ठट्टाले भ्रान्तचित्त, दीन-बुद्धि तथा हास्यको अयोग्य रुक्मिणीलाई कृपापूर्वक यसरी सान्त्वना दिए ॥ २८ ॥ श्रीकृष्णले भन्नुभयो—हे वैदर्भी ! तिमी अप्रसन्न नरिसाउ । मयो राम्ररी जान्दछु कि तिमी एकमात्र मलाई नै रुचाउँछ्यौ । हे कल्याणी ! मैले तिम्रा कुरा सुन्न र प्रणय कोपले काम्ने ओंठ, कटाक्ष विक्षेपले तेर्सो र अरुणवर्ण नयन एवं सुन्दरी तथा बाङ्गा भृकुटी युक्त तिम्रो मनोहर मुख हेर्नको निम्ति नै यस्तो ठट्टा गरेको हुँ ॥२९॥ ३०॥ हे भीरु ! हे सुन्दरि ! गृहस्थ पुरुषलाई यही सबै भन्दा ठूलो लाभ छ कि उनको समय आफ्नी प्रियतमासित हास्य-विनोद गर्दै

बितेर जान्छ ॥ ३१ ॥ श्रीशुकदेव भन्दछन्—हे राजन् ! भगवान्ले त्यसरी बुझाएपछि जब रुक्मिणीले यो मसित ठट्टा गरेको भन्ने बुझिन्, तब उनले प्रियतम द्वारा त्यागिने डर त्यागिदिइन ॥३२॥ त्यसपछि हे भारत ! ती सज्जन हाँसो र सुन्दर एवं प्रेमपूर्ण दृष्टिले पुरुषपुङ्गव भगवान् कृष्णको ऐश्वर्यपूर्ण मुखतिर हेरेर यस प्रकार भन्न लागिन् ॥३३॥ रुक्मिणीले भनिन्—हे कमल-नयन ! हजुरको कथन उचित र ठीक हो । वास्तवमा ऐश्वर्यादि गुणले युक्त र सर्वव्यापक हजुर परमेश्वरको अनुरूप पत्नी म होइन । कहाँ ! कहाँ आफ्नै महिमामा रमण गर्ने र तीनै गुणहरूका स्वामी हजुर र कहाँ अज्ञानी पुरुष नै जसका चरण-सेवा गर्दछन्, त्यो त्रिगुणमय स्वभाव भएकी मूढ म ? ॥ ३४ ॥ हे उरुक्रम ! हजुरको यो कथन सर्वथा उचित नै छ । हजुर साँच्चै नै सत्वादि त्रिगुणदेखि डराएर अगाध समुद्ररूपी अन्तःकरणमा चैतन्यघन आत्मारूपले शयन गर्नुहुन्छ । कुत्सित इन्द्रियहरूसँग राजाहरूसित सदा हजुरको कलह भइरहन्छ र घोर अन्धकाररूपी राज्यसिंहासनलाई त सदा हजुरका भक्तले नै छाडिराखेका छन्, अनि हजुरको विषयमा के भन्ने ? ॥३५॥ हजुरको

राजन्वैदर्भी परिमान्त्विता ॥ ज्ञात्वा तत्परिहासोक्तिं प्रियत्यागभयं जहौ ॥ ३२ ॥ बभाष ऋषभं पुंसां वीक्षन्ती भगवन्मुखम् ॥ सव्रीडहासरुचिरस्निग्धापाङ्गेन भारत ॥ ३३ ॥ रुक्मिण्युवाच ॥ नन्वेवमेतदरविन्दविलोचनाहं यद्वै भवान्भगवतोऽसदृशी विभूम्नः ॥ क स्वे महिम्न्यभिरतो भगवांस्त्र्यधीशः काहं गुणप्रकृतिरज्ञगृहीतपादा ॥ ३४ ॥ सत्यं भयादिव गुणेभ्य उरुक्रमान्तः शेते समुद्र उपलम्भनमात्र आत्मा ॥ नित्यं कदिन्द्रियगणैः कृतविग्रहस्त्वं त्वत्सेवकैर्नृपपदं विधुतं तमोऽन्धम् ॥ ३५ ॥ त्वत्पादपद्ममकरन्दजुषां मुनीनां वर्त्मास्फुटं नृपशुभिर्ननु दुर्विभाव्यम् ॥ तस्मादलौकिकमिवेहितमीश्वरस्य भूमंस्तवेहितमथो अनु ये भवन्तम् ॥ ३६ ॥ निष्किञ्चनो ननु भवान्न यतोऽस्ति किञ्चिद्यस्मै बलिं बलिभुजोऽपि हरन्त्यजाद्याः ॥ न त्वा विदन्त्यसुतृपोऽन्तकमाढ्यतान्धा प्रेष्ठो भवान्बलिभुजामपि तेऽपि तुभ्यम् ॥ ३७ ॥ त्वं वै समस्तपुरुषार्थमयः फलात्मा यद्वाञ्छया सुमतयो विसृजन्ति कृत्स्नम् ॥ तेषां विभो समुचितो भवतः समाजः पुंसः स्त्रियाश्च रतयोः सुखदुःखिनोर्न ॥ ३८ ॥ त्वं न्यस्तदण्डमुनिभिर्गदितानुभाव आत्मात्मदश्च जगतामिति मे वृतोऽसि ॥ हित्वा भवद्भ्रुव उदीरितकालवेगध्वस्ताशिषोऽब्जभवनाकपतीकुतोऽन्ये ॥ ३९ ॥ जाड्यं

चरणकमलको मकरन्द पान गर्ने मुनिजनको मार्ग पनि स्पष्ट हुँदैन, अनि नररूपी पशुका निम्ति त्यसलाई बुझ्नु अझ बर्ता कठिन छ । अतः हे भूमन ! हजुर सर्वेश्वर तथा हजुरका अनुगामीहरूको चेष्टा अलौकिक नै हुन्छन् ॥३६॥ हजुर निष्किञ्चन अवश्य हुनुहुन्छ तर हजुरबाहेक अरु केही छँदैछैन । अरुद्वारा पूजित ब्रह्मादि लोकपाल पनि हजुरको पूजा गर्दछन्, हजुर नै पूजनीय देवश्रेष्ठका प्रिय हुनुहुन्छ । जो धन-सम्पत्ति आदिको मदले अन्धा भइरहेछन्, ती कालस्वरूप हजुर परमेश्वरलाई जान्दैनन् अतः ती केवल आफ्नू प्राणको पोषण गर्छन् ॥३७॥ हजुर त धर्म, अर्थ, कामरूप समस्त पुरुषार्थमय र तिनका फल परमानन्दस्वरूप हुनुहुन्छ, जसको इच्छाले बुद्धिमान् व्यक्ति सबै त्यागिदिन्छन् । हे विभो ! ती विवेकी पुरुषहरूको हजुरसित सेव्य-सेवकरूप सम्बन्ध हुनुपर्दछ । जो जन स्त्री-पुरुषको रमणले प्राप्त सुख-दुःखको वशीभूत छन्, तिनको सम्बन्ध हजुरसित हुन पाउन्न ॥ ३८ ॥ जसले सबै प्राणीहरूका पीडारूपी दण्ड दिन त्यागि दिएका छ, ती मुनिजनहरूले हजुरका प्रभावको वर्णन गरेका छन् । हजुर अखिल जगत्का आत्मा र आफ्ना भक्तलाई आत्मस्वरूपका दाता

हुनुहुन्छ । अतः अरूको विषयमा के भन्ने ? हजुरको भृकुटिविलास द्वारा उत्पन्न कालको वेगले जसका सबै भोग नष्ट हुन्छन् , ती शिव, ब्रह्मा र इन्द्रादिलाई पनि त्यागेर मैले हजुर-लाई रोजें ॥३९॥ हे ईश ! हे गदाग्रज ! जसरी सिंह पशुहरूका माझबाट आफ्नू भाग खोसेर लैजान्छ, त्यस्तै शार्ङ्गधनुषको टङ्कारले जरासन्धादि राजालाई भगाएर मलाई आफ्नू भाग जानेर ल्याउनुभयो । उनै हजुरको यो कथन—हामी राजाहरूको डरले समुद्रमा बसेका छौं, यो भूलको कुरा हो ॥४०॥ हे कमलनयन ! हजुरलाई पाउने इच्छाले अङ्ग, गय, पृथु, भरत, वैण्य, ययाति आदि अनेक राजा आफाफ्ना एकछत्र राज्य छाडेर वनवासी भएका थिए, अनि हजुरका मार्गको अनुसरण गर्ने ती राजाहरूले के कुनै कष्ट भोग्नुपरेको थियो ? ॥ ४१ ॥ आफ्नू हिताहित विचार गर्ने यस्ती को मानवी स्त्री होली, जो सर्वगुणधाम हजुरका सत्पुरुषहरूद्वारा कीर्तित, भक्तहरूलाई मोक्षदायक र लक्ष्मीको आश्रयस्थल हजुरका चरण कमलको सुगन्ध सुँघिसकेर फेरि उनलाई तिरस्कार गरेर जसलाई निरन्तर अधिकाधिक भय लागिरहन्छ, यस्ता कोही अन्य पुरुषलाई पतिरूपमा वरण गर्लि ? ॥ ४२ ॥ हे नाथ ! हजुर सारा

वचस्तव गदाग्रज यस्तु भूपान्विद्राव्य शार्ङ्गनिनदेन जहर्थ मां त्वम् ॥ सिंहो यथा स्वबलिमीश पशून्स्वभागं तेभ्यो भयाद्यदुदधिं शरणं प्रपन्नः ॥४०॥
यद्वाञ्छया नृपशिखामणयोऽङ्गवैन्यजायन्तनाहुषगयादय ऐकपत्यम् ॥ राज्यं विसृज्य विविशुर्वनमम्बुजाक्ष सीदन्ति तेऽनुपदवीं त इहास्थिताः किम्
॥४१॥ कान्यं श्रयेत तव पादसरोजगन्धमाघ्राय सन्मुखरितं जनतापवर्गम्॥ लक्ष्म्यालयं त्वविगणय्य गुणालयस्य मर्त्या सदोरुभयमर्थविविक्तदृष्टिः॥४२॥
तं त्वानुरूपमभजं जगतामधीशमात्मानमत्र च परत्र च कामपूरम् ॥ स्यान्मे तवाङ्घ्रिशरणं सृतिभिर्भ्रमन्त्या यो वै भजन्तमुपयात्यनृतापवर्गः॥४३॥तस्याः
स्युरच्युत नृपा भवतापदिष्टाः स्त्रीणां गृहेषु खरगोश्वविडालभृत्याः ॥ यत्कर्णमूलमरिकर्षण नोपयायाद्युष्मत्कथा मृडविरिञ्चिसभासु गीता ॥ ४४ ॥
त्वक्श्मश्रुमोमनखकेशपिनद्धमन्तर्मांसास्थिरक्तकृमिविट्कफपित्तवातम् ॥ जीवच्छवं भजति कान्तमतिर्विमूढा या ते पदाब्जमकरन्दमजिघ्रती स्त्री ॥४५॥

संसारका अधीश्वर आत्मा र लोक-परलोकमा सबै कामनाहरू पूर्ण पार्ने प्रभु हुनुहुन्छ । मैले आफ्नू अनुरूप जानेर नै हजुरलाई रोजेकी हुँ । अब मेरो यही इच्छा छ—आफ्नू कर्मानुसार विभिन्न योनिहरूमा घुम्दै म सदा मिथ्या संसार-भ्रम निवृत्त पार्ने तथा आफ्ना भक्तलाई आफ्नू स्वरूपसम्म दिने हजुर परमेश्वरका शरणमै सदैव रहन पाऊँ ॥ ४३ ॥ हे अच्युत ! हे शत्रुसूदन ! हजुरले आज्ञा भएको शिशुपाल आदि राजा जुन गधा, कुकुर र बिरालो जस्ता कृपण, बकवादी* हिंसक र नोकर झैं स्त्रीको सेवामा लागिरहने हुन् । ती उही भाग्यहीना स्त्रीका पति होउन् , जसका कानमा महादेव, ब्रह्मा आदि देवेश्वरहरूको सभाहरूमा कीर्तित हजुरका कथाहरूले प्रवेश गरेका छैनन् ॥ ४४ ॥ हे प्रभो ! जसले हजुरका चरण-कमलका मकरन्दको स्वाद पाइसकेका छैनन्, त्यो अत्यन्त मूर्खा स्त्री नै, जो माथिबाट, त्वचा, श्मश्रु, रोम, नख र केशराशिले आवृत्त छ र भित्रबाट मांस, अस्थि, रक्त, कृमि, विष्ठा, कफ,

* उदाहरण ( वदामि च ददामि न )—यौटा भाँट कुनै राजाकहाँ गयो र अनेक कविता सुनाई बडाई गऱ्यो । राजाले प्रसन्न भएर खजान्चीलाई आज्ञा दिए—इनलाई भोलि ५०००|- रुपियाँ दिनु । त्यसैले भाँट प्रसन्न भयो, अब के भन्नु छ, पाँच हजार सित्तिमा पाइने भयो । भोलिपल्ट त्यो राजाकहाँ पुग्नासाथ उनले सोधे—'के चाहन्छौ ?' उसले उत्तर दियो—'सरकार ! हजुरले हिजो मलाई ५०००|- रुपियाँ दिनु भन्ने हुकुम भएको थियो, त्यो पाउनु पर्दछ ।' त्यति सुनी राजा साहेबले भने—'तिमीले मलाई कुराले प्रसन्न तुल्यायौ र मैले पनि तिमीलाई कुरैले खुशी पारिदिएँ । दिनु-दिनु त नामर्दको काम हो । जाऊ, अब कुनै मूर्खलाई रुवाउनु झन तिम्रा मीठा कुरा सुनेर रुपियाँ गनिदिओस् ।

पित्त र वातले पूर्ण छ, त्यस्तो त्यो जीवित नै मुर्दा समान देहलाई कान्तभावले भज्नेछ ॥४५॥ हे कमल-नयन ! हजुर आत्माराम हुनुहुन्छ र मथापि हजुरको केही विशेष कृपाकृष्टि छैन । हे प्रभो ! हजुरका चरणमा मेरो अनुराग बनिरहोस् । हजुर जुन संसारको वृद्धिका लागि उत्कट रजोगुण स्वीकार गरेर मतिर हेर्नुहुन्छ, त्यो पनि म हजुरको ठूलो अनुकम्पा नै मान्दछु ॥ ४६ ॥ हे मधुसूदन ! हजुरले आज्ञा भयो–'अझ पनि कोही अनुरूप वर रोज'–त्यो हजुरको वचन म मिथ्या मान्दिन, किनकि कहिले काहीं यौटा पुरुषद्वारा जितिएर पनि काशिराजकी कन्या अम्बा झैं कुनै-कुनै कन्याको अन्य पुरुषसित पनि प्रीति हुन्छ ॥ ४७ ॥ कतिपय व्यभिचारिणी स्त्रीको मन विवाह भइसकेपछि पनि नयाँ-नयाँ पुरुषहरूतिर लइसिन्दै रहन्छ । बुद्धिमान् पुरुष त्यस्ती दुराचारिणी स्त्रीको भरण-पोषण नगरून् किनकि त्यस्ताको पालन-पोषण गर्ने प्राणी इहलोक र परलोक दुवैबाट पतित हुन्छन् ॥ ४८ ॥ अनि भगवान् भन्नुहुन्छ–हे साध्वी ! यी सबै कुरा ठुकका लागि नै मैले तिमीसित ठट्टा गरेको थिएँ । मेरो भनाइको जुन अर्थ तिमीले बुझ्यौ, त्यही यथार्थ अथवा सत्य हो ॥ ४९ ॥

अस्त्वम्बुजाक्षमम ते चरणानुराग आत्मन्रतस्य मयि चानतिरिक्तदृष्टेः ॥ यर्ह्यस्य वृद्धय उपात्तरजोऽतिमात्रो मामीक्षसे तदुह नः परमानुकम्पा ॥४६॥ नैवालीकमहं मन्ये वचस्ते मधुसूदन ॥ अम्बाया इव हि प्रायः कन्यायाः स्याद्रतिः क्वचित् ॥७॥ व्यूढायाश्चापि पुंश्चल्या मनोऽभ्येति नवं नवम् ॥ बुधोऽसतीं न बिभृयात्तां बिभ्रदुभयच्युतः ॥४८॥ श्री भगवानुवाच ॥ साध्व्येतच्छ्रोतुकामैस्त्वं राजपुत्रि प्रलम्भिता ॥ मयोदितं यदन्वात्थ सर्वं तत्सत्यमेव हि ॥ ४६ ॥ यान्यान्कामयसे कामान्मय्यकामाय भामिनि ॥ सन्ति ह्येकान्तभक्तायास्तव कल्याणि नित्यदा ॥ ५० ॥ उपलब्धं पतिप्रेम पातिव्रत्यं च तेऽनघे ॥ यद्वाक्यैश्चाल्यमानाया न धीर्मय्यपकर्षिता ॥ ५१ ॥ ये मां भजन्ति दाम्पत्ये तपसा व्रतचर्यया ॥ कामात्मानोऽपवर्गेशं मोहिता मम मायया ॥ ५२ ॥ मां प्राप्य मानिन्यपवर्गसम्पदं वाञ्छन्ति ये सम्पद एव तत्पतिम् ॥ ते मन्दभाग्या निरयेऽपि ये नृणां मात्रात्मकत्वान्निरयः सुसङ्गमः ॥५३॥ दिष्ट्या गृहेश्वर्यसकृन्मयि त्वया कृतानुवृत्तिर्भवमोचनी खलैः ॥ सुदुष्करासौ सुतरां दुराशिषो ह्यसुंभराया निकृतिंजुषः स्त्रियाः ॥५४॥ न त्वादृशीं प्रणयिनीं गृहिणीं गृहेषु पश्यामि मानिनि यथा स्वविवाहकाले ॥ प्राप्तान्नृपानवगणय्य रहोहरो मे प्रस्थापितो द्विज उपश्रुतसत्कथस्य

हे मानिनि ! तिमी मेरी अनन्य भक्त हौ, सकामभावको निवृत्तिका लागि तिमी मसित जे इच्छा छ त्यो हे कल्याणि ! तिमीलाई नित्य प्राप्त छ ॥५०॥ हे अनघे ! मैले तिम्रो पति-प्रेम र पातिव्रत्य पनि राम्ररी देखें । मैले आफ्ना दोष देखाएर तिम्रो बुद्धि विचलित पार्ने चेष्टा गरें तर त्यो अलिकति पनि डगेन ॥ ५१ ॥ हे शुभे ! जुन सकाम पुरुष नाना थरिका व्रत र तपस्या गर्दै स्त्री-पुरुषको विषयजनित सुखको अभिलाषाले म मोक्षाधीशको भजन गर्दछन्, ती मेरी मायाले मोहित प्राणी हुन् ॥ ५२ ॥ हे मानिनी ! मोक्ष र सबै सम्पत्तिका आश्रय एवं अधीश्वर म परमात्मालाई पाएर जो जन केवल लौकिक सम्पत्ति खोज्दछन्, ती अभागी हुन्, किनकि विषय-सुख त नरकमा पनि पाइन्छ, तर ती अभागीहरूको निर्घो मन विषयमै लीन रहन्छ, अतः तिनलाई नरक प्राप्ति पनि नराम्रो लाग्दैन ॥ ५३ ॥ हे गृहेश्वरि ! यो राम्रो कुरा हो–तिमीले अहिलेसम्म संसाररूपी बन्धनबाट मुक्त पार्ने मेरो निष्काम सेवाको हो । दुष्ट जन यस्तो कदापि गर्न सक्तैनन् । दूषित कामना हुने अनेक नारी पनि आफ्ना इन्द्रियको तृप्तिका लागि नाना थरिका छल-छन्द गर्छन् । तिनको निम्ति त यस्तो

शुभ कार्य गर्न सम् कष्टकर हुन्छ ॥५४॥ हे मानिनी ! मलाई आफ्नू घरमा तिमी जस्ती प्रणयिनी गृहिणी अरु कोही देखिदैनन् किनकि तिमीले मेरो प्रशंसा मात्र सुनेर आफ्नू विवाहको मौकामा आएका सबै राजाको अवहेलना गरेर यौटा ब्राह्मणलाई दूत बनाई मकहाँ गुटुक्क समाचार पठाएकी थियौ ॥ ५५ ॥ तिम्रो हरणमा मैले तिम्रो दाजूलाई युद्धमा जितेर कुरूप तुल्याएँ र अनिरुद्धको विवाहोत्सवमा बलरामले जूआको खेलमा उसलाई मारिदिनु भयो, तापनि हामीसित वियोगको आशंकाले तिमीले त्यो असह्य कष्ट पनि सहन गर्‍यौ र मसित केही भनिनौ । तिम्रो यो उदारताले मलाई आफ्नू मुठीमा पारेको छ ॥५६॥ तिमीले मलाई प्राप्त गर्न निश्चय गरेर मकहाँ दूत पठायौ र जब म त्यहाँ पुग्न ढीलो भयो तब यस जगत्‌लाई शून्य ठानेर, आफ्नो शरीर कुनै अरुको योग्य नठानेर यसलाई त्याग्ने सम्मको सङ्कल्प गर्‍यौ । तिम्रो यो काम तिम्रो योग्य, उचित नै थियो । म यसको साटो फेर्न कदापि समर्थ छैन । केवल यसको अभिनन्दन मात्र गर्न सक्छु । ५७ ॥ शुकदेवजी भन्नु हुन्छ—हे राजन् ! भगवान् कृष्ण यसरी मानव

॥५५॥ भ्रातुर्विरूपकरणं युधि निर्जितस्य प्रोद्वाहपर्वणि च तद्वधमक्षगोष्ठ्याम् ॥ दुःखं समुत्थमसहोऽस्मदयोगभीत्या नैवाब्रवीः किमपि तेन वयं जितास्ते
॥५६॥ दूतस्त्वयात्मलभने सुविविक्तमन्त्रः प्रस्थापितो मयि चिरायति शून्यमेतत् ॥ मत्वा जिहास इदमङ्गमनन्ययोग्यं तिष्ठेत तत्त्वयि वयं प्रतिनन्दयामः
॥५७॥ श्रीशुक उवाच ॥ एवं सौरतसंलापैर्भगवाञ्जगदीश्वरः ॥ स्वरतो रमया रेमे नरलोकं विडम्बयन् ॥५८॥ तथान्यासामपि विभुर्गृहेषु गृहवानिव ॥
आस्थितो गृहमेधीयान्धर्माँल्लोकगुरुर्हरिः ॥५९॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे कृष्णरुक्मिणीसंवादोनाम षष्टितमोऽध्यायः ॥६०॥

श्रीशुक उवाच ॥ एकैकशस्ताः कृष्णस्य पुत्रान्दश दशाबलाः ॥ अजीजनन्ननवमान्पितुः सर्वात्मसम्पदा ॥ १ ॥ गृहादनपगं वीक्ष्य राजपुत्र्योऽच्युतं स्थितम् ॥ प्रेष्ठं न्यमंसत स्वं स्वं न तत्तत्त्वविदः स्त्रियः ॥ २ ॥ चार्वब्जकोशवदनायतबाहुनेत्रसप्रेमहासरसवीक्षितवल्गुजल्पैः ॥ सम्मोहिता भगवतो न मनो विजेतुं स्वैर्विभ्रमैः समशकन्वनिता विभूम्नः ॥ ३ ॥ स्मायावलोकलवदर्शितभावहारिभ्रूमण्डलप्रहितसौरतमन्त्रशौण्डैः ॥ पत्न्यस्तु षोडशसहस्रमनङ्गबाणैर्यस्येन्द्रियं विमथितुं करणैर्न शेकुः ॥ ४ ॥ इत्थं रमापतिमवाप्य पतिं स्त्रियस्ता ब्रह्मादयोऽपि न

चरित्रको अनुसरण गर्दै आत्माराम भएर पनि विनोदपूर्ण वार्तालाप गरेर लक्ष्मी रूपिणी रुक्मिणीसित रमण गर्दथे ॥ ५८ ॥ जगद्गुरु भगवान् कृष्ण अरु रानीहरूको घरमा पनि यसै गरी साधारण गृहस्थ धर्मको पालन गर्दथे ॥५९॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे 'वासिष्ठी' भाषाटीकायां षष्ठितमोऽध्यायः ॥६०॥

(श्रीकृष्णका सन्तानको वर्णन र अनिरुद्धको विवाहमा रुक्मी-वध) शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! श्रीकृष्णका भार्याहरूमध्ये प्रत्येक भार्याका दस-दस छोरा भए । ती रूप, बल आदि गुणहरूमा आफ्ना पिताकै समान थिए ॥ १ ॥ भगवान्‌की प्रत्येक रानी उनी कहीं अन्त नगएर निरन्तर आफ्आफ्ना महलमै बसेका देखेर उनको वास्तविक महत्त्व नजान्नाले यस्तो ठान्दथे कि 'भगवान्‌की म सबभन्दा प्रिय पत्नी हुँ' ॥ २ ॥ तर ती सुन्दरीहरू निजानन्दपूर्ण भगवान् कृष्णको कमलको समान मनोहर मुखारविन्द, विशाल बाहु, र नेत्र, मधुर हास्ययुक्त कटाक्ष र मनमोहनी वार्तालापले स्वयं नै मोहित हुन्थे तर उनलाई मोहित पार्न सक्तैनथे ॥ ३ ॥ ती सोह्र हजार पत्नीहरू

गूढ हर्षयुक्त हेराई र मनोहर भावपूर्ण भ्रूमण्डलबाट छाडेका सुरत-मन्त्र परिपुष्ट कामबाण र अन्यान्य साधनहरूले पनि उनका इन्द्रियहरूलाई चंचल पार्न सकेनन् ॥ ४ ॥ यसरी ब्रह्मादि देवता पनि जसको स्वरूप जान्दैनन्, ती लक्ष्मीपतिलाई पतिरूपमा पाएर ती स्त्रीहरूले सधैं बढ्दो अनुराग, हास्ययुक्त दृष्टि र नवसंगमको लालसा आदि विविध हाउ-भाउले उनको सेवा गरे ॥ ५ ॥ तीमध्ये प्रत्येक कृष्ण-पत्नीको सेवामा सयौं दासीहरू रहन्थे, तर भगवान् आउनासाथ अगाडि ती स्वयं आएर उनलाई आदर पूर्वक ल्याउनु, आसन दिई अर्घ्यादिले पूजा गरेर पाउ पखाली, पान दिनु, पाउ मिचेर श्रम निवारण गर्नु, पङ्खा हम्कनु, चन्दनादि लगाइदिनु, कपाल सम्याउनु, शयन र स्नान गराई विविध प्रकारका उपहार दिनु आदि कार्यद्वारा स्वयं उनको सेवा गर्दथे। हे राजन् ! श्रीकृष्णका स्त्रीहरूमध्ये जुन आठ पुत्रवतीहरूको पहिले वर्णन भइसकेको छ, तिनका प्रद्युम्नादि छोराको वर्णन सुन ॥६॥७॥ रुक्मिणीको गर्भबाट प्रद्युम्न, चारुदेष्ण, सुदेष्ण, चारुदेह, सुचारु, चारुगुप्त, भद्रचारु, चारुचन्द्र, विचारु र चारु यी दस पुत्र भए। यी सबै आफ्ना पिता-

न विदुः पदवीं यदीयाम् ॥ भेजुर्मुदाऽविरतमेधितयाऽनुरागहासावलोकनवसङ्गमलालसाद्यम् ॥ ५ ॥ प्रत्युद्गमासनवरार्हणपादशौचताम्बूलविश्रमणवीजनगन्धमाल्यैः ॥ केशप्रसारशयनस्नपनोपहार्यैर्दासीशता अपि विभोर्विदधुः स्म दास्यम् ॥ ६ ॥ तासां या दशपुत्राणां कृष्णस्त्रीणां पुरोदिताः ॥ अष्टौ महिष्यस्तत्पुत्रान्प्रद्युम्नादीन्गृणामि ते ॥ ७ ॥ चारुदेष्णः सुदेष्णश्च चारुदेहश्च वीर्यवान् ॥ सुचारुश्चारुगुप्तश्च भद्रचारुस्तथापरः ॥ ८ ॥ चारुचन्द्रो विचारुश्च चारुश्च दशमो हरेः ॥ प्रद्युम्नप्रमुखा जाता रुक्मिण्या नावमाः पितुः ॥ ९ ॥ भानुः सुभानुः स्वर्भानुः प्रभानुर्भानुमांस्तथा ॥ चन्द्रभानुर्बृहद्भानुरतिभानुस्तथाऽष्टमः ॥ १० ॥ श्रीभानुः प्रतिभानुश्च सत्यभामात्मजा दश ॥ साम्बः सुमित्रः पुरुजिच्छतजिच्च सहस्रजित् ॥ ११ ॥ विजयश्चित्रकेतुश्च वसुमान्द्रविडः क्रतुः ॥ जाम्बवत्याः सुता ह्येते साम्बाद्याः पितृसंमताः ॥ १२ ॥ वीरश्चन्द्रोऽश्वसेनश्च चित्रगुर्वेगवान्वृषः ॥ आमः शंकुर्वसुः श्रीमान्कुन्तिर्नाग्नजितेः सुताः ॥ १३ ॥ श्रुतः कविर्वृषो वीरः सुबाहुर्भद्र एकलः ॥ शान्तिर्दर्शः पूर्णमासः कालिन्द्याः सोमकोऽवरः ॥ १४ ॥ प्रघोषो गात्रवान्सिंहो बलः प्रबल ऊर्ध्वगः ॥ माद्र्याः पुत्रा महाशक्तिः सह ओजोऽपराजितः ॥१५॥ वृको हर्षोऽनिलो गृध्रो वर्धनोऽन्नाद एव च ॥ महाशः पावनो वह्निर्मित्रविन्दात्मजः क्षुधिः ॥ १६ ॥ संग्रामजिद्बृहत्सेनः शूरः प्रहरणोऽरिजित् ॥

मन्दा, कुनै कुरामा हीन थिएनन् ॥८॥९॥ त्यसैगरी भानु, सुभानु, स्वर्भानु, प्रभानु, भानुमान, चन्द्रभानु, बृहद्भानु, अतिभानु, श्रीभानु र प्रतिभानु यी दस सत्यभामाका छोरा थिए। साम्ब, सुमित्र, पुरुजित्, शतजित् सहस्रजित्, विजय, चित्रकेतु, वसुमान, द्रविड र क्रतु—यी पराक्रमी दस पुत्र जाम्बवतीका थिए ॥१०-१२॥ वीर, चन्द्र, अश्वसेन, चित्रगु, वेगवान्, वृष, आम, शंकु, वसु र तेजस्वी कुन्ति—यी दस नाग्नजितिका छोरा थिए ॥१३॥ श्रुत, कवि, वीर, सुबाहु, भद्र, एकल, शान्ति, दर्श, पूर्णमास र सबैभन्दा कान्छा सोमक—यी दस पुत्र कालिन्दीका थिए ॥१४॥ प्रघोष, गात्रवान, सिंह, बल, प्रबल, ऊर्ध्वग, महाशक्ति, सह, ओज र अपराजि—यी दस लक्ष्मणाका गर्भबाट जन्मेका थिए ॥१५॥ वृक, हर्ष, अनिल, गृध्र, वर्धन, अन्नाद, महाश, पावन, वह्नि र क्षुधि—यी मित्रविन्दाका दस पुत्र थिए ॥ १६ ॥ अनि संग्रामजित्, बृहत्सेन, शूर, प्रहरण, अरिजित, जय, सुभद्र,

नाम, आयु र सत्यक—यी भद्राका दस पुत्र थिए ॥१७॥ यीबाहेक अरु रोहिणी आदि सोह्र हजार एक सय आठ रानी थिए, तीबाट श्रीकृष्णका दीप्तिमान र ताम्रतप्तादि छोराहरू भए । हे राजन् ! प्रद्युम्नकी भार्या रुक्मवतीबाट, जो भोजकट नगरमा बस्ने रुक्मीकी छोरी थिइन्—महाबली अनिरुद्धको जन्म भयो । हे राजन् ! ती सबैका पनि पुत्र-पौत्रहरू मिलाएर ती करोडौंको संख्यामा भए, किनकि ती कृष्ण-पुत्रका त आमाहरू नै सोह्र हजार भन्दा बढी थिए ॥ १८ ॥ १९ ॥ यति कथा सुनिसकेर राजा परीक्षितले सोधे—हे भगवन् ! रुक्मीले आफ्नू शत्रु श्रीकृष्णका छोरासित आफ्नी छोरीको विवाह कसरी गरे ? ती त एकपल्ट भगवान्‌सित पराजित भएका थिए र सधैं उनलाई मारिदिने मौका खोजिरहन्थे । हे विद्वन् ! ती शत्रुहरूमा कसरी विवाह सम्बन्ध भयो ? यो हजुर भन्नुहवस् ॥ २० ॥ योगीजन भूत, भविष्य, वर्तमान, नजिकै र टाढा, व्यवहृत सबै कुराहरू स्पष्टरूपले देख्दछन् ॥ २१ ॥ शुकदेवजी भन्दछन्—हे राजन् ! रुक्मीकी छोरी रुक्मवतीले स्वयंवरमा मूर्तिमान् कामदेव प्रद्युम्नलाई नै रोजेकी थिइन् । त्यसै अनुसार प्रद्युम्न त्यहाँ एकत्रित भएका सबै

जयः सुभद्रो भद्राया वाम आयुश्च सत्यकः ॥ १७ ॥ दीप्तिमांस्ताम्रतप्ताद्या रोहिण्यास्तनया हरेः ॥ प्रद्युम्नाच्चानिरुद्धोऽभूद्रुक्मवत्यां महाबलः ॥ १८ ॥ पुत्र्यां तु रुक्मिणो राजन्नाम्ना भोजकटे पुरे ॥ एतेषां पुत्रपौत्राश्च बभूवुः कोटिशो नृप ॥ मातरः कृष्णजातानां सहस्राणि च षोडश ॥ १९ ॥ राजोवाच ॥ कथं रुक्म्यरिपुत्राय प्रादाद्दुहितरं युधि ॥ कृष्णेन परिभूतस्तं हन्तुं रन्ध्रं प्रतीक्षते ॥ एतदाख्याहि मे विद्वन् द्विषोर्वैवाहिकं मिथः ॥ २० ॥ अनागतमतीतं च वर्तमानमतीन्द्रियम् ॥ विप्रकृष्टं व्यवहितं सम्यक् पश्यन्ति योगिनः ॥ २१ ॥ श्रीशुक उवाच ॥ वृतः स्वयंवरे साक्षादनङ्गोऽङ्गयुतस्तया ॥ राज्ञः समेतान्निर्जित्य जहारैकरथो युधि ॥ २२ ॥ यद्यप्यनुस्मरन्वैरं रुक्मी कृष्णावमानितः ॥ व्यतरद्भागिनेयाय सुतां कुर्वन्स्वसुः प्रियम् ॥ २३ ॥ रुक्मिण्यास्तनयां राजन्कृतवर्मसुतो बली ॥ उपयेमे विशालाक्षीं कन्यां चारुमतीं किल ॥ २४ ॥ दौहित्रायानिरुद्धाय पौत्रीं रुक्म्यददाद्धरेः ॥ रोचनां बद्धवैरोऽपि स्वसुः प्रियचिकीर्षया ॥ जानन्नधर्मं तद्यौनं स्नेहपाशानुबन्धनः ॥ २५ ॥ तस्मिन्नभ्युदये राजन्रुक्मिणी रामकेशवौ ॥ पुरं भोजकटं जग्मुः साम्बप्रद्युम्नकादयः ॥ २६ ॥ तस्मिन्निवृत्त उद्वाहे कालिङ्गप्रमुखा नृपाः ॥ दृप्तास्ते रुक्मिणं प्रोचुर्बलमक्षैर्विनिर्जय ॥ २७ ॥ अनक्षज्ञो ह्ययं राजन्नपि तद्व्यसनं महत् ॥ इत्युक्तो बलमाहूय तेनाक्षै रुक्म्यदीव्यत ॥२८॥ शतं सहस्रमयुतं राम-

राजाहरूलाई युद्धमा जितेर एक्लै उनलाई हरेर ल्याएका थिए ॥ २२ ॥ यद्यपि भगवान् श्रीकृष्णसित अपमानित रुक्मीलाई पूर्व-वैरत्वको स्मरण थियो तथापि उसले आफ्नी बहिनी रुक्मिणीको प्रिय गर्नका लागि आफ्नी कन्या भान्जालाई दिए ॥२३॥ हे राजन् ! श्रीकृष्णका रानीहरूमध्ये प्रत्येकका एक-एक छोरी पनि थिए । तीमध्ये रुक्मिणीकी पुत्री चारुमतीको विवाह कृतवर्माका महाबली पुत्रसित भयो ॥ २४ ॥ यद्यपि रुक्मीको कृष्णसित पुरानो वैरत्व थियो, तर उसले स्नेहपाशमा बाँधिएर आफ्नी बहिनी रुक्मिणीलाई प्रसन्न तुल्याउन अनिरुद्धसित आफ्नी पौत्री रोचनाको विवाह गरिदियो ॥ २५ ॥ हे राजन् ! त्यस विवाहको उत्सवमा रुक्मिणी, बलराम, श्रीकृष्ण, प्रद्युम्न र साम्बादि यादवहरू भोजकट नगर गएका थिए ॥ २६ ॥ विवाह-संस्कार समाप्त भएपछि सभामा कलिङ्ग नरेश आदि अभिमानी राजाहरूले रुक्मीसित भने—हे राजन् ! तिमी बलरामलाई जुवामा जित । यद्यपि ती

द्यूतक्रीडामा निपुण छैनन् तापनि उनलाई यसको ठूलो व्यसन छ ।' यसरी राजाहरूले भनेपछि रुक्मीले बलरामलाई डाक्यो र उनीसित पासा खेल्न आरम्भ गरे ॥२७-२८॥ बलरामले क्रमशः सय, हजार र दस हजार मुद्राहरू थापे । त्यो पैसै रुक्मीले जिते । अनि कलिङ्ग नरेश बलरामतिर हेरेर, दाँत देखाई अट्टहास गर्दै हाँस्नलागे । बलरामले यो सहन सकेनन् ॥२९॥ अनि रुक्मीले लाख मुद्रा थापे । त्यो बलरामले जिते, तर रुक्मीले कपटपूर्वक भन्यो–'तिमी होइन, मैले जितेको हुँ ।' ॥३०॥ रुक्मीको यो धूर्तताले बलरामजी, जसका नेत्र स्वभावैले अरुणवर्णका थिए, पर्वकालमा उर्लेको समुद्र झैं क्षुभित भए र उनले अत्यन्त क्रोधित भएर दस करोड मुद्रा थापिदिए ॥३१॥ त्यो पनि वास्तवमा बलरामले नै जितेका थिए परन्तु रुक्मीले छल गरेर भन्यो–'यो पनि मैले नै जितेको हुँ । यी मनेर बसेका प्रश्न-निर्णायक कलिङ्ग नरेश आदि नै भनुन्–यो बाजी कसले जितेको हो' ॥३२॥ उसै बेला आकाश-वाणी भयो–'धर्मपूर्वक भन्ने हो भने यो बाजी बलरामले नै जितेका हुन् । रुक्मी मिथ्या बोलिरहेछ' ॥३३॥ तर काल-प्रेरित रुक्मीले दुष्ट राजाहरूको कुरामा लागेर आकाशवाणीको

स्तत्राददे पणम् ॥ तं तु रुक्म्यजयत्तत्र कालिङ्गः प्राहसद्बलम् ॥ दन्तान्सन्दर्शयन्नुच्चैर्नामृष्यत्तद्धलायुधः ॥ २९ ॥ ततो लक्षं रुक्म्यगृह्णाद् ग्लहं तत्राजयद्बलः ॥ जितवानहमित्याह रुक्मी कैतवमाश्रितः ॥ ३० ॥ मन्युना क्षुभितः श्रीमान्समुद्र इव पर्वणि ॥ जात्याऽरुणाक्षोऽतिरुषा न्यर्बुदं ग्लहमाददे ॥३१॥ तं चापि जितवान्रामो धर्मेण छलमाश्रितः ॥ रुक्मी जितं मयाऽत्रेमे वदन्तु प्राश्निका इति ॥३२॥ तदाऽब्रवीन्नभोवाणी बलेनैव जितो ग्लहः ॥ धर्मतो वचनेनैव रुक्मी वदति वै मृषा ॥३३॥ तामनादृत्य वैदर्भो दुष्टराजन्यचोदितः ॥ सङ्कर्षणं परिहसन्बभाषे कालचोदितः ॥३४॥ नैवाक्षकोविदा यूयं गोपाला वनगोचराः ॥ अक्षैर्दीव्यन्ति राजानो बाणैश्च न भवादृशाः ॥ ३५ ॥ रुक्मिणैवमधिक्षिप्तो राजभिश्चोपहासितः ॥ क्रुद्धः परिघमुद्यम्य जघ्ने तं नृम्णसंसदि ॥ ३६ ॥ कलिङ्गराजं तरसा गृहीत्वा दशमे पदे ॥ दन्तानपातयत्क्रुद्धो योऽहसद्विवृतैर्द्विजैः ॥ ३७ ॥ अन्ये निर्भिन्नबाहूरुशिरसो रुधिरोक्षिताः ॥ राजानो दुद्रुवुर्भीता बलेन परिघार्दिताः ॥ ३८ ॥ निहते रुक्मिणि श्याले नाब्रवीत्साध्वसाधु वा ॥ रुक्मिणी-बलयो राजन्स्नेहभङ्गभयाद्धरिः ॥ ३९ ॥ ततोऽनिरुद्धं सह सूर्यया वरं रथं समारोप्य ययुः कुशस्थलीम् ॥ रामादयो भोजकटाद्दशार्हाः

ख्याल गरेन र बलरामको खिल्ली उडाउँदै भन्यो–॥३४॥ आखिर तिमीहरू वनमा गाई चराउने हौ । अनि पासा खेल्न के जान्दथ्यौ ! पासा र बाणद्वारा त राजाहरू नै खेल्दछन्-तिमी जस्ता ग्वाला खेल्न सक्तैनन् ॥३५॥ यसरी रुक्मीले आक्षेप गर्नु र राजाहरूले खिल्ली उडाएपछि बलराम साह्रै रिसाएर मोटो परिघ उचाले र त्यसैले माङ्गलिक सभामा-रुक्मी-लाई मारिदिए ।३६॥ कलिङ्गराज बलरामलाई दाँत देखाएर हाँसेका थिए, उनले त्यसलाई त्यहीं समाते र अतिशय क्रोधपूर्वक त्यसका सबै दाँतहरू फुकालिदिए ॥ ३७ ॥ ती बाहेक अन्य राजाहरू बलरामको परिघको चोट खाएर बाहु, तिघ्रा र टाउको आदि फुट्नाले रगताम्मे भएर डरले आफ्नाम् प्राण लिएर त्यहाँबाट निस्केर भागे ॥३८॥ हे राजन ! रुक्मिणी र बलरामको स्नेहमा फरक नपरोस् भनेर श्रीकृष्णले आफ्ना जेठान रुक्मी मारिएकोमा कसैलाई पनि जाति-नजाती केही भनेनन् ॥ ३९ ॥ यसरी शत्रुको वध र अनिरुद्धको

विवाह आदि सबै कार्य सकिएपछि श्रीकृष्णचन्द्रका आश्रित बलरामजी आदि यादव नववधू सहित अनिरुद्धलाई उत्तम रथमा बसालेर भोजकटबाट द्वारका जाम हिंडे ॥४०॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे 'बासिष्ठी' नेपाली भाषाटीकायामेकषष्टितमोऽध्यायः ॥६१॥

( उषा अनिरुद्धको समागम ) यति कथा सुनेर राजा परीक्षितले सोधे–हे महायोगिन् ! युद्धवीर अनिरुद्धले बाणासुरकी छोरी उषालाई कसरी विवाह गरे र त्यस बेला भगवान शङ्कर र श्रीकृष्णको परस्पर घोर सङ्ग्राम भएको सबै चरित्र भन्नुहवस् ॥१॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! सुन महात्मा बलिले वामनरूपधारी श्रीहरिलाई सम्पूर्ण भूमण्डल दान दिएका थिए, तिनका सय छोरामा सबभन्दा जेठा बाणासुर थिए ॥२॥ बलिको औरस पुत्र बाणासुर भगवान् शङ्करको भक्तिमा गाडिइरहन्थे। ती माननीय, उदार चित्त,बुद्धिमान्

सिद्धाखिलार्थां मधुसूदनाश्रयाः ॥४०॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे अनिरुद्धविवाहे रुक्मिवधो नामैकषष्टितमोऽध्याय ॥६१॥

राजोवाच ॥ बाणस्य तनयामूषामुपयेमे यदूत्तमः ॥ तत्र युद्धमभूद्घोरं हरिशङ्करयोर्महत् ॥ एतत्सर्वं महायोगिन्समाख्यातुं त्वमर्हसि ॥ १ ॥ श्रीशुक उवाच ॥ बाणः पुत्रशतज्येष्ठो बलेरासीन्महात्मनः ॥ येन वामनरूपाय हरयेऽदायि मेदिनी ॥ २ ॥ तस्यौरसः सुतो बाणः शिव-भक्तिरतः सदा ॥ मान्यो वदान्यः श्रीमांश्च सत्यसन्धो दृढव्रतः ॥ ३ ॥ शोणिताख्ये पुरे रम्ये स राज्यमकरोत्पुरा ॥ तस्य शम्भोः प्रसादेन किङ्करा इव तेऽमराः ॥ सहस्रबाहुवाद्येन ताण्डवेऽतोषयन्मृडम् ॥ ४ ॥ भगवान्सर्वभूतेशः शरण्यो भक्तवत्सलः ॥ वरेण छन्दयामास स तं वव्रे पुराधिपम् ॥ ५ ॥ स एकदाऽऽह गिरिशं पार्श्वस्थं वीर्यदुर्मदः ॥ किरीटेनार्कवर्णेन संस्पृशंस्तत्पदाम्बुजम् ॥ ६ ॥ नमस्ये त्वां महादेव लोकानां गुरुमीश्वरम् ॥ पुंसामपूर्णकामानां कामपूरामराङ्घ्रिपम् ॥ ७ ॥ दोःसहस्रं त्वया दत्तं परं भाराय मेऽभवत् ॥ त्रिलोक्यां प्रतियोद्धाऽहं

सत्य प्रतिज्ञ र दृढव्रती थिए ॥३॥ पहिले ती सुरम्य शोणितपुरमा राज्य गर्दथे। भगवान् शङ्करको कृपाले सबै देवता उनका सेवक झैं आज्ञाकारी थिए। एक दिन ताण्डव-नृत्यको अवसरमा उनले आफ्ना सहस्र भुजाले एकैपल्ट अनेक थरिका बाजा बजाएर शिवलाई प्रसन्न पारे। अनि शरणागत वत्सल र भक्तहितकारी भगवान् भूतनाथले तीसित अभिलषित वर माग्न भने। अनि तिनले यही वर मागे–हजुर मेरो नगरको रक्षा गरिरहनोस् ॥४-५॥ एक दिन वीर्योन्मत्त बाणासुरले आफ्नो सूर्य झैं देदीप्यमान मुकुटीले समीपस्थ शङ्कर भगवानको चरण स्पर्श गर्दै भने–॥६॥ हे शिव ! म हजुरलाई प्रणाम गर्दछु। हजुर *क्षमाका अवतार सबै लोकका गुरु र स्वामी हुनुहुन्छ। जसका कामनाहरू पूर्ण भएका हुँदैनन्, तिनका सबै

---

* दृष्टान्त ( क्षमाका अवतार ) कोही स्त्री व्यभिचार गर्दै पक्रिई। मानिस त्यो कलिहरहेकी स्त्रीलाई ईसाको सामुन्ने लिएर गए र भने–हजरत मूसाको नीति अनुसार यस स्त्रीलाई बारम्बार ढुङ्गाले हानेर मारिनु पर्ने हो।' त्यसमा ईसाले भने–'पहिले त्यही मनुष्य यसलाई ढुङ्गाले हानोस्, जसले कहिल्यै कुनै पाप गरेको छैन। नभए यसको हत्याको पाप उसैको टाउकोमा पर्नेछ।' यति सुनेर सबै जना लज्जित भएर चुपलागे किनकि त्यहाँ कुनै पनि यस्तो व्यक्ति थिएनन्, जसले जीवनमा कुनै पाप नगरेको होस्। अनि ईसाले प्रेमपूर्वक त्यस अपराधिनीतिर हेरेर भने–बहिनी ! तिमी आफ्नू सुधार गर। त्यो परमपिता अझ पनि तिम्रो अपराध क्षमा गरेर तिमीलाई आफ्नू कृपाछायामा शरण दिन तयार छन्।' यति सुनेपछि त्यो ईसाका पाउमा छटपटिई र त्यसै दिनदेखि ईश्वर-भक्त बनी।

इच्छा पूर्ण पार्न हजुर कल्पवृक्ष हुनुहुन्छ ॥ ७ ॥ हे प्रभो ! मलाई जुन एक हजार भुजा दिनुभएको छ, यो मलाई भारस्वरूप भइरहेछन्, किनकि तीनैलोकमा हजुर बाहेक अरु कोही योद्धा म जस्तै बलवान देखिएन ॥८॥ हे आदिदेव ! मेरा बाहु चिलाउन लागे तब म दिग्गजहरूसित युद्ध गर्नको निम्ति बाटोमा पर्ने पर्वतहरूलाई धूलो-पीठो पार्दै हिंडें, तर ती पनि डराएर भागे' ॥ ९ ॥ यति सुनी शङ्करजी रिसाए र भने–'अरे मूढ ! जब तेरो ध्वजा भाँचिएला तब तेरो मसँग पांदासित युद्ध हुनेछ र तेरो सम्पूर्ण गर्व नष्ट हुनेछ ॥ १० ॥ हे राजन् ! शिवले यति भने पछि मन्दमति बाणासुर प्रसन्न भएर घर फर्कियो र शङ्कर भगवान्‌ले आज्ञा भएको आफ्नो अभिमान धूलो-पीठो पार्ने संग्रामको प्रतीक्षा गर्नलाग्यो ॥ ११ ॥ त्यसकी उषा नामकी छोरी थिई । त्यसलाई बाल्यकालमै सपनामा जसलाई कहिल्यै देखे-सुनेको थिएन, ती प्रद्युम्न-कुमार अनिरुद्धसित रतिसुख प्राप्त भएको थियो ॥ १२ ॥ फेरि अकस्मात् बिउँझेर उनलाई नदेखेर उषा–'हे कान्त ! तिमी कहाँ छौ छौ ?' यसरी भन्दै व्याकुल भएर जुरुक्क उठेर बसी आफूलाई सखीहरूको

न लभे त्वदृते समम् ॥ ८ ॥ कण्डूत्या निभृतैर्दोर्भिर्युयुत्सुर्दिग्गजानहम् ॥ आद्यायां चूर्णयन्नद्रीन्भीतास्तेऽपि प्रदुद्रुवुः ॥ ९ ॥ तच्छ्रुत्वा भगवान्क्रुद्धः केतुस्ते भज्यते यदा ॥ त्वद्दर्पघ्नं भवेन्मूढ संयुगं मत्समेन ते ॥१०॥ इत्युक्तः कुमतिर्हृष्टः स्वगृहं प्राविशन्नृप ॥ प्रतीक्षन्गिरिशादेशं स्ववीर्यनशनं कुधीः ॥ ११ ॥ तस्योषा नाम दुहिता स्वप्ने प्राद्युम्निना रतिम् ॥ कन्याऽलभत कान्तेन प्रागदृष्टश्रुतेन सा ॥१२॥ स तत्र तमपश्यन्ती क्वासि कान्तेति वादिनी ॥ सखीनां मध्य उत्तस्थौ विह्वला व्रीडिता भृशम् ॥ १३ ॥ बाणस्य मन्त्री कुम्भाण्डश्चित्रलेखा च तत्सुता ॥ सख्यपृच्छत्सखीमूषां कौतूहलसमन्विता ॥ १४ ॥ कं त्वं मृगयसे सुभ्रूः कीदृशस्ते मनोरथः ॥ हस्तग्राहं न तेऽद्यापि राजपुत्र्युपलक्षये ॥ १५ ॥ ऊषोवाच ॥ दृष्टः कश्चिन्नरः स्वप्ने श्यामः कमललोचनः ॥ पीतवासा बृहद्बाहुर्योषितां हृदयङ्गमः ॥ १६ ॥ तमहं मृगये कान्तं पाययित्वाऽधरं मधु ॥ क्वापि यातः स्पृहयतीं क्षिप्त्वा मां वृजिनार्णवे ॥ १७ ॥ चित्रलेखोवाच ॥ व्यसनं तेऽपकर्षामि त्रिलोक्यां यदि भाव्यते ॥ तमानेष्ये नरं यस्ते मनोहर्ता तमादिश ॥ १८ ॥ इत्युक्त्वा देवगन्धर्वसिद्धचारणपन्नगान् ॥ दैत्यविद्याधरान्यक्षान्मनुजांश्च तथाऽलिखत् ॥१९॥ मनुजेषु च सा वृष्णीन्शूरमानकदुन्दुभिम् ॥ व्यलिखद्रामकृष्णौ च प्रद्युम्नं वीक्ष्य लज्जिता ॥ २० ॥ अनिरुद्धं विलिखितं वीक्ष्योषाऽवाङ्मुखी ह्रिया ॥ सोऽस्मवा-

माझमा देखेर लज्जित भई ॥ १३ ॥ बाणासुरको मन्त्री कुम्भाण्ड थियो । त्यसकी छोरी चित्रलेखा उषाकी सखी थिई । त्यसले उषासित कुतूहलवश सोधी–'हे सुभ्रू ! तिमी कसलाई खोजिरहे राजपुत्री ! तिमीसित विवाह-सम्बन्ध गर्ने कुनै पुरुष मैले देखेकी छैन, अनि तिम्रो यो मनोरथ किन भयो ? ॥ १५ ॥ उषाले भनिन्—हे सखि ! मैले सपनामा साँवला श्याम वर्ण, कमलनयन, पीताम्बरधारी, विशालबाहु स्त्रीको हृदयहारी नररत्न देखें ॥१६॥ त्यो मलाई आफ्नू अधरामृत पान गराई अतृप्तावस्थामै छाडेर [illegible] म त्यही प्रिय पुरुषलाई खोजिरहेकी छु ॥१७॥ चित्रलेखाले भनी–हे सखि ! तिम्रो चित्तचोर त्रिलोकमा जहाँ भए पनि म तिम्रो विरहव्यथा शान्त पारिदिन्छु । तिमी आफ्नू चित्तचोर बताऊ, म त्यसलाई ल्याइदिन्छु ॥१८॥ यति भनेर चित्रलेखाले देवता, गन्धर्व, सिद्ध, चारण, पन्नग दैत्य, विद्याधर, यक्ष र मनुष्यहरूका चित्र देखाई ॥१९॥ मनुष्यमा [illegible], वसुदेव, बलराम, र

1126

भगवान् कृष्णको तस्वीर बनाईं । जब उसले प्रद्युम्नको चित्र बनाई तब त्यो देखेर उषा लज्जित भई ॥ २० ॥ हे राजन् ! अनिरुद्धको चित्र देख्नासाथ उनले लाजले शिर निहुराइन् र मन्द-हास्यले भनिन्–'हो, त्यो यही हो ।' ॥२१॥ चित्रलेखा योगिनी थिईं, अतएव उसले जानी–यी श्रीकृष्णका पौत्र अनिरुद्ध हुन् ! अनि ऊ आकाशमार्गबाट श्रीकृष्ण द्वारा पालित द्वारकापुरीमा पुगी ॥२२॥ त्यहाँ प्रद्युम्न तनय अनिरुद्ध पलंगमा सुतेका थिए। चित्रलेखाले उनलाई आफ्नु योगबलले उडाएर शोणितपुरमा ल्याई र आफ्नी सखीलाई उसका प्रियतमको दर्शन गराई ॥२३॥ ती परम सुन्दर वरलाई पाएर उषा निकै प्रसन्न भइन् र जहाँ कहिल्यै कुनै पुरुषको दृष्टि पुग्दैनथ्यो, त्यस्तो आफ्नु भित्री महलमा अनिरुद्धसित विहार गर्नलागिन् ॥२४॥ उसको प्रेम निरन्तर बढिरहेको थियो. ती उषाले बहुमूल्य वस्त्र, माला, चन्दन, धूप, दीप र आसनादि सामग्रीहरू र मधुर पेय भोज्य-भक्ष्य पदार्थहरू एवं मीठो वाणी र सेवाले सम्मानित गरेर अनिरुद्धको चित्तलाई यस्तो वशीभूत पारिन कि ती कन्याको अन्तःपुरमा धेरै दिनसम्म उपस्थित रहँदा पनि थाहाथमथितेका

विति प्राह स्मयमाना महीपते ॥ २१ ॥ चित्रलेखा तमाज्ञाय पौत्रं कृष्णस्य योगिनी ॥ ययौ विहायसा राजन्द्वारकां कृष्णपालिताम् ॥ २२ ॥
तत्र सुप्तं सुपर्यङ्के प्राद्युम्निं योगमास्थिता ॥ गृहीत्वा शोणितपुरं सख्यै प्रियमदर्शयत् ॥२३॥ सा च तं सुन्दरवरं विलोक्य मुदितानना ॥ दुष्प्रेक्ष्ये
स्वगृहे पुम्भी रेमे प्राद्युम्निना समम् ॥ २४ ॥ परार्ध्यवासःस्रग्गन्धधूपदीपासनादिभिः ॥ पानभोजनभक्ष्यैश्च वाक्यैः शुश्रूषयाऽर्चितः ॥२५॥ गूढः
कन्यापुरे शश्वत्प्रवृद्धस्नेहया तया ॥ नाहर्गणान्स बुबुधे ऊषयाऽपहृतेन्द्रियः ॥ २६ ॥ तां तथा यदुवीरेण भुज्यमानां हतव्रताम् ॥ हेतुभिर्लक्षयाञ्च-
क्रुरापीतां दुरवच्छदैः ॥ २७ ॥ भटा आवेदयाञ्चक्रू राजंस्ते दुहितुर्वयम् ॥ विचेष्टितं लक्षयामः कन्यायाः कुलदूषणम् ॥ २८ ॥ अनपायिभिरस्मा-
भिर्गुप्तायाश्च गृहे प्रभो ॥ कन्याया दूषणं पुम्भिर्दुष्प्रेक्ष्याया न विद्महे ॥ २९ ॥ ततः प्रव्यथितो बाणो दुहितुः श्रुतदूषणः ॥ त्वरितः कन्यकागारं
प्राप्तोऽद्राक्षीद्यदूद्वहम् ॥ ३० ॥ कामात्मजं तं भुवनैकसुन्दरं श्यामं पिशङ्गाम्बरमम्बुजेक्षणम् ॥ बृहद्भुजं कुण्डलकुन्तलत्विषा स्मितावलोकेन च
मण्डिताननम् ॥ ३१ ॥ दीव्यन्तमक्षैः प्रिययाऽभिनृम्णया तदङ्गसङ्गस्तनकुङ्कुमस्रजम् ॥ बाह्वोर्दधानं मधुमल्लिकाश्रितां तस्याग्र आसीनमवेक्ष्य
विस्मितः ॥ ३२ ॥ स तं प्रविष्टं वृतमाततायिभिर्भटैरनीकैरवलोक्य माधवः ॥ उद्यम्य मौर्वं परिघं व्यवस्थितो यथाऽन्तको दण्डधरो जिघांसया

दिन थाहै भएन ॥ २५ ॥ २६ ॥ यदुवीर अनिरुद्ध द्वारा भोगिएकी उषालाई, जुन कष्टपूर्वक लुकाउन सकिन्थ्यो, यस्ता चिह्नहरूद्वारा कुमारी व्रतबाट स्खलित र अति प्रसन्न भएकी देखेर द्वारपालहरू गई बाणासुरसित भने—'राजन् ! हजुरकी अविवाहिता छोरीको चाल-ढाल आफ्नु ललाई कलङ्कित पार्ने जस्तै देखिई रहेछ ॥ २७ ॥ २८ ॥ हे प्रभो ! हामी सदा त्यस भवनको रक्षा गर्दछौं । कुनै पुरुषले राजकन्यातिर चियाउन पनि पाउन्न, अनि कसले तिनलाई दूषित पाऱ्यो—यो हामी जान्दैनौं' ॥२९॥ कन्या दूषित भएको समचार सुनेर बाणासुर दुःखी भयो । त्यो तुरुन्त छोरीको अन्तःपुरमा पुग्यो र त्यहाँ कामदेवका छोरा, त्रिलोकमा सर्वभन्दा राम्रा, श्यामवर्ण, पीताम्बरधारी, कमलनयन, विशालबाहु तथा कुण्डल र अलकावलीको झलक, मधुर हास्ययुक्त मुख भएका वीरवर अनिरुद्धलाई उपस्थित देख्यो ॥ ३० ॥ ३१ ॥ त्यस बेला ती प्रियालाई बाहुपाशमा जकडेर अङ्गसङ्ग

तथा तिनका कुचकुङ्कुमले रंजित मल्लिका पुष्पको माला धारण गरेका उसको सम्मुख बसेर पासा खेल्दै थिए। तिनलाई देखेर। बाणासुर छक्क पर्‍यो ॥ ३२ ॥ त्यस असुरलाई अनेक शस्त्र सैनिक सहित भवनमा आएको देखेर अनिरुद्ध पौटा फलामको परिघ लिई दण्डधारी काल झैं ती सबैलाई मार्न उद्यत भए ॥३३॥ त्यसरी आफूलाई समात्न सबै तिरबाट दगुरेका सैनिकहरूलाई अनिरुद्ध यस प्रकार मार्न लागे, जस्तै शूकर-यूथपति कुकुरहरूलाई मार्दछ। अनिरुद्धको प्रहारले आफ्नू शिर, भुजा आदि अवयवहरू टुट-फुट हुनाले ती सैनिक त्यहाँबाट भागे ॥३४॥ अनि महाबली बाणासुर रिसाई आफ्ना सैनिकको संहार गर्ने अनिरुद्ध ई नागपाशले बाँध्यो। आफ्ना प्रियतमलाई बन्धनमा परेका देखेर उषा शोक र विषादले व्याकुल भई रुन लागिन् ॥३५॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां द्विषष्टितमोऽध्यायः ॥६२॥

( कृष्ण र बाणासुरको संग्राम ) श्रीशुकदेव भन्दछन्–हे भारत ! यता द्वारकामा अनिरुद्धलाई नदेखी बन्धु-बान्धवले शोक गर्दागर्दै वर्षाऋतुका चार महीना बितेर गए ॥१॥ अनि

॥ ३३ ॥ जिघृक्षया तान्परितः प्रसर्पतः शुनो यथा सूकरयूथपोऽहनत् ॥ ते हन्यमाना भवनाद्विनिर्गता निर्भिन्नमूर्धोरुभुजाः प्रदुद्रुवुः ॥ ३४ ॥
तं नागपाशैर्बलिनन्दनो बली घ्नन्तं स्वसैन्यं कुपितो बबन्ध ह ॥ ऊषा भृशं शोकविषादविह्वला बद्धं निशम्याश्रुकलाक्ष्यरोदिषीत् ॥ ३५ ॥
इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धेऽनिरुद्धबन्धो नाम द्विषष्टितमोऽध्यायः ॥ ६२ ॥

श्रीशुक उवाच ॥ अपश्यतां चानिरुद्धं तद्बन्धूनां च भारत ॥ चत्वारो वार्षिका मासाव्यतीयुरनुशोचताम् ॥१॥ नारदात्तदुपाकर्ण्य वार्तां बद्धस्य कर्म च ॥ प्रययुः शोणितपुरं वृष्णयः कृष्णदेवताः ॥२॥ प्रद्युम्नो युयुधानश्च गदः साम्बोऽथ सारण॥ नंदोपनन्दभद्राद्या रामकृष्णानुवर्तिनः ॥३॥ अक्षौहिणीभिर्द्वादशभिः समेताः सर्वतो दिशम् ॥ रुरुधुर्बाणनगरं समन्तात्सात्वतर्षभाः ॥४॥ भज्यमानपुरोद्यानप्राकाराट्टालगोपुरम्॥ प्रेक्षमाणो रुषाविष्टस्तुल्यसैन्योऽभिनिर्ययौ ॥५॥ बाणार्थे भगवान्रुद्रः ससुतैः प्रमथैर्वृतः ॥ आरुह्य नन्दिवृषभं युयुधे रामकृष्णयोः ॥६॥ आसीत्सुतुमुलं युद्धमद्भुतं रोमहर्षणम् ॥ कृष्णशङ्करयो राजन्प्रद्युम्नगुहयोरपि ॥७॥ कुम्भाण्डकूपकर्णाभ्यां बलेन सह संयुगः ॥ साम्बस्य बाणपुत्रेण बाणेन सह सात्यकेः ॥ ८ ॥ ब्रह्मादयः सुराधीशा मुनयः सिद्धचारणाः ॥ गन्धर्वाप्सरसो यक्षा विमानैर्द्रष्टुमागमन् ॥ ९ ॥ शङ्करानुचराञ्छौरिर्भूतप्रमथगुह्यकान् ॥ डाकिनीर्यातुधानांश्च

नारदको मुखबाट अनिरुद्धको पराक्रम र बाणासुरले बन्दी तुल्याएको समचार सुनेर, जसका श्रीकृष्ण नै इष्टदेव थिए, ती यादवगण शोणितपुर हिंडे ॥२॥ भगवान् बलराम श्रीकृष्णका अनुयायी प्रद्युम्न, सात्यकि, गद, शाम्ब, सारण, नन्द, उपनन्द र इन्द्र आदि श्रेष्ठ यादवहरूले आफ्नू बाह्र अक्षौहिणी सेनाद्वारा बाणसुरको नगर चारैतिरबाट घेरिलिए ॥ ३ ॥ ४ ॥ यादव सेनाद्वारा नगरको उद्यान, अटाली, घर, छत र सिंहद्वारहरू तोडिएको देखेर बाणासुर सार्है रिसायो र बाह्र अक्षौहिणी सेना लिएर नगरको बाहिर निस्कियो ॥ ५ ॥ त्यस बेला आफ्ना छोरा र गणहरू साथमा लिएर भगवान् शङ्कर पनि नन्दीश्वरमा चढेर बाणासुरको तर्फबाट बलराम र श्रीकृष्णचन्द्रसित डरलाग्दो युद्ध गरे ॥६॥ हे राजन् ! अनि भगवान् कृष्ण र शङ्करमा, प्रद्युम्न र स्वामि कार्तिकेयमा, कुम्भाण्ड-कूपकर्णमा र बलरामजीमा, शाम्ब र बाणासुरको छोरामा तथा सात्यकि र बाणासुरमा अत्यन्त भीषण

र रोमाञ्चकारी युद्ध पऱ्यो ॥ ७-८ ॥ त्यो संग्राम हेर्नका लागि ब्रह्मा आदि देवेश्वर, मुनि, सिद्ध, चारण, गन्धर्व, अप्सरा र यक्ष आदि विमानहरूमा बसेर आए ॥ ९ ॥ भगवान् कृष्णले आफ्नू शार्ङ्ग नामक धनुषद्वारा छाडेका तीखा बाणहरूले शिवका अनुचर प्रमथ, गुह्यक, डाकिनी, यातुधान, वेताल, विनायक, प्रेतगण, मातृगण, पिशाच, कूष्माण्ड र ब्रह्मराक्षसादिलाई चुटेर लखेटिदिए ॥ १०-११ ॥ पिनाकपाणि भगवान शिवले श्रीकृष्ण माथि थरि-थरिका अस्त्रशस्त्र चलाए, तर शार्ङ्गपाणि श्रीहरिले सहजै उनलाई उनका विरोधी अस्त्रले शान्त पारिदिए ॥ ११ ॥ ब्रह्मास्त्रलाई ब्रह्मास्त्रले, वायव्यास्त्रलाई पर्वतास्त्रले, आग्नेयास्त्रलाई पर्जन्यास्त्रले, शिवको पाशुपतास्त्रलाई आफ्नू-नारायणवस्त्रले शान्त पारे ॥१३॥ अनि जृम्भणास्त्रले कैलाशपतिलाई मोहित पारेर उनलाई 'हाई' गर्दै छाडेर भगवान् खड्ग, गदा र बाणादि आयुधहरूले बाणासुरका सेनाको संहार गर्नलागे ॥ १४ ॥ उता प्रद्युम्नका बाणले स्वामिकार्तिकलाई निकै घाएं भयो । तिनको शरीरबाट रगत बग्नलाग्यो र ती आफ्नू वाहन मयूरमा बसेर भागे ॥ १५ ॥ कूष्माण्ड र कूपकर्ण यी दुवै नै श्रीबलरामको

वेतालान्सविनायकान् ॥ १० ॥ प्रेतमातृपिशाचांश्च कूष्माण्डान्ब्रह्मराक्षसान् ॥ द्रावयामास तीक्ष्णाग्रैः शरैः शार्ङ्गधनुश्च्युतैः ॥ ११ ॥ पृथग्विधानि प्रायुङ्क्त पिनाक्यस्त्राणि शार्ङ्गिणे ॥ प्रत्यस्त्रैः शमयामास शार्ङ्गपाणिरविस्मितः ॥ १२ ॥ ब्रह्मास्त्रस्य च ब्रह्मास्त्रं वायव्यस्य च पार्वतम् ॥ आग्नेयस्य च पार्जन्यं नैजं पाशुपतस्य च ॥ १३ ॥ मोहयित्वा तु गिरिशं जृम्भणास्त्रेण जृम्भितम् ॥ बाणस्य पृतनां शौरिर्जघानासिगदेषुभिः ॥ १४ ॥ स्कन्दः प्रद्युम्नबाणौघैरर्द्यमानः समन्ततः ॥ असृग्विमुञ्चन्गात्रेभ्यः शिखिनाऽपाक्रमद्रणात् ॥ १५ ॥ कुम्भाण्डः कूपकर्णश्च पेततुर्मुसलार्दितौ ॥ दुद्रुवुस्तदनीकानि हतनाथानि सर्वतः ॥ १६ ॥ विशीर्यमाणं स्वबलं दृष्ट्वा बाणोऽत्यमर्षणः ॥ कृष्णमभ्यद्रवत्संख्ये रथी हित्वैव सात्यकिम् ॥ १७ ॥ धनूंष्याकृष्य युगपद्बाणः पञ्चशतानि वै ॥ एकैकस्मिञ्छरौ द्वौ द्वौ सन्दधे रणदुर्मदः ॥ १८ ॥ तानि चिच्छेद भगवान्धनूंषि युगपद्धरिः ॥ सारथिं रथमश्वांश्च हत्वा शङ्खमपूरयत् ॥ १९ ॥ तन्माता कोटरा नाम नग्ना मुक्तशिरोरुहा ॥ पुरोऽवतस्थे कृष्णस्य पुत्रप्राणरिरक्षया ॥ २० ॥ ततस्तिर्यङ्मुखो नग्नामनिरीक्षन्गदाग्रजः ॥ बाणश्च तावद्विरथश्छिन्नधन्वाऽविशत्पुरम् ॥ २१ ॥ विद्राविते भूतगणे ज्वरस्तु त्रिशिरास्त्रिपात् ॥ अभ्यधावत दाशार्हं दहन्निव दिशो दश ॥ २२ ॥ अथ नारायणो देवस्तं दृष्ट्वा व्यसृजज्ज्वरम् ॥ माहेश्वरो वैष्णवश्च युयुधाते ज्वरावुभौ ॥ २३ ॥ माहेश्वरः

मूसलको चोट परेर मूर्च्छित भई धराशायी हुन गए र तिनका सेना आफ्ना स्वामीहरू मरेका देखेर भागे ॥ १६ ॥ यस प्रकार आफ्नू सेना छिन्न-भिन्न भएका देखेर महारथी बाणासुर निकै क्रोधित भयो । अनि त्यो सात्यकिलाई छाडेर रणभूमिमा श्रीकृष्णको सामुन्ने आइपुग्यो ॥ १७ ॥ त्यहाँ आएर त्यो रणोन्मत्त बाणासुरले एकैपल्ट पाँच सय धनु तानेर ती प्रत्येक धनुषमा दुइ-दुइ बाण चढायो ॥ १८ ॥ तर भगवानले ती धनुषहरूलाई एकै साथ काटिदिए र उसका सारथि रथ र घोडाहरू मारेर पाञ्चजन्य शङ्ख बजाए ॥ १९ ॥ अनि बाणासुरकी आमा कोटरा आफ्नू छोराको प्राणरक्षाका लागि नग्नावस्थामा जगल्टा फिंजेर युद्धमा श्रीकृष्णको सामुन्ने आएर उभिई ॥ २० ॥ उनलाई नग्नावस्थामा नहेर्नका लागि भगवानले आफ्नू मुख फर्काए । उसै बेला रथ र धनुहीन बाणासुर नगरमा भागेर गयो ॥ २१ ॥ यता भूतगण छिन्न-भिन्न भएपछि त्रिशिर

1129

छाडेको तीन शिर र तीन खुट्टा हुने कालज्वर दसै दिशाहरू दग्ध पर्दै श्रीकृष्णतिर लम्कियो ॥ २२ ॥ त्यो आउन लागेको देखेर श्रीनारायणले पनि आफ्नू शीतज्वर छाडे। अब दुवै ज्वर परस्पर लड्न लागे ॥२३॥ अन्त्यमा माहेश्वर ज्वर वैष्णवज्वर द्वारा पीडित भई सार्है डराएर करायो र कहीं निर्भय स्थान नदेखेर अतिशय विनयपूर्वक हात जोरेर भगवान् कृष्णसित शरणदानको लागि प्रार्थना गर्नलाग्यो ॥ २४ ॥ ज्वरले भन्यो—हे देव ! अनन्तशक्ति, सबैका अन्तरात्मा, एकमात्र ज्ञानस्वरूप, संसारको उत्पत्ति, स्थिति र लयका कारण र वेदवाक्यले लक्षित हजुर शुद्ध ब्रह्म हुनुहुन्छ, यस्ता परमेश्वरलाई म प्रणाम गर्दछु ॥ १५ ॥ काल, दैव, कर्म, जीव, स्वभाव, भूत-सूक्ष्म, शरीर सूत्र, अहङ्कार, एघार इन्द्रिय र पञ्चभूत यी सबैका सङ्घातरूपी लिंगदेह र त्यो बीज उम्रनु, बढ्नु—यी सबै हजुरका माया हुन्। हजुर यी सबैबाट अलग्ग रहनु हुन्छ। म हजुरको शरणमा परेको छु ॥ २६ ॥ हे नाथ ! हजुर लीलाले नै धारण गरेका अनेक रूपले देवगण, साधुगण र लोकमर्यादाको रक्षा गर्नुहुन्छ र कुबाटोमा जाने तथा हिंसाले आजीविका चलाउनेहरूको

ममाक्रन्दवैष्णवेन बलार्दितः ॥ अलब्ध्वाऽभयमन्यत्र भीतो माहेश्वरो ज्वरः ॥ शरणार्थी हृषीकेशं तुष्टाव प्रयताञ्जलिः ॥२४॥ ज्वर उवाच ॥ नमामि त्वाऽनन्तशक्तिं परेशं सर्वात्मानं केवलं ज्ञप्तिमात्रम् ॥ विश्वोत्पत्तिस्थानसंरोधहेतुं यत्तद्ब्रह्म ब्रह्मलिङ्गं प्रशान्तम् ॥ २५ ॥ कालो दैवं कर्म जीवः स्वभावो द्रव्यं क्षेत्रं प्राण आत्मा विकारः ॥ तत्सङ्घातो बीजरोहप्रवाहस्त्वन्मायैषा तन्निषेधं प्रपद्ये ॥ २६ ॥ नानाभावैर्लीलयैवोपपन्नैर्देवान्साधूँल्लोकसेतून्बिभर्षि ॥ हंस्युन्मार्गान्हिंसया वर्तमानान् जन्मैतत्ते भारहाराय भूमेः ॥ २७ ॥ तप्तोऽहंते तेजसा दुःसहेन शान्तोग्रेणात्युल्बणेन ज्वरेण ॥ तावत्तापो देहिनां तेऽङ्घ्रिमूलं नो सेवेरन् यावदाशानुबद्धाः ॥ २८ ॥ श्रीभगवानुवाच ॥ त्रिशिरस्ते प्रसन्नोऽस्मि व्येतु ते मज्ज्वराद्भयम् ॥ यो नौ स्मरति संवादं तस्य त्वन्न भवेद्भयम् ॥ २९ ॥ इत्युक्तोऽच्युतमानम्य गतो माहेश्वरो ज्वरः ॥ बाणस्तु रथमारूढः प्रागाद्योत्स्यञ्जनार्दनम् ॥ ३० ॥ ततो बाहुसहस्रेण नानायुधधरोऽसुरः ॥ मुमोच परमक्रुद्धो बाणांश्चक्रायुधे नृप ॥ ३१ ॥ तस्यास्यतोऽस्त्राण्यसकृच्चक्रेण क्षुरनेमिना ॥ चिच्छेद

संहार गर्नुहुन्छ। हजुरको यो अवतार पनि पृथ्वीको भारी हलुको पार्न भएको छ ॥ २७ ॥ हे प्रभो ! हजुरको शान्त, उग्र तथा डरलाग्दो दुःसह तेजरूप ज्वरले म सार्है सन्तप्त भइरहेको छु। हे भगवन् ! देहधारी जीवलाई तबसम्म ताप रहन्छ, जबसम्म ती आशारूपी पाशमा बाँधिइ रहनाले हजुरका चरण-कमलको आश्रय लिँदैनन्। अतः अब म हजुरको शरणमा आएको छु, मेरो सबै ताप निवारण गरिदिनोस् ॥ २८ ॥ भगवान्ले आज्ञा भयो—हे त्रिशिर ज्वर ! म तिमीसित प्रसन्न छु, अब मेरो ज्वरसित नडराऊ। जो जन मेरो र तिम्रो यो संवाद स्मरण गर्नेछन्, तिनलाई पनि तिम्रो भय रहने छैन ॥ २९ ॥ यसरी भगवान्ले आज्ञा भएपछि शिवजीको ज्वर उनलाई प्रणाम गरेर गयो। यतिमै *निराश बाणासुर रथमा बसेर भगवान्सित युद्ध गर्न रणभूमिमा आइपुग्यो ॥ ३० ॥ हे राजन् ! अनि बाणासुर निकै रिसाएर विविध शस्त्रास्त्र धारण गरेका आफ्ना हजार भुजाहरूले चक्रपाणि

* दृष्टान्त ( आशाहि परमं दुःखं निराशा परमं सुखम् )—यौटा विद्वान्ले आफ्नू चेलोसित भने—यदि कसैले सोध्यो भने तिमी मेरो नाम भनिसकेर भन्नेछौ कि मैले अमुक विद्वान्सित विद्या अथवा तत्त्वज्ञान प्राप्त गरेको छु। तिमी को उत्तरमा उसले यो भनोस्—'तिम्रो गुरु महामूर्ख र अज्ञानी हो !' अनि तिमी के भन्दछौ ?' यो शिष्य निरुत्तर भएपछि विद्वान्ले भने—'यस्तो स्थितिमा तिमी यतिमात्र भन्नु—मैले केवल दुइ कुरा सिकेको छु। पहिलो कुराले अति प्राप्त हुन्छ, त्यसैमा सन्तोष राख्नु र यो कुरा सम्झिरहनु कि आशा भन्दा निराशा राम्रो हुन्छ।

भगवान् कृष्णमाथि बाणवर्षा गर्नलाग्यो ॥ ३१ ॥ जब त्यसले पानी परे झैं शस्त्रास्त्रले ढाकिदियो तब भगवान्ले आफ्नू सुदर्शन चक्रले त्यसका भुजाहरूलाई वृक्षका हाँगा छिमले झैं छिमली दिए ॥३२॥ वाणासुरका हजारै हात काटिन लागेका देखेर भगवान शङ्कर चक्रधारी श्रीकृष्णकहाँ पुगेर सन्मुखभयो ।३३॥ श्रीशिवले आज्ञा भयो—'हे प्रभो ! हजुर वेद-वाक्यहरूमा लुकेको परम ज्योतिस्वरूप परब्रह्म हुनुहुन्छ । शुद्धचित्त साधुजन हजुरलाई आकाश झैं व्यापक र सदा निर्विकार देख्दछन् ॥३४॥ आकाश हजुरको नाभि र अग्नि मुख हो, जल वीर्य र स्वर्ग मस्तक हो, दिशाहरू श्रवण हुन्, पृथिवी चरण र चंद्रमा मन हुन्, सूर्य नेत्र र म शिव अहङ्कार हुँ, समुद्र पेट हो र देवराज इन्द्र भुजा हुन् ॥ ३५ ॥ औषधिहरू हजुरका रौं र ब्रह्मा बुद्धि हुन्, प्रजापति उपस्थ र धर्म हजुरको हृदय हो । यस प्रकार सबै लोकसित जसका अङ्गहरूको तुलना गरिन्छ, त्यो एकमात्र हजुर हुनुहुन्छ ॥ ३६ ॥ हे अक्षुण्ण तेजोमय प्रभो ! हजुरको अवतार धर्मको रक्षा र अभ्युदयको निम्ति भएको छ । म पनि हजुरकै प्रभावले प्रभावित भएर सातै भुवनको पालन-पोषण

भगवान्बाहूञ्छाखा इव वनस्पतेः ॥ ३२ ॥ बाहुषु छिद्यमानेषु बाणस्य भगवान्भवः ॥ भक्तानुकम्प्युपव्रज्य चक्रायुधमभाषत ॥ ३३ ॥ श्रीरुद्र उवाच ॥ त्वं हि ब्रह्म परं ज्योतिर्गूढं ब्रह्मणि वाङ्मये ॥ यं पश्यन्त्यमलात्मान आकाशमिव केवलम् ॥ ३४ ॥ नाभिर्नभोऽग्निर्मुखमम्बु रेतो द्यौः शीर्षमाशा श्रुतिरङ्घ्रिरुर्वी ॥ चन्द्रो मनो यस्य दृगर्क आत्मा अहं समुद्रो जठरं भुजेन्द्रः ॥ ३५ ॥ रोमाणि यस्यौषधयोऽम्बुवाहाः केशा विरिञ्चो धिषणा विसर्गः ॥ प्रजापतिर्हृदयं यस्य धर्मः स वै भवान्पुरुषो लोककल्पः ॥ ३६ ॥ तवावतारोऽयमकुण्ठधामन्धर्मस्य गुप्त्यै जगतो भवाय ॥ वयं च सर्वे भवतानुभाविता विभावयामो भुवनानि सप्त ॥ ३७ ॥ त्वमेक आद्यः पुरुषोऽद्वितीयस्तुर्यः स्वदृग्घेतुरहेतुरीशः ॥ प्रतीतसेऽथापि यथाविकारं स्वमायया सर्वगुणप्रसिद्ध्यै ॥ ३८ ॥ यथैव सूर्यः पिहितश्छायया स्वया छायां च रूपाणि च सञ्चकास्ति ॥ एवं गुणेनापिहितो गुणांस्त्वमात्मप्रदीपो गुणिनश्च भूमन् ॥ ३९ ॥ यन्मायामोहितधियः पुत्रदारगृहादिषु ॥ उन्मज्जन्ति निमज्जन्ति प्रसक्ता वृजिनार्णवे ॥ ४० ॥ देवदत्तमिमं लब्ध्वा नृलोकमजितेन्द्रियः ॥ यो नाद्रियेत त्वत्पादौ स शोच्यो ह्यात्मवञ्चकः ॥ ४१ ॥ यस्त्वां विसृजते मर्त्य आत्मानं प्रियमीश्वरम् ॥ विपर्ययेन्द्रियार्थार्थं विषमत्त्यमृतं त्यजन् ॥ ४२ ॥ अहं ब्रह्माऽथ विबुधा मुनयश्चामलाशयाः ॥ सर्वात्मना प्रपन्नास्त्वामात्मानं प्रेष्ठमीश्वरम् ॥४३॥ तं त्वा जगत्स्थित्युदयान्तहेतुं

गर्दछु ॥ ३७ ॥ हजुर एकमात्र आदिपुरुष, अद्वितीय, तुरीय, स्वप्रकाश, सबैका कारण, स्वयं कारणरहित सर्वेश्वर हुनुहुन्छ । तापनि सबै विषयलाई प्रभावित पार्न आफ्नी मायाको आश्रय लिएर गुणका विकाररूप देव–तिर्यक् मनुष्यादि शरीरमा भिन्न-भिन्न रूपले भासमान हुनुहुन्छ ॥ ३८ ॥ हे भूमन् ! जस्तै सूर्य मेघका छायाले आच्छादित भएर त्यस छायाका रूपलाई भिन्न-भिन्न रूपमा प्रकाशित पार्दछ, त्यस्तै स्वयं प्रकाश हजुर गुणले आच्छादित भएर ती सबै गुण तथा गुणाभिमानी जीवलाई प्रकाशित पार्नुहुन्छ ॥ ३९ ॥ ४० । हे प्रभो ! हजुरकी मायाले मोहित हुने र पुत्र, स्त्री र गृहादिमा आसक्त पुरुष नै संसाररूपी दुःखको सिन्धुमा डुब्दै-उत्रन्दै गर्दछन् । जो अजितेन्द्रिय पुरुष हजुरका पवित्र चरणमा अनुराग राख्दैनन्, ती स्वयंलाई धोखा दिने अत्यन्त शोचनीय मनुष्य हुन्छन् ॥ ४१ ॥ जो पुरुष दुःखरूप इन्द्रिय-सुखका लागि आफ्नू प्रिय आत्मारूप हजुर ईश्वरलाई त्यागि-

दिन्छ, त्यो प्राणी अमृत छाडेर विष पिउँछ ॥४२॥ म, ब्रह्मा, सबै देवता र शुद्धचित्त मुनिगण आफ्ना आत्मा, प्रियतम र प्रभुरूप हजुर परमेश्वरको सबै प्रकारले शरणागत रहन्छन् ॥४३॥ हे देव ! जगत्को उत्पत्ति-स्थिति र प्रलयका कारण, शान्त, सबैका सुहृद्, आत्मा, ईश्वर, अद्वितीय र जगत्का एकमात्र अधिष्ठाता हजुरलाई संसारबाट मुक्त हुनको निम्ति भज्दछौं ॥४४ । हे देव ! यो बाणासुर मेरो मनपरेको र इष्ट सेवक हो । मैले यसलाई अभय दिएको छु । हे प्रभो ! जस्तै प्रह्लादमा हजुरको कृपा थियो, त्यस्तै यो पनि हजुरको कृपा प्राप्त गरोस् ॥४५॥ भगवान् भन्नुहुन्छ—हे भगवन् ! हजुर जो भन्नुहुन्छ, हजुरको त्यो प्रियकार्य म अवश्य गर्नेछु । हजुरले जस्तो विचार्नु भएको थियो, मैले त्यसको अनुमोदन गरेको छु ॥ ४६ ॥ यो असुर विरोचनसुत बलिको छोरो हुनाले अवध्य छ । मैले प्रह्लादलाई पनि यही वर दिएको थिएँ-मेरो हातबाट तिम्रा सन्तानको वध हुनेछैन ॥ ४७ ॥ केवल यसको दर्प-दलन गर्न भुजाहरू छिमलिदिएँ र भूमिका भारस्वरूप यसका सेनाको संहार गरिदिएँ ॥४८॥ अब जुन यसका चार भुजाहरू शेष रहन गएका

समं प्रशान्तं सुहृदात्मदैवम् ॥ अनन्यमेकं जगदात्मकेतं भवापवर्गाय भजाम देवम् ॥४४॥ अयं ममेष्टो दयितोऽनुवर्ती मयाऽभयं दत्तममुष्य देव ॥ सम्पाद्यतां तद्भवतः प्रसादो यथा हि ते दैत्यपतौ प्रसादः ॥ ४५ ॥ श्रीभगवानुवाच ॥ यदात्थ भगवंस्त्वन्नः करवाम प्रियं तव ॥ भवता यद्व्यवसितं तन्मे साध्वनुमोदितम् ॥ ४६ ॥ अवध्योऽयं ममाप्येष वैरोचनिसुतोऽसुरः ॥ प्रह्लादाय वरो दत्तो न वध्यो मे तवान्वयः ॥ ४७ ॥ दर्पोपशमनायास्य प्रवृक्णा बाहवो मया ॥ सूदितं च बलं भूरि यच्च भारायितं भुवः ॥ ४८ ॥ चत्वारोऽस्य भुजाः शिष्टा भविष्यन्त्यजरामराः ॥ पार्षदमुख्यो भवतो न कुतश्चिद्भयोऽसुरः ॥ ४९ ॥ इति लब्ध्वाऽभयं कृष्णं प्रणम्य शिरसाऽसुरः ॥ प्राद्युम्निं रथमारोप्य सवध्वा समुपानयत् ॥५०॥ अक्षौहिण्या परिवृतं सुवासःसमलंकृतम् ॥ सपत्नीकं पुरस्कृत्य ययौ रुद्रानुमोदितः ॥ ५१ ॥ स्वराजधानीं समलंकृतां ध्वजैः सतोरणैरुक्षितमार्गचत्वराम् ॥ विवेश शङ्खानकदुन्दुभिस्वनैरभ्युद्यतः पौरसुहृद्द्विजातिभिः ॥ ५२ ॥ य एवं कृष्णविजयं शङ्करेण च संयुगम् ॥ संस्मरेत्प्रातरुत्थाय न तस्य स्यात्पराजयः ॥ ५३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धेऽनिरुद्धानयनं नाम त्रिषष्टितमोऽध्याय. ॥ ६३ ॥

छन्, ती अजर-अमर हुनेछन् र यो हजुरका पार्षदमा प्रधान हुनेछ । अब यो निर्भय रहने छ ॥ ४९ ॥ भगवान् द्वारा यस प्रकार जीवन र अभयदान पाएर बाणासुरले उनलाई आफ्नू मस्तक न्यूराई प्रणाम गरे र प्रद्युम्नतनय अनिरुद्धलाई नववधू सहित रथमा बसालेर त्याई उपस्थित गर्‍यो ॥ ५० ॥ अनि भगवान् कृष्णले श्रीमहादेवसित अनुमति लिएर एक अक्षौहिणी सेनाले रक्षित र वस्त्रालङ्कारहरूले अलंकृत नववधू सहित अनिरुद्धलाई अघिलगाई द्वारकाको निम्ति प्रस्थान गर्नुभयो ॥५१॥ त्यसपछि श्रीकृष्णले आफ्ना पुरवासी, स्वजन र ब्राह्मणहरूद्वारा स्वागत गरिंदै शङ्ख, ढोल, दुन्दुभी आदि बाजाका ध्वनिको साथै, जुन ध्वजा-पताका आदिले राम्ररी सजाइएकी थिई र जसको समस्त मार्ग तथा चौबाटामा पानी छर्किएको थियो, यस्ती राजधानी द्वारकामा प्रवेश गर्नुभयो ॥ ५२ ॥ हे राजन् ! जो प्राणी शंकर र कृष्णको युद्ध तथा विजय सम्बन्धी यो कथा बिहानै सम्झन्छ, त्यसको कहिल्यै पराभव हुँदैन ॥ ५३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायां त्रिषष्टितमोऽध्यायः ॥ ६३ ॥

( राजा नृगको आख्यान ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! एक दिन साम्ब, प्रद्युम्न, चारु, भानु र गद आदि यादवकुमार उपवनमा विहार गर्न गएका थिए ॥ १ ॥ निकै बेरसम्म खेल्नाले तिनलाई तिर्खा लाग्यो । अनि उनीहरूले जल खोज्दा थोटा पानी नभएको कूपमा थौटा विचित्र जीव बसेको देखे ॥ २ ॥ त्यस कूपमा पर्वत समान धेरै ठूलो छेपारो देखेर तिनीहरूलाई निकै विस्मय भयो र ती कृपावश त्यसलाई बाहिर झिकिदिने प्रयत्न गर्नलागे ॥ ३ ॥ तर जब त्यो छेपारोलाई छाला र डोरीले बाँधीसकेर पनि बाहिर झिक्न सकेनन्, तब तिनले उत्सुक भएर सबै कुरा श्रीकृष्णासित भने ॥ ४ ॥ अनि कमलनयन भगवान् विश्वम्भरले स्वयं गएर त्यसलाई देखी आफ्नू बायाँ हातको भरमा अनायास कूपबाट बाहिर झिकिदिए ॥ ५ ॥ उत्तमश्लोक भगवान् कृष्णका बाहुको स्पर्श हुनासाथ उसले छेपारोको रूप त्यागिदियो र खारेको सुवर्ण समान सुन्दर र अतिविचित्र वस्त्र, आभूषण तथा माला धारण गरेका देवता सदृश भए ॥ ६ ॥ यद्यपि मुकुन्द भगवान् सर्वज्ञ थिए, तापनि अरू सबैलाई ती अधम योनिमा आने कारण ज्ञात होस् भन्नाका लागि

श्रीशुक उवाच ॥ एकदोपवनं राजञ्जग्मुर्यदुकुमारकाः ॥ विहर्तुं साम्बप्रद्युम्नचारुभानुगदादयः ॥१॥ क्रीडित्वा सुचिरं तत्र विचिन्वन्तः पिपासिताः ॥ जलं निरुदके कूपे ददृशुः सत्त्वमद्भुतम् ॥२॥ कृकलासं गिरिनिभं वीक्ष्य विस्मितमानसाः ॥ तस्य चोद्धरणे यत्नं चक्रुस्ते कृपयान्विताः ॥३॥ चर्मजैस्तान्तवैः पाशैर्बद्ध्वा पतितमर्भकाः ॥ नाशक्नुवन्समुद्धर्तुं कृष्णायाचख्युरुत्सुकाः ॥४॥ तत्रागत्यारविन्दाक्षो भगवान्विश्वभावनः ॥ वीक्ष्योज्जहार वामेन तं करेण स लीलया ॥५॥ स उत्तमश्लोककराभिमृष्टो विहाय सद्यः कृकलासरूपम् ॥ सन्तप्तचामीकरचारुवर्णः स्वर्ग्यद्भुतालङ्करणाम्बरस्रक् ॥६॥ पप्रच्छ विद्वानपि तन्निदानं जनेषु विख्यापयितुं मुकुन्दः ॥ कस्त्वं महाभाग वरेण्यरूपो देवोत्तमं त्वां गणयामि नूनम् ॥७॥ दशामिमां वा कतमेन कर्मणा सम्प्रापितोऽस्यतदर्हः सुभद्र ॥ आत्मानमाख्याहि विवित्सतां नो यन्मन्यसे नः क्षममत्र वक्तुम् ॥८॥ श्रीशुक उवाच ॥ इति स्म राजा सम्पृष्टः कृष्णेनानन्तमूर्तिना ॥ माधवं प्रणिपत्याह किरीटेनार्कवर्चसा ॥९॥ नृग उवाच ॥ नृगो नाम नरेन्द्रोऽहमिक्ष्वाकुतनयः प्रभो ॥ दानिष्वाख्यायमानेषु यदि ते कर्णमस्पृशम् ॥१०॥ किं नु तेऽविदितं नाथ सर्वभूतात्मसाक्षिणः ॥ कालेनाव्याहतदृशो वक्ष्येऽथापि तवाज्ञया ॥ ११ ॥ यावत्यः सिकता भूमेर्यावत्यो दिवि तारकाः ॥ यावत्यो वर्षधाराश्च तावतीरददं स्म गाः ॥ १२ ॥ पयस्विनीस्तरुणीः शीलरूपगुणोपपन्नाः कपिलाहेमशृङ्गीः ॥ न्यायार्जितारूप्यखुराः

उनले सोधे–'हे महाभाग ! तिमी को हौ ? तिम्रो रूप अति मनोहर छ । म त ठानिरहेको छु कि तिमी निश्चय पनि कुनै श्रेष्ठ देवता हौ ॥ ७ ॥ हे कल्याणमूर्ते ! तिमीलाई कुन कर्मले यो अधम योनि मिल्यो ? तिमी यस योनिको योग्य त हुनै सक्तैनौ । म तिम्रो वृत्तान्त जान्न चाहन्छु । यदि त्यो भन्नयोग्य ठान्दछौ भने आफ्नू सबै हाल सुनाऊ ॥ ८ ॥ श्रीशुकदेव भन्दछन्—हे राजन् ! अनन्तमूर्ति भगवान् कृष्णले यसरी सोधेपछि राजा नृगले आफ्नू सूर्य झैं तेजस्वी तथा मुकुटयुक्त मस्तक न्युराएर भगवान्‌लाई प्रणाम गरेर भन्न लागे ॥ ९ ॥ नृग बोले—हे प्रभो ! म महाराज इक्ष्वाकुको छोरो राजा नृग हुँ । सम्भवतः दानीहरूको गणनामा कहिले हजुरको कानमा पनि मेरो नाम परेको होला ॥ १० ॥ हे नाथ ! हजूर सबै प्राणीका अन्तःकरणका साक्षी हुनुहुन्छ–हजूरले नजानेको के छ ? किनकि हजूरको दृष्टि काल पनि रोक्न समर्थ हुन सक्तैन । तापनि हजुरको आज्ञाले म आफ्नू

वृत्तान्त सुनाउँछु ॥ ११ ॥ हे प्रभो ! पृथ्वीमा जति रजःकण छन्, आकाशमा जति तारा छन् र वर्षातमा जति जलधारा खस्तछ र, मैले त्यति नै गाई दान गरेर विज्ञ ब्राह्मणहरूलाई
दिएको थिएँ ॥ १२॥ मैले दूध दिने तरुणी, शील, गुण सम्पन्न, धेरै थिउ दिने, सुनको सींग र चाँदीका खुर हुने, न्यायपूर्वक तथा वस्त्र-माला आदिले अलंकृत बाछा-बाछीले युक्त
गाईहरू राम्रा वस्त्रादिले अलंकृत, गुणशील सम्पन्न, बहुकुटुम्बी, सत्यपरायण, तपस्वी वेदपाठी र शिष्यहरूलाई पढाउने तथा सच्चरित्र युवक ब्राह्मणहरूलाई दिएको थिएँ ॥ १३ ॥ १४ ॥
यसरी मैले धेरै गाई, पृथ्वी, सुवर्ण, घर, अश्व, हात्ती र दासीहरूसहित कन्या, तिलपर्वत, चाँदी, शय्या, वस्त्र, परिच्छद अर्थात् रथ आदि दान दिएँ, अनेकौं यज्ञ गराएँ र धेरै कूप,
पोखरी आदि पनि बनाउन लगाएँ ॥ १५ ॥ एकपल्ट यौटा ब्राह्मणको गाई छुट्टिएर मेरो दान गर्ने गाईहरूको बीचमा मिसिई । मलाई त्यस कुराको ज्ञान थिएन । यसै निम्ति मैले
ती गाई अर्कै ब्राह्मणलाई दान दिएँ ॥ १६ ॥ त्यो गाई लिएर जाँदा गाईका स्वामी ब्राह्मणले भने–यो गाई मेरी हुन् र दान थापेर लैजाने ब्राह्मणले भने–'होइन, यी गाई मेरी हुन् म

सवत्सा दुकूलमालाभरणा ददावहम् ॥ १३ ॥ स्वलंकृतेभ्यो गुणशीलवद्भ्यः सीदत्कुटुम्बेभ्य ऋतव्रतेभ्यः ॥ तपः श्रुतब्रह्मवदान्यसद्भ्यः प्रादां युवभ्यो
द्विजपुङ्गवेभ्यः ॥ १४ ॥ गोभूहिरण्यायतनाश्वहस्तिः कन्याः सदासीस्तिलरूप्यशय्याः ॥ वासांसि रत्नानि परिच्छदात्रथानिष्टं च यज्ञैश्चरितं च पूर्तम्
॥ १५ ॥ कस्यचिद्द्विजमुख्यस्य भ्रष्टा गौर्मम गोधने ॥ सम्पृक्ताऽविदुषा सा च मया दत्ता द्विजातये ॥ १६ ॥ तां नीयमानां तत्स्वामी दृष्ट्वोवाच
ममेति तम् ॥ ममेति प्रतिग्राह्याह नृगो मे दत्तवानिति ॥१७॥ विप्रौ विवदमानौ मामूचतुः स्वार्थसाधकौ ॥ भवान्दाताऽपहर्तेति तच्छ्रुत्वा मेऽभवः
दुभ्रमः ॥ १८ ॥ अनुनीतावुभौ विप्रौ धर्मकृच्छ्रगतेन वै ॥ गवां लक्षं प्रकृष्टानां दास्याम्येषा प्रदीयताम् ॥ १९ ॥ भवन्तावनुगृह्णीतां किङ्करस्यावि-
जानतः ॥ समुद्धरत मां कृच्छ्रात्पतन्तं निरयेऽशुचौ ॥ २० ॥ नाहं प्रतीच्छे वै राजन्नित्युक्त्वा स्वान्यपाक्रमत् ॥ नान्यद्गवामप्ययुतमिच्छामीत्यपरो
ययौ ॥ २१ ॥ एतस्मिन्नन्तरे याम्यैर्दूतैर्नीतो यमक्षयम् ॥ यमेन पृष्टस्तत्राहं देवदेव जगत्पते ॥ २२ ॥ पूर्वं त्वमशुभं भुङ्क्षे उताहो नृपते शुभम् ॥
नान्तं दानस्य धर्मस्य पश्ये लोकस्य भास्वतः ॥ २३ ॥ पूर्वं देवाशुभं भुञ्ज इति प्राह पतेति सः ॥ तावदद्राक्षमात्मानं कृकलासं पतन्प्रभो ॥ २४ ॥

भरखर राजा नृगसित दान लिएर आउँदै छु ॥ १७ ॥ तब ती दुवै ब्राह्मण परस्पर झगडा गर्दै त्यसको निर्णय गराउन मकहाँ आए । तीमध्ये गाई लिएर जाने विप्रले भने—'यी गाई
मलाई तिमीले दान गरेर दिएको हो' र गाईका स्वामीले भने—'तिमीले मेरो गाई चोरेका हौ ।' त्यो पूरा प्रसङ्ग सुनेर मलाई भ्रम भयो ॥ १८ ॥ धर्मसङ्कटमा परेर मैले ती दुवै जना
ब्राह्मणसित प्रार्थना गरें–तपाईं दुवैमध्ये एक जना यो अधिकार छाडिदिनोस् । म उनलाई यसको साटो एक लाख उत्तम गाई दिन्छु ॥ १९ ॥ थाहा नपाएर मसित यो अपराध भएको
हो तपाईंहरू म सेवकमाथि कृपा गरेर मलाई घोर नरकमा जाने कष्टबाट जोगाउनोस्' ॥२०॥ अनि गाईका स्वामीले भने—'म यसको साटो केही पनि लिन्न' र ती तुरुन्त त्यहाँबाट
हिंडिदिए । अनि गाई पाउने त्यस गाईका स्वामी अर्का ब्राह्मण पनि–'अब लाख माथि दस हजार अझ थपिदिए पनि म यसको साटो लिन्न', यति भनेर ती ब्राह्मण पनि त्यहाँबाट गए
॥ २१ ॥ कालान्तरमा यमका दूतले मलाई यमराज कहाँ लिएर गए । हे देवदेव जगदीश्वर ! मलाई यमराजले भने—॥ २२ ॥ हे राजन् ! मलाई यो कुरा भन कि तिमी पहिले पापको

फल भोग्दछौ वा पुण्यकर्महरूको ? तिमीलाई तेजोमय लोक प्राप्त गराउने तिम्रा दान र पुण्यकर्मको कुनै सीमा छैन ॥ २३ ॥ अनि मैले भनें—'हे देव ! पहिले म पापको फल नै भोग्दछु ।' यमराजले भने—'लौ त जाऊ ।' हे प्रभो ! यमराजले यति भन्नासाथ मैले आफूलाई छेपारो रूपको भएर तल झरेको देखें ॥ २४ ॥ हे केशव ! म ब्राह्मणको भक्त, दानी र हजुरको दास थिएँ र मलाई हजुरको दर्शनको प्रबल लालसा थियो । अतः आजसम्म मेरो पूर्वजन्मको सम्झना हराएन ॥ २५ ॥ हे विभो ! हजुर परमात्मा हुनुहुन्छ । शुद्धचित्त योगेश्वरगण आफ्नो उपनिषद्रूपिणी दृष्टिले आफ्नू हृदयमा हजुरको ध्यान गर्दछन् । हे अधोक्षज ! यस्ता हजुर म अन्धबुद्धि मन्दमतिको समक्ष आज कसरी प्रकट हुनुभयो ? किनकि जसको संसारचक्र नष्टहुन खोज्दछ, उसैले हजुरको दर्शन पाउँछ ॥२६॥ हे देवदेव ! हे गोविन्द ! हे पुरुषोत्तम ! हे नारायण ! हे हृषीकेश ! हे पुण्यश्लोक ! हे अविनाशिन् ! ॥२७॥ हे कृष्ण ! अब म देवलोक जान्छु । हजुर मलाई आज्ञा बक्सियोस् । हे प्रभो ! हजुर यस्तो कृपा गर्नुहवस् कि म जहाँ रहे पनि मेरो चित्त सदा हजुरमै लीन रहोस् ॥ २८ ॥ सारा

ब्रह्मण्यस्य वदान्यस्य तव दासस्य केशव ॥ स्मृतिर्नाद्यापि विध्वस्ता भवत्सन्दर्शनार्थिनः ॥ २५ ॥ स त्वं कथं मम विभोऽक्षिपथः परात्मा योगेश्वरैः श्रुतिदृशामलहृद्विभाव्यः ॥ साक्षादधोक्षज उरुव्यसनान्धबुद्धेः स्यान्मेऽनुदृश्य इव यस्य भवापवर्गः ॥ २६ ॥ देवदेव जगन्नाथ गोविन्द पुरुषोत्तम ॥ नारायण हृषीकेश पुण्यश्लोकाच्युताव्यय ॥ २७ ॥ अनुजानीहि मां कृष्ण यान्तं देवगतिं प्रभो ॥ यत्र क्वापि सतश्चेतो भूयान्मे त्वत्पदास्पदम् ॥ २८ ॥ नमस्ते सर्वभावाय ब्रह्मणेऽनन्तशक्तये ॥ कृष्णाय वासुदेवाय योगानां पतये नमः ॥ २९ ॥ इत्युक्त्वा तं परिक्रम्य पादौ स्पृष्ट्वा स्वमौलिना ॥ अनुज्ञातो विमानाग्र्यमारुहत्पश्यतां नृणाम् ॥ ३० ॥ कृष्णः परिजनं प्राह भगवान्देवकीसुतः ॥ ब्रह्मण्यदेवो धर्मात्मा राजन्याननुशिक्षयन् ॥ ३१ ॥ दुर्जरं बत ब्रह्मस्वं भुक्तमग्नेर्मयागपि ॥ तेजीयसोऽपि किमुत राज्ञामीश्वरमानिनाम् ॥ ३२ ॥ नाहं हलाहलं मन्ये विषं यस्य प्रतिक्रिया ॥ ब्रह्मस्वं हि विषं प्रोक्तं नास्य प्रतिविधिर्भुवि ॥ ३३ ॥ हिनस्ति विषमत्तारं वह्निरद्भिः प्रशाम्यति ॥ कुलं समूलं दहति ब्रह्मस्वारणिपावकः ॥ ३४ ॥ ब्रह्मस्वं दुरनुज्ञातं भुक्तं हन्ति त्रिपूरुषम् ॥ प्रसह्य तु बलाद्भुक्तं दश पूर्वान्दशापरान् ॥ ३५ ॥ राजानो राजलक्ष्म्याऽन्धा

जगत्का उत्पत्तिस्थान, ब्रह्मस्वरूप, माया नामको अनन्त शक्तिले सम्पन्न, नित्यानन्दस्वरूप र योगेश्वर वासुदेवलाई मेरो अनेक नमस्कार ॥२९॥३०॥ यति भनेर नृगले भगवानको परिक्रमा गरी उनका पाउमा मस्तक न्वाराई प्रणाम गरे । अनि उनको आज्ञा पाएर राजा राजा नृग सबैले हेर्दाहेर्दै यौटा विमानमा बसेर गए । जब ब्रह्मण्यदेव देवकी नन्दन भगवान् कृष्णले यादव-राजकुमारहरूलाई शिक्षा दिंदै आफ्ना यन्धुगणलाई भन्नुभयो— ॥ ३१ ॥ 'अहो ! ब्राह्मणको धन ठूलो दुर्जय हुन्छ । त्यो अलिकति पनि खाएर अग्नि झैं तेजस्वी पुरुष पनि पचाउन सक्तैन । अनि आफैलाई ईश्वर मान्ने राजाहरूको त कुरै छैन ॥ ३२ ॥ म हलाहल विषलाई विष मान्दिन, किनकि त्यसको प्रतिकार गर्न सकिन्छ । मेरो विचारमा त ब्राह्मणको धन नै सबभन्दा विषम विष हो । संसारमा यसको शमन गर्न सक्ने कुनै पदार्थ छैन ॥ ३३ ॥ विष केवल खाने व्यक्तिलाई नै मार्दछ र अग्नि पनि जलले शान्त हुन्छ, परन्तु ब्राह्मणका धनरूपी अरणीबाट उत्पन्न अग्नि सारा कुललाई नै भस्म पारिदिन्छ ॥ ३४ ॥ यदि ब्राह्मणको धन, स्त्री र उनको सम्पत्ति लिएर भोगेमा

1135

त्यो तीन पुस्तालाई र यदि हठपूर्वक भोगेमा अगाडि र पछाडिका बीस-बीस पुस्तालाई नष्ट गरिदिन्छ ॥ ३५ ॥ जुन राजा नरकमा लैजाने ब्रह्मस्व हरण गर्नु उचित ठान्दछन्, ती मूर्ख राजलक्ष्मीले अन्धा भएर आफ्नू पतनको विचार गर्दैनन् ॥ ३६ ॥ जसको वृत्ति खोसिएको छ ती उदार र उनका कुटुम्बी रोए भने तिनको आँसुका एकेक थोपाले जति रजःकण-भिज्दछन् भने तिनको सर्वस्व हरण गर्ने निरंकुश राजा र तिनका कुटुम्बी त्यति वैवर्षसम्म कुम्भीपाक नाम ो नरकमा घोर कष्ट भोग्दछन् ॥ ३७ ॥ ३८ ॥ जो आफूले वा अरूले दिएको विप्र-वृत्ति हरण गरेर लिन्छ, त्यो साठी हजार वर्षसम्म विष्ठाको कीरा हुँदै जन्मदै मर्द रहन्छ ॥३९ । अतः मेरो त यही इच्छा रहन्छ—मेरो हातबाट कहिल्यै पनि कुनै ब्राह्मणको धन अपहरण नहोस्, किनकि त्यस्तो इच्छा गर्नेहरू पनि अल्पायु, शत्रुद्वारा पराजित र राज्यभ्रष्ट हुन्छन् । मरेपछि पनि ती अरूलाई कष्ट दिने सर्प हुन्छन् ॥ ४० ॥ अतः हे सुहृद्गण ! ब्राह्मणले अपराध गरे पनि उसित द्वेष नगर । उनले मारे अथवा धेरैपल्ट श्राप दिए पनि उनलाई सदा नमस्कार नै गर ॥ ४१ ॥ जस्तै म वेला वेलामा श्रद्धा-

नात्मपातं विचक्षते ॥ निरयं येऽभिन्यन्ते ब्रह्मस्वं साधु बालिशाः ॥ ३६ ॥ गृह्णन्ति यावत पांसून्कन्दतामश्रुबिन्दवः ॥ विप्राणां हृतवृत्तीनां वदान्यानां कुटुम्बिनाम् ॥ ३७ ॥ राजानो राजकुल्याश्च तावतोऽब्दान्निरङ्कुशाः ॥ कुम्भीपाकेषु पच्यन्ते ब्रह्मदायापहारिणः ॥ ३८ ॥ स्वदत्तां परदत्तां वा ब्रह्मवृत्तिं हरेच्च यः ॥ षष्टिवर्षसहस्राणि विष्ठायां जायते कृमिः ॥ ३९ ॥ न मे ब्रह्मधनं भूयाद्यद्गृद्ध्वाऽल्पायुषो नराः ॥ पराजिताश्च्युता राज्याद्भवन्त्युद्वेजिनोऽहयः ॥ ४० ॥ विप्रं कृतागसमपि नैव द्रुह्येत मामकाः ॥ घ्नन्तं बहु शपन्तं वा नमस्कुरुत नित्यशः ॥ ४१ ॥ यथाहं प्रणमे विप्राननुकालं समाहितः ॥ तथा नमत यूयं च योऽन्यथा मे स दण्डभाक् ॥ ४२ ॥ ब्राह्मणार्थो ह्यपहृतो हर्तारं पातयत्यधः ॥ अजानन्तमपि ह्येनं नृगं ब्राह्मणगौरिव ॥ ४३ ॥ एवं विश्राव्य भगवान्मुकुन्दो द्वारकौकसः ॥ पावनः सर्वलोकानां विवेश निजमन्दिरम् ॥ ४४ ॥

इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नृगोपाख्यानं नाम चतुःषष्टितमोऽध्यायः ॥ ६४ ॥

श्रीशुक उवाच ॥ बलभद्रः कुरुश्रेष्ठ भगवान्रथमास्थितः ॥ सुहृद्दिदृक्षुरुत्कण्ठः प्रययौ नन्दगोकुलम् ॥१॥ परिष्वक्तश्चिरोत्कण्ठैर्गोपैर्गोपीभिरेव च ॥ रामोऽभिवाद्य पितरावाशीर्भिरभिनन्दितः ॥२॥ चिरं नः पाहि दाशार्ह सानुजो जगदीश्वर ॥ इत्यारोप्याङ्कमालिङ्ग्य नेत्रैः सिषिचतुर्जलैः ॥३॥ गोप-

पूर्वक ब्राह्मणलाई प्रणाम गर्दछु, त्यस्तै तिमीहरूले पनि गर्नु उचित छ । जो यस्तो गर्दैन, त्यो मबाट दण्डनीय हुनेछ ॥ ४२ ॥ ब्राह्मणको धन हरण गरिएपछि त्यो हरण गर्नेलाई अधोगतिमा पुन्याउँछ । जस्तै त्यस ब्राह्मणको गाईले नजानीकन हरण गरिनाले पनि ती महादानी राजा नृगलाई अधम योनिमा फालिदियो ! ॥ ४३ ॥ सबै लोकलाई पवित्र पार्ने भगवान् कृष्ण द्वारकावासीलाई यस्तो उपदेश दिएर महलमा जानुभयो ॥४४॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां चतुःषष्टितमोऽध्यायः ॥ ६४ ॥

( बलभद्रको ब्रजागमन ) श्रीशुकदेव भन्नुहुन्छ—हे कुरुश्रेष्ठ ! एकपल्ट भगवान् बलरामजी आफ्ना बन्धु-बान्धवहरूलाई भेट्न साह्रै उत्कण्ठित भई रथमा बसेर नन्दजीको गोकुलमा पुगे ॥ १ ॥ त्यहाँ चिरकालदेखि दर्शनको निम्ति उत्कण्ठित गोप र गोपीहरूसित आलिङ्गित भएर बलरामले आफ्ना माता-पिता यशोदा र नन्दजीलाई सादर प्रणाम गरे

रती दुबैसे आशीर्वाद दिएर अभिनन्दन गरे ॥ २ ॥ उनले भने—हे दाशार्ह ! तिमी आफ्नू भाइ कृष्णसित हाम्रो चिरकालसम्म रक्षा गर यति भनेर नन्द र यशोदाले उनलाई काखमा लिएर हृदयमा टाँसे र प्रेमाश्रुले रुझाउन लागे ॥ ३ ॥ अनि बलरामले बूढा गोपहरू र सानाले बलरामलाई आफ्नू तथा सम्बन्ध अनुसार विधिवत् अभिवादन गरे ॥४॥ अनि समवयस्क ग्वाल-बालकहाँ गए र उनीतिर हाँसेर हात मिलाई भेटे। अब बलरामजी थकाई मारेर सुखपूर्वक बसे, तब कमलनयन भगवान् कृष्णको निम्ति समस्त भोग त्यागिदिने ग्वाल-बालले नजीकै आएर प्रेमगद्गद् वाणीले यादवहरूको कुशल सोधे र बलरामले पनि आरोग्यादिको विषयमा प्रश्न गरे ॥ ५-६ ॥ अनि ग्वाल-बाल भन्दछन्‌ले—'हे बलरामजी ! वसुदेव आदि हाम्रा सबै बन्धु-बान्धव सकुशल छन् ? अब त यहाँहरू स्त्री र सन्तानका पिता हुनुभयो। के कहिले हामीहरूकोपनि सम्झना गर्नुहुन्छ ? ॥ ७ ॥ यो ठूलो सौभाग्यको कुरा छ—पापी कंस मारियो हजुरका सुहृद्जन त्यसको बन्धनबाट मुक्त भए र हजुरहरू अब आफ्ना शत्रुहरूको संहार गरेर

वृद्धाँश्च विधिवद्यविष्ठैरभिवन्दितः ॥ यथा वयो यथा सख्यं यथा सम्बन्धमात्मनः ॥४॥ समुपेत्याथ गोपालान्हास्यहस्तग्रहादिभिः ॥ विश्रान्तं सुखमासीनं पप्रच्छुः पर्युपागताः ॥ ५ ॥ पृष्टाश्चानामयं स्वेषु प्रेमसगद्गदया गिरा ॥ कृष्णे कमलपत्राक्षे संन्यस्ताखिलराधसः ॥६॥ कच्चिन्नो बान्धवाराम सर्वे कुशलमासते ॥ कच्चित्स्मरथ नो राम यूयं दारसुतान्विताः ॥७॥ दिष्ट्या कंसो हतः पापो दिष्ट्या मुक्ताः सुहृज्जनाः ॥ निहत्य निर्जित्य रिपून्दिष्ट्या दुर्गं समाश्रिताः ॥ ८ ॥ गोप्यो हसन्त्यः पप्रच्छू रामसन्दर्शनादृताः ॥ कच्चिदास्ते सुखं कृष्णः पुरस्त्रीजनवल्लभः ॥ ९ ॥ कच्चित्स्मरति वा बन्धून्पितरं मातरं च सः ॥ अप्यसौ मातरं द्रष्टुं सकृदप्यागमिष्यति ॥ अपि वा स्मरतेऽस्माकमनुसेवां महाभुजः ॥ १० ॥ मातरं पितरं भ्रातॄन्पतीन्पुत्रान्स्वसॄरपि ॥ यदर्थे जहिम दाशार्ह दुस्त्यजान्स्वजनान्प्रभो ॥ ११ ॥ ता नः सद्यः परित्यज्य गतः संभिन्नसौहृदः ॥ कथं नु तादृशं स्त्रीभिर्न श्रद्धीयेत भाषितम् ॥ १२ ॥ कथं नु गृह्णन्त्यनवस्थितात्मनो वचः कृतघ्नस्य बुधाः पुरस्त्रियः ॥ गृह्णन्ति वै चित्रकथस्य सुन्दरस्मितावलोकोच्छ्वसितस्मरातुराः ॥१३॥ किं नस्तत्कथया गोप्यः कथाः कथयतापराः ॥ यात्यस्माभिर्विना कालो यदि तस्य तथैव नः ॥ १४ ॥ इति प्रहसितं शौरेर्जल्पितं

यौटा अभेद्य दुर्गमा बस्नु हुन्छ ॥ ८ ॥ अहिलेसम्म बलरामले बूढा पुरानासित नै भेटेका थिए। उसै बेला बलरामको स्नेह दृष्टिले सम्मानित गोपिनीहरू आएर हाँस्तै भने—'हे राम ! नगरकी नारीका वल्लभ श्रीकृष्ण प्रसन्न छन् ? ॥ ९ ॥ के ती कहिले आफ्ना बन्धु-बान्धव र माता-पिताको पनि स्मरण गर्दछन् ? के ती आफ्नी आमालाई हेर्न र भेट्न एकपल्ट यहाँ आउलान् ? ती महाबाहुलाई के कहिले हाम्रा सेवाको पनि सम्झना हुन्छ ? ॥ १० ॥ हे दाशार्ह ! जसको निम्ति हामीले आफ्ना घर माता-पिता, पति-पुत्र, भाई-बहिनी आदि दुस्त्यज बन्धुलाई पनि त्यागिदिएका थियौं, हे प्रभो ! ती हाम्रो स्नेहबन्धन छिनालेर हामीलाई यति छिटै त्यागेर गए ? यदि—'उनलाई किन रोकेनौ' भन्नुहुन्छ भने 'म तिम्रो उपकारको साटो कहिल्यै फेर्न सक्तिन' आदि उनका कपटी कुरामा विश्वास नगर्ने कुन स्त्री होली ?' ॥ ११-१२ ॥ यौटी गोपी—हे बलभद्रजी ! नगरका स्त्रीहरू त धेरै बाठी हुन्छन्, ती अव्यवस्थित चित्त र कृष्णका कुरामा कसरी पत्यार मान्दा हुनन् ?' अर्कीले भनी—'श्रीकृष्ण विचित्र प्रकारले अरि-परिका कुरा

बनाउन आन्दछन्, तिनको मनोहर हास्य, बाँगो हेराई र उद्दीप्त प्रेमवश ती अवश्य तीमाथि विश्वास गर्दा हुन्न् ॥ १३ ॥ यौटी अर्कीले भनी—'ए गोपिनी हो ! ह रीलाई तिनका कुरामित के चाशो ? छुनै अर्कै कुरा गर । यदि हाम्री दमय पनि तिनको समय बित्छ भने हाम्रा दिन पनि तिनी नभएर बित्न सक्छन् ॥ १४ ॥ यसै गरी श्रीकृष्णको हाँसो, उनको बोलचाल, उनको मनोहर रूप, गति र प्रेमालिङ्गनादिको स्मरण गर्दै ती व्रजबालाहरू रुन लागे ॥ १५ ॥ अनि विविध अनुनय-विनयमा कुशल भगवान् संकर्षणले तिनलाई कृष्णको मर्मस्पर्शी सन्देश सुनाएर सान्त्वना दिए ॥ १६ ॥ त्यसपछि भगवान् रास रात्रिमा गोपिनीहरूको प्रेम बढाउँदै चैत र वैशाख दुइ महीना त्यहीँ बसे ॥१७॥ व्रजनारीहरूले घेरिएका रोहिणी-नन्दन पूर्णचन्द्रको कान्तिले शोभायमान र कुसुम-पुष्पको सुगन्धले सुवासित यमुनाजीको सुरम्य कुञ्जमा यथेच्छ विहार गरे ॥१८॥ उसै बेला वरुणदेवले पठाएकी वारुणी देवीले वृक्षकोटरबाट मधुधाराको रूपमा बगेर सारा वनलाई आफ्नू सुगन्धले सुवासित पारिदिए। बलराम वायुले उडाएर ल्याएको त्यो

चारु वीक्षितम् ॥ गतिं प्रेमपरिष्वङ्गं स्मरन्त्यो रुरुदुः स्त्रियः ॥ १५ ॥ सङ्कर्षणस्ताः कृष्णस्य सन्देशैर्हृदयङ्गमैः ॥ सान्त्वयामास भगवान्नानाऽनुनय-कोविदः ॥ १६ ॥ द्वौ मासौ तत्र चावात्सीन्मधुं माधवमेव च ॥ रामः क्षपासु भगवान्गोपीनां रतिमावहन् ॥ १७ ॥ पूर्णचन्द्रकलामृष्टे कौमुदी-गन्धवायुना ॥ यमुनोपवने रेमे सेविते स्त्रीगणैर्वृतः ॥ १८ ॥ वरुणप्रेषिता देवी वारुणी वृक्षकोटरात् ॥ पतन्ती तद्वनं सर्वं स्वगन्धेनाध्यवासयत् ॥ १९ ॥ तं गन्धं मधुधाराया वायुनोपहृतं बलः ॥ आघ्रायोपगतस्तत्र ललनाभिः समं पपौ ॥ २० ॥ उपगीयमानचरितो वनिताभिर्हलायुधः ॥ वनेषु व्यचरत्क्षीवो मदविह्वललोचनः ॥२१॥ स्रग्व्येककुण्डलो मत्तो वैजयन्त्या च मालया ॥ बिभ्रत्स्मितमुखाम्भोजं स्वेदप्रालेयभूषितम् ॥ २२ ॥ स आजुहाव यमुनां जलक्रीडार्थमीश्वरः ॥ निजं वाक्यमनादृत्य मत्त इत्यापगां बलः ॥ अनागतां हलाग्रेण कुपितो विचकर्ष ह ॥ २३ ॥ पापे त्वं मामवज्ञाय यन्नायासि मयाहुता ॥ नेष्ये त्वां लाङ्गलाग्रेण शतधा कामचारिणीम् ॥ २४ ॥ एवं निर्भर्त्सिता भीता यमुना यदुनन्दनम् ॥

मधुधाराको बास्ना सुँघेर त्यहाँ पुगे र स्त्रीहरूका साथ त्यो पिए। अनि नशाको आनन्दमा उनका नेत्र विह्वल भइरहेका थिए, उनले घाँटीमा वनमाला र यौटै कानमा कुण्डल पहिरेका थिए, जो स्वभावैले मत्त थिए र आनुपर्यन्त लामो वैजयन्ती माला पहिरेका थिए तथा उनको हास्ययुक्त मुखारविन्द स्वेदरूपी तुषार कणले विभूषित थियो, ती आनन्दोन्मत्त राम व्रजनारीहरू द्वारा आफ्नू सुयश सुन्दै वनमा यता-उता डुल्नलागे ॥ १९-२१ ॥ उसै बेला श्री बलभद्रले जल-क्रीडाको निम्ति यमुनालाई डाके। अनि जब ती उनलाई मतवाला ठानेर उनको आज्ञा अनादर गर्दै आइनन् तब उनले रिसाई उनलाई आफ्नू हलोको टुप्पाले बलपूर्वक ताने ॥ २३ ॥ अनि भने—'ए मानिनी ! तँ मैले डाकेपछि पनि मेरो अवहेलना गरेर नटेरेर नमीच आइरहेकी छैनस्। अतएव म यो हलोको टुप्पाले तँ स्वेच्छाचारिणीको अनेक टुक्रा पारिदिनेछु* ॥ २४ ॥ हे राजन् !

* दृष्टान्त ( बलियोको झीरो टाउकोमा )—चोटा बाघ र दुइटा अन्य बनपशु शिकार गर्न गए। सबैले मिलेर चौटा हरिण मारे। जब बाग लगाउने बेला भयो तब बाघ स्वयं बाँड्न बस्यो। उसले शिकारको तीन भाग लगायो र भन्यो—'पहिलो भाग राजांश हुनाले मेरो भयो, त्यो म लिन्छु। शिकारमा पनि सबभन्दा बढी परिश्रम मैले गरेको छु यसै निम्ति दोस्रो भाग पनि मैले पाउनु पर्दछ। अब रह्यो तेस्रो भाग, त्यो चाहिँ जसको शरीरमा शक्ति छ, त्यो लोओस्।' यति सुनेर अन्य पशु चुपचाप त्यहाँबाट हिँडे ; किनकी रक्त छ, उनैको सारा मुलुक छ। यदि बलवान् व्यक्ति स्वार्थी छ भने निर्बल माथि अत्याचार हुँदै रहन्छ।

बलरामले यसरी हप्काएपछि यमुना डराइन् । ती चकितभावले आइन् र बलभद्रका न्युरेर भन्न लागिन्–॥ २४-२५ ॥ हे राम ! हे महाबाहो ! हे जगत्पते ! हजुरले आफ्नू एक अंशले नै सम्पूर्ण विश्व उचालि राख्नुभएको छ, म हजुरको पराक्रम जान्दीनथें ॥ २६ ॥ हे भगवन् ! मैले हजुरको सच्चा स्वरूप बुझ्न सकेकी थिइन । अतः हे विश्वात्मन् ! मलाई छाडिदिनोस् । हे भक्तवत्सल ! म हजुरको शरणमा छु' ॥ २७॥ यसरी यमुनाले प्रार्थना गरेपछि बलरामले उनलाई छाडिदिनु भयो । फेरि हात्ती जसरी ढोईहरूसित जलक्रीडा गर्दछ, त्यसै गरी ती गोपिनीसित जलक्रीडा गर्नलागे ॥ २८ ॥ यथेष्ट जलविहार गरेर यमुनाबाट निस्के । अनि लक्ष्मीले उनलाई नीलो वस्त्र, बहुमूल्य आभूषण र यौटा राम्रो माला अर्पण गरिन् ॥ २९ ॥ बलराम नीलाम्बर लगाई घाँटीमा माला पहिरी, चन्दनादिको लेप गरेर ऐरावत हात्ती झैं शोभित भए ॥३०॥ हे राजन् ! अझ पनि यमुनाजी उनैले तनाएका मार्गबाट बग्दै–बलरामको अपरिमित पराक्रमको सूचना दिए झैं छन् ॥ ३१ ॥ हे तात ! व्रजबालाहरूको माधुर्यले आकृष्ट भएर उनैसित व्रजमा क्रीडा गर्दै बलरामलाई यी दुइ महीनाका

उवाच चकिता वाचं पतिता पादयोर्नृप ॥ २५ ॥ राम राम महाबाहो न जाने तव विक्रमम् ॥ यस्यैकांशेन विधृता जगती जगतः पते ॥ २६ ॥ परं भावं भगवतो भगवन्मामजानतीम् ॥ मोक्तुमर्हसि विश्वात्मन्प्रपन्नां भक्तवत्सल ॥ २७ ॥ ततो व्यमुञ्चद्यमुनां याचितो भगवान्बलः ॥ विजगाह जलं स्त्रीभिः करेणुभिरिवेभराट् ॥ २८ ॥ कामं विहृत्य सलिलादुत्तीर्णायासिताम्बरे ॥ भूषणानि महार्हाणि ददौ लक्ष्मीः शुभां स्रजम् ॥ २९ ॥ वसित्वा वाससी नीले मालामामुच्य काञ्चनीम् ॥ रेजे स्वलंकृतो लिप्तो माहेन्द्र इव वारणः ॥ ३० ॥ अद्यापि दृश्यते राजन्यमुना कृष्टवर्त्मना ॥ बलस्यानन्तवीर्यस्य वीर्यं सूचयतीव हि ॥ ३१ ॥ एवं सर्वा निशा याता एकेव रमतो व्रजे ॥ रामस्याक्षिप्तचित्तस्य माधुर्यैर्व्रजयोषिताम् ॥ ३२ ॥
इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे बलदेवविजये यमुनाकर्षणं नाम पञ्चषष्टितमोऽध्यायः ॥ ६५ ॥

श्रीशुक उवाच ॥ नन्दव्रजं गते रामे करूषाधिपतिर्नृप ॥ वासुदेवोऽहमित्यज्ञो दूतं कृष्णाय प्राहिणोत् ॥ १ ॥ त्वं वासुदेवो भगवानवतीर्णो जगत्पतिः ॥ इति प्रस्तोभितो बालैर्मेन आत्मानमच्युतम् ॥ २ ॥ दूतं च प्राहिणोन्मन्दः कृष्णायाव्यक्तवर्त्मने ॥ द्वारकायां यथा बालो नृपो बाल-कृतोऽबुधः ॥ ३ ॥ दूतस्तु द्वारकामेत्य सभायामास्थितं प्रभुम् ॥ कृष्णं कमलपत्राक्षं राजसन्देशमब्रवीत् ॥ ४ ॥ वासुदेवोऽवतीर्णोऽहमेक एव न

रात्रि एक रात झैं लागे ॥ ३२ ॥ इति श्री मद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायां पञ्चषष्टितमोऽध्यायः ॥६५॥

( पौण्ड्रकवधको कथा ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! बलरामजी व्रज गएपछि करूषदेशको राजा पौण्ड्रकले अज्ञानवश यो निश्चय गर्‍यो कि 'म नै वासुदेव हुँ' र उसले भगवान् कृष्णकहाँ आफ्नू दूत पठायो ॥ १ ॥ 'हजुर नै जगत्पति भगवान् वासुदेव भएर पृथिवीमा अवतरित हुनुभएको हो' यस्ता कुरा गरेर उसका चाटुकारहरूले धाक लगाइदिनाले त्यो आफूलाई नै वासुदेव ठान्न लाग्यो ॥ २ ॥ बालकहरूद्वारा खेलमा बनाएका राजाको समान कृष्ण बनेको त्यस मन्दमतिले द्वारकावासी तथा अचिन्त्यगति श्रीहरि-कहाँ आफ्नू दूत पठायो ॥ ३ ॥ त्यस दूतले द्वारकापुरी गएर आफ्नू सभाभवनमा विराजमान कमलनयन भगवान कृष्णलाई आफ्नू स्वामीको जे समाचार सुनायो, त्यो यो थियो ॥४॥

एकमात्र मनै वासुदेव हुँ, अरु कोही होइन । मैले नै समस्त जीवहरूमा दया गर्नका लागि अवतार लिएको हुँ । तिमी झूठो आफूलाई 'वासुदेव' भन्न छाड ॥ ५ ॥ हे यादव ! तिमी मूर्खतावश मेरो जे-जे चिह्न गरिराख्दछौ त्यो त्याग, वा मेरो शरणमा आऊ, नभए मलाई आफूसित युद्ध गर्ने अवसर देऊ' ॥ ६ ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! त्यो मन्दमति पौण्ड्रकको आत्मप्रशंसाले भरिएको समचार सुनेर उग्रसेन आदि सबै सभासद् बेसरी गलल हाँसे ॥ ७ ॥ अनि पौण्ड्रकको खिल्ली उडाउँदै भगवानले हाँस्तै त्यस दूतसित भन्नुभयो—'हे दूत ! तँ गएर आफ्नू राजासित भनिदे—हे मूढ ! म आफ्ना सुदर्शनचक्रादि चिन्हहरू—जसको उकसाईमा लागेर तँ यस्तो कुरा गर्दैछस्—ती माथि र तँमाथि पनि छाड्नेछु । अनि तँ यति ठूलो बनेर कुरा गर्दैछस्, त्यो आफ्नू मुख लुकाएर जब तँ कङ्क, गृध्र र वट आदि पक्षिहरूले घेरिएर रणभूमिमा मरेर ढल्लास, तब तँ कुकुरको शरणमा जालास्' ॥ ८-९ ॥ दूतले भगवान्को त्यो तिरस्कारपूर्ण उत्तर आफ्नू स्वामीलाई सुनायो । यता श्रीकृष्ण रथमा चढेर काशी जान हिंडे ॥१०॥ युद्धको निम्ति श्रीकृष्णचन्द्रको उद्योग

चापरः ॥ भूतानामनुकम्पार्थं त्वं तु मिथ्याभिधां त्यज ॥५॥ यानि त्वमस्मच्चिह्नानि मौढ्याद्बिभर्षि सात्वत ॥ त्यक्त्वैहि मां त्वं शरणं नो चेद्देहि ममाहवम् ॥६॥ श्रीशुक उवाच ॥ कत्थनं तदुपाकर्ण्य पौण्ड्रकस्याल्पमेधसः ॥ उग्रसेनादयः सभ्या उच्चकैर्जहसुस्तदा ॥७॥उवाच दूतं भगवान्परिहासकथामनु॥ उत्स्रक्ष्ये मूढ चिह्नानि यैस्त्वमेवं विकत्थसे ॥ ८ ॥ मुखं तदपिधायाज्ञ कङ्कगृध्रवटैर्वृतः ॥ शयिष्यसे हतस्तत्र भविता शरणं शुनाम् ॥ ९ ॥ इति दूतस्तदाक्षेपं स्वामिने सर्वमाहरत् ॥ कृष्णोऽपि रथमास्थाय काशीमुपजगाम ह ॥ १० ॥ पौण्ड्रकोऽपि तदुद्योगमुपलभ्य महारथः ॥ अक्षौहिणीभ्यां संयुक्तो निश्चक्राम पुराद् द्रुमम् ॥ ११ ॥ तस्य काशिपतिर्मित्रं पार्ष्णिग्राहोऽन्वयान्नृप ॥ अक्षौहिणीभिस्तिसृभिरपश्यत्पौण्ड्रकं हरिः ॥ १२ ॥ शङ्खार्यसिगदाशार्ङ्ग श्रीवत्साद्युपलक्षितम् ॥ बिभ्राणं कौस्तुभमणि वनमालाविभूषितम् ॥ १३ ॥ कौशेयवाससी पीते वसानं गरुडध्वजम् ॥ अमूल्यमाल्याभरणं स्फुरन्मकरकुण्डलम् ॥ १४ ॥ दृष्ट्वा तमात्मनस्तुल्यवेषं कृत्रिममास्थितम् ॥ यथा नटं रङ्गगतं विजहास भृशं हरिः ॥ १५ ॥ शूलैर्गदाभिः परिघैः शक्त्यृष्टिप्रासतोमरैः ॥ असिभिः पट्टिशैर्बाणैः प्राहरन्नरयो हरिम् ॥ १६ ॥ कृष्णस्तु तत्पौण्ड्रककाशिराजयोर्बलं गजस्यन्दनवाजिपत्तिमत् ॥ गदासिचक्रेषुभिरार्दयद्भृशं यथा युगान्ते हुतभुक्पृथक्प्रजाः ॥ १७ ॥ आयोधनं तद्रथवाजिकुञ्जरद्विपत्खरोष्ट्रैररिणाऽवखण्डितैः ॥

देखेर महारथी पौण्ड्रक दुइ अक्षौहिणी सेना लिएर तुरुन्त आफ्नो नगरबाट बाहिर निस्क्यो । हे राजन् ! उही पौण्ड्रकको मित्र काशिराज पनि उसको सहायता गर्न तीन अक्षौहिणी सेना लिएर उसको पछि-पछि आइपुग्यो । त्यस वेला भगवान्‌ले पौण्ड्रकलाई देख्नुभयो—त्यो शङ्ख, चक्र, गदा, शार्ङ्गधनु र श्रीवत्सादि चिन्हले युक्त छ र घाँटीमा कौस्तुभ मणि धारण गरेर वनमालाले सुशोभित छ ॥ ११-१२-१३ ॥ त्यो रेशमी पीताम्बर, मूल्यवान् मुकुट, आभूषण र झलझलाउँदो मकराकृत कुण्डल लगाएको र गरुडचिन्ह युक्त ध्वजा भएको रथमा बसेको छ ॥ १४ ॥ नाट्यशालामा उपस्थित नट झैं उसलाई आफ्नै अनुरूप बनावटी वेष धारण गरेको देखेर श्रीकृष्ण मनमनै हाँसे ॥ १५ ॥ तत्काल ती सबै शत्रुहरूले संगसंगै भगवान्माथि त्रिशूल, गदा, परिघ, ऋष्टि, प्रास, तोमर, खड्ग, पट्टिश, बाण आदि अनेक थरिका शस्त्रास्त्रहरूले प्रहार गरे ॥ १६ ॥ जस्तै प्रलयकालीन अग्नि भिन्न-भिन्न

प्रकारले प्राणीहरूलाई कष्ट दिन्छ, त्यसै गरी श्रीकृष्णले पनि पौण्ड्रक र काशिराजका हात्ती-घोडा र पैदल सेनालाई आफ्नू गदा, खड्ग र चक्रादिले सखाप पारिदिए ॥ १७ ॥ ॥ १७ ॥ त्यस बेला भगवान्‌को चक्राघातले खण्ड-खण्ड भएका रथ, घोड़ा, हात्ती, मनुष्य, ऊँट र गधाले रणभूमि भूतनाथ शङ्करको क्रीडास्थली समान शूरवीरहरूलाई आनन्ददायिनी लाग्यो ॥१८॥ अनि भगवानले पौण्ड्रकलाई भन्नुभयो—'हे पौण्ड्रक ! तँले जो मसित दूतद्वारा भनेको थिइस्, ती सुदर्शनादि आयुध अब म तँ माथि प्रहार गर्दछु ॥१९॥ ए मूर्ख ! तँले जो मिथ्या मेरो नाम धारण गरिराखेको छस्, म त्यो पनि छुटाइदिन्छु र यदि मलाई तँसित युद्ध गर्ने साहस रहेन भने आज म तेरो शरणमा पर्न आउने छु, ॥२०॥ यस प्रकार पौण्ड्रकको तिरस्कार गरेर भगवान्‌ले आफ्ना तीक्ष्ण बाणले उसलाई रथहीन पारिदिए र जसरी इन्द्रले वज्रद्वारा पर्वतका पखेटा काटेका थिए, त्यस्तै सुदर्शन चक्रले त्यसको शिर काटेर छुट्याइदिए । आफ्ना बाणले काशिराजको पनि शिर काटेर उसलाई वायुसंचालित कमलकोश जस्तै काशीपुरीमा खसालिदिए ॥२१-२२॥ यस प्रकार उसको कथामृत सिद्धगण गान गर्दछन्, ती भगवान् कृष्णले आफुप्रति द्वेष राख्ने पौण्ड्रक र उसको मित्र काशीनरेशलाई मारेर द्वारकापुरी फर्कनु भयो ॥ २३ ॥ हे राजन् ! द्वेषभावले नित्यप्रति भगवान्‌को ध्यान गर्नाले त्यसका सबै कर्मबन्धन कटिसकेका थिए । अब त्यो पौण्ड्रक श्रीकृष्णको रूपधारण गर्नाले तद्रुप भयो ॥ २४ ॥ यता काशीपुरीको राजद्वारमा यौटा कुण्डलविमण्डित मस्तक खसेको देखेर सबै जना सन्देह गर्नलागे—'यो के हो ? कसको शिर हो ?' ॥२५॥ अन्तमा त्यसलाई काशिराजको शिर भन्ने जानेर सबै रानीहरू, राजपुत्र, बन्धु-बान्धव र पुरवासीजन 'हरे ! हामी मारियौं ! हा राजन् ! हा नाथ !' भन्दै विलाप गर्न लागे ॥२६॥ अनि काशिराजको पुत्र सुदक्षिणले आफ्ना पिताको अन्त्येष्टि-संस्कार गरेर यो निश्चय गरे—म आफ्ना पिताको वध गर्नेलाई मारेर पितृऋणबाट अऋणी हुन्छु । अतः त्यो उपाध्यायलाई लिएर तपद्वारा श्रीशिवजीको आराधना गर्नलाग्यो ॥२७-२८॥ अविमुक्त क्षेत्र काशीधाममा त्यसको तपले प्रसन्न भएर शंकर भगवान्‌ले वर माग भन्नुभयो । अनि उसले आफ्ना पिताको वध गर्नेलाई मार्ने उपायस्वरूप आफ्नू इच्छित वर माग्यो ॥२९॥ त्यसमा श्रीरुद्रले भन्नु

बभौ चित्तं मोदवहं मनस्विनामाक्रीडनं भूतपतेरिवोल्वणम् ॥ १८ ॥ अथाह पौण्ड्रकं शौरिर्भो भोः पौण्ड्रक यद्भवान् ॥ दूतवाक्येन मामाह तान्यस्त्राण्युत्सृजामि ते ॥ १९ ॥ त्याजयिष्येऽभिधानं मे यत्त्वयाऽज्ञ मृषा धृतम् ॥ व्रजामि शरणं तेऽद्य यदि नेच्छामि संयुगम् ॥२०॥ इति क्षिप्त्वा शितैर्बाणैर्विरथीकृत्य पौण्ड्रकम् ॥ शिरोऽवृश्चद्रथाङ्गेन वज्रेणेन्द्रो यथा गिरेः ॥ २१ ॥ तथा काशिपतेः कायाच्छिर उत्कृत्य पत्रिभिः ॥ न्यपातयत्काशिपुर्यां पद्मकोशमिवानिलः ॥२२॥ एवं मत्सरिणं हत्वा पौण्ड्रकं ससखं हरिः । द्वारकामाविशत्सिद्धैर्गीयमानकथामृतः ॥ २३ ॥ स नित्यं भगवद्ध्यानप्रध्वस्ताखिलबन्धनः ॥ बिभ्राणश्च हरे राजन्स्वरूपं तन्मयोऽभवत् ॥ २४ ॥ शिरः पतितमालोक्य राजद्वारे सकुण्डलम् ॥ किमिदं कस्य वा वक्त्रमिति संशयिरे जनाः ॥ २५ ॥ राज्ञः काशिपतेर्ज्ञात्वा महिष्यः पुत्रबान्धवाः ॥ पौराश्च हा हता राजन्नाथ नाथेति प्रारुदन् ॥ २६ ॥ सुदक्षिणस्तस्य सुतः कृत्वा संस्थाविधिं पितुः ॥ निहत्य पितृहन्तारं यास्याम्यपचितिं पितुः ॥ २७ ॥ इत्यात्मनाऽभिसन्धाय सोपाध्यायो महेश्वरम् ॥ सुदक्षिणोऽर्चयामास परमेण समाधिना ॥ २८ ॥ प्रीतोऽविमुक्ते भगवाँस्तस्मै वरमदाद्विभुः ॥ पितृहन्तृवधोपायं स वव्रे वरमीप्सितम् ॥ २९ ॥

भयो—'तिमी ब्राह्मणसहित यज्ञका देवता र ऋत्विक्स्वरूप दक्षिणाग्निको अभिचारविधिले आराधना गर । त्यसले ती अग्नि प्रमथगणका साथ प्रकट भएर जो ब्राह्मणका भक्त छैनन्, तिनमाथि प्रयुक्त भएपछि तिम्रो कामना पूरा गर्नेछ ।' शंकर भगवानको यस्तो आदेश पाएर सुदक्षिण ब्रह्मचर्यादि नियम पालन गर्दै श्रीकृष्णमाथि अभिचारमय अनुष्ठान गर्नलाग्यो ॥३०-३१॥ त्यो अभिचार पूर्ण हुनासाथ हवनकुण्डबाट यौटा डरलाग्दो अग्निपुरुष मूर्तिमान भएर प्रकट भयो । त्यसका कपाल र दाह्री-जुँगा तताएको तामा झैं राता थिए र आँखा-बाट आगोको फिलुङ्गा निस्किरहेथे ॥३२॥ त्यसको मुख उग्र दाह्रा र वक्र भृकुटीले गर्दा साह्रै क्रूर ज्ञात भइरहेथ्यो । उसको शरीर नाङ्गो थियो र ऊ जिब्रोले ओंठ चाट्तै अति तेजस्वी त्रिशूल घुमाइरहेको थियो ॥३३॥ हे राजन् ! त्यो आफ्ना तालु जत्रा खुट्टाले पृथ्वीकम्प पार्दै दशै दिशालाई दग्ध पार्दै भूतगणले घेरिएर द्वारकातिर हिंड्यो ॥३४॥ त्यो अभिचारमय अग्नि आउनलागेको देखेर समस्त द्वारकावासी यस्तो भयभीत भए, जस्तै वनमा आगो लागेपछि वनवासी प्राणी व्याकुल हुन्छन् ॥३५॥ ती भयातुर द्वारकावासीहरूले सभामा पासा

दक्षिणाग्निं परिचर ब्राह्मणैः सममृत्विजम् ॥ अभिचारविधानेन स चाग्निः प्रमथैर्वृतः ॥ ३० ॥ साधयिष्यति सङ्कल्पमब्रह्मण्ये प्रयोजितः ॥ इत्या-दिष्टस्तथा चक्रे कृष्णायाभिचरन्व्रती ॥ ३१ ॥ ततोऽग्निरुत्थितः कुण्डान्मूर्तिमानतिभीषणः ॥ तप्तताम्रशिखाश्मश्रुरङ्गारोद्गारिलोचनः ॥ ३२ ॥ दंष्ट्रोग्रभ्रुकुटीदण्डकठोरास्यः स्वजिह्वया ॥ आलिहन्सृक्किणी नग्नो विधुन्वंस्त्रिशिखं ज्वलत् ॥ ३३ ॥ पद्भ्यां तालप्रमाणाभ्यां कम्पयन्नवनीतलम् ॥ सोऽभ्यधावद् वृतो भूतैर्द्वारकां प्रदहन्दिशः ॥ ३४ ॥ तमभिचारदहनमायान्तं द्वारकौकसः ॥ विलोक्य तत्रसुः सर्वे वनदाहे मृगा यथा ॥३५॥ अक्षैः सभायां क्रीडन्तं भगवन्तं भयातुराः ॥ त्राहि त्राहि त्रिलोकेश वह्नेः प्रदहतः पुरम् ॥ ३६ ॥ श्रुत्वा तज्जनवैक्लव्यं दृष्ट्वा स्वानां च साध्वसम् ॥ शरण्यः सम्प्रहस्याह मा भैष्टेत्यविताऽस्म्यहम् ॥३७॥ सर्वस्यान्तर्बहिः साक्षी कृत्यां माहेश्वरीं विभुः ॥ विज्ञाय तद्विघातार्थं पार्श्वस्थं चक्रमादिशत् ॥३८॥ तत्सूर्यकोटिप्रतिमं सुदर्शनं जाज्वल्यमानं प्रलयानलप्रभम् ॥ स्वतेजसा खं ककुभोऽथ रोदसी चक्रं मुकुन्दास्त्रमथाग्निमार्दयत् ॥ ३९ ॥ कृत्यानलः प्रतिहतः स रथाङ्गपाणेरस्त्रौजसा स नृप भग्नमुखो निवृत्तः ॥ वाराणसीं परिसमेत्य सुदक्षिणं तं सर्त्विग्जनं समदहत्स्वकृतोऽभिचारः ॥ ४० ॥

खेलिरहेका भगवान कृष्णकहाँ गएर दीन स्वरले भने—'हे त्रिलोकीनाथ ! आज द्वारकापुरी अग्निले दग्ध हुन लागिरहेछ । हजुर यसको रक्षा गर्नुहवस्' ॥३६॥ प्रजाको आर्तनाद र बन्धु-हरूको व्याकुलता देखेर शरणागतवत्सल श्रीकृष्णले हाँसेर भन्नुभयो—'नडराओ म सबैको रक्षा गर्नेछु' ॥३७॥ भगवान् सबैका भित्र-बाहिरका साक्षी थिए । उनले जाने—यो उनैको नाशका लागि प्रयोग गरिएको माहेश्वरी कृत्या हो । अतः त्यसलाई नष्ट गर्नको लागि भगवानले आफ्नू साथमा विद्यमान सुदर्शनचक्रलाई आज्ञा दिनुभयो ॥ ३८ ॥ करोडौं सूर्य झैं प्रकाशमान र प्रलयाग्निको समान तेजस्वी विष्णुको सुदर्शनचक्र आफ्नू तेजले आकाश, दिशा र अन्तरिक्षलाई आलोकित पार्दै त्यो अग्निलाई पीडित पार्नलाग्यो ॥३९॥ भगवानको अस्त्रतेजले अभिभूत र भग्नमुख हुनाले कृत्या फर्किएर र काशीमा पुगेर ऋत्विक्सहित सुदक्षिणलाई नै भस्म पारिदियो । उसले आफूले गरेको अभिचार नै नाशको कारण बन्यो★॥४०॥

---

★ दृष्टान्त (कुन कामको फल हो भनेर यसलाई बुझाउँछ) साहरमा यौटा धोबी बस्दथ्यो । उसको नाम थियो पुलकार । त्यो नवयुवक थियो । त्यसै वर्ष उसको विवाह भएको थियो । नयाँ सुन्दरी दुलही घरमा थिई । ९.५

अनि त्यो सुदर्शनचक्रले पनि अट्टालिका, सभाभवन, बजार, नगरद्वार, द्वारका शिखर र घर आदिले पूर्ण कोश, हात्तीसार, अस्तबल, रथशाला र अन्नागार युक्त काशीपुरीमा प्रवेश गर्‍यो ॥४१॥ विष्णुभगवान्‌को सुदर्शन चक्र सारा काशी पोलेर फेरि महान् कर्म गर्ने भगवान् कृष्णकहाँ फर्केर आयो ॥ ४२ ॥ जो प्राणी ती पुण्यकीर्ति भगवान् कृष्णको यो चरित्र सुन्दछ वा सुनाउँछ, त्यो सबै पापबाट मुक्त हुन्छ ॥४३॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां षट्षष्टितमोऽध्यायः ॥ ६६ ॥

यति कथा सुनेर राजा परीक्षित्‌ले भने–हे भगवन् ! म अनन्त, अप्रमेय र अद्भुतकर्मा भगवान् बलरामको अरु चरित्र सुन्न चाहन्छु । सर्वसमर्थ बलरामजीले अरु जुन जुन

चक्रं च विष्णोस्तदनुप्रविष्टं वाराणसीं साट्टसभालयापणाम् ॥ सगोपुराट्टालककोष्ठसङ्कुलां सकोशहस्त्यश्वरथान्नशालाम् ॥४१॥ दग्ध्वा वाराणसीं सर्वां विष्णोश्चक्रं सुदर्शनम् ॥ भूयः पार्श्वमुपातिष्ठत्कृष्णस्याक्लिष्टकर्मणः ॥ ४२ ॥ य एवं श्रावयेन्मर्त्य उत्तमश्लोकविक्रमम् ॥ समाहितो वा शृणुयात्सर्वपापैः प्रमुच्यते ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पौण्ड्रकादिवधो नाम षट्षष्टितमोऽध्यायः ॥६६॥

राजोवाच ॥ भूयोऽहं श्रोतुमिच्छामि रामस्याद्भुतकर्मणः ॥ अनन्तस्याप्रमेयस्य यदन्यत्कृतवान्प्रभुः ॥१॥ श्रीशुक उवाच ॥ नरकस्य सखा कश्चिद् द्विविदो नाम वानरः ॥ सुग्रीवसचिवः सोऽथ भ्राता मैन्दस्य वीर्यवान् ॥ २ ॥ सख्युः सोऽपचितिं कुर्वन्वानरो राष्ट्रविप्लवम् ॥ पुरग्रामाकरान्घोषानदहद्वह्निमुत्सृजन् ॥ ३ ॥ क्वचित्स शैलानुत्पाट्य तैर्देशान्समचूर्णयत् ॥ आनर्तान्सुतरामेव यत्रास्ते मित्रहा हरिः ॥४॥ क्वचित्समुद्रमध्यस्थो दोर्भ्यामुत्क्षिप्य तज्जलम् ॥ देशान्नागायुतप्राणो वेलाकूलानमज्जयत् ॥ ५ ॥ आश्रमानृषिमुख्यानां कृत्वा भग्नवनस्पतीन् ॥ अदूषयच्छकृन्मूत्रैरग्नीन्वैतानिका-

कार्य गरे, त्यो सबै सुन्नुहवस् ॥१॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! नरकासुरको मित्र महाबली द्विविद नामको बाँदर वानर थियो । त्यो सुग्रीवको मन्त्री र मैन्दको दाजु थियो ॥ २ ॥ आफ्नो मित्र नरकासुरको साटो फेर्न भनेर त्यो समस्त राष्ट्रमा उपद्रव गर्दै पुर, ग्राम, नगर र घोषहरूमा आगो लगाएर भस्म पारिदिन्थ्यो ॥ ३ ॥ आनर्त देशमा जहाँ–त्यसका मित्रलाई मार्ने श्रीकृष्ण बस्तथे, उसले उपद्रव मचायो ।' त्यो कहिले पर्वतका टुक्रा पल्टाइदिएर कैयौं प्रदेश चूर्ण पारिदिन्थ्यो र कहिले दस हजार हात्तीको बल हुने

---

रात त्यो आफ्नी प्रेयसीसित सानन्द सुतिरहेका थियो । अन्दाजी दुइबजे त्यसको घरमा चोर पसे । आँगनमा त्यसको गधा र कुकुर बसिरहेका थिए । त्यस परिस्थितिमा गधाले कुकुरसित भन्यो—'मित्र ! यही तिम्रो काम को मौका हो, तिमी किन चुपचाप बसिरहेका छौ ? बेसरी भुक, जसले घरको स्वामी जागोस् ।' कुकुरले भन्यो–'मित्र ! तिमी मेरो कामको समयको चर्चा नगर । के तिमी जान्दैनौ—म रात दिन त्यसको घरको रक्षा गर्दछु, तैपनि त्यो मलाई पेटभरि खान दिँदैन । त्यो त मेरो आवश्यकता नै ठान्दैन किनकि हानि नभई प्रभुहरू आफ्ना आश्रितको उपयोगिता नै बुझ्दैनन् ।' गधाले भन्यो–'ए मूर्ख ! जो उचित मौकामा आफ्नु कार्य साधन गर्दछ, त्यो सेवक दुष्ट कहिन्छ ।' कुकुरले भन्यो–'उसै भए जो मौका परेपछि मात्र सेवकसित राम्रो सितले बोल्दछ–त्यो पनि दुष्ट प्रभु हो ।' अनि गधाले रिसाएर भन्यो–'ए दुष्ट ! तँ कृतघ्न होस् । जो विपत्तिको बेलामा पनि स्वामीका कार्यको उपेक्षा गर्दछ । अस्तु, अब म नै कोही यस्तो उपाय गर्दछु, जसले मालिक निद्राबाट उठोस् र त्यसको घरमा चोरी हुन नपाओस् ।' यति भनेर त्यो बेसरी कराउन लाग्यो । धोबी गधा कराएको सुनेर उठ्यो र ठोसा ठूलो लौरो लिएर यति बर्को कुट्यो कि गधा ठाउँ मै मर्‍यो । यसैले भनेको पनि छ–'पराधिकारचर्चां यः कुर्यात् स्वामिहितेच्छया । स विषीदति चीत्कारात् गर्दभस्ताडितो यथा ॥

त्यो दुष्ट वानर समुद्रको जलमा उभिएर आफ्ना भुजाले सिन्धुको जल उफारी किनारका ग्रामीण बस्तीहरू डुबाइदिन्थ्यो ॥ ४ ॥ ५ ॥ त्यो ऋषि-मुनिको आश्रमका वृक्ष आदि उखेलेर तिनको अग्निकुण्ड मल-मूत्रादिले दूषित पारिदिन्थ्यो ॥६॥ जस्तै भृङ्गी नामको कीरा अन्य कीरालाई लगेर आफ्नू प्वालमा थुनिदिन्छ, त्यस्तै त्यो बलले मदोन्मत्त वानर अनेक स्त्री र पुरुषलाई लगेर पर्वतका कन्दरामा थुनेर त्यसको द्वार ठूलो शिलाले थुनि दिन्थ्यो ॥ ७ ॥ यसरी त्यो दुष्ट वानर यता–उता अनेकानेक देशहरू ध्वस्त पार्दै तथा कुलाङ्गनाहरूलाई दूषित पार्दै मनोहर गायनको ध्वनि सुनेर रैवतक पर्वतमा पुग्यो ॥ ८ ॥ त्यहाँ उसले भामिनीहरूको बीचमा पद्ममाला विभूषित र सर्वाङ्ग सुन्दर यदुपति बलरामलाई मदिरा पान गरेर गाउन लागेका देख्यो । उस बखत तिनको नेत्र नशाको आनन्दले विह्वल भइरहेको थियो र उनको तुन्दिल शरीर मदस्रावी हात्ती झैं सुशोभित थियो ॥९॥१०॥ त्यो दुष्ट वानर वृक्षका हाँगामा चढेर हल्लाउँदै घरि-घरि स्त्रीहरूका साम्नुने आएर डिच्च दाँत देखाउन लाग्यो ॥११॥ प्रायः सबै तरुणी स्त्रीहरू स्वभावैले चञ्चल र

न्खलः ॥ ६ ॥ पुरुषान्योषितो दृप्तः क्ष्माभृद्द्रोणीगुहासु सः ॥ निक्षिप्य चाप्यधाच्छैलैः पेशस्कारीव कीटकम् ॥७॥ एवं देशान्विप्रकुर्वन्दूषयंश्च कुल-
स्त्रियः ॥ श्रुत्वा सुललितं गीतं गिरिं रैवतकं ययौ ॥ ८ ॥ तत्रापश्यद्यदुपतिं रामं पुष्करमालिनम् ॥ सुदर्शनीयसर्वाङ्गं ललनायूथमध्यगम् ॥ ६ ॥
गायन्तं वारुणीं पीत्वा मदविह्वललोचनम् ॥ विभ्राजमानं वपुषा प्रभिन्नमिव वारणम् ॥ १० ॥ दुष्टः शाखामृगः शाखामारूढः कम्पयन्द्रुमान् ॥
चक्रे किलकिलाशब्दमात्मानं सम्प्रदर्शयन् ॥११॥ तस्य धार्ष्ट्यं कपेर्वीक्ष्य तरुण्यो जातिचापलाः ॥ हास्यप्रिया विजहसुर्बलदेवपरिग्रहाः ॥ १२ ॥
ता हेलयामास कपिर्भ्रूक्षेपैः सम्मुखादिभिः ॥ दर्शयन्स्वगुदं तासां रामस्य च निरीक्षतः ॥ १३ ॥ तं ग्राव्णा प्राहरत्क्रुद्धो बलः प्रहरतां वर. ॥
स वञ्चयित्वा ग्रावाणं मदिराकलशं कपिः ॥ १४ ॥ गृहीत्वा हेलयामास धूर्तस्तं कोपयन्हसन् ॥ निर्भिद्य कलशं दुष्टो वासांस्यस्फालयद्बलम्
॥ १५ ॥ कदर्थीकृत्य बलवान्विप्रचक्रे मदोद्धतः ॥ तं तस्याविनयं दृष्ट्वा देशांश्च तदुपद्रुतान् ॥ १६ ॥ क्रुद्धो मुसलमादत्त हलं चारिजिघांसया ॥
द्विविदोऽपि महावीर्यः शालमुद्यम्य पाणिना ॥ १७ ॥ अभ्येत्य तरसा तेन बलं मूर्धन्यताडयत् ॥ तं तु सङ्कर्षणो मूर्ध्नि पतन्तमचलो यथा ॥१८॥

हास्यप्रिय हुन्छन् । अतः वानरको धृष्टता देखेर बलरामको साथका स्त्रीहरू हाँस्न लागे ॥ १२ ॥ अनि त्यो वानर बलरामको साम्नुने नै तिनलाई गुदा देखाएर आँखीभौं चम्काई, घुर्की देखाएर जिस्क्याउन लाग्यो ॥ १३ ॥ यसले प्रहार गर्नेहरूमा श्रेष्ठ बलरामजीले रिसाई वानरतिर सानो ढुङ्गा फाले, तर त्यो धूर्त ढुङ्गालाग्नबाट जोगिएर मदको घड़ा बोकेर भाग्यो । त्यो दुष्ट वानरले घडा फुटाइदियो र स्त्रीहरूका लुगा तानेर फारिदिन लाग्यो । यसरी बलरामको अवज्ञा गर्दै उनको अवहेलना गरी संकर्षणलाई क्रोधित पारिदियो ॥१४॥१५॥ त्यो मदोन्मत्त र बलवान् वानरले बलरामको उपेक्षा गरेर त्यस्तो अवज्ञा गरेपछि त्यसको धृष्टता तथा देश नाश गरेको सम्झी उनले त्यसको संहार गर्ने विचारले क्रोधित भई आफ्नू हलो र मूसल सम्हारे । पराक्रमी द्विविद पनि हातमा सालको वृक्ष लिएर बलरामतिर दगुर्‍यो र निकै वेगले त्यो वृक्ष उनको मस्तकमा बजार्‍यो । महाबलवान् बलरामजीले पर्वत झैं अडिग रहेर आफ्नू मस्तकमा गिर्नलागेको त्यो पर्वताकार वृक्ष बीचैमा हातले समातेर वानरमाथि आफ्नू

सुनन्द नामक मुसलले प्रहार गरे । त्यो मुसल लागेर द्विविदको टाउकोबाट रगतको धारा बग्नलाग्यो । त्यसले त्यो गेरुको धारायुक्त पर्वत झैं शोभित भयो, तर त्यसको चिन्ता नगरेर द्विविदले रिसाई यौटा अर्को वृक्ष उखेलेर त्यसका पात झारिदिई अत्यन्त वेगले बलराममाथि आक्रमण गऱ्यो । बलभद्रजीले त्यस वृक्षको पनि अनेक टुक्रा पारिदिए । त्यसपछि उसले राममाथि अर्को वृक्ष उखेलेर फ्याँक्यो, तर बलरामले त्यसको पनि सयौं टुक्रा पारिदिए ॥ १६-२१॥ श्रीबलरामसित यसरी युद्ध गर्दागर्दै द्विविद यौटा वृक्ष नष्ट हुनासाथ अर्को लिने गरेर वनको वारिपरिका सारा ठूला-साना वृक्षहरू समाप्त पारिदियो र वन वृक्षहीन देखियो ॥२२॥ वृक्षहरू सकिएपछि झन् बर्ता क्रोधित भएर त्यो दुष्ट द्विविदले बलराममाथि ढुङ्गाहरूको वर्षा गर्न लाग्यो, तर मुसलधारी बलरामजीले ख्याल-ख्यालमै ती ढुङ्गा-मुढा धूली पारिदिए ॥ २३ ॥ अन्त्यमा त्यो कपीश्वर आफ्नू तालको समान लामा ढुआले-मुड्की पारेर रोहिणीनन्दन बलरामतिर झम्ट्यो र उनको वक्षस्थलमा प्रहार गरिदियो ॥२४॥ बलरामजीले पनि कुपित भएर हलो र मुसल भूमिमा राखी आफ्ना दुवै हातले त्यसका घुआ र

प्रतिजग्राह बलवान्सुनन्देनाहनच्च तम् ॥ मुसलाहतमस्तिष्को विरेजे रक्तधारया ॥ १६ ॥ गिरिर्यथा गैरिकया प्रहारं नानुचिन्तयन् ॥ पुनरन्यं समुत्क्षिप्य कृत्वा निष्पत्रमोजसा ॥२०॥ तेनाहनत्सुसंक्रुद्धस्तं बलः शतधाऽच्छिनत् ॥ ततोऽन्येन रुषा जघ्ने तं चापि शतधाऽच्छिनत् ॥२१॥ एवं युध्यन्भगवता भग्ने भग्ने पुनः पुनः ॥ आकृष्य सर्वतो वृक्षान्निर्वृक्षमकरोद्वनम् ॥२२॥ ततोऽमुञ्चच्छिलावर्षं बलस्योपर्यमर्षितः ॥ तत्सर्वं चूर्णयामास लीलया मुसलायुधः ॥ २३ ॥ स बाहू तालसङ्काशौ मुष्टीकृत्य कपीश्वरः ॥ आसाद्य रोहिणीपुत्रं ताभ्यां वक्षस्यरूरुजत् ॥२४॥ यादवेन्द्रोऽपि तंदोर्भ्यां त्यक्त्वा मुसललाङ्गले ॥ जत्रावभ्यर्दयत्क्रुद्धः सोऽपतद्रुधिरं वमन् ॥२५॥ चकम्पे तेन पतता सटङ्कः सवनस्पतिः ॥ पर्वतःकुरु शार्दूल वायुना नौरिवाम्भसि ॥२६॥ जयशब्दो नमःशब्दः साधु साध्विति चाम्बरे ॥ सुरसिद्धमुनीन्द्राणामासीत्कुसुमवर्षिणाम् ॥२७॥ एवं निहत्यद्विविदं जगद्व्यतिकरावहम्॥ संस्तूयमानो भगवाञ्जनैः स्वपुरमाविशत् ॥२८॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे द्विविदवधो नाम सप्तषष्टितमोऽध्यायः ॥ ६७ ॥

श्रीशुक उवाच ॥ दुर्योधनसुतां राजँल्लक्ष्मणां समितिञ्जयः ॥ स्वयंवरस्थामहरत्साम्बो जाम्बवतीसुतः ॥ १ ॥ कौरवाः कुपिता ऊचुर्दुर्विनीतोऽयमर्भकः ॥ कदर्थीकृत्य नः कन्यामकामामहरद्बलात् ॥ २ ॥ बध्नीतेमं दुर्विनीतं किं करिष्यन्ति वृष्णयः ॥ येऽस्मत्प्रसादोपचितां दत्तां नो

ग्रीवामा प्रहार गरे । त्यस चोटले दिविद मुखबाट रगत उकेल्दै भूमिमा पल्टियो ॥ २५ ॥ हे कुरुश्रेष्ठ ! हुरीले गर्दा जलमा जसरी डुङ्गा हल्लिन्छ, त्यसै गरी त्यो पृथ्वीमा ढल्नाले जलकुण्ड र वृक्षहरू समेत सारा पर्वत हल्लिए ॥२६॥ बलरामजी माथि पुष्पवर्षा गर्ने देवता, सिद्ध र मुनीश्वरहरूको जय जयकार, नमस्कार र साधुको शब्दले आकाश भरियो ॥२७॥ संसारलाई कष्ट दिने द्विविदलाई मारेर बलभद्रजी परिजनद्वारा स्तूयमान हुँदै नगरमा गए ॥२८॥इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायां सप्तषष्टितमोऽध्यायः॥६७॥

(जाम्बवती-तनय साम्बको विवाह) शुकदेवजी भन्दछन्—हे राजन् ! जाम्बवतीका छोरा रणवीर साम्बले दुर्योधनकी छोरी लक्ष्मणाई उसको स्वयंवरबाट हरेर ल्याएका थिए ॥१॥ त्यसले कौरव अत्यन्त कुपित भएर परस्पर भन्नलागे–'यो निकै अटेरी छ । हेर, यसको हाम्रो अवहेलना गरेर आफूलाई मनपराउने कान्याको बलपूर्वक अपहरण गरेर लगिदिए ॥२॥

'यस दुष्टलाई समातेर बाँध, ती यादवहरूले हामीलाई के गर्छन ? ती हामीले नै दिएको र हाम्रो कृपाले धन-धान्य सम्पन्न पृथ्वीको राज्य भोग्दछन् ॥ ३ ॥ यदि आफ्नू छोरोलाई बन्धनमा परेको सुनेर यादवहरू यहाँ आए भने पनि प्राणायामादि द्वारा राम्ररी वशीभूत पारिएको प्राणवायु समान दर्पहीन भएर शान्त हुने छन्' ॥ ४ ॥ यस्तो विचार गरेर कुरुवृद्ध भीष्मपितामहको पनि अनुमति लिएर कर्ण, शल, भूरिश्रवा, यज्ञकेतु र दुर्योधनादि वीर साम्बलाई पक्रने तर्खरमा अग्जमाए ॥ ५ ॥ महारथी साम्ब धृतराष्ट्रका छोराहरूलाई आफ्नू पछि-पछि आउन लागेका देखेर यौटा उत्तम धनुष लिएर सिंह झैं एक्लैं डटे ॥ ६ ॥ यता उनलाई पक्रने इच्छाले आएका कर्णादि वीर धनुष धारण गरेर रिसाई—'पर्खी-पर्खी' भन्दै कराई बाण-वर्षा गर्नलागे ॥ ७ ॥ हे कुरुश्रेष्ठ ! त्यरी कौरवहरूले आक्रमण गरेपछि यदुनन्दन कृष्णतनय साम्ब तिनको पराक्रम–क्षुद्र मृगको पराक्रम सिंहले सहन नसके झैं सहन सकेनन् ॥ ८ ॥ उनको आफ्नू उत्तम धनुषको टङ्कार गरेर त्यसबाट एकैसाथ छाडेका छ-छ बाणहरूले ती कर्णादि वीरहरूलाई भिन्न भिन्न वेधन गऱ्यो ॥ ९ ॥ उनले

भुञ्जते महीम् ॥ ३ ॥ निगृहीतं सुतं श्रुत्वा यद्येष्यन्तीह वृष्णयः ॥ भग्नदर्पाः शमं यान्ति प्राणा इव सुसंयताः ॥ ४ ॥ इति कर्णः शलो भूरिर्यज्ञकेतुः सुयोधनः ॥ साम्बमारेभिरे बद्धुं कुरुवृद्धानुमोदिताः ॥ ५ ॥ दृष्ट्वाऽनुधावतः साम्बो धार्तराष्ट्रान्महारथः ॥ प्रगृह्य रुचिरं चापं तस्थौ सिंह इवैकलः ॥ ६ ॥ तं ते जिघृक्षवः क्रुद्धास्तिष्ठ तिष्ठेति भाषिणः ॥ आसाद्य धन्विनो बाणैः कर्णाग्रण्यः समाकिरन् ॥ ७ ॥ सोऽपविद्धः कुरुश्रेष्ठ कुरुभिर्यदुनन्दनः ॥ नामृष्यत्तदचिन्त्यार्भः सिंहः क्षुद्रमृगैरिव ॥ ८ ॥ विस्फूर्ज्य रुचिरं चापं सर्वान्विव्याध सायकैः ॥ कर्णादीन्षड्रथान्वीरांस्तावद्भिर्युगपत्पृथक् ॥ ९ ॥ चतुर्भिश्चतुरो वाहानेकैकेन च सारथीन् ॥ रथिनश्च महेष्वासांस्तस्य तत्तेऽभ्यपूजयन् ॥ १० ॥ तं तु ते विरथं चक्रुश्चत्वारश्चतुरो हयान् ॥ एकस्तु सारथिं जघ्ने चिच्छेदान्यः शरासनम् ॥ ११ ॥ तं बद्ध्वा विरथीकृत्य कृच्छ्रेण कुरवो युधि ॥ कुमारं स्वस्य कन्यां च स्वपुरं जयिनोऽविशन् ॥ १२ ॥ तच्छ्रुत्वा नारदोक्तेन राजन्सञ्जातमन्यवः ॥ कुरून्प्रत्युद्यमं चक्रुरुग्रसेनप्रचोदिताः ॥ १३ ॥ सान्त्वयित्वा तु तान्रामः सन्नद्धान्वृष्णिपुङ्गवान् ॥ नैच्छत्कुरूणां वृष्णीनां कलिं कलिमलापहः ॥ १४ ॥ जगाम हास्तिनपुरं रथेनादित्यवर्चसा ॥ ब्राह्मणैः कुलवृद्धैश्च वृतश्चन्द्र इव ग्रहैः ॥१५॥ गत्वा गजाह्वयं रामो बाह्योपवनमास्थितः ॥ उद्धवं प्रेषयामास धृतराष्ट्रं बुभुत्सया ॥ १६ ॥ सोऽभिवन्द्याम्बिकापुत्रं भीष्मं

आफ्ना चार-चार बाणले चार चार अश्व र एक-एकले महान् धनुर्धर छ रथिहरूलाई चोट पुऱ्याए। तिनको त्यो पराक्रममा विपक्षी वीरहरू पनि सन्हनी गर्न लागे ॥ १० ॥ अनि ती सबै मिलेर साम्बलाई रथहीन तुल्याए, अनि चार जनाले चार अश्व मारिदिए, यौटाले सारथीको वध गरे र एकले धनुष काटिदिए ॥ ११ ॥ यसरी ती वीर कौरवहरूले ठूलो कष्टपूर्वक साम्बलाई युद्धमा रथहीन पारी उनलाई बाँधेर आफ्नू विजयोत्सव मनाउदै कन्या सहित हस्तिनापुर लगे ॥ १२ ॥ हे राजन् ! यता नारदजीको मुखबाट यो समचार पाएर यादवहरूलाई निकै रिस उठ्यो र ती महाराज उग्रसेनको आज्ञाले चढाई गर्नें तर्खरमा लागे ॥ १३ ॥ कलिमल-विनाशक बलराम यो चाहन्नथे—कौरव र यादवहरूमा झनै कलह उत्पन्न होस। अतः उनले युद्धका लागि तत्पर यादव वीरहरूलाई बुझाएर शान्त पारिदिए ॥ १४ ॥ ग्रहहरू द्वारा घेरिएका चन्द्रमा समान ब्राह्मण त कुटुम्बका

बुढा-पुरा नासित ती सूर्यँ जस्तै तेजस्वी रथमा बसेर हस्तिनापुरतिर हिंडे ॥ १५ ॥ हस्तिनापुर पुगेपछि उनले नगर बाहिरै यौटा बगैंचामा बसे र ती कौरवहरूको अभिप्राय जान्न-बुझ्न उद्धवलाई धृतराष्ट्रकहाँ पठाए ॥१६॥ उद्धवले कौरवहरूको सभामा गएर अम्बिकानन्दन धृतराष्ट्र, भीष्म, द्रोण, कर्ण, वाह्लीक तथा दुर्योधनको यथाविधि अभ्यर्थना गरेर उनलाई बलरामजी पाल्नु भएको सूचना दिए ॥१७॥ आफ्ना अतिप्रिय सुहृद् बलराम पाल्नुभयो भन्ने समचार सुनेर ती प्रसन्न भए र उद्धवको सत्कार गरेर धेरै माङ्गलिक वस्तु-हरू लिई बलरामको समक्ष पुगे ॥१८॥ आफाफना अवस्था अनुसार ती सबै यथायोग्य बलरामजीसित भेटे र उनलाई पाद्यार्घ्य, गाई आदि अर्पण गरे। ती कौरवहरू मध्ये जतिले बलरामको प्रभाव जान्दथे, तिनले मस्तक न्यूराएर उनलाई प्रणाम गरे ॥१९॥ अनि दुवै पक्षले परस्पर कुशल सोधे र यो सुनेर कि हाम्रा सबै बन्धुगण सकुशल छन्–श्रीबलराम यस्तो निर्भीक वाक्य बोल्नुभयो–॥२०॥ 'राजाधिराज उग्रसेनले तिमीहरूलाई जे आज्ञा दिएका छन्–त्यो शान्तचित्तले सुनेर तुरुन्त त्यसको पालन गर ॥२१॥ यहाँ

द्रोणं च वाह्लिकम् ॥ दुर्योधनं च विधिवद्राममागतमब्रवीत् ॥ १७ ॥ तेऽतिप्रीतास्तमाकर्ण्य प्राप्तं रामं सुहृत्तमम् ॥ तमर्चयित्वाऽभिययुः सर्वे मङ्गल-पाणयः ॥ १८ ॥ तं सङ्गम्य यथान्यायं गामर्घ्यं च न्यवेदयन् ॥ तेषां ये तत्प्रभावज्ञाः प्रणेमुः शिरसा बलम् ॥ १९ ॥ बन्धून्कुशलिनः श्रुत्वा पृष्ट्वा शिवमनामयम् ॥ परस्परमथो रामो बभाषेऽविक्लवं वचः ॥ २० ॥ उग्रसेनः क्षितीशेशो यद्व आज्ञापयत्प्रभुः ॥ तदव्यग्रधियः श्रुत्वा कुरुध्वं मा विल-म्बितम् ॥ २१ ॥ यद्यूयं बहवस्त्वेकं जित्वाऽधर्मेण धार्मिकम् ॥ अबध्नीताथ तन्मृष्ये बन्धूनामैक्यकाम्यया ॥२२॥ वीर्यशौर्यबलोन्नद्धमात्मशक्तिसमं वचः ॥ कुरवो बलदेवस्य निशाम्योचुः प्रकोपिताः ॥२३॥ अहो महच्चित्रमिदं कालगत्या दुरत्यया ॥ आरुरुक्षत्युपानद्वै शिरो मुकुटसेवितम् ॥२४॥ एते यौनेन सम्बद्धाः सहशय्यासनाशनाः ॥ वृष्णयस्तुल्यतां नीता अस्मद्दत्तनृपासनाः ॥ २५ ॥ चामरव्यजने शङ्खमातपत्रं च पाण्डुरम् ॥ किरीट-मासनं शय्यां भुञ्जन्त्यस्मदुपेक्षया ॥ २६ ॥ अलं यदूनां नरदेवलाञ्छनैर्दातुः प्रतीपैः फणिनामिवामृतम् ॥ येऽस्मत्प्रसादोपचिता हि यादवा आज्ञाप-यन्त्यद्य गतत्रपा बत ॥ २७ ॥ कथमिन्द्रोऽपि कुरुभिर्भीष्मद्रोणार्जुनादिभिः ॥ अदत्तमवरुन्धीत सिंहग्रस्तमिवोरणः ॥२८॥ श्रीशुक उवाच ॥ जन्म-

अनेक वीरहरू मिलेर धार्मिक र एक्लो साम्बलाई जुन अधर्मपूर्वक जितेर बाँधेका छौ, त्यो मैले-'बन्धुहरूमा एकता बनिरहोस्' यस विचारले सहन गरें ॥२२॥ वीर्य, शौर्य र बलको उत्कर्षले पूर्ण तथा उनको शक्तिको अनुरूप बलरामका वचन सुनेर कौरवहरू रिसाई भन्नलागे ॥ २३ ॥ 'अहो! यो विचित्र कुरा छ। कालको गति पनि नाघिनसक्नु हुन्छ, जसले आज खुट्टाका जुत्ता मुकुटसेवित मस्तकमा पुग्न खोज्दैछ ॥२४॥ यी यादव कुन्तीको विवाह सम्बन्धले हाम्रा सम्बन्धी भए र हामीबाट राज्याधिकार पाएर नै हामीसित सुत्ने, बस्ने, संगै उठ्ने र खाने गर्दा यी हाम्रो बराबरीको पदमा पुगेका हुन् ॥२५॥ हाम्रो उपेक्षाले नै आज चमर, व्यजन, शङ्ख, श्वेत छत्र, मुकुट, राजसिंहासन तथा शय्या आदिको उपभोग गर्दछन् ॥२६॥ सर्पलाई पिलाएको दूध जस्तै दुःखदायक हुन्छ. यस्तै यी यादवहरूका छत्र-चामरादि राजचिह्न आफ्ना दाताको नै प्रतिकूल गइरहेको छ! अब इनको आवश्यकता छैन–यी सबै यादवहरूसित खोस्नुपर्दछ। जुन यादव हाम्रो नै कृपाले यति ठूला भए, ती अब निर्लज्ज भएर हामीलाई आज्ञा दिन्छन् ॥२७॥ जस्तै सिंहको अधिकारको

वस्तुलाई स्यालले भोग्न सक्तैन । त्यस्तै नै भीष्म,द्रोण र अर्जुन आदि कौरवहरूलाई नदिई इन्द्र पनि कुनै वस्तु कसरी उपभोग गर्नसक्तछन् ?' ॥२८॥ श्रीशुकदेव भन्नुहुन्छ–हे भरतश्रेष्ठ ! त्यस वेला ती असभ्य कौरव कुल-कुटुम्ब र सम्पत्तिको मदले उन्मत्त भइरहेका थिए । अतः बलरामलाई त्यस्ता दुर्वचन भनेर ती नगरमा फर्किए ॥२९॥ कौरवहरूको त्यस्तो धृष्टता देखेर तथा तिनका अवाच्य सुनेर बलराम बेसरी हाँसेर भन्नलागे–त्यस वेला रिसले उनको आकृति यस्तो उग्र भएको थियो कि उनको मुखतिर हेर्न पनि सकिन्नथ्यो ॥ ३० ॥ उनले भने–'अनेक थरिका मदले उन्मत्त दुष्टजन अशान्ति खोज्दछन् । तिनलाई पशु झैं लट्ठीले शान्त पार्ने उपाय केवल लौरो नै हुनसक्तछ ॥३१॥ यिनैको कल्याणार्थ म रिसले चूर युद्धको निम्ति तत्पर यादवहरू र कृष्णलाई कुनै युक्तिले बुझाएर यहाँ आएँ ॥ ३२ ॥ तर यी मन्दमति तथा कलहप्रिय दुष्ट कौरव यस्ता अभिमानी भइरहेछन् कि मेरो तिरस्कार गरेर यिनले यस्तो कठोर भाषण दिए ! ॥३३॥ इन्द्रादि लोकपाल पनि जसको आज्ञा मान्दछन्–ती भोज, वृष्णि र अन्धकवंशी यादवहरूका अधिपति उग्रसेन

बन्धुश्रियोन्नद्धमदास्ते भरतर्षभ ॥ आश्राव्य रामं दुर्वाच्यमसभ्याः पुरमाविशन् ॥ २८ ॥ दृष्ट्वा कुरूणां दौःशील्यं श्रुत्वाऽवाच्यानि चाच्युतः ॥ अवोचत्कोपसंरब्धो दुष्प्रेक्ष्यः प्रहसन्मुहुः ॥ ३० ॥ नूनं नानामदोन्नद्धाः शान्तिं नेच्छन्त्यमाधवः ॥ तेषां हि प्रशमो दण्डः पशूनां लगुडोयथा ॥३१॥ अहो यदून्सुसंरब्धान्कृष्णं च कुपितं शनैः ॥ सान्त्वयित्वाऽहमेतेषां शममिच्छन्निहागतः ॥ ३२ ॥ त इमे मन्दमतयः कलहाभिरताः खलाः ॥ तं मामवज्ञाय मुहुर्दुर्भाषान्मानिनोऽब्रुवन् ॥३३॥ नोग्रसेनः किल विभुर्भोजवृष्ण्यन्धकेश्वरः ॥ शक्रादयो लोकपाला यस्यादेशानुवर्तिनः ॥३४॥ सुधर्माऽऽक्रम्यते येन पारिजातोऽमराङ्घ्रिपः ॥ आनीय भुज्यते सोऽसौ न किलाध्यासनार्हणः ॥३५॥ यस्य पादयुगं साक्षाच्छ्रीरुपास्तेऽखिलेश्वरी ॥ स नार्हति किल श्रीशो नरदेवपरिच्छदान् ॥ ३६ ॥ यस्याङ्घ्रिपङ्कजरजोऽखिललोकपालैर्मौल्युत्तमैर्धृतमुपासिततीर्थतीर्थम् ॥ ब्रह्मा भवोऽहमपि यस्य कलाः कलायाः श्रीश्चोद्वहेम चिरमस्य नृपासनं क ॥३७॥ भुञ्जतेकुरुभिर्दत्तं भूखण्डं वृष्णयः किल ॥ उपानहः किल वयं स्वयं तु कुरवः शिरः ॥३८॥ अहो ऐश्वर्यमत्तानां मत्तानामिव मानिनाम् ॥ असम्बद्धा गिरो रूक्षाः कः सहेतानुशासिता ॥ ३९ ॥ अद्य निष्कौरवीं पृथ्वीं करिष्यामीत्यमर्षितः ॥

के यिनीहरूलाई आज्ञा दिने सामर्थ्य राख्दैनन् ? ॥ ३४ ॥ जो सुधर्मा सभामा जान्छन् र जो देवगणको पारिजात वृक्ष ल्याएर भोग्दैछन्, ती कृष्णलाई के मनुष्यको राज्यासनको अधिकार प्राप्त छैन ? ॥३५॥ जसका चरणको सेवा साक्षात् लक्ष्मी गर्दछिन्, ती लक्ष्मीपति कृष्ण छत्र-चामरादि राजचिह्नहरूका योग्य छैनन् ? ॥३६॥ समस्त सन्तहरू द्वारा सेवित गङ्गादि तीर्थलाई पनि पवित्र पार्न जसको चरणरज सबै लोकपाल आफ्ना मुकुटमण्डित मस्तकमा धारण गर्दछन्–ब्रह्मा, शिव, म र लक्ष्मी जसको अंशबाट उत्पन्न भएर उनकै चरणरज शिरमा राख्दछौं, ती कृष्णको निम्ति यो तुच्छ सिंहासन के वस्तु हो र ? ॥३७॥ यादवहरू कौरवले दिएको राज्य भोग्छन्, यो कुरा ठीक हो र यो पनि उचित नै हो–हामी जुत्ता हौं र कौरव मस्तक हुन् ॥३८॥ अहो ! मतवाला पुरुष झैं ऐश्वर्यमदले उन्मत्त एवं अभिमानी कौरवहरूका यी शुष्क र असम्बद्ध कुराहरू, इनको शासक भएर पनि कसले सहन सक्ला ? ॥ ३९ ॥ अतः आज म सम्पूर्ण पृथ्वी कौरव विहीन पारिदिन्छु ।' यति भनेर अहिल्यै त्रिलोक भस्म पार्छन् कि भन्ने भावले

अमर्षयुक्त भएर बलराम हलो लिई जुरुक्क उठे ॥ ४० ॥ त्यो हलोको टुप्पाले हस्तिनापुरीलाई उखेलेर नष्ट पारिदिन उसलाई गङ्गाजीतिर बेसरी तान्नलागे ॥ ४१ ॥ तिनको हलोले तानिएर नगर डुङ्गा झैं चक्कर खाएर गङ्गामा पर्न आँटेको देखेर कौरव आत्तिए ॥४२॥ अनि लक्ष्मणा समेत साम्बलाई आफ्नू प्राण रक्षाका लागि ती आफ्ना परिवारसमेत विनीत भावले हात जोरेर बल रामको शरणमा आए ॥ ४३ ॥ अनि भन्नलागे—हे राम ! हे राम ! हे अखिल जगत्का आधार ! हामी हजुरको र हजुरका आराधनाको प्रभाव जान्दैनथ्यौं । हे प्रभो ! हामी मूढ र दुर्बुद्धिहरूको अपराध क्षमा गर्नोस् ॥ ४४ ॥ हजुर नै सम्पूर्ण जगत्का उत्पत्ति, स्थिति र प्रलयका कारण हुनुहुन्छ । हजुरको अरु कुनै पनि

गृहीत्वा हलमुत्तस्थौ दहन्निव जगत्त्रयम् ॥४०॥ लाङ्गलाग्रेण नगरमुद्विदार्य गजाह्वयम् ॥ विचकर्ष स गङ्गायां प्रहरिष्यन्नमर्षितः ॥ ४१ ॥ जलयानमिवाघूर्णं गङ्गायां नगरं पतत् ॥ आकृष्यमाणमालोक्य कौरवा जातसम्भ्रमाः ॥ ४२ ॥ तमेव शरणं जग्मुः सकुटुम्बा जिजीषवः ॥ सलक्ष्मणं पुरस्कृत्य साम्बं प्राञ्जलयः प्रभुम् ॥ ४३ ॥ राम रामाखिलाधार प्रभावं न विदाम ते ॥ मूढानां नः कुबुद्धीनां क्षन्तुमर्हस्यतिक्रमम् ॥ ४४ ॥ स्थित्युत्पत्त्यप्ययानां त्वमेको हेतुर्निराश्रयः ॥ लोकान्क्रीडनकानीश क्रीडतस्ते वदन्ति हि ॥ ४५ ॥ त्वमेव मूर्ध्नीदमनन्त लीलया भूमण्डलं बिभर्षि सहस्रमूर्धन् ॥ अन्ते च यः स्वात्मनि रुद्धविश्वः शेषेऽद्वितीयः परिशिष्यमाणः ॥ ४६ ॥ कोपस्तेऽखिलशिक्षार्थं न द्वेषान्न च मत्सरात् ॥ बिभ्रतो भगवन् यत्त्वं स्थितिपालनतत्परः ॥ ४७ ॥ नमस्ते सर्वभूतात्मन्सर्वशक्तिधराव्यय ॥ विश्वकर्मन्नमस्तेऽस्तु त्वां वयं शरणं गताः ॥ ४८ ॥ श्रीशुक उवाच ॥

आधार छैन ! हे ईश ! जब हजुर क्रीडा गर्नुहुन्छ, तब सम्पूर्ण लोक हजुरका खेलौना बन्दछन्—यस्तो मुनिजनको भनाई छ ॥ ४५ ॥ हे सहस्रमूर्धन् ! हे अनन्त ! जो समस्त भूमण्डललाई लीलाले आफ्नू मस्तकमा धारण गर्ने तथा प्रलयकालमा सम्पूर्ण जगत्लाई आफूमा लीन गरेर स्वयं बाँचिरहने, ती शेषशायी नारायण हजुर हुनुहुन्छ ॥४६॥ हे भगवन् ! हजुर जगत्को स्थिति, पालनमा तत्पर रहनुहुन्छ, त्यसैले शुद्ध सत्वलाई धारण गर्नुहुन्छ । हजुरको क्रोध सबै प्राणीलाई शिक्षा दिनको निम्ति नै हुन्छ, द्वेष वा मत्सरको निम्ति होइन ॥४७॥ हे सर्वभूतात्मन् ! हे सर्वशक्तिधर ! हे विश्वकर्मन् ! हजुरलाई नमस्कार छ । हामी हजुरका शरणमा छौं॥४८॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! जसका घर हल्लिइरहेका थिए, जो

---

दृष्टान्त ( आराधनाको बल) शङ्ख र लिखित यी दुवै ऋषि योटा नदीको किनारमा अलगअलग आश्रम बनाएर बस्तथे । एक दिन लिखित शङ्ख ऋषिको आश्रममा गए । त्यहाँ राम्रा फलले लटरम्म वृक्ष देखेर फल टिप्दै खानथाले । उसै बेला शङ्ख आइपुगे र भने—यी फल कहाँबाट ल्यायौ ?' लिखितले भने—'यिनै नै वृक्षका फल हुन् । मलाई भोक लागेको हुनाले खाइरहेको छु ।' शङ्खले रिसाएर भने-'के म कहीं गएको थिएँ र मसित नसोधी टिपेर खान लाग्यौ ? तिमीले यो अपराध गऱ्यौ । अतः राजाकहाँ गएर यस पापको प्रायश्चित गर ।' त्यसै अनुसार लिखित राजाकहाँ गएर दण्ड मागे । राजाले भने—मुनिजी ! यदि म तिमीलाई दण्ड दिने योग्य छु भने क्षमा पनि गर्न सक्छु । जाऊ, मैले क्षमा गरिदिएँ ।' तर लिखितले हठपूर्वक भने-'मलाई कठोर दण्ड दिनुहवस्, जसले म फेरि कुनै अपराध नगरूँ ।' विवश भइ र राजाले तिनको हात काट्न लगाए । अब ठुटो हात लिएर लिखित शंखकहाँ गए र हाँस्तै उनको सामुन्ने उभिए । त्यो देखेर शङ्ख प्रसन्न भएर दगुर्दै गएर लिखितलाई अंकमाल गरे । अनि शंखले भने—'अब नदीमा गएर सूर्य-तर्पण गरी देवताहरूको ध्यान गर, अनि पाप मुक्त हुनेछौ ।' लिखितले त्यसै गरे र सूर्य नारायणलाई अर्घ्य दिनको निम्ति जलमा हात हाल्नासाथ उनको हात पहिले झैं भयो र ती कमल झैं सुशोभित हुन लागे ।

निकै आत्तिएर शरणमा आएका थिए, ती कौरवहरूले यसरी प्रार्थना गरेपछि बलराम प्रसन्न भएर 'नडराओ' भन्दै तिनीहरूलाई अभय पारे ॥ ४९ ॥ अनि कन्यावत्सल दुर्योधनले लक्ष्मणाको दाइजोमा साठी वर्ष पुगेका बाह्र सय हात्ती, दस हजार घोडा, सूर्य झैं तेजस्वी र सुवर्णमण्डित छ हजार रथ र घाँटीमा माला धारण गरेका एक हजार दासीहरू दिए ॥५०-५१॥ यादव श्रेष्ठ बलराम यी सबै सामग्री र साम्ब तथा पुत्रवधू लक्ष्मणालाई लिई बन्धु-बान्धव द्वारा सत्कृत भई द्वारका फर्किए ॥५२॥ उहाँ पुगेर बलराम आफ्ना अनुरक्त स्वजनसित भेटे र यादवहरूको सभामा आफूले गरेका कार्य वर्णन गरेर सुनाए ॥ ५३ ॥ आज पनि हस्तिनापुर बलरामको पराक्रम सूचित गर्दै दक्षिणतिर अग्लो र गंगातिर न्युरेको देखिन्छ ॥ ५४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायामष्टषष्ठितमोऽध्यायः ॥६०॥

( देवर्षि नारद द्वारा भगवान्को दिनचर्या हेर्नु ) श्री शुकदेव भन्नुहुन्छ—हे राजन् ! नरकासुरको वध र एक्लै श्रीकृष्णको अनेकौं स्त्रीहरूसित विवाह भएको समचार

एवं प्रपन्नैः संविग्नैर्वेपमानायनैर्बलः ॥ प्रसादितः सुप्रसन्नो मा भैष्टेत्यभयं ददौ ॥ ४९ ॥ दुर्योधनः पारिबर्हं कुञ्जरान्षष्टिहायनान् ॥ ददौ च द्वाद-
शशतान्ययुतानि तुरङ्गमान् ॥ ५० ॥ रथानां षट्सहस्राणि रौक्माणां सूर्यवर्चसाम् ॥ दासीनां निष्ककण्ठीनां सहस्रं दुहितृवत्सलः ॥५१॥ प्रतिगृह्य
तु तत्सर्वं भगवान्सात्वतर्षभः ॥ ससुतः सस्नुषः प्रागात्सुहृद्भिरभिनन्दितः ॥ ५२ ॥ ततः प्रविष्टः स्वपुरं हलायुधः समेत्य बन्धूननुरक्तचेतसः ॥
शशंस सर्वं यदुपुङ्गवानां मध्ये सभाया कुरुषु स्वचेष्टितम् ॥ ५३ ॥ अद्यापि च पुरं ह्येतत्सूचयद्रामविक्रमम् ॥ समुन्नतं दक्षिणतो गङ्गायामनुदृश्यते
॥५४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे हस्तिनापुरकर्षणरूपसङ्कर्षणविजयो नामाष्टषष्टितमोऽध्यायः ॥ ६८ ॥

शुक उवाच ॥ नरकं निहतं श्रुत्वा तथोद्वाहं च योषिताम् ॥ कृष्णेनैकेन बह्वीनां तद्दिदृक्षुः स्म नारदः ॥ १ ॥ चित्रं बतैतदेकेन वपुषा युग-
पत्पृथक् ॥ गृहेषु द्व्यष्टसाहस्रं स्त्रिय एक उदावहत् ॥ २ ॥ इत्युत्सुको द्वारवतीं देवर्षिर्द्रष्टुमागमत् ॥ पुष्पितोपवनारामद्विजालिकुलनादिताम् ॥३॥
उत्फुल्लेन्दीवराम्भोजकह्लारकुमुदोत्पलैः ॥ छुरितेषु सरःसूच्चैः कूजितां हंससारसैः ॥४॥ प्रासादलक्षैर्नवभिर्जुष्टां स्फाटिकराजतैः ॥ महामरकतप्रख्यैः
स्वर्णरत्नपरिच्छदैः ॥५॥ विभक्तरथ्यापथचत्वरापणैः शालासभाभी रुचिरां सुरालयैः ॥ संसिक्तमार्गाङ्गणवीथिदेहलीं पतत्पताकाध्वजवारितातपाम्

सुनेर नारदलाई भगवान्को दिनचर्या हेर्न मनलाग्यो ॥ १ ॥ उनले विचार गरे—'यो निकै विचित्र कुरा छ कि आफू एकै शरीरले पृथक्-पृथक् एक साथ सोह्र हजार स्त्रीहरूसित विवाह गरिसकेका छन्' ॥ २ ॥ यसरी कृष्णलीला हेर्नको निम्ति अति उत्सुक भएर देवर्षि नारद राम्रा बगैचा र फल-फूलहरूले सुशोभित एवं पक्षीहरू र भ्रमरगणको स्वरले गुञ्जायमान द्वारकापुरीमा आए ॥३॥ त्यो द्वारकापुरी फक्रेका इन्दीवर, अम्भोज, कह्लार, कुमुद र उत्पलहरूले भरिएका सरोवरमा हंस-सारसादि जलपक्षीले कूजित भइरहेथ्यो ॥४॥ सुवर्ण र रत्नमय वस्तुले पूर्ण, मरकतमणि झैं उज्ज्वल त्यो पुरी स्फटिक र चाँदीका नौ लाख राजमन्दिरले सुशोभित भइरहेकोथियो ॥ ५ ॥ भिन्न-भिन्न गल्ली, बाटो, चौबाटो, हाट, शाला, सभा र देवालयहरूले सान्है राम्रो लागिरहेथ्यो । त्यसका सबै मार्ग र घर-अगाडि पानी छर्किएका थिए । फर्फराइरहेका राम्रा ध्वजा, पताकाहरू त्यहाँ आतप (घाम) को

निवारण गर्दथे ॥६॥ त्यहीं द्वारकापुरीमा श्रीकृष्ण र उनका पत्नीहरूको सोह्र हजार महलहरूले सुशोभित र लोकपाल हरूले पूजित, श्रीसम्पन्न अन्तःपुर थिए । जसको निर्माणमा विश्वकर्माले आफ्नु सबै शिल्प-चातुर्य खर्च गरेका थिए । तीमध्ये यौटा विशाल भवनमा नारदजी पुगे ॥ ७ ॥८ ॥ त्यो महलका खाँबा वैदूर्यले बनेका उत्तम चौखट, इन्द्रनील मणिका भित्ता–जसको कान्ति कहिल्यै मलीन हुँदैनथ्यो, त्यस्तो इन्द्रनीलमणिमयी भूमिले शोभित भइरहेको थियो ॥ ९ ॥ विश्वकर्मा द्वारा निर्मित मोतीहरूका झालर उनेका चँदुवा तथा उत्तम मणिजडित हात्ती-दाँतका आसन र पलंगहरूले ती भवन राम्ररी सुसज्जित थिए ॥१०॥ राम्रा लुगा र घाँटीमा हार लगाएका अनेक दासी र मरकत मणिमय कुण्डल र जामा-पगरीले शोभित परिचारकगण आफ्नु सौन्दर्यले अझ शोभा बढाइरहेका थिए ॥११॥ रत्ननिर्मित झलमल बत्तीको उज्यालोले गर्दा कतै पनि अन्धकार देखिँदैनथ्यो । त्यसका बुर्जामा बसेका मयूर, आँखीझ्यालबाट निस्कने धूपको धुवाँ देखेर मेघ बनी वेसरी के कारण गरेर नाचिरहेका थिए ॥ १२ ॥ त्यस भव्य भवनमा श्रीनारद मुनिले यदुनाथ कृष्णलाई आफ्नी

॥ ६ ॥ तस्यामन्तःपुरं श्रीमदर्चितं सर्वधिष्ण्यपैः ॥ हरेः स्वकौशलं यत्र त्वष्ट्रा कार्त्स्न्येन दर्शितम् ॥ ७ ॥ तत्र षोडशभिः सद्मसहस्रैः समलंकृतम् ॥
विवेशैकतमं शौरेः पत्नीनां भवनं महत् ॥८॥ विष्टब्धं विद्रुमस्तम्भैर्वैदूर्यफलकोत्तमैः ॥ इन्द्रनीलमयैः कुड्यैर्जगत्या चाहतत्विषा ॥ ९ ॥ वितानै-
र्निर्मितैस्त्वष्ट्रा मुक्तादामविलम्बिभिः ॥ दान्तैरासनपर्यङ्कैर्मण्युत्तमपरिष्कृतैः ॥ १० ॥ दासीभिर्निष्ककण्ठीभिः सुवासोभिरलंकृतम् ॥ पुम्भिः
सकञ्चुकोष्णीषसुवस्त्रमणिकुण्डलैः ॥ ११ ॥ रत्नप्रदीपनिकरद्युतिभिर्निरस्तध्वान्तं विचित्रवलभीषु शिखण्डिनोऽङ्ग ॥ नृत्यन्ति यत्र विहितागुरु-
धूपमक्षैर्निर्यान्तमीक्ष्य घनबुद्धय उन्नदन्तः ॥ १२ ॥ तस्मिन्समानगुणरूपवयःसुवेषदासीसहस्रयुतयाऽनुसवं गृहिण्या ॥ विप्रो ददर्श चमरव्यजनेन
रुक्मदण्डेन सात्वतपतिं परिवीजयन्त्या ॥ १३ ॥ तं सन्निरीक्ष्य भगवान्सहसोत्थितः श्रीपर्यङ्कतः सकलधर्मभृतां वरिष्ठः ॥ आनम्य पादयुगलं
शिरसा किरीटजुष्टेन साञ्जलिरवीविशदासने स्वे ॥ १४ ॥ तस्यावनिज्य चरणौ तदपः स्वमूर्ध्ना बिभ्रज्जगद्गुरुपरोऽपि सतां पतिर्हि ॥ ब्रह्मण्यदेव
इति यद्गुणनाम युक्तं तस्यैव यच्चरणशौचमशेषतीर्थम् ॥ १५ ॥ सम्पूज्य देवऋषिवर्यमृषिः पुराणो नारायणो नरसखो विधिनोदितेन ॥
वाण्याऽभिभाष्य मितयाऽमृतमिष्टया तं प्राह प्रभो भगवते करवामहे किम् ॥ १६ ॥ नारद उवाच ॥ नैवाद्भुतं त्वयि विभोऽखिललोकनाथे मैत्री जनेषु

गृहिणी रुक्मिणीसित बसेका देखे । आफ्नै समानरूप, गुण, अवस्था र वेष हुने दस हजार दासीहरूले घेरिएर रुक्मिणी रहेकी थिइन् । तैपनि सुनको डाँठ हुने चमर हल्केर निरन्तर भगवानको सेवा स्वयं गर्दथिन् ॥ १३ ॥ नारदलाई देख्नासाथ धार्मिकहरूमा श्रेष्ठ भगवान् श्रीकृष्णचन्द्र सहर्ष रुक्मिणीको पलंगबाट उठेर ठिङ्ग उभिए र मुनिका चरणमा आफ्नु मुकुट विमण्डित मस्तक न्युराई प्रणाम गरेर मुनिलाई आफ्नु आसनमा बसाले ॥ १४ ॥ जसको चरणोदकस्वरूपा ( गङ्गा ) भागीरथी सबैलाई पवित्र पार्दछिन्, जो स्वयं जगत्का गुरु र सत्पुरुषका स्वामी छन्, ती श्रीहरिले नारदका पाउ पखालेर त्यो जल शिरमा लगाए । उनको 'ब्रह्मण्यदेव' नाम तिनै गुणको अनुरूप र उचित नै थियो ॥१५॥ यस प्रकार नरका सखा आदिऋषि नारायणले देवर्षि श्रेष्ठ नारदको विधिवत् पूजा गरेर अमृत समान मधुर र स्वल्पवाणीमा सम्भाषण गर्दै भन्नुभयो–हे प्रभो ! हे मुने ! भन्नुहवस्, म हजुरको

के सेवा गरौं ?' ॥१६॥ नारदजी भन्दछन्—हे विभो ! हजुर सबै लोकका स्वामी हुनुहुन्छ । हजुरले भक्तका प्रति मैत्री र दुष्टका प्रति दमन–यी दुवै गुण हजुरमै छन् । यो कुनै छक पर्ने कुरा होइन । हे महायशस्विन् ! म राम्ररी जान्दछु–हजुर जगत्‌को स्थिति र रक्षा गरेर उसको कल्याण गर्नको निम्ति नै स्वेच्छाले यहाँ यसरी अवतरित हुनुभएको छ ॥ १७ ॥ जो संसारमा मोक्ष दिने, अगाधबोध, ब्रह्मादि देवता द्वारा हृदयमा चिन्तनीय र संसारकूपमा गडेका व्यक्तिलाई बाहिर झिकिदिने एकमात्र अवलम्बन हुनुहुन्छ, त्यस्ता हजुरको चरणका आज मलाई दर्शन प्राप्त भयो । अब हजुर यस्तो कृपा गर्नुहवस्–जसले म हजुरका चरण-युगलको ध्यान गर्दै डुलिरहूँ र सदा मलाई त्यसको स्मरणा भइरहोस् ॥१८॥ हे तात ! अनि योगेश्वरका ईश्वर भगवान् कृष्णको योगमायालाई हेर्न नारदजी उनकी अन्य पत्नीको महलमा पुगे ॥१९॥ त्यहाँ भगवान् आफ्नी प्रिया र उद्धवसित बसेर पासा खेलिरहेका थिए । त्यहाँ पनि प्रत्युत्थान र आसनादिद्वारा नारदजीको सत्कार भयो ॥२०॥ अनि नजाने जस्तै भगवान्‌ले सोध्नु भयो—'मन्नुहवस्, हजुर कहिले पाल्नुभयो ? हजुर जस्ता आप्तकाम

सकलेषु दमः खलानाम् ॥ निःश्रेयसाय हि जगत्स्थितिरिक्षणाभ्यां स्वैरावतार उरुगाय विदाम सुष्ठु ॥ १७ ॥ दृष्टं तवाङ्घ्रियुगलं जनतापवर्गं ब्रह्मादिभिर्हृदि विचिन्त्यमगाधबोधैः ॥ संसारकूपपतितोत्तरणावलम्बं ध्यायंश्चराम्यनुगृहाण यथा स्मृतिः स्यात् ॥ १८ ॥ ततोऽन्यदाविशद्गेहं कृष्णपत्न्याः स नारद ॥ योगेश्वरेश्वरस्याङ्ग योगमायाविवित्सया ॥ १९ ॥ दीव्यन्तमक्षैस्तत्रापि प्रियया चोद्धवेन च ॥ पूजितः परया भक्त्या प्रत्युत्थानासनादिभिः ॥ २० ॥ पृष्टश्चाविदुषेवासो कदाऽऽयातो भवानिति ॥ क्रियते किं नुपूर्णानामपूर्णैरस्मदादिभिः ॥ २१ ॥ अथापि ब्रूहि नो ब्रह्मञ्जन्मैतच्छोभनं कुरु ॥ स तु विस्मित उत्थाय तूष्णीमयन्दगाद् गृहम् ॥ २२ ॥ तत्राप्याचष्ट गोविन्दं लालयन्तं सुताञ्छिशून् ॥ ततोऽन्यस्मिन्गृहेऽपश्यन्मज्जनाय कृतोद्यमम् ॥ २३ ॥ जुह्वन्तं च वितानाग्नीन्यजन्तं पञ्चभिर्मखैः ॥ भोजयन्तं द्विजान्क्वापि भुञ्जानमवशेषितम् ॥ २४ ॥ क्वापि सन्ध्यामुपासीनं जपन्तं ब्रह्म वाग्यतम् ॥ एकत्र चासिचर्मभ्यां चरन्तमसिवर्मसु ॥ २५ ॥ अश्वैर्गजै रथैः क्वापि विचरन्तं गदाग्रजम् ॥ क्वचिच्छयानं पर्यङ्के स्तूयमानं च वन्दिभिः ॥ २६ ॥ मन्त्रयन्तं च कस्मिंश्चिन्मन्त्रिभिश्चोद्धवादिभिः ॥ जलक्रीडारतं क्वापि वारमुख्यबलावृतम् ॥ २७ ॥ कुत्रचिद्द्विजमुख्येभ्यो ददतं गाः स्वलंकृताः ॥ इतिहासपुराणानि शृण्वन्तं मङ्गलानि च ॥ २८ ॥ हसन्तं हास्यकथया कदाचित्प्रियया गृहे ॥

मुनिको हामी सकाम जन के सेवा गर्न सक्छौं ? ॥ २१ ॥ तैपनि मलाई कुनै सेवाको आज्ञा दिएर मेरो जन्म सफल तुल्याउनोस् ।' यति सुनेर नारद छक्क परेर चुपचाप अर्को महलमा हेर्न गए ॥२२॥ त्यहाँ उनले श्रीकृष्णलाई आफ्ना स-साना बालकलाई खेलाउन लागेका देखे । त्यहाँबाट नारद अर्को प्रासादमा पुग्दा भगवान्‌लाई स्नानको तयारी गर्नलागेका देखे ॥२३॥ यसै गरी कहीं यज्ञाग्निमा हवन गर्नलागेका, कहीं पञ्चमहायज्ञ द्वारा देवताको आराधना गर्दै, कहीं ब्राह्मण-भोजन गराउँदै, कहीं यज्ञ अवशिष्ट खात लागेका र कहीं सन्ध्योपासन गरेका, कहीं मौन भएर गायत्री जपेका, कहीं ढाल तरवार लिएर त्यसलाई चलाउने रीति देखाइरहेका, कहीं हात्ती, घोडा, रथमा डुलिरहेका, कहीं वन्दीजन द्वारा स्तूयमान भएका, कहीं पलँगमा शयन गरेका, कहीं उद्धवादि मन्त्रीहरूसित सल्लाह गरेका, कहीं स्त्रीहरूसित जलक्रीडा गरेका, कहीं श्रेष्ठ ब्राह्मणलाई सज्जित गाई दान दिइरहेका र

कहीं इतिहास-पुराण र स्वस्तिवाचनादि सुनिरहेका देखे ॥ २७।२८ ॥ नारदले कहीं देखे–भगवान् आफ्नी प्रियासित ठट्टा गरेर हाँसिरहेका छन् । कहीं सद्धर्मको पालन गरिरहेका छन् । कहीं काम र अर्थको संचय गर्दैछन् ॥२९॥ कहीं नारदजीले देखे—भगवान् कृष्ण एकान्तमा बसेर आफ्नै स्वरूप तथा प्रकृतिसित अतीत पुराण-पुरुषको ध्यान गरिहेछन् र कहीं विचित्र प्रकारका इच्छित पदार्थ तथा भोग-सामग्री अर्पण गरेर गुरुजनको सेवा गरिरहेका छन् ॥ ३० ॥ त्यसै गरी कहीं कसैसित विग्रह र कसैसित सन्धि गरिहेका, कहीं बलरामसित सत्पुरुषका कल्याणको विषयमा सल्लाह गरेका, कहीं बेलामा छोरा र छोरीहरूको उनकै सदृश कन्या र वरसित धुमधामले विधिवत् विवाह गराइरहेका र कहीं छोरी बिदा गर्न लागेका तथा अन्यत्रबाट डाक्ने र बालकहरूको जन्म-दिन मनाउने महोत्सव गरिरहेका देखे । योगेश्वरका पनि ईश्वर भगवान्का ती विचित्र महोत्सवहरू देखेर सबै जना छक्क परिरहेका थिए ॥३१-३३ नारदजीले देखे–कहीं भगवान् ठूला-ठूला यज्ञ गरेर देवताहरूको पूजा गरिरहेछन्, कहीं कुवा, बगैंचा र धर्मशाला आदि बनाउन लगाई पूर्त-कर्मको पालन गर्दैछन्, कहीं

कापि धर्मं सेवमानमर्थकामौ च कुत्रचित् ॥ २९ ॥ ध्यायन्तमेकमासीनं पुरुषं प्रकृतेः परम् ॥ शुश्रूषन्तं गुरून्क्वापि कामैर्भोगैः सपर्यया ॥ ३० ॥
कुर्वन्तं विग्रहं कैश्चित्सन्धिं चान्यत्र केशवम् ॥ कुत्रापि सह रामेण चिन्तयन्तं सतां शिवम् ॥ ३१ ॥ पुत्राणां दुहितॄणां च काले विध्युपयापनम् ॥
दारैर्वरैस्तत्सदृशैः कल्पयन्तं विभूतिभिः ॥ ३२ ॥ प्रस्थापनोपानयनैरपत्यानां महोत्सवान् ॥ वीक्ष्य योगेश्वरेशस्य येषां लोका विसिस्मिरे ॥ ३३ ॥
यजन्तं सकलान्देवान्क्वापि क्रतुभिरूर्जितैः ॥ पूर्तयन्तं क्वचिद्धर्मं कूपाराममठादिभिः ॥ ३४ ॥ चरन्तं मृगयां क्वापि हयमारुह्य सैन्धवम् ॥ घ्नन्तं
ततः पशून्मेध्यान्परीतं यदुपुङ्गवैः ॥ ३५ ॥ अव्यक्तलिङ्गं प्रकृतिष्वन्तः पुरगृहादिषु ॥ क्वचिच्चरन्तं योगेशं तत्तद्भावबुभुत्सया ॥ ३६ ॥ अथोवाच
हृषीकेशं नारदः प्रहसन्निव ॥ योगमायोदयं वीक्ष्य मानुषीमीयुषो गतिम् ॥ ३७ ॥ विदाम योगमायास्ते दुर्दर्शा अपि मायिनाम् ॥ योगेश्वरात्म-
न्निर्भाता भवत्पादनिषेवया ॥ ३८ ॥ अनुजानीहि मां देव लोकांस्ते यशसाप्लुतान् ॥ पर्यटामि तवोद्गायँल्लीलां भुवनपावनीम् ॥३९॥ श्रीभगवा-
नुवाच ॥ ब्रह्मन्धर्मस्य वक्ताऽहं कर्ता तदनुमोदिता ॥ तच्छिक्षयँल्लोकमिमास्थितः पुत्र मा खिदः ॥ ४० ॥ श्रीशुक उवाच ॥ इत्याचरन्तं सद्धर्मान्पा-
वनान्गृहमेधिनाम् ॥ तमेव सर्वगेहेषु सन्तमेकं ददर्श ह ॥ ४१ ॥ कृष्णस्यानन्तवीर्यस्य योगमायामहोदयम् ॥ मुहुर्दृष्ट्वा ऋषिरभूद्विस्मितो

सिन्धुदेशको घोडामा चढेर अन्य यादवहरूसित यज्ञको निम्ति शिकार गर्दैछन् र कहीं प्रजा तथा अन्तःपुरका निवासीहरूको मनोभाव जान्नका लागि योगेश्वर कृष्णचन्द्र रूप साटेर घुमिरहेका छन् । यसरी मानवी लीला गर्दै भगवान हृषीकेशको योगमायाको ऐश्वर्य देखेर नारदजीले हाँस्तै भगवान्‌सित भने ॥३४-३७॥ 'हे योगेश्वर ! हे परमात्मन् ! म जान्दछु—ब्रह्मादिक मायावीहरूलाई पनि हजुरको योगमाया देख्नु कठिन छ र हजुरका चरण-शरणले नै त्यो माया मलाई मालिन भइन् ॥ ३८ ॥ हे देव ! हजुर मलाई यस्तो सामर्थ्य दिनोस्–जसले म हजुरको सुयशपूर्ण लोकहरूमा त्रिभुवनपावनी लीला-गान गर्दै विचरण गर्नसकूँ ॥ ३९ ॥ भगवान् भन्नुहुन्छ–हे ब्रह्मन् ! हे मुने ! म धर्मको वक्ता कर्ता र अनुमोदन गर्ने हुँ । संसारलाई धर्ममार्गको शिक्षा दिनका लागि नै म यस्तो आचरण गर्दछु । अतः हे वत्स ! तिमी मेरो योगमायालाई देखेर मनमा खिन्न नहोऊ ॥ ४० ॥ श्रीशुकदेवजी भन्दछन्—

हे राजन् ! यसरी नारदजीले सबै घरमा पौंटै श्रीकृष्णलाई गृहस्थका परमपवित्र धर्महरूको पालन गरिरहेका देखे ॥ ४१ ॥ बारम्बार अनन्तवीर्य भगवान् कृष्णको योगमायाको वैभव देखेर देवर्षिलाई कुतूहल र विस्मय दुबै भयो ॥ ४२ ॥ यसरी अर्थ, धर्म र काममा जसको अत्यन्त श्रद्धा थियो, ती श्रीकृष्णचन्द्र द्वारा सम्मानित भएर देवर्षि नारद प्रसन्न चित्तले उनैको स्मरण गर्दै हिंडे ॥ ४३ ॥ यस प्रकार जुन भगवान्‌ले सम्पूर्ण संसारको उत्कर्षका लागि नै आफ्नी माया शक्तिलाई स्वीकार गरेका थिए, ती नाराण भगवान् मानवी लीलाको अनुसरण गर्दै सोह्र हजार सुन्दरीहरूको लज्जायुक्त प्रणय कटाक्ष र मन्द हास्यले सत्कृत हुँदै उनीहरूसित रमण गर्दथे॥ ४४ ॥ विश्वको उत्पत्ति, स्थिति तथा लयका एकमात्र कारण श्रीहरिले, अन्य कसैले पनि नगर्न सकिने योग्य जे-जे कर्म गरेका थिए, हे प्रिय ! त्यो जो प्राणी गाउँछन्, सुन्दछन् वा अनुमोदन गर्दछन्, तिनको मोक्षदाता भगवान्‌मा अटल भक्ति हुन्छ ॥४५॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे 'वासिष्ठी' भाषाटीकायामेकोनसप्ततितमोऽध्यायः ॥ ६९ ॥

जातकौतुकः ॥ ४२ ॥ इत्यर्थकामधर्मेषु कृष्णेन श्रद्धितात्मना ॥ सम्यक् सभाजितः प्रीतस्तमेवानुस्मरन्ययौ ॥ ४३ ॥ एवं मनुष्यपदपदवीमनुवर्तमानो नारायणोऽखिलभवाय गृहीतशक्तिः ॥ रेमेऽङ्ग षोडशसहस्रवराङ्गनानां सव्रीडसौहृदनिरीक्षणहासजुष्टः ॥ ४४ ॥ यानीह विश्वविलयोद्भववृत्तिहेतुः कर्माण्यनन्यविषयाणि हरिश्चकार ॥ यस्त्वङ्ग गायति शृणोत्यनुमोदते वा भक्तिर्भवेद्भगवति ह्यपवर्गमार्गे ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे कृष्णगार्हस्थ्यदर्शनं नामैकोनसप्ततितमोऽध्यामः ॥ ६९ ॥

श्रीशुक उवाच ॥ अथोषस्युपवृत्तायां कुक्कुटान्कूजतोऽशपन् ॥ गृहीतकण्ठ्यः पतिभिर्माधव्यो विरहातुराः ॥ १ ॥ वयांस्यरूरुवन्कृष्णं बोधयन्तीव वन्दिनः ॥ गायत्स्वलिष्वनिद्राणि मन्दारवनवायुभिः ॥२॥ मुहूर्तं तं तु वैदर्भी नामृष्यदतिशोभनम् ॥ परिरम्भणविश्लेषात्प्रियबाह्वन्तरं गता ॥३॥ब्राह्मे मुहूर्त उत्थाय वार्युपस्पृश्य माधवः ॥ दध्यौ प्रसन्नकरण आत्मानं तमसः परम् ॥४॥ एकं स्वयंज्योतिरनन्यमव्ययं स्वसंस्थया नित्यनिरस्तकल्मषम् ॥ ब्रह्माख्यमस्योद्भवनाशहेतुभिःस्वशक्तिभिर्लक्षितभावनिर्वृतिम् ॥५॥ अथाप्लुतोऽम्भस्यमले यथाविधि क्रियाकलापं परिधाय वाससी ॥चकार सन्ध्योपगमादि सत्तमो हुतानलो ब्रह्म जजाप वाग्यतः ॥६॥ उपस्थायार्कमुद्यन्तं तर्पयित्वात्मनः कलाः ॥ देवानृषीन्पितॄन्वृद्धान्विप्रानभ्यर्च्य चात्मवान् ॥ ७ ॥ धेनूनां

( श्रीकृष्ण भगवान्‌को दैनिक दिनचर्या र उनीकहाँ जरासन्धका कैदी राजाहरूको दूत आउनु ) श्रीशुकदेव भन्दछन्—हे राजन् ! एकपल्ट उषाकालमा जब कुखुरा कराउन लागे, तब भगवान् द्वारा आलिङ्गित उनका भामिनीहरू प्रियवियोगको आशंकाले व्याकुल भए र ती कुखुराहरूलाई जाती-नजाती भनेपछि भन्नलागे । उता उपवनको वायुले आकर्षित भई गुञ्जन गर्ने भ्रमरको शब्दले जागेका पक्षी स्तुति र मागध झैं श्रीकृष्णलाई जागा गराउँदै चिरबिराउन लागे॥ १-२ ॥ तर आफ्ना प्रियतमका बाहुमा बाँधिएर सुतिरहेकी रुक्मिणी प्रभृतिलाई आलिङ्गनबाट छुट्टिने भयले त्यो मनोहर समय पनि रुचाइनन् ॥३॥ श्रीकृष्ण ब्राह्म मुहूर्तमा उठेर हात-मुख धोई स्वस्थेन्द्रिय भई आफ्नो मायातीत, अखण्ड, स्वयंप्रकाश, अद्वितीय एवं अविनाशी स्वरूपले नित्य, निर्मल र जगत्‌का उत्पत्ति, नाशादिका हेतुभूता आफ्नी शक्तिहरूले लक्षित हुने सदानन्दस्वरूप ब्रह्मनामक आत्म चिन्तन गर्नलागे ॥४-५॥

त्यसपछि स्वच्छ जलले स्नान गरी वस्त्र पहिरेर सत्पुरुषमा श्रेष्ठ श्रीकृष्णले विधिवत् सन्ध्योपासनादि कर्म गरेर मौनभावले गायत्रीको जप गर्नलागे। अनि उदाउन लागेका सूर्यलाई नमस्कार गरेर महामनस्वी भगवान् कृष्णले आफ्नै अंशस्वरूप देवता, ऋषि र पितृहरूको तर्पण गरेर वृद्धजन र ब्राह्मणहरू सहित सूर्यनारायणको पूजा गरे ॥ ६-७ ॥ वस्त्राभूषणले सुसज्जित ब्राह्मणहरूलाई रेशमी लुगा, मृगचर्म तथा तिल सहित खुधी ( नहान्ने ) दूध दिने, पहिलो बेतकी र बाछोसहित भएकी गाईहरू दान गरेर दिए। तिनका सींग सुवर्ण र खुर चाँदीले मोरिएका थिए। तिनका घाँटीमा मोतिका माला थिए र तीं राम्रा वस्त्र अर्थात् झूलले विभूषित थिए। यस प्रकार उनले प्रतिदिन एक-एक बद्व अर्थात् तेह्र हजार चौरासी गाईहरू दान गरेर दिए ॥ ८-९ ॥ फेरि आफ्नी विभूतिस्वरूप गाई, ब्राह्मण, देवता, वृद्ध तथा गुरु सबै प्राणीहरूलाई प्रणाम गरेर माङ्गलिक वस्तुहरूको स्पर्श गरे ॥१०॥ अनि आफ्नो नरलोकभूषण देहलाई पीताम्बरादि वस्त्राभूषण तथा दिव्य माला र चन्दनादिले विभूषित गरे ॥११॥ अनि उनले घिउमा प्रतिबिम्ब हेरेर गाई, गोरु, ब्राह्मण र देवताहरूको दर्शन गरे

रुक्मशृङ्गीणां साध्वीनां मौक्तिकस्रजाम् ॥ पयस्विनीनां गृष्टीनां सवत्सानां सुवाससाम् ॥ ८ ॥ ददौ रूप्यखुराग्राणां क्षौमाजिनतिलैः सह ॥ अलंकृतेभ्यो विप्रेभ्यो बद्वं बद्वं दिने दिने ॥९॥ गोविप्रदेवतावृद्धगुरून्भूतानिसर्वशः ॥ नमस्कृत्यात्मसम्भूतीर्मङ्गलानि समस्पृशत् ॥१०॥ आत्मानं भूषयामास नर-
लोकविभूषणम् ॥ वासोभिर्भूषणैः स्वीयैर्दिव्यस्रगनुलेपनैः ॥११॥ आवेक्ष्याज्यं तथादर्शं गोवृषद्विजदेवताः ॥ कामांश्च सर्ववर्णानां पौरान्तःपुरचारि-
णाम् ॥ प्रदाप्य प्रकृतीः कामैः प्रतोष्य प्रत्यनन्दत ॥ १२ ॥ संविभज्याग्रतो विप्रान्स्रक्ताम्बूलानुलेपनैः ॥ सुहृदः प्रकृतीर्दारानुपायुंक्त ततः स्वयम्
॥ १३ ॥ तावत्सूत उपानीय स्यन्दनं परमाद्भुतम् ॥ सुग्रीवाद्यैर्हयैर्युक्तं प्रणम्यावस्थितोऽग्रतः ॥१४॥ गृहीत्वा पाणिना पाणी सारथेस्तमथारुहत् ॥
सात्यक्युद्धवसंयुक्तः पूर्वाद्रिमिव भास्करः ॥ १५ ॥ ईक्षितोऽन्तःपुरस्त्रीणां सव्रीडप्रेमवीक्षितैः ॥ कृच्छ्राद्विसृष्टो निरगाज्जातहासो हरन्मनः ॥ १६ ॥
सुधर्माख्यां सभां सर्वैर्वृष्णिभिः परिवारितः ॥ प्राविशद्यन्निविष्टानां न सन्त्यङ्ग षडूर्मयः ॥ १७ ॥ तत्रोपविष्टः परमासने विभुर्बभौ स्वभासा ककुभोऽव-
भासयन् ॥ वृतो नृसिंहैर्यदुभिर्यदूत्तमो यथोडुराजो दिवि तारकागणैः ॥ १८ ॥ तत्रोपमन्त्रिणो राजन्नानाहास्यरसैर्विभुम् ॥ उपतस्थुर्नटाचार्या नर्त-

अनि नगर तथा अन्तःपुरमा बस्ने सबै वर्ण र मन्त्रीहरूलाई उनको इच्छित पदार्थहरूले सन्तुष्ट पारेर आनन्द प्राप्त गरे र ॥१२॥ अनि माला, पान र चन्दनादि भोग-सामग्रीहरू पहिले ब्राह्मण, सुहृद्, मन्त्री र स्त्रीहरूलाई बाँडेर पछि स्वयं तिनको उपयोग गरे ॥१३॥ त्यति हुँदाहुँदै दारुक नामको सुग्रीवादि अश्वयुक्त भगवानको अति अद्भुत रथ लिएर आयो र प्रभु-लाई प्रणाम गरेर उनको सामुन्ने ठिङ्ग उभिइरह्यो ॥१४॥ त्यो रथ आइपुगेको देखी भगवान् सारथीको हातमा हात हालेर सात्यकी तथा उद्धव सहित उदयाचलमा उदीयमान सूर्यदेव समान त्यस रथमा बस्नुभयो ॥१५॥ आफ्ना अन्तःपुरका स्त्रीहरू द्वारा सलज्ज प्रणय-कटाक्षले हेरिन्दै केही हाँसो आइदिनाले गर्दा मानो उनको चित्त चोरेर उनीसित कष्टपूर्वक विदा भएर राजसभा जानुभयो ॥१६॥ हे तात ! अनि समस्त यादवहरूले घेरिएका भगवान् कृष्ण सुधर्मा सभामा प्रविष्ट हुनुभयो। जसमा प्रवेश गर्नेहरूलाई छ उर्मिहरू अर्थात् प्यास, शोक, मोह, जरा र मृत्युले कष्ट दिँदैनन् ॥ १७ ॥ सुधर्मा सभामा अन्यान्य यदुवंशी नर-वीरहरूद्वारा घेरिएर उत्तम राजसिंहासनमा आसीन यदुश्रेष्ठ भगवान् कृष्णचन्द्र आफ्नु कान्तिले दशै

दिशाहरू आलोकित पार्दै यस्ता रात्री देखिए जस्तै आकाशमा नक्षत्रहरूका माझमा चन्द्रमा शोभित हुन्छन् ॥१८॥ त्यस सभामा हास्य-कुशल उपमन्त्रीगण विविध प्रकारका हास्य-र सपूर्ण कुराले भगवान् कृष्णको मनोरंजन गर्नलागे । नटाचार्य नर्तकगण मृदङ्ग, वीणा, मुरज र बाँसुरीको लय तथा शङ्खध्वनिको अनुसार नाच-गान गर्नलागे । सूत, मागध तथा बन्दीजन उनको स्तुति गर्नलागे ॥ १९॥२० ॥ त्यहाँ उपस्थित केही वेदवादी तथा ब्राह्मण वेदहरूको व्याख्या गर्दै पूर्वकालीन पवित्र कीर्ति भएका राजाहरूको सम्पूर्ण वृत्तान्त सुनाउन लागे ॥ २१ ॥ हे राजन् ! त्यसै वेला त्यहाँ यौटा यस्तो व्यक्ति आयो, जसलाई पहिले कसैले पनि देखे सुनेका वा चिनेको थिएन । भगवानलाई त्यो आएको सूचना दिइयो र उनको आज्ञाले द्वारपालले उसलाई त्यस सभामा ल्याएर उपस्थित गरायो ॥ २२-२३ ॥ सुधर्मा सभामा पुगेपछि उसले परमेश्वर भगवान् श्रीकृष्णलाई दुवै हात जोडेर प्रणाम गर्‍यो र उसले जरासन्धको बन्दीगृहमा परेका राजाहरूको कष्ट सुनायो । जरासन्धको दिग्विजय प्रसङ्गमा जसले उसको साम्ने टाउको न्हुराएनथ्यो, ती बीस हजार

क्यस्ताण्डवैः पृथक् ॥ १९ ॥ मृदङ्गवीणामुरजवेणुतालदरस्वनैः ॥ ननृतुर्जगुस्तुष्टुवुश्च सूतमागधवन्दिनः ॥ २० ॥ तत्राहुर्ब्राह्मणाः केचिदासीना ब्रह्मवादिनः ॥ पूर्वेषां पुण्ययशसां राज्ञां चाकथयन्कथाः ॥ २१ ॥ तत्रैकः पुरुषो राजन्नागतोऽपूर्वदर्शनः ॥ विज्ञापितो भगवते प्रतीहारैः प्रवेशितः ॥२२॥ स नमस्कृत्य कृष्णाय परेशाय कृताञ्जलिः ॥ राज्ञामावेदयद्दुःखं जरासन्धनिरोधजम् ॥२३॥ ये च दिग्विजये तस्य सन्नतिं न ययुर्नृपाः ॥ प्रसह्यरुद्धास्तेनासन्नयुते द्वे गिरिव्रजे ॥ २४ ॥ कृष्ण कृष्णाप्रमेयात्मन्प्रपन्नभयभञ्जन ॥ वयं त्वां शरणं यामो भयभीताः पृथग्धियः ॥ २५ ॥ लोको विकर्मनिरतः कुशले प्रमत्तः कर्मण्ययं त्वदुदिते भवदर्चने स्वे ॥ यस्तावदस्य बलवानिह जीविताशां सद्यश्छिनत्त्यनिमिषाय नमोऽस्तु तस्मै ॥२६॥ लोके भवाञ्जगदिनः कलयावतीर्णः सद्रक्षणाय खलनिग्रहणाय चान्यः ॥ कश्चित्त्वदीयमतियाति निदेशमीश किं वा जनः स्वकृतमृच्छति तन्न विद्मः ॥ २७ ॥ स्वप्नायिते नृपसुखं परतन्त्रमीश शश्वद्भयेन मृतकेन धुरं वहामः ॥ हित्वा तदात्मनि सुखं त्वदनीहलभ्यं क्लिश्यामहेऽतिकृपणास्तव माययेह ॥ २८ ॥ तन्नो भवान्प्रणतशोकहराङ्घ्रियुग्मो बद्धान्वियुङ्क्ष्व मगधाह्वयकर्मपाशात् ॥ यो भूभुजोऽयुतमतङ्गजवीर्यमेको बिभ्रद्रुरोध भवने

राजाहरूलाई उसले बलपूर्वक आफ्नू गिरिव्रज नामको दुर्गमा थुनिदियो ॥ २४ ॥ ती राजाहरूको समाचार सुनाउँदै दूतले भन्यो–हे कृष्ण ! हे अप्रमेयात्मन् ! हे शरणा-गतका भय-भंजन गर्ने ! हामी भेदबुद्धि हुने प्राणी संसारको भयले डराएर हजुरको शरणमा छौं ॥ २५ ॥ यो जीव हजुरले आज्ञा भएका पूजना रूप कल्याणकारी कर्मबाट विमुख भएर सकाम कर्ममा संलग्न रहन्छ । यस्तो स्थितिमा जो यस विमूढ जीवको जीवन-आशालाई तुरुन्त नष्ट पारिदिन्छन्, ती महाबलशाली नित्य सावधान र कालरूप हजुरलाई प्रणाम छ ॥२६॥ हजुर समस्त जगत्का ईश्वर हुनुहुन्छ । सत्पुरुषको रक्षा र दुष्ट जनको दमन गर्नका लागि नै हजुर यस लोकका आफ्ना सबै कलाहरूसहित अवतीर्ण हुनुभएको छ । हे ईश ! के कुनै यस्तो बलवान् पुरुष छ, जो हजुरको आज्ञा उल्लङ्घन गर्नसकोस् । प्रत्येक व्यक्ति आफूले गरेका कर्मफल भोग्छ नै, यो हामीलाई थाहा छैन ॥२७॥ हे ईश ! हामी आफ्नू आत्मामा प्राप्त स्वतःसिद्ध सुख छोडेर हजुरकी मायाले दीन-हीन भएर कष्ट भोगिरहेका छौं, किनकि प्रारब्धाधीन हुनाले हामी परतन्त्र छौं र स्वप्नसमान राजसुख पाउने इच्छुक रहन्छौं । उसको

सदा भय बनिरहन्छ, त्यो मृतकतुल्य शरीरले हामी केवल स्त्री-पुत्रादिको चिन्तारूपी भारी बोकिरहेछौँ॥२८॥हे प्रभो ! हजुरका चरणयुगल शरणागतका दु:ख हटाइदिन्छन् । अतः हजुरले
जरासन्धरूपी कर्मबन्धनमा बाँधिएका हामीलाई* मुक्ति दिलाउनोस् । त्यो एक्लै दस हजार हस्तीको बल भएको हुनाले हामीलाई भेडा-बाख्रा झैं कैदमा थुनि राखेको छ ॥ २९ ॥
हे उदात्तचक्र ! जरासन्धले हजुरसित अठार पल्ट युद्ध गऱ्यो । त्यसमा सत्रपल्ट हजुरले त्यसको मानमर्दन गर्नुभयो, तैपनि अठारौं पल्ट मनुष्यलीलामा निरत तथा अनन्त-अमित
पराक्रमी हजुरलाई एकपल्ट जित्यो, उसैबेलादेखि त्यो उन्मत्त भएर हजुरका प्रजास्वरूप हामीलाई असह्य यातना र कष्ट दिन थालिरहेछ । हे अजित ! अब जे उचित ठान्नु हुन्छ
सोही गर्नोस्' ॥ ३० ॥ दूतले भन्यो–हे भगवन् ! जरासन्धका थुनुवा हजुरका दर्शनेच्छु राजाहरूले हजुरका चरणको शरण परेका छन् । कृपा गरेर तिनीहरूको कल्याण गर्नुहवस्
॥३१॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! त्यो दूत यसरी प्रार्थना गर्दै थियो, त्यसै बेला पिङ्गलवर्ण, जटाधारी, तेजस्वी र सूर्य झैं प्रकाशवान् र ज्ञानी देवर्षि नारदजी त्यहीं आइपुगे

मृगराडिवावीः ॥ २९ ॥ यो वै त्वया द्विनवकृत्व उदात्तचक्र भग्नो मृधे खलु भवन्तमनन्तवीर्यम् ॥ जित्वा नृलोकनिरतं सकृदूढदर्पो युष्मत्प्रजा
रुजति नोऽजित तद्विधेहि ॥३०॥ दूत उवाच ॥ इति मागधसंरुद्धा भवद्दर्शनकांक्षिणः ॥ प्रपन्नाः पादमूलं ते दीनानां शं विधीयताम् ॥ ३१ ॥
श्रीशुक उवाच ॥ राजदूते ब्रुवत्येवं देवर्षिः परमद्युतिः ॥ बिभ्रत्पिङ्गजटाभारं प्रादुरासीद्यथा रविः ॥ ३२ ॥ तं दृष्ट्वा भगवान्कृष्णः सर्वलोकेश्वरेश्वरः ॥
ववन्द उत्थितः शीर्ष्णा ससभ्यः सानुगो मुदा ॥३३॥ सभाजयित्वा विधिवत्कृतासनपरिग्रहम् ॥ बभाषे सूनृतैर्वाक्यैः श्रद्धया तर्पयन्मुनिम् ॥३४॥
अपिस्विदद्य लोकानां त्रयाणामकुतोभयम् ॥ ननु भूयान्भगवतो लोकान्पर्यटतो गुणः ॥ ३५ ॥ न हि तेऽविदितं किञ्चिल्लोकेष्वीश्वरकर्तृषु ॥
अथ पृच्छामहे युष्मान्पाण्डवानां चिकीर्षितम् ॥ ३६ ॥ श्रीनारद उवाच ॥ दृष्टा मया ते बहुशो दुरत्यया माया विभो विश्वसृजश्च मायिनः ॥

॥ ३२ ॥ तिनलाई देख्नासाथ सबै लोकपालहरूका प्रभु श्रीकृष्ण सबै सभासद् र अनुचर सहित झुल्क उठेर ठिङ्ग उभिए र प्रसन्नतापूर्वक शिर न्युराएर उनलाई प्रणाम गरे ॥३३॥
उनले विधिवत् आसनादि दिएर सत्कार गरे र श्रद्धाले मुनिवरलाई सन्तुष्ट पार्दै मधुर वाणीमा भन्नुभयो—॥३४॥ 'हे नारदजी ! हे मुने ! अब त्रिलोकमा कसैलाई भय त रहेन ?
हजुर तीनै लोकमा डुल्नुहुन्छ, यसले हामीलाई यो ठूलो लाभ हुन्छ कि सबै लोकका समचार अनायास प्राप्त हुन्छन् ॥३५॥ ईश्वरले रचेका तीनै लोकमा यस्तो कुनै कुरा छैन
जो मुनिको निम्ति अज्ञात होस् । अतएव हामी हजुरसित यो जान्न खोज्दैछौं कि पाण्डवहरू अब के गर्न खोजिरहेका छन् ? ॥ ३६ ॥ नारदजीले भने–हे विभो ! हजुर समस्त

* दृष्टान्त ( हामी त पिताद्वारा नै मुक्त हुन्छौं ) अंग्रेज पहिले यस देशमा व्यापार गर्न आएका थिए । बिस्तार बिस्तार तिनको व्यापार बढ्दै गयो । अन्त्यमा १८५७ ई० को विद्रोहपछि तिनको सत्ता चलिरहो गयो । अंग्रेजी सत्ताको नाममा तिनको शिक्षा, धर्म, रीति रिवाज आदिको पनि प्रचुर प्रचार भए । त्यसैताका एक दिन कोही पादरी उपदेश दिइरहेका थिए– ईशाको शरण नपरी मुक्ति प्राप्त हुन सक्दैन !' श्रोताले सोधे–'ईशू को हुन् ?' पादरीले भने–'ती ईश्वरका मनपरेका छोरा हुन् !' श्रोताले फेरि सोधे–'ईश्वर बाँचेकै छन् कि छैनन् ?' पादरीले भने–'उनको कहिल्यै नाश हुँदैन–उनी अमर छन् !' श्रोताले फेरि सोधे–'अनि ईशू छन् कि छैनन् ?' पादरीले भने–'स्थूल रूपमा छैनन्, सूक्ष्म रूपमा छन् !' श्रोताहरूले हाँसेर भने–पादरी साहेब ! तिमी के भनिरहेका छौ ? जबसम्म प्रभुरूपी पिता बसेकै छ, तब सम्म छोराँसित मुक्ति किन माग्ने । फेरि त्यो छोरो पनि जीवित छैन । अतः हामीलाई त जीवित पिताले नै मुक्ति दिन्छन् । के तिमी यस्तो छोराका प्रयोग पनि सोचिरहेका छौ !' यति कुरा सुनेर पादरी चुपलागे । उसले बुझ्यो–यहाँ मेरो कुरा सुन्ने कोही छैन । यसै निमित्त त्यो गाउँहरूमा गएर आफ्नू धर्म-प्रचार गर्न लाग्यो ।

विश्वका रचयिता र मायावी हुनुहुन्छ । मैले हजुरको दुस्तर मायालाई घेरैपल्ट देखेको छु । जस्तै दाउरामा ज्वालाविहीन अग्नि लुकेको हुन्छ, त्यस्तै हजुर आफ्नो मायाशक्तिले सबै प्राणीमा व्याप्त रहनु हुन्छ । अतः हजुरको यस्तो प्रश्न मेरो निम्ति कुनै अद्भुत कुरा होइन ॥३७॥ हे प्रभो ! सर्वथा मिथ्या भएर पनि सत्य झैं प्रतीत हुने प्रपञ्चलाई हजुर आफ्नो मायाले रचेर लय पार्नुहुन्छ । अतः हजुर परमेश्वरको अभिप्राय को जान्न सक्दछ ? हजुर अचिन्त्यमूर्ति ईश्वरलाई नमस्कार छ ॥३८॥ हजुरले अनर्थवादी शरीरबाट मुक्त हुने उपाय नजान्नाले गर्दा संसार-चक्रमा घुमिरहने जीवलाई मुक्त पार्नको निम्ति विविध लीलावतार धारण गरेर आफ्नू सुयशरूपी बत्ती प्रज्वलित पार्नु भएको छ । म हजुरको शरणमा छु ॥३९॥ हे प्रभो ! हजुर साक्षात् ब्रह्म हुनुहुन्छ, तर यस बेला मानवी लीलाको अनुसरण गर्नुभएको छ । यसै निम्ति म हजुरका फुपूका छोरा अनन्य भक्त राजा युधिष्ठिरलाई जे गर्ने इच्छा छ, त्यो भन्दछु ॥४०॥ पाण्डुतनय महाराज युधिष्ठिर चक्रवर्ती हुने इच्छाले राजसूय यज्ञद्वारा हजुरको पूजा गर्न खोजिरहेका छन्, हजुर तिनको अनुमोदन गर्नोस् ॥ ४१ ॥

भूतेषु भूमंश्चरतः स्वशक्तिभिर्वह्नेरिवच्छन्नरुचो न मेऽद्भुतम् ॥३७॥ तवेहितं कोऽर्हति साधु वेदितुं स्वमाययेदं सृजतो नियच्छतः ॥ यद्विद्यमानात्मतयाऽवभासते तस्मै नमस्ते स्वविलक्षणात्मने ॥३८॥ जीवस्य यः संसरतो विमोक्षणं न जानतोऽनर्थवहाच्छरीरः ॥ लीलावतारैः स्वयशःप्रदीपकं प्रज्वालयत्त्वा तमहं प्रपद्ये ॥ ३९ ॥ अथाप्याश्रावये ब्रह्मन् नरलोकविडम्बनम् ॥ राज्ञः पैतृष्वस्रेयस्य भक्तस्य च चिकीर्षितम् ॥ ४० ॥ यक्ष्यति त्वां मखेन्द्रेण राजसूयेन पाण्डवः ॥ पारमेष्ठ्यकामो नृपतिस्तद्भवाननुमोदताम् ॥ ४१ ॥ तस्मिन्देव क्रतुवरे भवन्तं वै सुरादयः ॥ दिदृक्षवः समेष्यन्ति राजानश्च यशस्विनः ॥ ४२ ॥ श्रवणात्कीर्तनाद्ध्यानात्पूयन्तेऽन्तेवसायिनः ॥ तव ब्रह्ममयस्येश किमुतेक्षाभिमर्शिनः ॥ ४३ ॥ यस्यामलं दिवि यशः प्रथितं रसायां भूमौ च ते भुवनमङ्गल दिग्वितानम् ॥ मन्दाकिनीति दिवि भोगवतीति चाधो गङ्गेति चेह चरणाम्बु पुनाति विश्वम् ॥ ४४ ॥ श्रीशुक उवाच ॥ तत्र तेष्वात्मपक्षेष्वगृह्णत्सु विजिगीषया ॥ वाचः पेशैः स्मयन्भृत्यमुद्धवं प्राह केशवः ॥४५॥ श्रीभगवानुवाच ॥ त्वं हि नः परमं चक्षुः सुहृन्मन्त्रार्थतत्त्ववित् ॥ तथाऽत्र ब्रूह्यनुष्ठेयं श्रद्दध्मः करवाम तत् ॥ ४६ ॥ इत्युपामन्त्रितो भर्त्रा सर्वज्ञेनापि मुग्धवत् ॥

हे देव ! त्यस उत्तम यज्ञमा सबै देवता र ठूला-ठूला यशस्वी राजा हजुरको दर्शन गर्न आउँछन् । हे ईश ! परब्रह्मरूप ईश्वरको श्रवण, कीर्तन मनन, ध्यान गर्नाले चाण्डाल पनि पवित्र हुन्छन् भने हजुरको साक्षात् दर्शन तथा स्पर्श गर्नेहरूको त कुरै छैन ! ॥४२॥४३॥ हे भुवनमङ्गल ! हजुरको पवित्र यश स्वर्ग, पाताल र पृथ्वी तथा दसै दिशाहरूमा व्याप्त छ । हे प्रभो ! हजुरको चरणोदक स्वर्गमा मन्दाकिनी, पातालमा भोगवती तथा भूलोकमा गङ्गा नामले विद्यमान भएर समस्त विश्वलाई पवित्र पार्ने गर्दछिन् ॥ ४४ ॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! आफ्ना पक्षका यादवहरू विजय प्राप्तिका लागि अति उत्सुक हुनाले नारदजीको कुरा स्वीकार नगरेका देखेर श्रीकृष्णले आफ्ना भृत्य उद्धवसित हाँस्तै भन्नुभयो ॥४५॥ श्रीकृष्ण आज्ञा हुन्छ–हे उद्धव ! तिमी सबै पदार्थका ज्ञाता, हाम्रा उत्तम चक्षु, शुभ सम्मतिका मर्मज्ञ र प्रिय सुहृद् हौ । अब तिमी नै भन हामीले के गर्नु उचित छ ? तिमी जे भन्नेछौ, हामी उसैमा विश्वास गरेर त्यही गर्नेछौं ॥४६॥ जब सर्वज्ञ भएर पनि आफ्ना स्वामी कृष्णले उद्धवसित थाहै नपाए झैं गरी आफ्नू कर्तव्य सोधेपछि उनले

पनि प्रभुको आज्ञा शिरोधार्य गरेर यसरी उत्तर दिए ॥४७॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायां सप्ततितमोऽध्यायः ॥ ७० ॥

( भगवान्‌को इन्द्रप्रस्थ प्रस्थान ) श्रीशुकदेव भन्दछन्–हे राजन् ! श्रीकृष्णका त्यस्ता वचन सुनेर तथा देवर्षि नारद, सबै सभासद र भगवान् कृष्णको मनोभाव जानेर महामति उद्धवले भने ॥ १ ॥ उद्धव बोले-–हे देव ! जस्तो देवर्षि नारदले भन्नुभयो, त्यस अनुसार हजुरले यज्ञ गर्न इच्छुक आफ्ना फुपूका छोरा युधिष्ठिरको नै सहायता गर्नु पर्दछ। तो शरणागत राजाहरूको रक्षा गर्नु पनि आवश्यक छ ॥ २६ ॥ हे प्रभो ! राजसूय यज्ञ त्यही व्यक्ति गर्न सक्दछ, जो सबै दिशाहरू जितोस्। अतः त्यो दिग्विजयको प्रसंगमा जरासन्धलाई जित्न पनि आवश्यक हुनेछ र जरासन्धलाई जितेपछि युधिष्ठिरको यज्ञ र शरणागतहरूको रक्षा दुवै कार्य संगै सम्पन्न हुनेछ–यस्तो मेरो मन्तव्य छ ॥३॥ हे गोविन्द ! यदि यस्तो गरिन्छ भने दिग्विजयको उद्देश्य सफल होला र तो धुनामा परेका राजाहरू पनि मुक्त हुने छन् र हजुरको यश पनि चारैतिर फैलिने छ ॥ ४ ॥ राजा जरासन्ध दस हजार

निदेशं शिरसाऽऽधाय उद्धवः प्रत्यभाषत ॥ ४७ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे भगवद्यानविचारे सप्ततितमोऽध्यायः ॥७०॥

श्रीशुक उवाच ॥ इत्युदीरितमाकर्ण्य देवर्षेरुद्धवोऽब्रवीत ॥ सभ्यानां मतमाज्ञाय कृष्णस्य च महामतिः ॥ १ ॥ उद्धव उवाच ॥ यदुक्तमृषिणा देव साचिव्यं यक्ष्यतस्त्वया ॥ कार्यं पैतृष्वस्रेयस्य रक्षा च शरणैषिणाम् ॥ २ ॥ यष्टव्यं राजसूयेन दिक्चक्रजयिना विभो ॥ अतो जरासुतजय उभयार्थो मतो मम ॥ ३ ॥ अस्माकं च महानर्थो ह्येतेनैव भविष्यति ॥ यशश्च तव गोविन्द राज्ञो बद्धान्विमुञ्चतः ॥ ४ ॥ स वै दुर्विषहो राजा नागायुतसमो बले ॥ बलिनामपि चान्येषां भीमं समबलं विना ॥ ५ ॥ द्वैरथे स तु जेतव्यो मा शताक्षौहिणीयुतः ॥ ब्रह्मण्योऽभ्यर्थितो विप्रैर्न प्रत्याख्याति कर्हिचित् ॥ ६ ॥ ब्रह्मवेषधरो गत्वा तं भिक्षेत वृकोदरः ॥ हनिष्यति न सन्देहो द्वैरथे तव सन्निधौ ॥७॥ निमित्तं परमीशस्य विश्वसर्ग निरोधयोः ॥ हिरण्यगर्भः शर्वश्च कालस्यारूपिणस्तव ॥ ८ ॥ गायन्ति ते विशदकर्म गृहेषु देव्यो राज्ञां स्वशत्रुवधमात्मविमोक्षणं च ॥ गोप्यश्च कुञ्जरपतेर्जनकात्मजायाः पित्रोश्च लब्धशरणा मुनयो वयं च ॥ ९ ॥ जरासन्धवधः कृष्ण भूर्यर्थायोपकल्पते ॥ प्रायः पाकविपाकेन तव चाभिमतः

हात्तीको समान बलवान् छ। त्यसलाई उस्तै बलवान् भीमसेन बाहेक अरु कोहि बर्ता बलवान् भए पनि जित्न सक्तैन, किनकि त्यसको मृत्यु भीमसेनको हातबाट हुनु निश्चित छ ॥५॥ उसलाई द्वन्द युद्धमा जित्नु उचित हुनेछ। उसलाई जित्न सयौं अक्षौहिणी सेना लिएर जाने आवश्यकता छैन। त्यो निकै ब्राह्मण-भक्त छ। ब्राह्मणहरूको प्रार्थनालाई त्यो कदापि टार्दैन ॥ ६ ॥ अतः भीमसेन ब्राह्मण बनेर त्यसकहाँ जाउन् र द्वन्दयुद्धको भिक्षा मागुन्। अनि तो हजुरको साम्मुन्ने उसलाई द्वन्दयुद्धमा अवश्य मार्नेछन्, यसमा अलिकति पनि सन्देह छैन ॥ ७ ॥ हजुर निराकार र कालस्वरूप ईश्वर हुनुहुन्छ। जगत्‌को उत्पत्ति र प्रलयमा ब्रह्मा र शिव निमित्त मात्र हुन्, वस्तुतः हजुर नै गर्नुहुन्छ ॥ ८ ॥ जरासन्ध मरपछि त्यसका बन्दी राजाहरूका स्त्रीगण शत्रुको वध, तथा पतिहरू बन्धनमुक्त भएका हुनाले हजुरका लीलाको आनन्दपूर्वक आफ्आफ्ना घरमा गान गर्नेछन्, जस्तै गोपिनीहरू शंखचूडबाट मुक्ति पाएर र मुनिगण ग्राहको मुखबाट छुटाउने र रावणकहाँबाट सीताजीलाई ल्याउने लीलाहरू गाउँछन् र हामी यादव कंसलाई मारेर माता-पितालाई उसको बन्धनबाट मुक्त पारेको कीर्ति

वर्णन गर्दछन् ॥९॥ हे कृष्ण ! जरासन्धको वधले अनेक कार्य एकैसाथ हुनेछन् र राजाहरूका पुण्यकर्म र जरासन्धको वध हजुरलाई पनि यज्ञ नै श्रेष्ठ र मान्य छ । अतः पहिले राजसूय यज्ञमा नै जानुपर्दछ ॥ १० ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! श्रीकृष्णले देवर्षि नारद, वयोवृद्ध यादवहरूका कुराको समर्थन गर्नुभयो ॥११॥ अनि भगवान् देवकीनन्दले वसुदेव आदि गुरुजनसित आज्ञा लिएर दारुक तथा जैत्र आदि सेवकलाई इन्द्रप्रस्थ जाने तयारी गर्ने आज्ञा दिए ॥ १२ ॥ पहिले पुत्रहरू तथा अन्यान्य कुटुम्बीजन सहित शत्रुनाशक बलरामजीको पनि आज्ञा लिएर भगवान कृष्ण सारथीले ल्याएको गरुडचिह्नले चिह्नित ध्वजायुक्त रथमा चढ्नुभयो ॥१३। मृदङ्ग, भेरी, ढोल, नगरा, शङ्ख, पणव र गोमुख आदि बाजाहरूको घोषले दशै दिशाहरू मुखरित पार्दै रथ, हात्ती, घोडा र पैदल चतुरङ्गिणी विशाल सेनाले घेरिएर श्रीकृष्ण नगर बाहिर निस्के ॥ १४ ॥ कृष्णका पतिपरायणा पत्नीहरू राम्रा-राम्रा आभूषण, चन्दन तथा माला आदिले अलंकृत भएर आफ्ना छोरा-छोरी सहित नरयान ( पालकी ) अश्वयान तथा सुवर्णमण्डित शिबिकाहरूमा चढेर कृष्णभगवान्का रथको अघि-पछिलाग्दै

क्रतुः ॥ १० ॥ श्रीशुक उवाच ॥ इत्युद्धववचो राजन्सर्वतोभद्रमच्युतम् ॥ देवर्षिर्यदुवृद्धाश्च कृष्णश्च प्रत्यपूजयन् ॥ ११ ॥ अथादिशत्प्रयाणाय भगवान्देवकीसुतः ॥ भृत्यान्दारुकजैत्रादीननुज्ञाप्य गुरून्विभुः ॥ १२ ॥ निर्गमय्यावरोधान्स्वान्सुतान्सपरिच्छदान् ॥ सङ्कर्षणमनुज्ञाप्य यदुराजं च शत्रुहन् ॥ सूतोपनीतं स्वरथमारुहद्गरुडध्वजम् ॥ १३ ॥ ततो रथद्विपभटसादिनायकैः करालया परिवृत आत्मसेनया ॥ मृदङ्गभेर्यानकशङ्खगोमुखैः प्रघोषघोषितककुभो निराक्रमत् ॥ १४ ॥ नृवाजिकाञ्चनशिबिकाभिरच्युतं सहात्मजाः पतिमनु सुव्रता ययुः ॥ वराम्बराभरणविलेपनस्रजः सुसंवृता नृभिरसिचर्मपाणिभिः ॥ १५ ॥ नरोष्ट्रगोमहिषखराश्वतर्यनःकरेणुभिः परिजनवारयोषितः ॥ स्वलंकृताः कटकुटिकम्बलाम्बराद्युपस्करा ययुरधियुज्य सर्वतः ॥ १६ ॥ बलं बृहद्ध्वजपटछत्रचामरैर्वरायुधाभरणकिरीटवर्मभिः ॥ दिवांशुभिस्तुमुलरवं बभौ रवेर्यथार्णवः क्षुभिततिमिङ्गिलोर्मिभिः ॥ १७ ॥ अथो मुनिर्यदुपतिना सभाजितः प्रणम्य तं हृदि विदधद्विहायसा ॥ निशम्य तद्व्यवसितमाहृतार्हणो मुकुन्दसन्दर्शननिर्वृतेन्द्रियः ॥ १८ ॥ राजदूतमुवाचेदं भगवान्प्रीणयन्गिरा ॥ माभैष्ट दूत भद्रं वो घातयिष्यामि मागधम् ॥ १९ ॥ इत्युक्त प्रस्थितो दूतो

तिनको सुरक्षाका निम्ति चारैतिर ढाल-तरवारले सुसज्जित सैनिकगण पहरा दिइरहेका थिए ॥ १५ ॥ यसै प्रकार उनको अनुयायीका पत्नी तथा वाराङ्गना राम्ररी शृङ्गार गरेर खस-खस आदिले बनेका कृत्रिम भवन तथा कम्बल र वस्त्रादि घरका सामग्रीलाई गोरु आदि वाहनमा राखेर ऊँटमा, गोरु, गधा, खच्चर गाडा तथा हात्तीहरूमा चढेर हिंडे ॥१६॥ त्यस महासमवायको तुमुल कोलाहलले व्याप्त त्यो सेना ठूला-ठूला ध्वजा, पताका, छत्र, चमर, उत्तम अस्त्र-शस्त्र, आभूषण, मुकुट तथा कवचादिले यस्तै शोभित भयो, जस्तै दिनमा सूर्यका किरण पर्नाले तथा उफ्रिरहेका ग्राह, माछा र तरङ्गहरूले समुद्रको शोभा हुने गर्दछ ॥१७॥ अनि श्रीयदुनाथद्वारा सम्मानित भएर उनको दर्शनले प्रसन्नचित्त नारदजी उनीबाट सत्कार पाएर उनको राजसूय यज्ञमा जाने पक्का निश्चय गरेर तथा प्रभुलाई प्रणाम गरी हृदयमा उनैको स्मरण गर्दै आकाशमार्गले गए ॥१८॥ अनि कृष्णले राजाहरूको त्यस दूतलाई आफ्नो सुधाजस्तै गुलियो वाणीले प्रसन्न पार्दै भन्न भयो–"हे दूत ! तिमी गएर राजाहरूसंग भन–डराउनु पर्दैन, म शीघ्र जरासन्धलाई मारेर उनको कल्याण गर्न आउने छु"॥१९॥ हरिले यस्तो

आज्ञा भएपछि दूत गएर राजाहरूलाई सबै वृत्तान्त यथावत् सुनाइदियो । ती राजा शीघ्र बन्धनमुक्त हुने आशाले भगवान् कृष्णको दर्शन पाउने प्रतीक्षा गर्नलागे ॥२०॥ यता भगवान् पनि आनर्त, सौवीर मरु तथा कुरुक्षेत्र नाघेर पर्वत, नदी, पुर, ग्राम, व्रज र आकरहरूलाई नाघेर दृषद्वती र सरस्वती नदी तरेर पाञ्चाल तथा मत्स्यदेशलाई उल्लंघन गर्दै इन्द्रप्रस्थको नजीकै पुगे ॥२१-२२॥ उनको दर्शन मनुष्यलाई अत्यन्त दुर्लभ थियो, तो श्रीकृष्णको आगमन समचार पाएर आफ्ना बन्धुवर्गले घेरिएर महाराज युधिष्ठिर अतिशय प्रसन्न भएर आफ्ना उपाध्याय सहित स्वागतका लागि नगरबाट बाहिर पुगे ॥ २३ ॥ जस्तै इन्द्रियहरू प्राणसित मिल्न गइरहेका हुन्, त्यस्तै ती राजाको तुमुल घोष र वेदको मङ्गलकारी ध्वनि संगै भगवान्को साम्नु गए । श्रीकृष्ण र उनको भक्तिः परवशता देखेर युधिष्ठिरको चित्त प्रेमातिरेकले गद्गद भयो र ती धेरै दिनपछि प्राप्त भएका आफ्ना प्रिय सुहृद्‌लाई परि-

यथावदवदन्नृपान् ॥ तेऽपि स दर्शनं शौरेः प्रत्यैक्षन्यन्मुमुक्षवः ॥ २० ॥ आनर्तसौवीरमरूंस्तीर्त्वा विनशनं हरिः ॥ गिरीन्नदीरतीयाय पुरग्राम-व्रजाकरान् ॥ २१ ॥ ततो दृषद्वतीं तीर्त्वा मुकुन्दोऽथ सरस्वतीम् ॥ पञ्चालानथ मत्स्यांश्च शक्रप्रस्थमथागमत् ॥ २२ ॥ तमुपागतमाकर्ण्य प्रीतो दुर्दर्शनं नृणाम् ॥ अजातशत्रुर्निरगात्सोपाध्यायः सुहृद्वृतः ॥ २३ ॥ गीतवादित्रघोषेण ब्रह्मघोषेण भूयसा ॥ अभ्ययात्स हृषीकेशं प्राणाः प्राणमिवादृतः ॥ २४ ॥ दृष्ट्वा विक्लिन्नहृदयः कृष्णं स्नेहेन पाण्डवः ॥ चिराद्दृष्टं प्रियतमं सस्वजेऽथ पुनः पुनः ॥ २५ ॥ दोर्भ्यां परिष्वज्य रमामलालयं मुकुन्दगात्रं नृपतिर्हताशुभः ॥ लेभे परां निर्वृतिमश्रुलोचनो हृष्यत्तनुर्विस्मृतलोकविभ्रमः ॥ २६ ॥ तं मातुलेयं परिरभ्य निर्वृतो भीमः स्मयन्प्रेमजवाकुलेन्द्रियः ॥ यमौ किरीटी च सुहृत्तमं मुदा प्रवृद्धबाष्पाः परिरेभिरेऽच्युतम् ॥ २७ ॥ अर्जुनेन परिष्वक्तो यमाभ्यामभिवादितः ॥

षरि अङ्कमाल गरेर भेटे ॥ २४-२५ ॥ लक्ष्मीका परम आश्रयस्वरूप जगत्पति भगवान् कृष्णको दिव्य शरीरको आलिङ्गन गर्नाले नै युधिष्ठिरका सबै अशुभ निवारण भइसके र उनलाई परमानन्द-लाभ भयो । त्यस वेला उनका आँखामा हर्षाश्रु भरिएर आए, शरीरमा रोमाञ्च भयो र ती लोकपालसम्मलाइ बिर्सिए ॥२६॥ त्यसपछि भीमसेनले पनि आफ्ना पुत्रको मुसुक्क हाँसेर आलिङ्गन गरेर परमशान्ति पाए । प्रेमको उद्वेगले उनको चित्त चञ्चल भएर आयो । अनि नकुल-सहदेव र आनन्दले गर्दा उम्लेर आएको आँसुले भरिएका अर्जुनले पनि उनको आलिङ्गन गरे ॥ २७ ॥ अर्जुन द्वारा आलिङ्गित र नकुल-सहदेव द्वारा नमस्कृत भएर भगवान्ले ब्राह्मणवर्ग तथा बूढा-पाकालाई यथायोग्य नमस्कार गरे ।

---

© उदाहरण ( भगवान्को भक्तपरवशता ) कर्मांबाई भगवानलाई पुत्रभावले भज्दथिन् । जस्तै–आमा बिहान उठ्नासाथ आफ्नो बालकलाई सम्झाउँछन्, त्यस्तै कर्मांबाई उनले मुहाउने, खाने पिउने आदिको ध्यान राख्दथिन । ती बिहान उठ्नासाथ स्नान नगरेरै थोरा भात भाँडामा खिचडी पकाएर भगवान्लाई भोग लगाउँथिन र भगवान् तिनको काखमा बसेर खिचडी खाने गर्दथे । एकपल्ट कुनै पण्डितले उनलाई सल्लाह दिए–तिमी आचार-विचारको पालन गरेर प्रातः स्नान गरी भगवान्लाई भोग लगाउने गर ।' कर्मांबाईले त्यस्तै गरिन् तर निकै बेर लाग्यो । भगवान् उनको काखमा बसेर खिचडी खाईरहेका थिए । त्यसै बेला जगन्नाथ-मन्दिरमा थोरा भक्तले भगवानको सामुन्ने भोग राखे । अनि भगवान हात-मुख नधोएर त्यस भक्तकहाँ दगुर्दै पुगे । भक्तले भगवानका हात र मुखमा जुठो लागेको देखेर सोधे–'हात र मुखमा जुठो कसरी लाग्यो ?' अनि भगवान्ले उत्तर दिनुभयो—'कर्मांबाई मलाई बिहानै खिचडी ख्वाउने गर्दथिन तर आज एउटा व्यक्तिले ती तिनलाई आचार विचारसित भोग लगाउनु भन्ने शिक्षा दिएछन्, त्यसैले अबेर भयो ।' ती भक्त गएर कर्मांलाई यही कुरा सुनाए । अनि ती प्रसन्न भइन र नित्य जस्तै बिहानै खिचडी पकाएर भगवानलाई ख्वाउन थालिन् ।

श्रीकृष्णले कुरु, सृञ्जय र केकय देशका राजाहरूद्वारा सम्मानित भएर स्वयं पनि सम्मान गरे। सूत, मागध, गन्धर्व, वन्दीजन उपासक र विप्रगण, मृदङ्ग, शङ्ख, वीणा, भेरी, पणव र गोमुख आदि बाजा बजाउँदै भगवान्‌को स्तुति र नाच-गान गर्नलागे ॥ २८-३० ॥ यसरी आफ्ना बन्धुगणले घेरिएर पुण्यश्लोक-शिरोमणि भगवान् कृष्ण वन्दीजन द्वारा स्तुति गरिँदै त्यस नगरमा प्रविष्ट हुनुभयो ॥ ३१ ॥ जसको मूल सडकमा हात्तीहरूका मदले सुगन्धित जल छर्किएको थियो, जुन रङ्ग-विरङ्गी ध्वजा-पताका र सुनौला वन्दनवार तथा जलपूर्ण कलश एवं स्नानादिले स्वच्छ भएर राम्रा वस्त्राभूषण र सुगन्धित मालाहरूले अलंकृत नर-नारीहरूले सुशोभित भइरहेको थियो ॥ ३२ ॥ श्रीकृष्ण भगवान्‌ले धर्मराजको राजधानीलाई प्रज्वलित बत्ती, उपहार, घरका आँखीझ्यालबाट निस्कने अगरु-धूप, पताकाहरू र स्वर्णकलश राखिएका चाँदीका शिखरले अलंकृत भवनहरूले भरिएको देखे ॥ ३३ ॥ सबै व्यक्तिका नेत्रको निम्ति अत्यन्त दर्शनीय भगवान् कृष्णचन्द्रको आगमन सुन्नासाथ नगरका नारीगण घर-धन्दा र शय्यामा सुतेका आफ्ना पति लाई त्यहीं छाडेर श्रीकृष्णलाई

ब्राह्मणेभ्यो नमस्कृत्य वृद्धेभ्यश्च यथार्हतः ॥ २८ ॥ मानितो मानयामास कुरुसृञ्जयकैकयान् ॥ सूतमागधगन्धर्वा वन्दिनश्चोपमन्त्रिणः ॥ २९ ॥ मृदङ्गशङ्खपटहवीणापणवगोमुखैः ॥ ब्राह्मणाश्चारविन्दाक्षं तुष्टुवुर्ननृतुर्जगुः ॥ ३० ॥ एवं सुहृद्भिः पर्यस्तः पुण्यश्लोकशिखामणिः ॥ संस्तूयमानो भगवान्विवेशालंकृतं पुरम् ॥ ३१ ॥ संसिक्तवर्त्म करिणां मदगन्धतो यैश्चित्रध्वजैः कनकतोरणपूर्णकुम्भैः ॥ मृष्टात्मभिर्नवदुकूलविभूषणस्रग्गन्धैर्नृभिर्युवतिभिश्च विराजमानम् ॥ ३२ ॥ उद्दीप्तदीपबलिभिः प्रतिसद्मजालनिर्यातधूपरुचिरं विलसत्पताकम् ॥ मूर्धन्यहेमकलशै रजतोरुशृङ्गैर्जुष्टं ददर्श भवनैः कुरुराजधाम ॥ ३३ ॥ प्राप्तं निशम्य नरलोचनपानपात्रमौत्सुक्यविश्लथितकेशदुकूलबन्धाः ॥ सद्यो विसृज्य गृहकर्म पतींश्च तल्पे द्रष्टुं ययुर्युवतयः स्म नरेन्द्रमार्गे ॥ ३४ ॥ तस्मिन्सुसङ्कुल इभाश्वरथद्विपद्भिः कृष्णं सभार्यमुपलभ्य गृहाधिरूढाः ॥ नार्यो विकीर्य कुसुमैर्मनसोपगुह्य सुस्वागतं विदधुरुत्स्मयवीक्षितेन ॥ ३५ ॥ ऊचुः स्त्रियः पथि निरीक्ष्य मुकुन्दपत्नीस्तारा यथोडुपसहाः किमकार्यमूभिः ॥ यच्चक्षुषां पुरुषमौलिरुदारहासलीलावलोककलयोत्सवमातनोति ॥ ३६ ॥ तत्र तत्रोपसंगम्य पौरा मङ्गलपाणयः ॥ चक्रुः सपर्यां कृष्णाय श्रेणीमुख्या हतैनसः ॥ ३७ ॥ अन्तःपुरजनैः प्रीत्या मुकुन्दः फुल्ललोचनैः ॥ ससम्भ्रमैरभ्युपेतः प्राविशद्राजमन्दिरम् ॥ ३८ ॥ पृथा विलोक्य भ्रात्रेयं कृष्णं त्रिभुवनेश्वरम् ॥

हेर्नको निम्ति राजमार्गमा आए। त्यस बेला उत्सुकताले गर्दा तिनका कपाल र लुगाका बन्धन शिथिल भएका थिए। अनि आफ्ना घरका अटालीमा उक्लेका ती नारीहरूले हात्ती घोडा, रथ र पैदल सेनाले आवृत्त श्रीकृष्णलाई आफ्ना रानीहरूसित राजमार्गमा गइरहेका देखेर ती माथि पुष्पवर्षा गरे र उनको मानसिक आलिङ्गन गरेर मुसु-मुसु हाँस्ते बाङ्गा नेत्रले स्वागत गरे ॥ ३४-३५ ॥ चन्द्रमासहित विराजमान तारागण जस्तै राजमार्गमा श्रीकृष्णसंग सुशोभित तिनकी रानीहरूलाई देखेर ती नगरका समस्त नारीहरू भन्नलागे— 'यी भाग्यमानीहरूले कुन पुण्य गरेका रहेछन् जसले पुरुषपुङ्गव श्रीकृष्ण आफ्नू उदार हाँसो र लीलामय दृष्टिले इनका नयनलाई बराबर आनन्द प्रदान गर्दछन्' ॥ ३६ ॥ जता तवै अनेक पुण्यात्मा, धनी मानी र शिल्पजीवी नागरिकहरूले धेरै माङ्गलिक वस्तु लिई अगाडि गएर श्रीकृष्ण भगवान्‌को पूजा गरे ॥ ३७ ॥ अनि श्रीकृष्ण भगवान् अन्तःपुरमा

बस्ने पुलकका विकसित र विह्वल नेत्रद्वारा प्रीतिपूर्वक स्वागत गरेपछि राजभवनमा पाल्नुभयो । ३८॥ अनि कुन्तीले पनि आफ्ना दाजूका छोरा एवं त्रैलोक्यनाथ कृष्णलाई आउनुलागेका देखेर प्रसन्नतापूर्वक पलंगबाट उठी आफ्नी पुत्रवधू द्रौपदीसहित अगाडि गएर आलिङ्गन गरिन् ॥ ३९ ॥ अनि भगवान् कृष्णलाई सादर आफ्नू महलमा लगेपछि महाराज युधिष्ठिरलाई आनन्दातिरेकले गर्दा पूजा आदि गर्ने क्रम नै बिर्सिए ॥४०॥ हे राजन् ! द्रौपदि र आफ्नी बहिनी सुभद्राद्वारा नमस्कृत भएर भगवान् कृष्णले पिताकी बहिनी कुन्ती र त्यहाँका अन्य बूढी-पुरानी स्त्रीहरूलाई प्रणाम गर्नुभयो ॥४१॥ सासु कुन्तीको प्रेरणाले द्रौपदीले रुक्मिणी, सत्यभामा, भद्रा, जाम्बवती, मित्रविन्दा, लक्ष्मणा र परमसाध्वी सत्या आदि कृष्णचन्द्रकी पत्नीहरू र उनीहरूसंग आएका जुन अन्यान्य स्त्री थिए, ती सबैलाई वस्त्र, माला र आभूषणादि दिएर राम्ररी सत्कार गरे ॥४२॥४३॥ अनि श्रीकृष्णले अर्जुनद्वारा खाण्डवदाह गराई अग्निलाई तृप्त पारे । त्यस प्रचण्ड अग्निकाण्डबाट मयदानवको रक्षा गरे त्यसैद्वारा महाराज युधिष्ठिरका निम्ति यौटा दिव्य भवन तयार गराउने श्रीजनार्दनलाई युधिष्ठिरले

प्रीतात्मोत्थाय पर्यङ्कात्सस्नुषा परिषस्वजे ॥ ३९ ॥ गोविन्दं गृहमानीय देवदेवेशमादृत. ॥ पूजायां नाविदत्कृत्यं प्रमोदोपहतो नृपः ॥४०॥ पितृष्वसुर्गुरुस्त्रीणां कृष्णश्चक्रेऽभिवादनम् ॥ स्वयं च कृष्णया राजन्भगिन्या चाभिवन्दितः ॥ ४१ ॥ श्वश्र्वा संचोदिता कृष्णा कृष्णपत्नीश्च सर्वशः ॥ आनर्च रुक्मिणीं सत्यां भद्रां जाम्बवतीं तथा ॥ ४२ ॥ कालिन्दीं मित्रविन्दां च शैब्यां नाग्नजितीं सतीम् ॥ अन्याश्चाभ्यागता यास्तु वासःस्रङ्मण्डनादिभिः ॥ ४३ ॥ सुखं निवासयामास धर्मराजो जनार्दनम् ॥ ससैन्यं सानुगामात्यं सभार्यं च नवं नवम् ॥ ४४ ॥ तर्पयित्वा खाण्डवेन वह्निं फाल्गुनसंयुतः ॥ मोचयित्वा मयं येन राज्ञे दिव्या सभा कृता ॥ ४५ ॥ उवास कतिचिन्मासान्राज्ञः प्रियचिकीर्षया ॥ विहरन्रथमारुह्य फाल्गुनेन भटैर्वृतः ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे कृष्णस्येन्द्रप्रस्थगमनं नामैकसप्ततितमोऽध्यायः ॥ ७१ ॥

श्रीशुक उवाच ॥ एकदा तु सभामध्य आस्थितो मुनिभिर्वृतः ॥ ब्राह्मणैः क्षत्रियैर्वैश्यैर्भ्रातृभिश्च युधिष्ठिरः ॥१॥ आचार्यैः कुलवृद्धैश्च ज्ञातिसम्बन्धिबान्धवैः ॥ शृण्वतामेव चैतेषामाभाष्येदमुवाच ह ॥ २ ॥ युधिष्ठिर उवाच ॥ क्रतुराजेन गोविन्द राजसूयेन पावनीः ॥ यक्ष्ये विभूतिर्भवतस्तत्सम्पादय नः प्रभो ॥ ३ ॥ त्वत्पादुके अविरतं परि ये चरन्ति ध्यायन्त्यभद्रशने शुचयो गृणन्ति ॥ विदन्ति ते कमलनाभ भवापवर्गमाशासते यदि

उनका सेना, अनुचरगण, मन्त्रिमण्डल एवं पत्नीहरूलाई यस्तो बस्ने स्थान दिए, जहाँ तिनलाई नित्य नयाँ सुख प्राप्त होस् ॥ ४४॥४५ ॥ अनि भगवान् कृष्ण अर्जुनसित रथमा चढेर अनेक सैनिकसित डुल्दै युधिष्ठिरको प्रिय गर्नाका लागि त्यहाँ केही महीना बस्नुभयो ॥४६॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायामेकसप्ततितमोऽध्यायः ॥७१॥

( युधिष्ठिरको राजसूय यज्ञको आयोजन, जरासन्ध-वध ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! एक दिन महाराज युधिष्ठिरले जब श्रीकृष्ण मुनि, विप्र, क्षत्रिय, वैश्य तथा भीमसेन आदि भ्राता, आचार्य, कुलका बूढा-पाका र जातका सम्बन्धी एवं बन्धु-बान्धवले घेरिएर राजसभामा बसेका थिए । उसै बेला उनले सबैका सामुन्ने भगवान् कृष्णलाई सम्बोधित गरेर भने ॥१॥२॥ युधिष्ठिर भन्दछन्—हे गोविन्द ! यज्ञहरूमा श्रेष्ठ राजसूय यज्ञद्वारा म हजुरका परम विभूतिस्वरूप इन्द्रादि देवताहरूको पूजा गर्न खोजिरहेको छु ।

हे प्रभो ! हजुर मेरो यो सङ्कल्प पूर्ण पारिदिनोस् ॥३॥ हे कमलनाभ ! शुद्ध चित्त जुन पुरुष पनि हजुरको पापनाशिनी चरण-पादुका निरन्तर सेवन, ध्यान र कथोपकथन गर्दछन्, ती संसारका बन्धनबाट सदाको निम्ति मुक्त हुन्छन् । यदि ती भोग खोज्दछन् भने उनहाई यस्तो सबै प्रकारका भोग अनायास प्राप्त हुन्छन्,जो अन्यलाई प्राप्त हुन सक्तैनन् असले गर्दा सबै जना हजुरका चरण-कमलको सेवाको महत्व बुझ्न सकून् । अतः हे प्रभो ! हजुर कुरु तथा सृञ्जयवंशी राजाहरूलाई आफ्नू सेवा गर्ने दुवै थरिका पुरुषहरूलाई निष्ठा देखाउनोस् ॥४॥ हे प्रभो ! हजुर सर्वात्मा, समदर्शी र आत्मानुभव परब्रह्म हुनुहुन्छ।हजुरमा आफ्नू-विरानोको भेद-भाव केही पनि छैन तैपनिजस्तै कल्पवृक्ष आफ्नू सेवा गर्नेलाई उनको भावना अनुसार फल दिन्छ, त्यस्तै प्राणीलाई सेवाको अनुरूप फल मिल्दछ । यसैले हजुरप्रति भेद-भाव अथवा निर्दयताको दोषारोप हुन सक्तैन ॥५॥६॥ श्रीभगवानले आज्ञा भयो—हे शत्रुदमन राजन् ! हजुरले उचित विचार्नु भयो । यसले लोकमा हजुरको कल्याणकारी कीर्ति बढ्नेछ ॥७॥ यो यज्ञ राजा, ऋषि, पितृ, देवता आदि सबै प्राणी र हामी बन्धु-बान्धवादि

त आशिष ईश नान्ये ॥ ४ ॥ तद्देवदेव भवतश्चरणारविन्दसेवानुभावमिह पश्यतु लोक एषः ॥ ये त्वां भजन्ति न भजन्त्युत वोभयेषां निष्ठां प्रद-
र्शय विभो कुरुसृञ्जयानाम् ॥ ५ ॥ न ब्रह्मणः स्वपरभेदमतिस्तव स्यात् सर्वात्मनः समदृशः स्वसुखानुभूतेः ॥ संसेवतां सुरतरोरिव ते प्रसादः
सेवानुरूपमुदयो न विपर्ययोऽत्र ॥ ६ ॥ श्रीभगवानुवाच ॥ सम्यग्व्यवसितं राजन्भवता शत्रुकर्शन ॥ कल्याणी येन ते कीर्तिर्लोकाननु भविष्यति
॥ ७ ॥ ऋषीणां पितृदेवानां सुहृदामपि नः प्रभो ॥ सर्वेषामपि भूतानामीप्सितः क्रतुराडयम् ॥ ८ ॥ विजित्य नृपतीन्सर्वान्कृत्वा च जगती वशे ॥
सम्भृत्य सर्वसम्भारानाहरस्व महाक्रतुम् ॥ ९ ॥ एते ते भ्रातरो राजन्लोकपालांशसम्भवाः ॥ जितोऽस्म्यात्मवता तेऽहं दुर्जयो योऽकृतात्मभिः ॥१०॥
न कश्चिन्मत्परं लोके तेजसा यशसा श्रिया ॥ विभूतिभिर्वाभिभवेद्देवोऽपि किमु पार्थिवः ॥११॥ श्रीशुक उवाच ॥ निशम्य भगवद्गीतं प्रीतः फुल्ल-
मुखाम्बुजः ॥ भ्रातॄन्दिग्विजयेऽयुङ्क्त विष्णुतेजोपबृंहितान् ॥ १२ ॥ सहदेवं दक्षिणस्यामादिशत्सह सृञ्जयैः ॥ दिशि प्रतीच्यां नकुलमुदीच्यां
सव्यसाचिनम् ॥ प्राच्यां वृकोदरं मत्स्यैः केकयैः सह मद्रकैः ॥ १३ ॥ ते विजित्य नृपान्वीरा आजह्रुर्दिग्भ्य ओजसा ॥ अजातशत्रवे भूरि द्रविणं

सबैलाई इष्ट छ ॥८॥ हजुर सबै राजाहरूलाई जितेर समस्त भूमण्डल आफ्नू वशीभूत पारी सबै यज्ञको सामग्री एकत्र पारिसकेपछि यो महायज्ञको अनुष्ठान गर्नुहवस् ॥९॥ हे राजन् ! हजुरका चारैभाई इन्द्रादि लोकपालहरूका अंशले उत्पन्न भएका छन् र हजुर पनि मनस्वी हुनुहुन्छ । त्यसैले आफ्नू प्रेमले मलाई जितिलिनुभयो । अन्य अजितेन्द्रिय पुरुषद्वारा म जितिन सक्तिन ॥१०॥ मेरो भक्तको कुनै देवता पनि तेज, यश, श्री वा विभूति आदिले तिरस्कार गर्न सक्तैन । अनि साधारण राजा तिनको केहीपनि हानि गर्न सक्तैनन् ॥११॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! भगवान्को कथन सुनेर युधिष्ठिरको मुखकमल प्रसन्नताले फक्रिएर आयो र उनले श्रीकृष्णको तेजले तेजस्वी भाइहरूलाई दिग्विजयको कार्यमा नियुक्त गरे । सहदेवलाई सृञ्जयदेशीय वीरहरूसित दक्षिण दिशामा जाने आदेश दिए । पश्चिम दिशामा नकुल, उत्तरतिर अर्जुन र पूर्वतिर भीमसेनलाई मत्स्य, केकय र मद्र-देशीय वीरहरूका साथमा पठाए ॥१२॥१३॥ हे राजन् ! अर्जुन आदि वीरहरूले आफ्नू पराक्रमले सबै दिशाका राजाहरूलाई जितेर यज्ञको निम्ति तत्पर युधिष्ठिरलाई पर्याप्त धन

न्याग्र दिए ॥ १४ ॥ तब महाराज युधिष्ठिरले जरासन्धलाई अजेय सुने तब उसलाई जित्ने चिन्तामा माडिए। आदिपुरुष भगवान्ले उनलाई त्यही यत्न बताउनु भयो जुन पहिले उद्धवजीले भनेका थिए ॥१५॥ हे तात ! त्यसै अनुसार भीमसेन, अर्जुन र कृष्ण तीनै जना ब्राह्मणवेश धारण गरेर गिरिव्रज दुर्गमा गए, जहाँ बृहद्रथ-पुत्र जरासन्ध बस्तथे ॥१६॥ ब्राह्मण-वेषधारी ती क्षत्रियले ब्राह्मण-भक्त तथा गृहस्थाश्रमी राजा जरासन्धको घर ठीक आतिथ्यको मौकामा पुगेर प्रार्थना गरे ॥ १७ ॥ उनले भने—'हे राजन् ! हजुरको कल्याण होस् । हजुर यस्तो जान्नुहवस् कि हामी अतिथि धेरै परबाट आएका छौं । हामी हजुरसित जे माग्न खोज्दैछौं, त्यो कृपा गरेर हजुर हामीलाई दिनुहवस् ॥१८॥ तितिक्षु जनका लागि के असह्य छ ? दुष्टजन के अनर्थ गन सक्दैनन् ! उदार व्यक्तिका लागि के अदेय वस्तु छ ? अनि समदर्शीहरूका लागि अर्काको वस्तु के हुनसक्छ ? ॥ १९ ॥ जो पुरुष समर्थ भएर पनि यो नाशवान् शरीरले सज्जनहरूले गान गरिने योग्य सुयशको सम्पादन गर्दैनन्, ती निन्दनीय र शोचनीय कहिन्छन् । हरिश्चन्द्र, रन्तिदेव, शिलोञ्छवृत्तिमा बाँच्ने मुद्गल ऋषि,

नृप धक्ष्यते ॥१४॥ श्रुत्वाऽजितं जरासन्धं नृपतेर्ध्यायतो हरिः ॥ आहोपायं तमेवाद्य उद्धवो यमुवाच ह ॥ १५ ॥ भीमसेनोऽर्जुनः कृष्णो ब्रह्मलिङ्ग-
धरास्त्रयः ॥ जग्मुर्गिरिव्रजं तात बृहद्रथसुतो यतः ॥ १६ ॥ ते गत्वाऽऽतिथ्यवेलायां गृहेषु गृहमेधिनम् ॥ ब्रह्मण्यं समयाचेरन्राजन्या ब्रह्मलिङ्गिनः
॥ १७ ॥ राजन्विद्ध्यतिथीन्प्राप्तानर्थिनो दूरमागतान् ॥ तन्नः प्रयच्छ भद्रं ते यद्वयं कामयामहे ॥१८॥ किं दुर्मर्षं तितिक्षूणां किमकार्यमसाधुभिः ॥
किं न देयं वदान्यानां कः परः समदर्शिनाम् ॥ १९ ॥ योऽनित्येन शरीरेण सतां गेयं यशो ध्रुवम् ॥ नाचिनोति स्वयं कल्पः स वाच्यः शोच्य
एव सः ॥ २० ॥ हरिश्चन्द्रो रन्तिदेव उञ्छवृत्तिः शिबिर्बलिः ॥ व्याधः कपोतो बहवो ह्यध्रुवेण ध्रुवं गताः ॥ २१ ॥ श्रीशुक उवाच ॥ स्वरैराकृ-
तिभिस्तांस्तु प्रकोष्ठैर्ज्याहतैरपि ॥ राजन्यबन्धून्विज्ञाय दृष्टपूर्वानचिन्तयत् ॥ २२ ॥ राजन्यबान्धवा ह्येते ब्रह्मलिङ्गानि बिभ्रति ॥ ददामि भिक्षितं
तेभ्य आत्मानमपि दुस्त्यजम् ॥ २३ ॥ बलेर्नु श्रूयते कीर्तिर्वितता दिक्ष्वकल्मषा ॥ ऐश्वर्याद्भ्रंशितस्यापि विप्रव्याजेन विष्णुना ॥ २४ ॥ श्रियं
जिहीर्षतेन्द्रस्य विष्णवे द्विजरूपिणे ॥ जानन्नपि महीं प्रादाद्वार्यमाणोऽपि दैत्यराट् ॥ २५ ॥ जीवता ब्राह्मणार्थाय को न्वर्थः क्षत्रबन्धुना ॥ देहेन
पतमानेन नेहता विपुलं यशः ॥ २६ ॥ इत्युदारमतिः प्राह कृष्णार्जुनवृकोदरान् ॥ हे विप्रा व्रियतां कामो ददाम्यात्मशिरोऽपि वः ॥ २७ ॥

शिबि, बलि, व्याध र कपोत (परेवा) आदि अनेक प्राणीहरूले यस शरीरले नै अविनाशी पद प्राप्त गरेका थिए' ॥२०-२१॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! जरासन्धले तिनका स्वर, आकृति तथा पाखुराहरूमा परेका ठेला धनुषका ताँदोको चिह्नले तिनलाई आफूले पहिले देखेका क्षत्रिय ठानेर मनमनै विचार गरे—॥२२॥ यी वास्तवमा क्षत्रिय हुन्, तर इनले भयवश ब्राह्मण जस्तो वेष धारण गरेका छन् । अतएव इनले मागेपछि म आफ्नो दुस्त्यज शरीर पनि दिनसक्छु ॥२३॥ सुनिन्छ—बलिकहाँबाट इन्द्रको राज्यलक्ष्मी खोसिलिन इच्छुक विष्णुले ब्राह्मण बनेर बलिको छलपूर्वक ऐश्वर्य भ्रष्ट पारिदिएका थिए । तापनि दसै दिशामा फैलिएको निर्मल कीर्ति आज पनि विद्यमान छ । शुक्राचार्यले छेक्दा पनि ती दैत्यराजले विप्रवेषधारी विष्णुलाई जानी-जानी सम्पूर्ण पृथ्वी दिएका थिए ॥ २४-२५ ॥ जुन क्षत्रिय ब्राह्मणको निम्ति जीवन धारण गर्दैन र अविनाशी यशको संचय गर्दैन, त्यसका

नाशवान् शरीरले के लाभ ? ॥२६॥ मनमनै यस्तो विचार गरेर उदारबुद्धि जरासन्धले कृष्ण, अर्जुन र भीमसेनसित भने–हे विप्र हो ! तिमीहरूको जे इच्छा छ, त्यो माग, म त काल आफ्नू मस्तक पनि काटेर दिन तयार छु ॥२७॥ भगवान्ले भन्नुभयो–हे राजेन्द्र ! यदि उचित ठान्दछौ भने तिमी हामीलाई द्वन्दयुद्धको भिक्षा देऊ। हामी क्षत्रिय हौं र युद्धको इच्छाले नै तिमीकहाँ आएका हौं। हामी अन्नका इच्छुक ब्राह्मण होइनौं ॥२८॥ यी पृथापुत्र भीमसेन हुन् र यी उनैका भाई अर्जुन हुन् र म तिम्रो ममाको छोरो तथा तिम्रो पुरानो शत्रु कृष्ण हुँ यस्तो बुझ ॥२९॥ यस प्रकार भगवान् कृष्णद्वारा सूचित गरेपछि मगधाधिप जरासन्ध गलल्ल हाँस्न लागे र उनले अलिकति रिसाएर भने–'ए मूर्ख हो ! यदि तिमीहरूको यही इच्छा छ भने म तिमीहरूलाई द्वन्दयुद्धको भिक्षा दिन्छु ॥३०॥ तर तिमी त डराउने र युद्धमा आत्तिने खालका जीव हौ ; यसै निम्ति आफ्नू राजधानी मथुरा छाडेर समुद्रको शरणमा गएर बसेका हौ। अतः म तिमीसित लडाइँ गर्दिन ॥ ३१ ॥ अर्जुन पनि कुनै ठूलो योद्धा होइनन्। यद्यपि यी अवस्थामा मेरो समान छन् तापनि कुनै विशेष पराक्रमी नहुनाले मेरो

श्रीभगवानुवाच ॥ युद्धं नो देहि राजेन्द्र द्वन्द्वशो यदि मन्यसे ॥ युद्धार्थिनो वयं प्राप्ता राजन्या नान्नकाङ्क्षिणः ॥ २८ ॥ असौ वृकोदरः पार्थस्तस्य भ्राताऽर्जुनो ह्ययम् ॥ अनयोर्मातुलेयं मां कृष्णं जानीहि ते रिपुम् ॥ २९ ॥ एवमावेदितो राजा जहासोच्चैः स्म मागधः ॥ आह चामर्षितो मन्दा युद्धं तर्हि ददामि वः ॥ ३० ॥ न त्वया भीरुणा योत्स्ये युधि विक्लवचेतसा ॥ मथुरां स्वपुरीं त्यक्त्वा समुद्रं शरणं गतः ॥ ३१ ॥ अयं तु वयसा तुल्यो नातिसत्त्वो न मे समः ॥ अर्जुनो न भवेद्योद्धा भीमस्तुल्यबलो मम ॥ ३२ ॥ इत्युक्त्वा भीमसेनाय प्रादाय महतीं गदाम् ॥ द्वितीयां स्वयमादाय निर्जगाम पुराद्बहिः ॥ ३३ ॥ ततः समेखले वीरौ संयुक्तावितरेतरौ ॥ जघ्नतुर्वज्रकल्पाभ्यां गदाभ्यां रणदुर्मदौ ॥ ३४ ॥ मण्डलानि विचित्राणि सव्यं दक्षिणमेव च ॥ चरतोः शुशुभे युद्धं नटयोरिव रङ्गिणोः ॥ ३५ ॥ ततश्चटचटाशब्दो वज्रनिष्पेषसन्निभः ॥ गदयोः क्षिप्तयो राजन्दन्तयोरिव दन्तिनोः ॥३६॥ ते वै गदे भुजजवेन निपात्यमाने अन्योन्यतोंऽसकटिपादकरोरुजत्रून् ॥ चूर्णीबभूवतुरुपेत्य यथार्कशाखे संयुध्यतोर्द्विरदयोरिव दीप्तमन्योः ॥३७॥ इत्थं तयोः प्रहतयोर्गदयोर्नृवीरौ क्रुद्धौ स्वमुष्टिभिरयःस्पर्शैरपिष्टाम् ॥ शब्दस्तयोः प्रहरतोरिभयोरिवासी-

जोडि मिल्दैनन्। अँ, भीम अवश्य म झैं बलवान् छन्' यति भनेर जरासन्धले भीमसेनलाई यौटा ठूलो गदा दियो र अर्को गदा आफ्नू हातमा लिएर नगर बाहिर निस्के ॥३२॥३३॥ अब ती दुवै युद्धका मतवाला वीर यौटा समतल भूमिमा भिडे र आफ्ना वज्रसमान कठोर गदाले यौटा अर्कोमाथि प्रहार गर्नलागे ॥३४॥ ती दुवै दायाँ-बायाँ छल्दै र यता उता उफ्रन्दै यस्ता देखिइरहेथे, जस्तै दुइटा नट रणभूमिमा युद्ध गरिरहेछन् ॥ ३५ ॥ हे राजन् ! उस बेला यौटाले अर्कोमाथि हिर्काएको ठक्करले लड्न लागेका दुइ हात्तीका दाँत ठोकिए झैं र बिजुली झल्के झैं चट् चट् शब्द हुनलाग्यो ॥३६॥ ती गदा ठूलो वेगले यौटाले अर्कोमाथि काँध, कमर, चरण, हात, तिघ्रा र भुजामा लाग्नाले परस्पर ठक्कर गदा त्यसरी चूर्ण भएर ती नरवीर फलामे बन झैं देखिने मुड्कीले नै यौटाले अर्कोलाई थिलथिलो पार्नलागे। हात्ती झैं परस्पर प्रहार गर्ने मुड्कीको आघात खाई भूलो हुन्छन् ॥३७॥ तिनका

शब्द वज्र परे झैं प्रचण्ड सुनिन्थ्यो ॥ ३८ ॥ हे राजन् ! समान शिक्षा, बल र उत्साह सम्पन्न ती दुवै डरलाग्दा वीरको असाधारण युद्ध भयो । त्यस युद्धमा ती दुवैमध्ये कसैको पनि उत्साह भङ्ग हुन पाएन ॥३९॥ हे महाराज ! यसरी दिउँसो युद्ध गर्दथे र रातमा मित्रभावले बस्तावस्तै सत्ताइस दिन व्यतीत भए ॥ ४० ॥ अनि एक दिन भीमसेन आफ्ना मामाका पुत्र भगवान् कृष्णसित भन्दछन्--'हे कृष्ण ! म मगधराजलाई युद्धमा जित्न असमर्थ छु* ॥ ४१ ॥ श्रीकृष्ण भगवान् जरासन्धको जन्म र मरण दुवैको रहस्य जान्दथे । जसरी जरा राक्षसीले उसलाई जीवन-दान दिएकी थिई, त्यो पनि उनलाई थाहा थियो । अतः कुन्ती-तनय भीमसेनलाई आफ्नू तेजले उत्साहित पार्दै जरासन्ध वधको उपाय विचार्न लागे ॥४२॥ मोक्षिपल्ट अमोघ दर्शन श्रीकृष्णले युद्धको बेलामा भीमसेनलाई रूखको यौटा शाखा चिरेर देखाई संकेतले उसलाई मार्ने उपाय बताउनु भयो ॥४३॥ श्रेष्ठ प्रहारकर्ता एवं

निर्घातवज्रपरुषस्तलताडनोत्थः ॥ ३८ ॥ पयोरेवं प्रहरतोः समशिक्षाबलौजसोः ॥ निर्विशेषमभूद्युद्धमक्षीणजवयोर्नृप ॥ ३९ ॥ एवं तयोर्महाराज युध्यतोः सप्तविंशतिः ॥ दिनानि निरगंस्तत्र सुहृद्वन्निशि तिष्ठतोः ॥ ४१ ॥ एकदा मातुलेयं वै प्राह राजन्वृकोदरः ॥ न शक्तोऽहं जरासन्धं निर्जेतुं युधि माधव ॥ ४१ ॥ शत्रोर्जन्ममृती विद्वाञ्जीवितं च जराकृतम् ॥ पार्थमाप्याययन्स्वेन तेजसाऽचिन्तयद्धरिः ॥ ४२ ॥ सञ्चिन्त्यारिवधोपायं भीमस्यामोघदर्शनः ॥ दर्शयामास विटपं पाटयन्निव संज्ञया ॥ ४३ ॥ तद्विज्ञाय महासत्त्वो भीमः प्रहरतां वरः ॥ गृहीत्वा पादयोः शत्रुं पातयामास भूतले ॥४४॥ एवं पादं पदाक्रम्य दोर्भ्यामन्यं प्रगृह्य सः ॥ गुदतःपाटयामास शाखामिव महागजः ॥४५॥ एकपादोरुवृषणकटिपृष्ठस्तनांसके ॥ एकबाह्वक्षिभ्रूकर्णे शकले ददृशुः प्रजाः ॥ ४६ ॥ हाहाकारो महानासीन्निहते मगधेश्वरे ॥ पूजयामासतुर्भीमं परिरभ्य जयाच्युतौ ॥ ४७ ॥ सहदेवं तत्तनयं भगवान्भूतभावनः ॥ अभ्यषिञ्चदमेयात्मा मगधानां पतिं प्रभुः ॥ मोचयामास राजन्यान्संरुद्धा मागधेन ये ॥ ४८ ॥ इति श्रीमद्भागवते

महापराक्रमी भीमले कृष्ण भगवान्‌को संकेतले उसलाई मार्ने काइदा बुझे र उनले शत्रुको खुट्टा समातेर भूमिमा पच्छारिदिए ॥ ४४ ॥ अनि उसको यौटा खुट्टा आफ्नू बलियो खुट्टाले थिचेर अर्को खुट्टा भीमले दुवै हातले समाते र जसरी कुनै ठूलो गजराज कुनै वृक्षको हाँगा भाँच्दछ, उसै गरी गुदातिरबाट चीरेर उसको दुइ टुक्रा पारिदिए ॥ ४५ ॥ त्यस बेला प्रजाले देखे--उसको शरीरको चरण, पिंडा, अण्डकोश, स्तन, काँध, बाहु नेत्र र कानयुक्त देहको दुइ खण्ड भयो ॥ ४६ ॥ जरासन्ध मारिएपछि त्यहाँ ठूलो हाहाकार मच्चियो । अनि अर्जुन र कृष्णले भीमसेनको आलिङ्गन गरेर उनको सत्कार गरे ॥ ४७ ॥ अनि ती अप्रमेयात्मा र भूतभावन कृष्णले जरासन्धको पुत्र सहदेवलाई मगधदेशको राज-

---

* उदाहरण ( दृष्टान्त दिए )—यौटा पहलवान कुनै ठूलो मानिसले पालेको थियो । त्यसैले बसी-बसी दाना-पानी खान्थ्यो । त्योसित कुनै पनि काम गराइन्नथ्यो । यसो स्फूर्ति आउनाले त्यो निकै यता उता उफ्रन र दगुर्न गर्दथ्यो । एक दिन त्यो निकै फुर्ति देखाई राजको ठटापर बोल्यो — 'मेरी आमा रेस ( घुड्दौड ) की घोडी थिई । म पनि त आफ्नी आमाको छोरो हुँ, अनि किन त्यस्तै नहोऊँ !' तर अर्को दिन अलिकति दगुर्दा नै लस्त भयो । बर्बो थकाई लाग्यो । त्यसैले एक पाइला सार्न पनि कठिन भयो । अनि त्यसको मनमा तर्क आयो—'मेरी आमा घुडदौडकी घोडी भएर के भयो ! बाबु त यौटा साधारण गधा नै थियो ।' तात्पर्य के भने—प्रत्येक कुराको श्रेष्ठ र दुष्पार दुइ हुन्छन् । दुवै थरिलाई राम्ररी नबुझीकन जो एकातिर मात्र लम्कन्छन्, ती बाठोमा गनिदैनन् ।

सिंहासनमा आसीन गरेर जरासन्धले थुनेका राजाहरूलाई कारागारबाट मुक्त गरिदिए ॥४८॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपाली भाषाटीकायां द्विसप्ततितमोऽध्यायः ॥ ७२॥

( ह्यालखानबाट मुक्त राजाहरूको बिदाई र भगवान् इन्द्रप्रस्थ फर्कनु ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! जरासन्धद्वारा संग्राममा सहजै पराजित बीस हजार आठ सय राजाहरू जब मैलो र फाटेका लुगा लगाई, भोकले दुर्बल, मलीन अनुहार र बन्धनको कष्टले कृशित गिरिव्रज नामको दुर्ग बाहिर निस्के तब तिनले भगवान् कृष्णलाई सामुन्ने उभिएका देखे । ती मेघ झैं श्यामवर्णका थिए र रेशमी पीताम्बर धारण गरेका थिए ॥ १-२ ॥ उनको श्रीवत्सचिह्न, चार बाहु, कमल कोश झैं अरुण नयन र मनोहर तथा प्रसन्न बदरी मुखारविन्द थियो र कानमा मकराकृति कुण्डल झलमल गर्दै थियो ॥ ३ ॥ तो एक हातमा कमल लिएका थिए । शङ्ख, गदा र चक्रादि आयुध उनका अन्य बाहुमा थिए । ती किरीट, हार, कटक, कन्धनी र केयूरादिले विभूषित थिए ॥४॥ ती घाँटीमा कौस्तुभमणि पहिरेका र वनमालाले आवेष्टित थिए । त्यस्ता श्री हरिलाई ती राजाहरूले नेत्रद्वारा पिउने जिह्वाले चाट्ने,

महापुराणे दशमस्कन्धे उत्तरार्धे जरासन्धवधो नाम द्विसप्ततितमोऽध्यायः ॥ ७२ ॥

श्रीशुक उवाच ॥ अयुते द्वे शतान्यष्टौ लीलया युधि निर्जिताः ॥ ते निर्गता गिरिद्रोण्यां मलिना मलवाससः ॥१॥ क्षुत्क्षामाः शुष्कवदनाः संरोधपरिकर्शिताः ॥ ददृशुस्ते घनश्यामं पीतकौशेयवाससम् ॥२॥ श्रीवत्साङ्कं चतुर्बाहुं पद्मगर्भारुणेक्षणम् ॥ चारुप्रसन्नवदनं स्फुरन्मकरकुण्डलम् ॥३॥ पद्महस्तं गदाशङ्खरथाङ्गैरुपलक्षितम् ॥ किरीटहारकटककटिसूत्राङ्गदाचितम् ॥ ४ ॥ भ्राजद्वरमणिग्रीवं निवीतं वनमालया ॥ पिबन्त इव चक्षुर्भ्यां लिहन्त इव जिह्वया ॥ ५ ॥ जिघ्रन्त इव नासाभ्यां रम्भन्त इव बाहुभिः ॥ प्रणेमुर्हतपाप्मानो मूर्धभिः पादयोर्हरेः ॥६॥ कृष्णसंदर्शनाह्लादध्वस्तसंरोधनक्लमाः ॥ प्रशशंसुर्हृषीकेशं गीर्भिः प्राञ्जलयो नृपाः ॥७॥ राजान ऊचुः ॥ नमस्ते देवदेवेश प्रपन्नार्तिहराव्यय ॥ प्रपन्नान्पाहि नः कृष्ण निर्विण्णान्घोरसंसृतेः ॥८॥ नैनं नाथान्वसूयामो मागधं मधुसूदन ॥ अनुग्रहो यद्भवतो राज्ञां राज्यच्युतिर्विभो ॥९॥ राज्यैश्वर्यमदोन्नद्धो न श्रेयो विन्दते नृपः ॥ त्वन्मायामोहितोऽनित्या मन्यते सम्पदोऽचलाः ॥१०॥ मृगतृष्णां यथा बाला मन्यन्त उदकाशयम् ॥ एवं वैकारिकीं मायामयुक्ता वस्तु चक्षते ॥११॥ वयं पुरा श्रीमदनष्टदृष्टयो जिगीषयास्या इतरेतरस्पृधः ॥ घ्नन्तः प्रजाः स्वा अतिनिर्घृणाः प्रभो मृत्युं पुरस्त्वाविगणय्य दुर्मदाः ॥१२॥ त एव कृष्णाद्य गभीररंहसा

नाकले सुँघने र बाहुले आलिङ्गन गरे झस्तै श्रीकृष्णका युगल चरणमा शिर राखेर प्रणाम गरे ॥ ५-६ ॥ कृष्ण दर्शन प्राप्तिको प्रसन्नताले उनको थुनामा बस्दाको सबै कष्ट नष्ट भएको थियो, ती राजाहरू हात जोरेर विनम्र वाणीमा श्रीहृषीकेशको यस प्रकार स्तुति गर्नलागे ॥७॥ राजाहरू भन्दछन्—हे शरणागत भयहारी र सर्वेश्वरो देवेश्वर ! हजुरलाई प्रणाम छ । हे कृष्ण ! हामी यो घोर संसारबाट उदासीन भएर हजुरको शरणमा आएका छौं, हाम्रो रक्षा गर्नुहवस ॥८॥ हे नाथ ! हे मधुसूदन ! हामी जरासन्धलाई दोष मान्दैनौं किनकि त्यसद्वारा जो हामीहरूले राज्यभ्रष्ट हुनुपऱ्यो, त्यो पनि हजुरको अनुग्रह नै थियो ॥९॥ राज्य र ऐश्वर्यका मदले उन्मत्त राजाको कहिल्यै कल्याण हुन सक्दैन । [illegible] रहनाले गर्दा अनित्य र चञ्चल धन-सम्पत्तिलाई नै नित्य र अचल मान्दछन् ॥१०॥ जस्तै मूढजन मृगतृष्णालाई जलाशय मान्दछन् [illegible]

सत्य वस्तु मान्दछन् ॥११॥ हे प्रभो ! पहिले हामी लक्ष्मीको मदमा अन्धा भएर यौटा अर्कोसित ईर्ष्या गरेर शत्रुलाई जित्ने इच्छाले निरन्तर सम्मुख रहने मृत्युरूपी हजुरलाई पनि मदान्ध भएर केही नगनी निर्दयतापूर्वक आफ्नै प्रजाको नाश गर्दथ्यौं ॥१२॥ हे कृष्ण ! उनै हामी यस बखत हजुरको स्वरूपभूत तथा अनन्तवीर्य कालको गम्भीर गतिले श्रीहीन हुनाले गर्दा हजुरको कृपाले गर्वरहित भएर हजुरका चरणको स्मरण गर्दछौं ॥१३॥ हे विभो ! निरन्तर क्षीण हुने रोगादिको क्रीडा भूमिस्वरूप शरीरले सेवन गरिने योग्य मृग-तृष्णा झैं मिथ्या राज्य तथा मरेपछि पाइने र कानलाई मनपर्ने स्वर्गादि कर्मफलको पनि अब हामीलाई इच्छा छैन ॥ १४ ॥ अतः हे प्रभो ! अब हजुर त्यही उपाय आज्ञा हवस् कि जसले यस संसारका विविध योनिहरूमा भ्रमण गर्दै पनि हामी हजुरका चरण कमलको सम्झना नबिसौं ॥१५॥ वासुदेव, हरि, परमात्मा, शरणागतका क्लेश नष्ट पार्ने गोविन्द, भगवान कृष्णलाई अनेक प्रणाम छ ॥१६॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! बन्धन-मुक्त ती राजाहरूद्वारा यस प्रकार स्तूयमान भएर शरणागत वत्सल तथा करुणामय भगवानले

दुरन्तवीर्येण विचालिताः श्रियः ॥ कालेन तन्वा भवतोऽनुकम्पया विनष्टदर्पाश्चरणौ स्मराम ते ॥१३॥ अथो न राज्यं मृगतृष्णिरूपितं देहेन शश्वत्पतता रुजां भुवा ॥ उपासितव्यं स्पृहयामहे विभो क्रियाफलं प्रेत्य च कर्णरोचनम् ॥ १४ ॥ तं नः समादिशोपायं येन ते चरणाब्जयोः ॥ स्मृतिर्यथा न विरमेदपि संसरतामिह ॥ १५ ॥ कृष्णाय वासुदेवाय हरये परमात्मने ॥ प्रणतक्लेशनाशाय गोविन्दाय नमो नमः ॥ १६ ॥ श्रीशुक उवाच ॥ संस्तूयमानो भगवान्राजभिर्मुक्तबन्धनैः ॥ तानाह करुणस्तात शरण्यः श्लक्ष्णया गिरा ॥ १७ ॥ श्रीभगवानुवाच ॥ अद्यप्रभृति वो भूपा मय्यात्मन्यखिलेश्वरे ॥ सुदृढा जायते भक्तिर्बाढमाशंसितं तथा ॥ १८ ॥ दिष्ट्या व्यवसितं भूपा भवन्त ऋतभाषिणः ॥ श्रियैश्वर्यमदोन्नाहं पश्य उन्मादकं नृणाम् ॥ १९ ॥ हैहयो नहुषो वेनो रावणो नरकोऽपरे ॥ श्रीमदाद्भ्रंशिताः स्थानाद्देवदैत्यनरेश्वराः ॥ २० ॥ भवन्त एतद्विज्ञाय देहाद्युत्पाद्यमन्तवत् ॥ मां यजन्तोऽध्वरैर्युक्ताः प्रजा धर्मेण रक्षथ ॥ २१ ॥ सन्तन्वन्तः प्रजातन्तून्सुखं दुःखं भवाभवौ ॥ प्राप्तं प्राप्तं च सेवन्तो मच्चित्ता विचरिष्यथ ॥ २२ ॥ उदासीनाश्च देहादावात्मारामा धृतव्रताः ॥ मय्यावेश्य मनः सम्यङ् मामन्ते ब्रह्म यास्यथ ॥ २३ ॥ श्रीशुक

उनलाई मधुरवाणीमा आज्ञा भयो॥१७॥भगवान् भन्नुहुन्छ—हे राजा हो ! तिमीहरूले जति भन्यौ, त्यो उचित हो । अबदेखि सबैको आत्मरूपी म सर्वेश्वरमा तिम्रो भक्ति हुनेछ ॥१८॥ हे राजा हो ! तिमीहरूले सत्य भन्यौ । श्री र ऐश्वर्यमदले हुने उच्छृङ्खलतालाई म मनुष्यलाई मतवाला तुल्याइदिने रक्सी मान्दछु ॥१९॥ हेर न, ऐश्वर्यमदले गर्दा नै हैहयवंशी सहस्रार्जुन, नहुष, वेन, रावण र नरकासुर आदि अनेक दैत्य, देवता तथा राजा आफ्नू स्थानबाट भ्रष्ट भइसकेका छन् ॥२०॥ अतः तिमीहरू उत्पन्नधर्मा देहादिलाई नाशवान् ठानेर सावधानीपूर्वक यज्ञादिद्वारा मेरो यजन गर्दै धर्मानुसार प्रजाको पालन गर ॥ २१ ॥ अब तिमीहरू सन्तान वृद्धि गर्दै र प्रारब्धानुसार प्राप्त हुने जन्म-मृत्यु, सुख दुःख र लाभालाभ भोग गर्दै र ममा चित्त लगाएर कालयापन गर ॥२२॥ देहादिबाट उदासीन, आत्माराम तथा नाना प्रकारका व्रत पालन गर्ने बन । चित्तलाई राम्रो प्रकारमा ममा नै लगाएर अन्त्यमा तिमीहरू म ब्रह्ममा नै प्राप्त हुनेछौ ॥२३॥ शुकदेवजी भन्नुहुन्छ—जगत्पति भगवान् कृष्णले राजाहरूलाई यस्तो आज्ञा दिएर उनलाई स्नानादि गराउन स्त्री र

पुरुष-सेवक खटाउनु भयो ॥२४॥ हे भारत ! जरासन्धको छोरो सहदेवद्वारा तिनलाई राजोचित वस्त्र, आभूषण, माला र चन्दनादि दिन लगाई सम्मानित तुल्याउनुभयो ॥२५॥ यसरी राम्ररी स्नान गरेर वस्त्राभूषणले अलंकृत ती राजाहरूलाई उत्तम अन्न खान दिई ताम्बूल आदि विविध प्रकारका राजोचित भोग समर्पण गराए ॥२६॥ श्रीकृष्णचन्द्रद्वारा कारागारबाट मुक्त पारिएका तथा सम्मानित ती नृपतिगण स्वच्छ कुण्डलका कान्तिले यस प्रकार शोभित भए, जसरी वर्षा ऋतुपछि तारागण शोभित हुन्छन् ॥२७॥ त्यसपछि उत्तम घोडा जोतिएका तथा मणि र सुवर्ण जडित रथमाथि बसालेर श्रीकृष्णले मधुरवाणीले प्रसन्न पार्दै आफाफ्नु देश पठाइदिए ॥२८॥ महात्मा कृष्णचन्द्रद्वारा क्लेशमुक्त भएर ती सबै राजाहरू ती श्रीकृष्ण र उनका लीलाहरूको ध्यान गर्दै आफाफ्नो देश हिंडे ॥२९॥ उहाँ तिनले आफ्ना मन्त्री, सेनापति आदिप्रति महापुरुष भगवान् कृष्णको जरासन्ध-वध आदि अद्भुत कार्य

उवाच ॥ इत्यादिश्य नृपान्कृष्णो भगवान्भुवनेश्वरः ॥ तेषां न्ययुङ्क्त पुरुषान्स्त्रियो मज्जनकर्मणि ॥ २४ ॥ सपर्यां कारयामास सहदेवेन भारत ॥ नरदेवोचितैर्वस्त्रैर्भूषणैः स्रग्विलेपनैः ॥ २५ ॥ भोजयित्वा वरान्नेन सुस्नातान्समलंकृतान् ॥ भोगैश्च विविधैर्युक्तांस्ताम्बूलाद्यैर्नृपोचितैः ॥ २६ ॥ ते पूजिता मुकुन्देन राजानो मृष्टकुण्डलाः ॥ विरेजुर्मोचिताः क्लेशात्प्रावृडन्ते यथा ग्रहाः ॥ २७ ॥ रथान्सदश्वानारोप्य मणिकाञ्चनभूषितान् ॥ प्रीणय्य सूनृतैर्वाक्यैः स्वदेशान्प्रत्ययापयत् ॥ २८ ॥ त एवं मोचिताः कृच्छ्रात्कृष्णेन सुमहात्मना ॥ ययुस्तमेव ध्यायन्तः कृतानि च जगत्पतेः ॥ २९ ॥ जगदुः प्रकृतिभ्यस्ते महापुरुषचेष्टितम् ॥ यथान्वशासद्भगवांस्तथा चक्रुरतन्द्रिताः ॥ ३० ॥ जरासन्धं घातयित्वा भीमसेनेन केशवः ॥ पार्थाभ्यां संयुतः प्रायात्सहदेवेन पूजितः ॥ ३१ ॥ गत्वा ते खाण्डवप्रस्थं शङ्खान्दध्मुर्जितारयः ॥ हर्षयन्तः स्वसुहृदो दुर्हृदां चासुखावहाः ॥३२॥ तच्छ्रुत्वा प्रीतमनस इन्द्रप्रस्थनिवासिनः ॥ मेनिरे मागधं शांतं राजा चाप्तमनोरथः ॥ ३३ ॥ अभिवन्द्याथ राजानं भीमार्जुनजनार्दनाः ॥ सर्वमाश्रावयाञ्चक्रुरात्मना यदनुष्ठितम् ॥ ३४ ॥ निशम्य धर्मराजस्तत्केशवेनानुकम्पितम् ॥ आनन्दाश्रुकलां मुञ्चन्प्रेम्णा नोवाच किञ्चन ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे कृष्णाद्यागमने त्रिसप्ततितमोऽध्यायः ॥ ७३ ॥

श्रीशुक उवाच ॥ एवं युधिष्ठिरो राजा जरासन्धवधं विभोः ॥ कृष्णस्य चानुभावं तं श्रुत्वा प्रीतस्तमब्रवीत् ॥ १ ॥ युधिष्ठिर उवाच ॥ ये स्युस्त्रै-

वर्णन गरेर सुनाए र भगवान्ले तिनलाई जस्तो गर्नु भनेर आज्ञा भएको थियो, त्यसै गरी सावधान रहेर सबै कार्य गर्नलागे ॥३०॥ यता भीमसेनद्वारा जरासन्ध-वध गराएर कृष्ण, भीम, तथा विजय सहित सहदेवद्वारा सम्मानित भएर इन्द्रप्रस्थ फर्किए ॥३१॥ शत्रुमा विजय प्राप्त गरेका ती वीरहरूले इन्द्रप्रस्थ पुगेर सुहृद्हरूलाई आनन्दित पार्दै द्वेषी जनलाई थर्काउँदै आफ्नू-आफ्नू शंख बजाए ॥३२॥ त्यो शङ्खध्वनि सुनेर इन्द्रप्रस्थनिवासी प्रजा प्रसन्न भएर उनले बुझे–जरासन्ध मारियो र महाराज युधिष्ठिरको दिग्विजय स्वरूप मनोरथ पूर्ण भयो ॥३३॥ अनि भीम, अर्जुन तथा भगवान् कृष्णले धर्मराज युधिष्ठिरको वन्दना गरेर उनलाई आफूले गरेका कार्य वर्णन गरेर सुनाए ॥३४॥ भगवान् कृष्णको त्यो अनुग्रहपूर्ण कार्यको वृत्तान्त सुनेर धर्मराजका आँखामा आनन्दाश्रु उम्लियो, ती केही बोल्नसकेनन् ॥३५॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपालीभाषाटीकायां त्रिसप्ततितमोऽध्यायः॥७३॥

( धर्मराज युधिष्ठिरको राजसूय यज्ञमा भगवान कृष्णको अग्रपूजा र शिशुपाल-वध ) श्रीशुकदेव भन्दछन्—हे राजन् ! जरासन्धको वध र भगवान् कृष्णको प्रभाव सुनेर महाराज युधिष्ठिरले प्रसन्नतापूर्वक उनीसित भने ॥१॥ युधिष्ठिर भन्दछन्—हे कृष्ण ! तिमी त्रिलोकका गुरु र सम्पूर्ण लोकका महान् ईश्वरस्वरूप ब्रह्मादिक देवता पनि जसको दुर्लभ आज्ञा आफ्नू शिरमा धारण गर्दछन् । हे भूमन् ! उही कमलनेत्र हजुर, आफूलाई समर्थ ठान्ने हामीहरूको आज्ञा पालन गर्नुहुन्छ । यो सबै हजुरको लीला नै हो ॥ २-३ ॥ जस्तै सूर्यको तेज उदय हुँदा र अस्ताउँदा बढ्दै-घट्दै रहन्छ, त्यस्ता अद्वितीय एक ब्रह्म परमात्मारूपी हजुरको तेज कर्म अथवा नगर्नाले घट्दै-बढ्दै रहन्न ॥ ४ ॥ हे अजित ! हे माधव ! हजुरका भक्तहरूमा पशुहरू झैं आफ्नू शरीर र पुत्रादिमा 'म र मेरो' भन्ने भावना र अरूमा 'त र तेरो' भन्ने भावनाको सविकार भेदबुद्धि रहन सक्तैन ॥ ५ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! यति महाराज युधिष्ठिरले भगवान् कृष्णको अनुमति लिएर यज्ञको निम्ति अनुकूल समय आएपछि यज्ञ क्रियामा कुशल वेदवादी ब्राह्मणहरूको ऋत्विक् आदिको रूपमा

लोक्यगुरवः सर्वे लोकमहेश्वराः ॥ वहन्ति दुर्लभंलब्ध्वा शिरसैवानुशासनम् ॥२॥ स भवानरविन्दाक्षो दीनानामीशमानिनाम् ॥ धत्तेऽनुशासनं भूमंस्तदत्यन्तविडम्बनम् ॥३॥ न ह्येकस्याद्वितीयस्य ब्रह्मणः परमात्मनः ॥ कर्मभिर्वर्धते तेजो ह्रसते च यथा रवेः ॥ ४ ॥ न वै तेऽजित भक्तानां ममाहमिति माधव ॥ त्वं तवेति च नाना धीः पशूनामिव वैकृता ॥५॥ श्रीशुक उवाच ॥ इत्युक्त्वा यज्ञिये काले वव्रेयुक्तान्स ऋत्विजः ॥ कृष्णानुमोदितः पार्थो ब्राह्मणान्ब्रह्मवादिनः ॥ ६ ॥ द्वैपायनो भरद्वाजः सुमन्तुर्गौतमोऽसितः ॥ वसिष्ठश्च्यवनः कण्वो मैत्रेयः कवषस्त्रितः ॥७॥ विश्वामित्रो वामदेव सुमतिर्जैमिनिः क्रतुः ॥ पैलः पराशरो गर्गो वैशम्पायन एव च ॥ ८ ॥ अथर्वा कश्यपो धौम्यो रामो भार्गव आसुरिः ॥ वीतिहोत्रो मधुच्छन्दा वीरसेनोऽकृतव्रण ॥ ९ ॥ उपहूतास्तथा चान्ये द्रोणभीष्मकृपादयः ॥ धृतराष्ट्रः सहसुतो विदुरश्च महामतिः ॥ १० ॥ ब्राह्मणाः क्षत्रिया वैश्याः शूद्रा यज्ञदिदृक्षवः तत्रेयुः सर्वराजानो राज्ञां प्रकृतयो नृप ॥ ११ ॥ ततस्ते देवयजनं ब्राह्मणाः स्वर्णलाङ्गलैः ॥ कृष्ट्वा तत्र यथाम्नायं दीक्षयाञ्चक्रिरे नृपम् ॥ १२ ॥ हैमाः किलोपकरणा वरुणस्य यथा पुरा ॥ इन्द्रादयो लोकपाला विरिञ्चिभवसंयुताः ॥ १३ ॥ सगणाः सिद्धगन्धर्वा विद्या

वरण गरे ॥ ६ ॥ तिनमा द्वैपायन, भरद्वाज सुमन्त, गौतम, असित, वसिष्ठ, च्यवन, कण्व, मैत्रेय, कवष, त्रित, विश्वामित्र, वामदेव, सुमति, जैमिनी, क्रतु, पैल, पराशर, गर्ग वैशम्पायन, अथर्व, कश्यप, धौम्य, राम, भार्गव, आसुरी, वीतिहोत्र, मधुच्छन्दा, वीरसेन तथा अकृतव्रण थिए ॥७।९॥ यी बाहेक द्रोण, भीष्म र कृपाचार्य आदि तथा पुत्रसमेत धृतराष्ट्र, महामतिमान् विदुर र अरु पनि ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र चारै वर्णका मानिस निमन्त्रित थिए । हे नृप ! ती सबै र अन्यान्य राजा तिनका मन्त्रीवर्ग पनि यज्ञ हेर्ने इच्छाले त्यहाँ आएर उपस्थित भएका थिए ॥ १०-११ ॥ वरण भइसकेपछि ऋत्विज ब्राह्मणहरूले त्यो यज्ञभूमिलाई स्वर्ण निर्मित हलोले जोत्न लगाई राजा युधिष्ठिरलाई विधिपूर्वक यज्ञको दीक्षा दिए ॥१२॥ पूर्वकालीन वरुणयज्ञ झैं त्यस यज्ञमा पनि सबै पात्र सुनका थिए । पाण्डुनन्दन महाराज युधिष्ठिरको त्यो राजसूय यज्ञमा ब्रह्मा, रुद्र, इन्द्रादि लोकपाल आफ्ना गणका साथ सिद्ध, गन्धर्व, विद्याधर, नाग, मुनि, यक्ष, राक्षस, पशु, पक्षी, किंनर, अप्सरा तथा सबै राजा र रानीहरू–पो सबै निमन्त्रित भएर आएर र उनले कुनै प्रकारका

आश्चर्य नगरीकन कृष्णभक्त युधिष्ठिरको यज्ञानुष्ठान उचित माने । अनि देवगण झैं तेज भएका याजकहरूले महाराज युधिष्ठिरद्वारा त्यस्तै विधिवत् यजन गराए, जस्तो पूर्वकालमा देवगणले वरुणद्वारा गराएका थिए ॥ १३–१६ ॥ सोमवल्लीबाट रस निकाल्ने दिन पृथ्वीपाल महाराज युधिष्ठिरले महाभाग याजकगण र सभापतिको सावधानीपूर्वक पूजा गरे ॥ १७ ॥ जब सबै सभासद्गण अग्रपूजाको योग्य व्यक्तिको छनोट गर्ने बेलामा एकमत नहुनाले कुनै निर्णय गर्न सकेनन्, तब सहदेवले भन्नुभयो—॥ १८ ॥ हे सभासद हो ! यस श्रेष्ठ पदका योग्य यदुनन्दन कृष्ण नै छन्, किनकि यिनै सबै देवता र देश, काल धनादिका मूर्त रूप छन् ॥ १९ ॥ समस्त विश्व यिनैको रूप छ र सबै यज्ञ कृष्णरूप नै छन् । अग्नि, आहुति, मन्त्र, सांख्य पूजा-पाठ र योगसाधन पनि इनकै निमित्त गरिन्छन् ॥ २० ॥ यिनै एक र अद्वितीय ब्रह्म हुन् । सम्पूर्ण जगत् इनैको स्वरूप हो । हे सभ्यगण !

धरमहोरगाः ॥ मुनयो यक्षरक्षांसि खगकिन्नरचारणाः ॥ १४ ॥ राजानश्च समाहूता राजपत्न्यश्च सर्वतः ॥ राजसूयं समीयुः स्म राज्ञः पाण्डुसुतस्य वै ॥ १५ ॥ मेनिरे कृष्णभक्तस्य सूपपन्नमविस्मिताः ॥ अयाजयन्महाराजं याजका देववर्चसः ॥ राजसूयेन विधिवत्प्राचेतसमिवामराः ॥१६॥ सुतेऽहन्यवनीपालो याजकान्सदसस्पतीन् ॥ अपूजयन्महाभागान्यथावत्सुसमाहितः ॥१७॥ सदस्याग्र्यार्हणार्हं वै विमृशन्तः सभासदः ॥ नाध्यगच्छन्ननैकान्त्यात्सहदेवस्तदाऽब्रवीत् ॥१८॥ अर्हति ह्यच्युतः श्रैष्ठ्यं भगवान्सात्वतां पतिः ॥ एष वै देवताः सर्वा देशकालधनादयः ॥१९॥ यदात्मकमिदं विश्वं क्रतवश्च यदात्मकाः ॥ अग्निराहुतयो मन्त्राः सांख्यं योगश्च यत्परः ॥ २० ॥ एक एवाद्वितीयोऽसावैतदात्म्यमिदं जगत् ॥ अनात्मनात्माश्रयः सभ्याः सृजत्यवति हन्त्यजः ॥२१॥ विविधानीह कर्माणि जनयन्यदपेक्षया ॥ ईहते यदयं सर्वः श्रेयो धर्मादिलक्षणम् ॥२२॥ तस्मात्कृष्णाय महते दीयतां परमार्हणम् ॥ एवं चेत्सर्वभूतानामात्मनश्चार्हणं भवेत् ॥ २३ ॥ सर्वभूतात्मभूताय कृष्णायानन्यदर्शिने ॥ देयं शान्ताय पूर्णाय दत्तस्यानन्त्यमिच्छता ॥ २४॥ इत्युक्त्वा सहदेवोऽभूत्तूष्णीं कृष्णानुभाववित् ॥ तच्छ्रुत्वा तुष्टुवुः सर्वे साधु साध्विति सत्तमाः ॥२५॥ श्रुत्वा द्विजेरितं राजा ज्ञात्वा हार्दं सभासदाम् ॥ समर्हयद्धृषीकेशं प्रीतः प्रणयविह्वलः ॥ २६ ॥ तत्पादाववनिज्यापः शिरसा लोकपावनीः ॥ सभार्यः सानुजामात्यः सकुटुम्बोऽवहन्मुदा ॥ २७ ॥ वासोभिः पीतकौशेयैर्भूषणैश्च महाधनैः ॥ अर्हयित्वाऽश्रुपूर्णाक्षो नाशकत्समवेक्षितुम्

यी अजन्मा कृष्ण नै स्वयं आफूमै यसको रचना, पालन र संहार गर्दछन् ॥ २१ ॥ किनकि सारा जगत् केवल इनकै अनुग्रहले विविध प्रकारका कर्म गर्दै धर्मादि सबै पुरुषार्थको सिद्धि प्राप्त गर्दछ ॥ २२ ॥ अतः महात्मा कृष्णको नै अग्रपूजा हुनु उचित छ । इनको पूजा भएपछि सबै प्राणीको र आफ्नू पनि पूजा गरेको हुन्छ ॥ २३ ॥ आफ्नू दानको अनन्त फल खोज्ने प्राणी सबै प्राणीहरूका अन्तरात्मा शान्त र परिपूर्ण भगवान् कृष्णकै तृप्तिका लागि यज्ञ, दान र पूजा गर, ॥ २४ ॥ कृष्ण भगवानको प्रभाव जान्ने सहदेव यति भनेर मौन भए । तिनको भनाई सुनेर श्रेष्ठ साधुजन 'उचित हो' भन्दै उनको प्रशंसा गर्नलागे ॥ २५ ॥ ब्राह्मणहरूको त्यस्तो कथन सुनेर तथा सभासदहरूको अभिप्राय जानेर महाराज युधिष्ठिरले प्रेम-विह्वल भई अति प्रेमपूर्वक कृष्णको पूजा गरे ॥ २६ ॥ अनि स्त्री, भाई, मन्त्री र कुटुम्बीहरूका साथै अत्यन्त आनन्दित भएर

उनले भगवान्‌को त्रिलोक पावन चरणोदक मस्तकमा लगाए ॥ २७ ॥ रेशमी पीताम्बर तथा बहुमूल्य आभूषणहरूले उनको पूजा गरे । त्यस बेला तिनका नेत्रमा आँसु भरिनाले ती कुनै वस्तु पनि स्पष्ट देख्न सकिरहेका थिएनन् ॥२८॥ यसरी पूजित कृष्ण भगवान्‌लाई देखेर सबै प्रजाजनले हात जोरेर 'नमः' र 'जय-जय' भन्दै उनलाई प्रणाम गरेर उनमाथि पुष्पवर्षा गरे ॥२९॥ यसरी भगवान् कृष्णका गुणहरूको वर्णन सुनेर दमघोषका छोरा शिशुपाल आफ्नू आसनबाट जुरुक्क उठेर निकै क्रोधितभावले सभामा हात उचालेर निर्भयतापूर्वक कृष्णलाई कठोर वचन सुनाउँदै बोल्नलागे–॥३०॥ काल सर्वसमर्थ छ, कालको छेउ कसैले भेट्न सक्तैनन्, यो श्रुति वचन सत्य गरियो । हेर न, यस सभामा

॥ २८ ॥ इत्थं सभाजितं वीक्ष्य सर्वे प्राञ्जलयो जनाः ॥ नमो जयेति नेमुस्तं निपेतुः पुष्पवृष्टयः ॥२९॥ इत्थं निशम्य दमघोषसुतः स्वपीठादुत्थाय कृष्णगुणवर्णनजातमन्युः ॥ उत्क्षिप्य बाहुमिदमाह सदस्यमर्षी संश्रावयन्भगवते परुषाण्यभीतः ॥ ३० ॥ ईशो दुरत्ययः काल इति सत्यवती श्रुतिः ॥ वृद्धानामपि यद्बुद्धिर्बालवाक्यैर्विभिद्यते ॥ ३१ ॥ यूयं पात्रविदां श्रेष्ठा मा मन्ध्वं बालभाषितम् ॥ सदसस्पतयः सर्वे कृष्णो यत्सम्मतोऽर्हणे ॥ ३२ ॥ तपोविद्याव्रतधराञ्ज्ञानविध्वस्तकल्मषान् ॥ परमर्षीन्ब्रह्मनिष्ठाँल्लोकपालैश्च पूजितान् ॥ ३३ ॥ सदस्पतीनतिक्रम्य गोपालः कुलपांसनः ॥ यथा काकः पुरोडाशं सपर्यां कथमर्हति ॥ ३४ ॥ वर्णाश्रमकुलापेतः सर्वधर्मबहिष्कृतः ॥ स्वैरवर्ती गुणैर्हीनः सपर्यां कथमर्हति ॥ ३५ ॥ ययातिनैषां हि कुलं शप्तं सद्भिर्बहिष्कृतम् ॥ वृथा पानरतं शश्वत्सपर्यां कथमर्हति ॥ ३६ ॥ ब्रह्मर्षिसेवितान्देशान्हित्वैतेऽब्रह्मवर्चसम् ॥

अनेक व्यक्ति अवस्था र ज्ञानमा ठूला छन् । तिनको बुद्धि पनि *भेडियाधसानमा पारेर बालकका कुराले भ्रान्त भएको छ ॥३१॥ हे सभापति हो ! तपाईंहरू सत्पात्रका ज्ञाताहरूमा श्रेष्ठ हुनुहुन्छ । यसै निम्ति 'कृष्ण नै अग्रपूजाका योग्य छन्' बालकको यस कथनलाई उचित नठान्नुहवस् ॥३२॥ किनकि यो कुलकलङ्क ग्वाला ठूला-ठूला तपस्वी, विद्वान्, ज्ञानाग्निले नष्ट कल्मष, ब्रह्मनिष्ठ र लोकपालगणले पूजित यज्ञका सभापति र महर्षीहरू छँदाछँदै यो कसरी पूजाको पात्र हुन सक्छ ? काग पनि कहिले यज्ञको पुरोडासको अधिकारी हुन्छ ? ॥३३॥३४॥ अनि वर्ण, आश्रम र कुलबाट पृथक्, सबै धर्मबाट बहिष्कृत, स्वेच्छाचारी र गुणहीन कृष्ण कसरी अग्रपूजाको योग्य हुन सक्छ ? ॥३५॥ राजा ययातिले यी यादवका

---

* दृष्टान्त ( भेडियाधसान )—एउटा साधुसित केही तामाका भाँडा थिए । जब साधु तीर्थाटनमा जान लाग्यो तब उसले एउटा जङ्गलमा आफ्ना भाँडा गाडेर चिन्हको निम्ति त्यहाँ एउटा माटोको थुप्रो बनाइदियो । एउटा व्यक्ति त्यो देखिरहेको थियो । उसले ठान्यो–यात्राको बेलामा जङ्गलमा माटोको थुप्रो बनाउनु शुभ होला, त्यसैले यो साधु यहाँ थुप्रो बनाउँदैछ । त्यस व्यक्तिले गाउँमा गएर यो कुरा प्रसिद्ध पारिदियो—'जो परदेश जान्छ, त्यो जङ्गलमा अमुक ठाउँमा माटोको एउटा थुप्रो बनाइदिने गरोस् । यस्तो गर्नाले तीर्थयात्राको विशेष फल पाइन्छ । भारतवर्षको भेडियाधसान प्रसिद्ध छँदैछ । कसैले पनि त्यो कुरा सत्य हो कि होइन भन्ने विचार गरेन । अब जो तीर्थयात्रा जान्थ्यो, त्यही स्थानमा माटोको उस्तै थुप्रो बनाइदिन्थ्यो । त्यसको परिणाम यो भयो कि केही दिनमै त्यस स्थानमा, जहाँ साधुले थुप्रो बनाएको थियो, अनेक थुप्रा तयार भए । जब त्यो साधु तीर्थयात्राबाट फर्केर आयो तब उसले भाँडा राखेको स्थानमा अनेक उस्तै माटोका थुप्रा हेरे । साधुले कुन मेरो थुप्रो हो भन्ने जान्न सकेन । यसै निम्ति उसले आफ्नू भाँडो पाउन सकेन । अनि साधुले भन्यो–'गतानुगतिको लोको न लोकः पारमार्थिकः । पश्य लोकस्य मूर्खत्वं हारितं मे ताम्रभाजनम्' । संसारको चलन भेडियाधसान छ । परमार्थको विचार गर्ने कोही छैन । मानिसहरूको मूर्खताले मेरो तामाका भाँडा गयो !' भाइ हो ! अब पुरानो चलनमा हिड्नाले केही पनि हातलाग्दैन । अतः जतातिर समयको गति छ, तिनै पनि आफ्नू मति उतै फर्काउ । किनकि प्रतिकूल वायुमा डुङ्गा हिड्न सक्तैन ।

कुललाई श्राप दिएका छन् । त्यसैले यो कुल सत्पुरुषबाट बहिष्कृत भएर मद्यपानादि दुष्कर्ममा तत्पर रहन्छ । अनि यो अग्रपूजाको योग्य कसरी हुनसक्छ ? ।।३६।। यी चोर यादव ब्रह्मर्षिगण सेवित र ब्रह्मतेजयुक्त मथुरापुरी छाडेर समुद्रमा स्थित दुर्गको आश्रय लिएर आफ्ना प्रजालाई कष्ट दिइरहन्छन् ।।३७।। जसको सौभाग्य नष्ट भइसकेको थियो, त्यो शिशुपालले यस्तै अनेक कटु वाक्य भन्यो, तर जस्तै स्यालको शब्द सुनेर सिंह केही बोल्दैन, त्यस्तै भगवान्ले केही भनेनन् ।। ३८ ।। अनेक सभासद् भगवान्को यो दुःसह निन्दा सुनेर रोषले चेदिराज शिशुपाललाई जाति-नजाति कुरा भन्दै कान थुनेर त्यहाँबाट हिंडिदिए।।३९।। किनकि जो व्यक्ति भगवान्को अथवा भगवत्परायण भक्तको निन्दाका वचन सुनेर त्यहाँबाट पर हट्दैनन्, ती शुभ कर्मबाट भ्रष्ट भएर नीच गतिमा पुग्न जान्छन् ।।४०।। अनि सबै पाण्डव र मत्स्य, केकय र सृञ्जय देशका राजा रिसाई शिशुपाललाई मार्नका निम्ति आफ्ना-आफ्ना शस्त्रास्त्र सम्हालेर जुरुक्क उठे ।।४१।। हे भरतनन्दन ! शिशुपालले पनि त्यस बेला गाह्रारो नमानीकन भरिएको सभामा कृष्णपक्षीय राजाहरूलाई ललकार्दै, हर्दै ढाल-तरवार उचाले

समुद्रं दुर्गमाश्रित्य बाधन्ते दस्यवः प्रजाः ।। ३७ ।। एवमादीन्यभद्राणि बभाषे नष्टमङ्गलः ।। नोवाच किञ्चिद्भगवान्यथा सिंह शिवारुतम् ।। ३८ ।।
भगवन्निन्दनं श्रुत्वा दुःसहं तत्सभासदः ।। कर्णौ पिधाय निर्जग्मुः शपन्तश्चेदिपं रुषा ।। ३९ ।। निन्दां भगवतः शृण्वंस्तत्परस्य जनस्य वा ।। ततो
नापैति यः सोऽपि यात्यधः सुकृताच्च्युतः ।। ४० ।। ततः पाण्डुसुताः क्रुद्धा मत्स्यकेकयसृञ्जयाः ।। उदायुधाः समुत्तस्थुः शिशुपालजिघांसवः
।। ४१ ।। ततश्चैद्यस्त्वसम्भ्रान्तो जगृहे खड्गचर्मणी ।। भर्त्सयन्कृष्णपक्षीयान्राज्ञः सदसि भारत ।। ४२ ।। तावदुत्थाय भगवान्स्वान्निवार्य स्वयं
रुषा ।। शिरः क्षुरान्त चक्रेण जहारापततो रिपोः ।। ४३ ।। शब्दः कोलाहलोऽप्यासीच्छिशुपाले हते महान् ।। तस्यानुयायिनो भूपा दुद्रुवु-
र्जीवितैषिणः ।। ४४ ।। चैद्यदेहोत्थितं ज्योतिर्वासुदेवमुपाविशत् ।। पश्यतां सर्वभूतानामुल्केव भुवि खाच्च्युता ।। ४५ ।। जन्मत्रयानुगुणितवैरसंर-
ब्धया धिया ।। ध्यायंस्तन्मयतां यातो भावो हि भवकारणम् ।। ४६ ।। ऋत्विग्भ्यः ससदस्येभ्यो दक्षिणां विपुलामदात् ।। सर्वान्सम्पूज्य विधिव-
च्चक्रेऽवभृथमेकराट् ।।४७।। साधयित्वा क्रतुं राज्ञः कृष्णो योगेश्वरेश्वरः ।। उवास कतिचिन्मासान्सुहृद्भिरभियाचितः ।। ४८ ।। ततोऽनुज्ञाप्य राजा-

।।४२।। अनि भगवान् उठेर आफ्ना सुहृद्हरूलाई शान्त पार्नुभयो र आफू उदार आक्रमण गर्न तत्पर शत्रु शिशुपालको शिर छुरा झैं तेजिलो धार हुने चक्रले काटिदिए । यस प्रकार शिशुपाल मारिएपछि त्यहाँ निकै कोलाहल मच्चियो र उसका अनुयायी राजा आफ्आफ्ना प्राण जोगाई भागे ।।४३।।४४।। त्यसै बेला शिशुपालको शरीरबाट निस्केको तेज सबै प्राणीहरूले हेर्दाहेर्दै यस प्रकार भगवान्मा विलीन भयो, जस्तै आकाशबाट झरेको उल्का पृथ्वीमै विलीन हुन्छ ।।४५।। तीन जन्मसम्म बराबर वैरभाव तथा द्वेषपूर्ण बुद्धिले भगवान्को ध्यान गर्नाले त्यो प्रत्यक्ष भगवान्मा लीन भएको थियो । किनकि भाव नै ध्येयकारितादिका प्राप्तिको कारण हुन्छ ।।४६।। अनि चक्रवर्ती महाराज युधिष्ठिरले सदस्यगण तथा ऋत्विजहरूलाई प्रशस्त दक्षिणा दिएर सबैको सत्कार गरी विधिपूर्वक अवभृथस्नान गरे ।। ४७ ।। यस प्रकार महाराज युधिष्ठिरको राजसूय यज्ञ सविधि पूर्ण गराई सर्वयोगेश्वर भगवान् सुहृद्गणको आग्रहले केही महीना त्यहीं बसे । अनि पाण्डवहरूको इच्छा नभए पनि राजा युधिष्ठिरसित आज्ञा लिएर भगवान्संग गएका जति सबैलाई लिई आफ्नु

राजधानी फर्किए ॥ ४८-४९ । हे राजन् ! वैकुण्ठवासी जय र विजयको सनकादि मुनिको श्रापले जसरी बारम्बार जन्म भयो त्यो वृत्तान्त विस्तारपूर्वक मैले सुनाइदिएँ ॥५०॥ उता महाराज युधिष्ठिर राजसूय यज्ञको अवभृथ स्नान गरेर ब्राह्मणवर्ग र क्षत्रियहरूको सभामा इन्द्र समान सुशोभित भए ॥ ५१ ॥ त्यस बेला पाण्डवको बढेको सम्पत्ति देखेर जो त्यसलाई सहन सकेको थिएन, त्यो कुरुकुल पापी दुर्योधनबाहेक अरु सबै देवता, मनुष्य र प्रमथगण राजा युधिष्ठिरद्वारा सम्मानित भएर श्रीकृष्ण र राजसूय यज्ञको प्रशंसा गर्दै प्रसन्न भई आफ्नू घर फर्के ॥५२-५३॥ जो प्राणी श्रीकृष्णको शिशुपाल वध आदि कर्म र राजाहरूको मुक्ति तथा पाण्डवहरूको यज्ञानुष्ठानको वृत्तान्त कीर्तन गर्छ, त्यो सबै पापबाट मुक्त हुन्छ ॥५४॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्ध उत्तरार्धे नेपाली भाषाटीकायां चतुःसप्ततितमोऽध्यायः ॥७४॥

( राजसूयको अवभृथ स्नान-महोत्सवमा दुर्योधनको अपमान )—यति कथा सुनिसकेर राजा परीक्षितले सोधे—हे ब्रह्मन् ! अहिले मन्जुभयो अजातशत्रु युधिष्ठिरको

नमनिच्छन्तमपीश्वरः ॥ ययौ सभार्यः सामात्यः स्वपुरं देवकीसुतः ॥ ४९ ॥ वर्णितं तदुपाख्यानं मया ते बहुविस्तरम् ॥ वैकुण्ठवासिनोर्जन्म विप्रशापात्पुनः पुनः ॥५०॥ राजसूयावभृथ्येन स्नातो राजा युधिष्ठिरः ॥ ब्रह्मक्षत्रसभामध्ये शुशुभे सुरराडिव ॥ ५१ ॥ राज्ञा सभाजिताः सर्वे सुरमानवखेचराः ॥ कृष्णं क्रतुं च शंसन्तः स्वधामानि ययुर्मुदा ॥ ५२ ॥ दुर्योधनमृते पापं कलिं कुरुकुलामयम् ॥ यो न सेहे श्रियं स्फीतां दृष्ट्वा पाण्डुसुतस्य ताम् ॥ ५३ ॥ य इदं कीर्तयेद्विष्णोः कर्म चैद्यवधादिकम् ॥ राजमोक्षं वितानं च सर्वपापैः प्रमुच्यते ॥ ५४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे शिशुपालवधो नाम चतुःसप्ततितमोऽध्यायः ॥ ७४ ॥

राजोवाच ॥ अजातशत्रोस्तं दृष्ट्वा राजसूयमहोदयम् ॥ सर्वे मुमुदिरे ब्रह्मन्नृदेवा ये समागताः ॥ १ ॥ दुर्योधनं वर्जयित्वा राजानः सर्षयः सुराः॥ इति श्रुतं नो भगवंस्तत्र कारणमुच्यताम्॥२॥ ऋषिरुवाच ॥ पितामहस्य ते यज्ञे राजसूये महात्मनः ॥ बान्धवाः परिचर्यायां तस्यासन्प्रेमबन्धनाः ॥३॥ भीमो महानसाध्यक्षो धनाध्यक्षः सुयोधनः ॥ सहदेवस्तु पूजायां नकुलो द्रव्यसाधने॥४॥गुरुशुश्रूषणे जिष्णुः कृष्णः पादावनेजने ॥ परिवेषणे द्रुपदजा कर्णो दाने महामनाः ॥५॥ युयुधानो विकर्णश्च हार्दिक्यो विदुरादयः ॥ बाह्लीकपुत्रा भूर्याद्या ये च सन्तर्दनादयः ॥६॥निरूपिता महायज्ञे नानाकर्मसु

त्यो महान् यज्ञोत्सव देखेर त्यहाँ जो राजा, ऋषिगण र देवगण आएका थिए, तिनमा दुर्योधन बाहेक अरु सबै प्रसन्न भए । दुर्योधनलाई के कुरामा किन प्रसन्नता भएन ! यसको कारण के थियो ? श्री शुकदेव भन्नुहुन्छ—हे राजन ! तिम्रा पितामह महाराज युधिष्ठिरको राजसूय यज्ञमा सबै बन्धुगणले भिन्न-भिन्न सेवा-कार्य हातमा लिएका थिए । जसमा भीमसेन पाकशालाको हेर-विचार गर्दथे । दुर्योधन कोषाध्यक्ष थियो । सहदेव आउने-जानेको पूजा-सत्कार गर्दथे र नकुल सहदेव अनेक थरिका सामग्री एकत्र पार्ने काम गर्दथे ॥ १-४ ॥ धनञ्जय पूज्य महानुभावहरूका सेवामा थिए, भगवान् कृष्ण अतिथिहरूको पाउ धुन्थे, द्रौपदी खानेकुरा पस्कन्थिन् र महामना कर्ण दान दिन्थे ॥५॥ हे राजेन्द्र ! यसै गरी सात्यकि, विकर्ण, हार्दिक्य, विदुर र भूरिश्रवादि बाह्लीक पुत्र, सन्तर्दनादि राजा पनि त्यस यज्ञमा विभिन्न काममा नियुक्त भएर युधिष्ठिरको काम पूरा गर्न आफ्ना

काममा लागेका थिए ॥ ६-७ ॥ ऋत्विक्, सदस्य र बहुज्ञ पुरुषहरू तथा आफ्ना बन्धु-बान्धवका सुमधुर वचन, नाना प्रकारका सामग्री र दक्षिणादिले सत्कार पाउने तथा चेदिराज शिशुपालले शरीर त्यागेर भगवान् यदुनाथका चरणमा प्रविष्ट भइसकेपछि महाराज युधिष्ठिर गएर गङ्गाजीमा अवभृथ स्नान गरे ॥ ८ ॥ त्यो अवभृथ-स्नानोत्सवको शुभ अवसरमा मृदङ्ग, शङ्ख, पणव, ढोल, नगरा र गोमुख आदि विविध बाजा बज्न लागे ॥ ९ ॥ नर्तकीहरू आनन्दित भएर नाच्न लागे, अनेक गायक गाउन लागे, तथा उनीहरूको वेणु एवं थपरी मारेको महान शब्द आकाशमण्डलमा गुञ्जायमान भयो ॥१०॥ अनि यजमानलाई अघि लगाएर यदु, सृञ्जय, काम्बोज, कुरु, कैकय र कोशल देशका राजा सुनका हारले भूषित भएर नाना प्रकारका ध्वजा पताकाहरू बोकेको हात्ती, रथ, घोडा र राम्ररी सज्जित पैदल रथी सेनासँगै भूमण्डललाई कम्पित पार्दै नगर बाहिर निस्के ॥११-१२॥ तिनीहरूका साथै सदस्य तथा ऋत्विक् आदि द्विजगण वेदध्वनि गर्दै हिंडे र देवता, पितृगण तथा गन्धर्व पुष्पवर्षा र स्तुति गर्नलागे ॥१३॥ चन्दन, माला, आभूषण र वस्त्रादिले राम्ररी अलंकृत

ते तदा ॥ प्रवर्तन्तेस्मराजेन्द्र राज्ञः प्रियचिकीर्षवः ॥७॥ ऋत्विक्सदस्यबहुवित्सु सुमहत्तमेषु स्विष्टेषु सूनृतसमर्हणदक्षिणाभिः ॥ चैद्ये च सात्वतपतेश्चरणं प्रविष्टे चक्रुस्ततस्त्ववभृथस्नपनं द्युनद्याम् ॥८॥ मृदङ्गशङ्खपणवधुन्धुर्यानकगोमुखाः वादित्राणि विचित्राणि नेदुरावभृथोत्सवे ॥९॥ नर्तक्यो ननृतुर्हृष्टा गायका यूथशो जगुः ॥ वीणावेणुतलोन्नादस्तेषां स दिवमस्पृशत् ॥१०॥ चित्रध्वजपताकाग्रैरिभेन्द्ररथवाजिभिः ॥ स्वलंकृतैर्भटैर्भूपा निर्ययू रुक्ममालिनः ॥११॥ यदुसृञ्जयकाम्बोजकुरुकेकयकोशलाः ॥ कम्पयन्तो भुवं सैन्यैर्यजमानपुरःसराः॥१२॥ सदस्यर्त्विग्द्विजश्रेष्ठा ब्रह्मघोषेण भूयसा ॥ देवर्षिपितृगन्धर्वास्तुष्टुवुः पुष्पवर्षिणः॥१३॥ स्वलंकृता नरा नार्यो गन्धस्रग्भूषणाम्बरैः ॥ विलिम्पन्त्योऽभिषिञ्चन्त्यो विजह्रुर्विविधै रसैः ॥१४॥ तैलगोरसगन्धोदहरिद्रासान्द्रकुङ्कुमैः ॥ पुम्भिः क्षिप्ताः प्रलिम्पन्त्यो विजह्रुर्वारयोषितः ॥ १५ ॥ गुप्ता नृभिर्निरगमन्नुपलब्धुमेतद्देव्यो यथा दिवि विमानवरैर्नृदेव्यः ॥ ता मातुलेयसखिभिः परिषिच्यमानाः सव्रीडहासविकसद्वदना विरेजुः ॥ १६ ॥ ता देवरानुत सखीन्सिषिचुर्दृतीभिः क्लिन्नाम्बरा विवृतगात्रकुचोरुमध्याः ॥ औत्सुक्यमुक्तकवराच्च्यवमानमाल्याः क्षोभं दधुर्मलधियां रुचिरैर्विहारैः ॥ १७ ॥ स सम्राड्रथमारूढः सदश्वं रुक्ममालिनम् ॥ व्यरोचत

नर-नारी थरीथरीका अर्कोको सुगन्ध नाना प्रकारका रसको लेपन गर्दै र भिजाउँदै उत्सव मनाउन लागे ॥ १४ ॥ वाराङ्गना-पुरुष द्वारा तेल, गोरस, चन्दन, बेसार र बाक्लो केशरले अनुलिप्तभएर स्वयं पनि उनका अङ्गमाथिनै वस्तुहरू घस्तै क्रीडा गर्न लागे ॥ १५ ॥ त्यस बेला उक्त उत्सव हेर्नको निम्ति आकाशमा विमानमा बसेर आएका देवाङ्गनाहरू झैं राजमहिलाहरू रथ आदिमा बसेर अनेक सैनिक द्वारा सुरक्षित भएर नगरबाट बाहिर निस्के । पाण्डवका मामाका पुत्र श्रीकृष्ण, उनका मित्रद्वारा भिजाइएका राजरानीहरू लज्जापूर्ण हाँसोले प्रफुल्लवदन भएर अत्यन्त शोभामा प्राप्त भए ॥ १६ ॥ उनी भिज्नाले उनको शरीर कुच, तिघ्रा र मध्यभाग आदि अलि-अलि देखिइरहेथे, ती राजमहिलाहरू आफ्ना देवर र तिनका सखागणलाई पिचकारीले भिजाउन लागे । यतातिर उत्सुकतावश तिनका केशपाश खुकुलो भए, तिनमा लगाएको पुष्पमाला विस्तारै फुस्क्यो । यसरी आफ्ना मनोहर क्रीडादिले ती मलिनबुद्धि पुरुषका मनमा क्षोभ उत्पन्न गर्नलागे ॥१७॥ यौटा राम्रा घोडायुक्त र सुवर्णमाला विभूषित उत्तम रथमा आफ्नी पत्नी सहित बसेर महाराज युधिष्ठिर

साक्षात् यज्ञपुरुष झैं सुशोभित भइरहेका थिए ॥ १८ ॥ अनि ऋत्विग्जनले युधिष्ठिरबाट 'पत्नीसंयाज यज्ञ ! अवभृथ स्नान सम्बन्धी कर्म' गराई द्रौपदीसित गङ्गाजीमा स्नान गराए
॥ १९ ॥ त्यस बेला मनुष्यका दुन्दुभीको साथै देवगणका दुन्दुभीको पनि निनाद हुन लाग्यो । देवता, ऋषि, पितृ र मनुष्य पुष्पवर्षा गर्नलागे ॥ २० ॥ यस प्रकार अवभृत स्नान
भइसकेपछि सबै वर्ण र आश्रमका व्यक्तिले गङ्गाजीमा स्नान गरे, किनकि अवभृथ स्नान गर्नाले महापातकी पुरुष पनि पापबाट मुक्त हुन्छन् ॥२१॥ दुइटा नयाँ रेशमी वस्त्र तथा अरु
पनि नाना प्रकारका आभूषण पहिरेका महाराज युधिष्ठिरले ऋत्विक्, सदस्य र अन्य ब्राह्मणलाई विविध प्रकारका वस्त्राभूषण दिएर बारम्बार सत्कार गरे ॥ २२ ॥ भगवत्परायण
महाराज युधिष्ठिरले आफ्ना बन्धु-बान्धव, जात-भाई, राजागण र मित्र, सुहृद् तथा आएका सबैलाई सम्मान गरे ॥ २३ ॥ अनि सबै जना मणिमय कुण्डल, माला, फेटा, भोटो, ओढ्ने
तथा बहुमूल्य हार पहिरेर देवता समान तेजोमय प्रतीत हुन लागे । युगल कुण्डल र अलकावलीले तिनको मनोहर मुखारविन्द अत्यन्त राम्रो र सुशोभित थियो । ती स्त्रीहरू कमरमा

स्वपत्नीभिः क्रियाभिः क्रतुराडिव ॥ १८ ॥ पत्नीसंयाजावभृथ्यैश्चरित्वा ते तमृत्विजः ॥ आचान्तं स्नापयाञ्चक्रुर्गङ्गायां सह कृष्णया ॥ १९ ॥ देव-
दुन्दुभयो नेदुर्नरदुन्दुभिभिः समम् ॥ मुमुचुः पुष्पवर्षाणि देवर्षिपितृमानवाः ॥ २० ॥ सस्नुस्तत्र ततः सर्वे वर्णाश्रमयुता नराः ॥ महापातक्यपि यतः
सद्यो मुच्येत किल्बिषात् ॥ २१ ॥ अथ राजाऽहते क्षौमे परिधाय स्वलङ्कृतः ॥ ऋत्विक्सदस्यविप्रादीनानर्चाभरणाम्बरैः ॥ २२ ॥ बन्धुज्ञातिनृपा-
न्मित्रसुहृदोऽन्यांश्च सर्वशः ॥ अभीक्ष्णं पूजयामास नारायणपरो नृपः ॥ २३ ॥ सर्वे जनाः सुररुचो मणिकुण्डलस्रगुष्णीषकञ्चुकदुकूलमहार्घ्य-
हाराः ॥ नार्यश्च कुण्डलयुगालकवृन्दजुष्टवक्त्रश्रियः कनकमेखलया विरेजुः ॥ २४ ॥ अथर्त्विजो महाशीलाः सदस्या ब्रह्मवादिनः ॥ ब्रह्मक्षत्रिय-
विट्शूद्रा राजानो ये समागताः ॥ २५ ॥ देवर्षिपितृभूतानि लोकपालाः सहानुगाः ॥ पूजितास्तमनुज्ञाप्य स्वधामानि ययुर्नृप ॥ २६ ॥
हरिदासस्य राजर्षे राजसूयमहोदयम् ॥ नैवातृप्यन्प्रशंसन्तः पिबन्मर्त्योऽमृतं यथा ॥ २७ ॥ ततो युधिष्ठिरो राजा सुहृत्सम्बन्धिबान्धवान् ॥ प्रेम्णा
निवारयामास कृष्णं च त्यागकातरः ॥ २८ ॥ भगवानपि तत्राङ्ग न्यवात्सीत्तत्प्रियङ्करः ॥ प्रस्थाप्य यदुवीरांश्च साम्बादींश्च कुशस्थलीम् ॥ २९ ॥
इत्थं राजा धर्मसुतो मनोरथमहार्णवम् ॥ सुदुस्तरं समुत्तीर्य कृष्णेनासीद्गतज्वरः ॥३०॥ एकदाऽन्तःपुरं तस्य वीक्ष्य दुर्योधनः श्रियम् ॥ अतप्यद्रा-

सुवर्णमेखला धारण गरेर राम्रैं शोभित भए ॥ २४ ॥ हे राजन् ! सर्वाधिक शोभित महामना ऋत्विग्गण र वेदवादी सदस्यगण यज्ञोत्सव हेर्नको निम्ति आएका अनेक ब्राह्मण,
क्षत्रिय, वैश्य, शूद्र र राजा तथा आफ्ना अनुयायी सहित देवता, ऋषि, पितृ, भूत र लोकपाल महाराज महाराज युधिष्ठिर द्वारा राम्ररी सम्मानित भएर तथा उनको अनुमति
लिई आफ्नू-आफ्नू स्थानमा फर्केर गए ॥ २५-२६ ॥ हे राजन् ! जस्तै अमृतले मानिस कहिल्यै अघाउन्न, त्यस्तै भगवद्भक्त महाराज युधिष्ठिरको राजसूय यज्ञको विशेष प्रशंसा गर्दै
जाँदा पनि उनको तृप्ति भएन ॥ २७ ॥ त्यस बेला उनको वियोग सहन असमर्थ हुनाले गर्दा राजा युधिष्ठिरले आफ्ना सुहृद्, सम्बन्धी, बान्धव तथा भगवान् श्रीकृष्णलाई प्रेमपूर्वक
केही दिन त्यहीं रोकेर राखेर ॥ २८ ॥ अनि हे तात ! युधिष्ठिरका शुभचिन्तक भगवान् कृष्णले साम्बादि यादवहरूलाई द्वारका पठाइदिए र स्वयं आफू त्यहीं बसे ॥ २९ ॥ यस

प्रकार धर्मपुत्र महाराज युधिष्ठिर भगवान् कृष्णको कृपाले आफ्नू मनोरथरूपी दुस्तर समुद्र तरेर निश्चिन्त भए ॥ ३० ॥ एक दिन भगवद्भक्त राजा युधिष्ठिरको राजमहलको सम्पत्ति र राजसूय यज्ञद्वारा प्राप्त सम्मान देखेर दुर्योधनलाई ठूलो सन्ताप भयो ॥ ३१ ॥ जुन सभामा मयदानवले ल्याएको देवेन्द्र, दैत्येन्द्र, सुरेन्द्रका विविध सम्पत्तिहरू सुशोभित थिए। ती सामग्रीहरूले राजरानी द्रौपदी आफ्ना पतिहरूको परिचर्या गर्दथिन्। जुन राजभवनमा श्रीकृष्णका-कुच कुंकुम रञ्जित रक्तवर्णहार तथा चञ्चल कुण्डल र अलकावलीले मण्डित मनोहर मुखारविन्दले हजारौं रानीहरू कटिभारवश मन्दगतिले हिड्दा तिनका नूपुरको झङ्कार सुनिन्थ्यो, त्यो सबै देखेर द्रौपदीमा आसक्त दुर्योधनलाई ठूलो डाह-ईर्ष्या भयो ॥३२-३३॥ एक दिन महाराज युधिष्ठिर मयदानवले बनाइदिएको सभामा आफ्ना भाइहरू, बन्धुजन र आफ्ना नेता भगवान कृष्ण सहित साम्राज्य-लक्ष्मीले सुसम्पन्न भएर स्वर्ण-सिंहासनमा साक्षात् इन्द्र समान आसीन थिए र बन्दीजन उनको स्तुति गरिरहेका थिए, त्यसै बेला अभिमानी दुर्योधन किरीट, कुण्डल, माला र खड्गादिले सुसज्जित भएर आफ्ना

जसूयस्य महित्वं चाच्युतात्मनः ॥ ३१ ॥ तस्मिन्नरेन्द्रदितिजेन्द्रसुरेन्द्रलक्ष्मीर्नाना विभान्ति किल विश्वसृजोपक्लृप्ताः ॥ ताभिः पतीन्द्रुपदराजसुतोपतस्थे यस्तां विषक्तहृदयः कुरुराडतप्यत् ॥ ३२ ॥ यस्मिंस्तदा मधुपतेर्महिषीसहस्रं श्रोणीभरेण शनकैः क्वणदङ्घ्रिशोभम् ॥ मध्ये सुचारुकुचकुंकुमशोणहारं श्रीमन्मुखं प्रचलकुण्डलकुन्तलाढ्यम् ॥ ३३ ॥ सभायां मयक्लृप्तायां क्वापि धर्मसुतोऽधिराट् ॥ वृतोऽनुजैर्बन्धुभिश्च कृष्णेनापि स्वचक्षुषा ॥३४॥ आसीनः काञ्चने साक्षादासने मघवानिव ॥ पारमेष्ठ्यश्रिया जुष्टः स्तूयमानश्च वन्दिभिः ॥ ३५ ॥ तत्र दुर्योधनो मानी परीतो भ्रातृभिर्नृप ॥ किरीटमाली न्यविशदसिहस्तः क्षिपन्रुषा ॥ ३६ ॥ स्थलेऽभ्यगृह्णाद्वस्त्रान्तं जलं मत्वा स्थलेऽपतत् ॥ जले च स्थलवद्भ्रान्त्या मयमायाविमोहितः ॥३७॥ जहास भीमस्तं दृष्ट्वा स्त्रियो नृपतयोऽपरे ॥ निवार्यमाणा अप्यङ्ग राज्ञा कृष्णानुमोदिताः ॥३८॥ स व्रीडितोऽवाग्वदनो रुषा ज्वलन्निष्क्रम्य तूष्णीं प्रययौ गजाह्वयम् ॥ हाहेति शब्दः सुमहानभूत्सतामजातशत्रुर्विमना इवाभवत् ॥३९॥ बभूव तूष्णीं भगवान्भुवो भरं समुज्जिहीर्षुर्भ्र

भाइहरूसहित द्वारपालाई हप्काउँदै रिसाएर त्यहाँ आए ॥ ३४-३५-३६ ॥ उनले मयदानवको मायामा सहित भएर स्थललाई जल ठानी आफ्ना लुगा उचाले तथा जलमा स्थलको भ्रम भइदिनाले ती पानीमा बेसरी पछारिए ॥ ३७ ॥ हे तात ! ती लडेको देखेर भीमसेन, राजमहिलाहरू अरू राजा-महाराजा युधिष्ठिरले छेक्ता-छेक्तै पनि भगवान् कृष्णको भाव बुझेर हाँस्न लागे ॥ ३८ ॥ त्यसले ती दुर्योधन सार्है लज्जित भए र टाउको न्युराई मनमनै क्रोधाग्निमा बल्दै सभाभवनबाट निस्केर हस्तिनापुर तिर प्रस्थान गरे। यो उपहासले भावी अनर्थको सम्भावना देखेर सज्जनवर्गमा हाहाकार मच्चियो र युधिष्ठिर अलि विचलित भए। तर उसको दृष्टिले दुर्योधन अभ्मा

८ दृष्टान्त ( भावी बलियो छ )—एक जना ब्राह्मण कहीं गइरहेका थिए। बाटोमा तिनले थोटा केटो देखे, त्यो खेतमा सुतेको थियो। अकस्मात् थोटा सर्पले बालकलाई टोकिदियो र त्यो मर्‍यो। ब्राह्मणले सर्पसित सोधे—'तिमी को हौ ?' सर्पले भन्यो—'म काल हुँ। यसको मृत्यु तोकिएको हुन्छ, म त्यही रूप धारण गरेर त्यसको प्राणहरण गर्दछु।' ब्राह्मणले भने—'भो भन त मेरो मृत्यु कहाँ र कसरी हुन्छ ?' सर्पले उत्तर दियो—गंगानदीमा गोहको रूप धरेर म तिमीलाई मार्नेछु।' यो कुरा सुनेर ब्राह्मण विचार गर्न लागे—'म कुन ठाउँमा जाऊँ जहाँ मैले गङ्गाजीमा स्नान नपरोस्। यदि गङ्गामा म नगएतापनि गोहले मलाई कसरी मार्ला।

११७८

परेका थिए, पृथिवीको भारी उतार्नका इच्छुक कृष्ण उस बेला केही पनि बोलेनन् ॥३९॥ हे राजन् ! तिमीले मसित जे सोधेका थियौ, त्यो मैले महान राजसूय यज्ञमा दुर्योधनको दुष्टताको वृत्तान्त सुनाएँ ॥४०॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायां पंचसप्ततितमोऽध्यायः ॥ ७५ ॥

(शाल्व र यादवहरूको संग्राम)–शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! अर्को सौभ विमानको स्वामी शाल्व मारिएको थियो, लीलाको निम्ति मानवस्वरूपधारी भगवान् कृष्णको त्यो चरित्र सुन शाल्व शिशुपालको मित्र थियो । जब त्यो रुक्मिणीको विवाहमा कुण्डिनपुर पुग्यो, तब जरासन्धादि राजाहरू सँग ऊ पनि यादवसित पराजित भएको थियो ॥२॥ अनि शाल्वलेसबै

मति स्म यदुदृशा ॥ ३९ ॥ एतत्तेऽभिहितं राजन्यत्पृष्टोऽमिह त्वया ॥ सुयोधनस्य दौरात्म्यं राजसूये महाक्रतौ ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे दुर्योधनमानभङ्गो नाम पञ्चसप्ततितमोऽध्यायः ॥ ७५ ॥

श्रीशुक उवाच ॥ अथान्यदपि कृष्णस्य शृणु कर्माद्भुतं नृप ॥ क्रीडानरशरीरस्य यथा सौभपतिर्हतः॥१॥ शिशुपालसखा शाल्वो रुक्मिण्युद्वाह आगतः ॥ यदुभिर्निर्जितः संख्ये जरासन्धादयस्तथा ॥२॥ शाल्वः प्रतिज्ञामकरोच्छृण्वतां सर्वभूभुजाम् ॥ अयादवीं क्ष्मां करिष्ये पौरुषं ममपश्यत॥३॥ इति मूढः प्रतिज्ञाय देवं पशुपतिं प्रभुम् ॥ आराधयामास नृप पांसुमुष्टिं सकृद्ग्रसन् ॥४॥ संवत्सरान्ते भगवानाशुतोष उमापतिः ॥ वरेण छन्दयामास शाल्वं शरणमागतम् ॥५॥ देवासुरमनुष्याणां गन्धर्वोरगरक्षसाम्॥ अभेद्यं कामगं वव्रे स यानं वृष्णिभीषणम् ॥६॥ तथेति गिरिशादिष्टो मयः परपुर·

राजालाई सुनाएर प्रतिज्ञा गरेको थियो–'सबै मेरो पुरुषार्थ हेर्नौला, एक दिन म यो भूमि यादव विहिन पारिदिने छु' ॥३॥ हे राजन् ! यस्तो प्रतिज्ञा गरेर त्यो मूढ दिनको एकपल्ट एक मुठी धूलो फाँको मारेर देवाधिदेव पशुपतिनाथको आराधना गर्नलाग्यो ॥ ४ ॥ एक वर्ष बितेपछि आशुतोष भगवान् शङ्करले आफ्नू शरणागत भक्त शाल्वसित आफ्नू अभिलषित वरदान माग्न भने ॥५॥ अनि उसले यादवहरूलाई भयभीत पार्ने यौटा यस्तो विमान माग्यो, जुन चालकको इच्छानुसार सर्वत्र जानसकोस् र जसलाई देवता, असुर, मनुष्य र राक्षस

लिनै विचारेर तिनले राजपुतानाको कुनै राज्यमा नोकरी समाते र ती ब्राह्मण राजकुमारसित यति बढी स्नेह बढेर गयो कि यौटालाई नदेखी अर्कोलाई शान्ति मिल्दैनथ्यो । जब राजकुमार तन्नेर भयो तब एक दिन भारत-भ्रमणको निम्ति निस्किदो । ब्राह्मण राजपुत्रसित जानु अनिवार्य थियो । अतः ऊ राजकुमारको पछि लाग्यो । राजकुमार अयोध्या जान खोजिरहेथ्यो । बाटोमा गङ्गाजी परिन् । राजपुत्रले स्नान गर्नु उचित ठानेर नुहाउन लागे । यो देखेर ब्राह्मणलाई पनि स्नान गर्न डाके । ब्राह्मणले मानेनन् र तिनले भने–"हे कुमार ! तीर्थमा केही दान दिनु पर्दछ । राजकुमारले जलमा उभिएर उनै ब्राह्मणसित भने— तिमी जलको छेउमा उभिएर मसित मेरो औंठी दान पाउ ।" अनि ब्राह्मणले मदा तदमा ठूला सक्नलागि यौटा ग्राह आएर तिनका खुट्टा समात्यो र पानीमा तानेर लग्यो । यस प्रकार ब्राह्मणको मृत्यु भयो र राजकुमार आदि उभिएर हेर्दै रहे ।

अवश्यं हमनुगस्य जन्न तथापि सा तो लभते मृगांष । प्रायः समापन्न विपत्ति काले धियोऽपि पुंसां मलिना भवन्ति ।

तुलसी जस भवितव्यता तैसी मिले सहाय । आपु न जावे ताहि पै, ताहि तहाँ लै जाय ॥

मज्जत्वम्भसि यातु मेरु शिखरे शत्रुञ्जयत्वाहवे, वाणिज्यं कृषि सेवनादि सकलं विद्याकला शिक्षिते । आकाशं विपुले प्रयातु खगवत्कृत्वा प्रयत्नं परं नाभाव्यं भवतीह कर्मवशतो भाव्यस्य नाशः कुतः ॥

पानीमा डुबुल्की मारोस् कि मेरु शिखरमा चढोस् , व्यापार, कृषि, नोकरी आदि सबै विद्यामा निपुण भएर शासक बनोस् वा चरो झैं आकाशमा उडोस्, तर नहुने कुरा कहिल्यै हुन्न र हुने कुरा अवश्य हुन्छ, किनकि–'यदभावि न तद्भावि भावि चेन्न तदन्यथा ।' –गीता ।

गर्दैले पनि माँच्न नसकून् ॥६॥ भगवान् शङ्करले 'तथास्तु' भन्नुभयो । तदनुसार उनकै आज्ञाले मयदानवले शत्रुको नगर जित्नसक्ने सौभ नामको उत्तम लौह-विमान बनाएर शाल्वलाई दिए ॥७॥ त्यो इच्छाचारी, अन्धकारमय र अभेद्य विमान पाएर शाल्व आफ्ना शत्रु यादवगणको पहिलो शत्रुता सम्झन्दै द्वारकापुरी पुग्यो ॥८॥ हे भरतर्षभ ! उसले धेरै ठूलो सेनाद्वारा द्वारकापुरी घेरिलियो र त्यहाँका उपवन, उद्यान, गोपुर, द्वार, प्रासाद, अट्टालिका र विहार-गृहहरू भत्काइदिन लाग्यो। उसबेला नदेखिने त्यस विमानबाट अनेक अस्त्रास्त्र वर्षा हुनलाग्यो ॥ ९ ॥ १० ॥ शिला, वृक्ष, वज्र, सर्प, र असिना पार्न लाग्यो र प्रचण्ड आँधीले गर्दा सबै दिशा धूलोले ढाकिए ॥ ११ ॥ हे राजन् ! पूर्वकालमा जस्तै त्रिपुरासुरद्वारा सम्पूर्ण पृथ्वी पीडित भएकी थिइन्, त्यस्तै सौभद्वारा अत्यन्त पीडित द्वारकालाई शान्ति प्राप्त भइरहेको थिएन ॥ १२ ॥ ठूला यशस्वी तथा भगवान प्रद्युम्नले आफ्ना प्रजालाई पीडित देखेर रथमा बसी 'नडराओ' भन्दै धैर्य दिए ॥ १३ ॥ त्यस वेला उनीसित सात्यकि, चारुदेष्ण, साम्ब भाइहरू समेत अक्रूर, हार्दिक्य, भानुविन्द,

अयः ॥ पुरं निर्माय शाल्वाय प्रादात्सौभमयस्मयम् ॥७॥ स लब्ध्वा कामगं यानं तमोधाम दुरासदम् ॥ ययौ द्वारवतीं शाल्वो वैरं वृष्णिकृतंस्मरन्॥८॥ निरुद्ध्य सेनया शाल्वो महत्या भरतर्षभ ॥ पुरीं बभञ्जोपवनान्युद्यानानि च सर्वशः ॥९॥ सगोपुराणि द्वाराणि प्रासादाट्टालतोलिकाः ॥ विहारान्स विमानाग्र्यान्निपेतुः शस्त्रवृष्टयः ॥१०॥ शिला द्रुमाश्चाशनयः सर्पा आसारशर्कराः ॥ प्रचण्डश्चक्रवातोऽभूद्रजसाच्छादिता दिशः ॥११॥ इत्यर्द्यमाना सौभेन कृष्णस्य नगरी भृशम् ॥ नाभ्यपद्यत शंराजंस्त्रिपुरेण यथामही॥१२॥ प्रद्युम्नोभगवान्वीक्ष्य बाध्यमाना निजाः प्रजाः॥ माभैत्यभ्यधाद्वीरोरथारूढो महायशाः ॥१३॥ सात्यकिश्चारुदेष्णश्च साम्बोऽक्रूरः सहानुजः ॥ हार्दिक्यो भानुविन्दश्च गदश्च शुकसारणौ ॥ १४ ॥ अपरे च महेष्वासा रथयूथपयूथपाः ॥ निर्ययुर्दंशिता गुप्ता रथेभाश्वपदातिभिः ॥१५॥ ततः प्रववृते युद्धं शाल्वानां यदुभिः सह ॥ यथाऽसुराणां विबुधैस्तुमुलं लोमहर्षणम् ॥१६॥ ताश्च सौभपतेर्माया दिव्यास्त्रै रुक्मिणीसुतः ॥ क्षणेन नाशयामास नैशं तम इवोष्णगु ॥ १७ ॥ विव्याध पञ्चविंशत्या स्वर्णपुङ्खैरयोमुखैः ॥ शाल्वस्य ध्वजिनीपालं शरैः सन्नतपर्वभिः ॥ १८ ॥ शतेनाताडयच्छाल्वमेकैकेनास्य सैनिकान् ॥ दशभिर्दशभिर्नेतॄन्वाहनानि त्रिभिस्त्रिभिः ॥ १९ ॥ तदद्भुतं महत्कर्म प्रद्युम्नस्य महात्मनः ॥ दृष्ट्वा तं पूजयामासुः सर्वे स्वपरसैनिकाः ॥ २० ॥ बहुरूपैकरूपं तद्दृश्यते न च दृश्यते ॥ मायामयं मयकृतं

गद, शुक, सारण, हात्ती-घोडा र पैदल सेनाद्वारा सुसज्जित भई कवच धारण गरेर नगर बाहिर आए ॥ १४ ॥ १५ ॥ त्यहाँ जस्तै देवतासित दैत्यकोसंग्राम भएथ्यो, त्यस्तै यादवहरूसित शाल्वका सैनिकको घोर तथा रोमाञ्चकारी युद्ध हुनलाग्यो ॥ १६ ॥ सूर्य जसरी रात्रिको अन्धकार हटाउँछन्, त्यस्तै नै रुक्मिणी-नन्दन प्रद्युम्नले बलवान शाल्वको त्यो सबै माया एक क्षणमै आफ्ना दिव्यास्त्रले नष्ट पारिदिए। ।१७॥ उनले शाल्वका सेनापतिलाई सुनका प्वाँख र फलामको टुप्पा हुने तथा जसको जोडा थिएन, त्यस्ता पच्चीस बाणले घायल पारे ॥१८॥ फेरि उनले सय बाणद्वारा शाल्वलाई, एकेकले सबै सैनिकलाई, दस-दसले सेनानायकलाई र तीन-तीन बाणले तिनका वाहनहरूलाई घायल पारिदिए ॥ १९ ॥ महात्मा प्रद्युम्नको त्यो अद्भुत र महान पराक्रम देखेर आफ्ना र विराना सबै सैनिक प्रशंसा गर्नलागे ॥२०॥ शाल्वको त्यो मयदानव निर्मित मायामय विमान कहिले अनेक रूप

र कहिले एक रूपको देखिन्थ्यो । त्यो छिनमा देखिने र छिनमै अदृश्य हुन्थ्यो । यस प्रकार उसका शत्रुलाई उसको गति कही पनि थाहा हुँदैनथ्यो ॥ २१ ॥ सौभ विमानको कुनै एक स्थानमा स्थिति हुँदैनथ्यो । त्यो कहिले पृथ्वीमा र कहिले आकाशमा, कहिले पर्वतशिखरमा र छिनमै अलातचक्र झैं फनफनि घुमेको देखिन्थ्यो ॥ २२ ॥ जहाँ-जहाँ सौभ विमान र आफ्ना सैनिकसित शाल्व देखिन्थ्यो, उतै-उतै यादवयूथपति बाण-वर्षा गर्दथे ॥ २३ ॥ यस प्रकार शाल्व शत्रुले छाडेका सूर्य तथा अग्नि समान तातो स्पर्शयुक्त र विषम विषधर समान असह्य बाण लागेर सैनिकगणसमेत पीडित भई मूर्च्छा पर्नगयो ॥ २४ ॥ यता इहलोक र परलोक दुवैलाई विजय गर्ने इच्छुक यादव वीरहरूले शाल्वका सैनिकहरूलाई शस्त्रास्त्र वर्षाले अत्यन्त पीडित भएर पनि रणभूमि छाडेनन् ॥ २५ ॥ उसै अवसरमा शाल्वको महामन्त्री द्युमानले, जसलाई एकपल्ट प्रद्युम्नले निकै व्यथित पारेका थिए, उनको साम्नुन्ने आयो र उनीमाथि वज्र-लौह निर्मित गदा प्रहार गरेर भयङ्कर सिंह झैं गर्जन गर्‍यो ॥ २६ ॥ त्यस गदाको प्रहारले शत्रुदमनकारी

दुर्विभाव्यं परैरभूत् ॥२१॥ क्वचिद्भूमौ क्वचिद्व्योम्नि गिरिमूर्ध्नि जले क्वचित् ॥ अलातचक्रवद्भ्राम्यत्सौभं तद्दुरवस्थितम् ॥ २२ ॥ यत्र यत्रोपलक्ष्येत ससौभः सहसैनिकः ॥ शाल्वस्ततस्ततोऽमुञ्चञ्छरान्सात्वतयूथपाः ॥२३॥ शरैरग्न्यर्कसंस्पर्शैराशीविषदुरासदैः ॥ पीड्यमानपुरानीकः शाल्वोऽमुह्यत्परेरितैः ॥२४॥ शाल्वानीकपशस्त्रौघैर्वृष्णिवीरा भृशार्दिताः ॥ न तत्यजू रणं स्वं स्वं लोकद्वयजिगीषवः ॥२५॥ शाल्वामात्यो द्युमान्नाम प्रद्युम्नं प्राक् प्रपीडितः ॥ आसाद्य गदया मौर्व्या व्याहत्य व्यनदद्बली ॥ २६ ॥ प्रद्युम्नं गदया शीर्णवक्षःस्थलमरिन्दमम् ॥ अपोवाह रणात्सूतो धर्मविद्दारुकात्मजः ॥२७॥ लब्धसंज्ञो मुहूर्तेन कार्ष्णिः सारथिमब्रवीत् ॥ अहो असाध्विदं सूत यद्रणान्मेऽपसर्पणम् ॥ २८ ॥ न यदूनां कुले जातः श्रूयते रणविच्युतः ॥ विना मत्क्लीबचित्तेन सूतेन प्राप्तकिल्बिषात् ॥ २९ ॥ किं नु वक्ष्येऽभिसङ्गम्य पितरौ रामकेशवौ ॥ युद्धात्सम्यगपक्रान्तः पृष्टस्तत्रात्मनः क्षमम् ॥ ३० ॥ व्यक्तं मे कथयिष्यन्ति हसन्त्यो भ्रातृजामयः ॥ क्लैब्यं कथं कथं वीर तवान्यैः कथ्यतां मृधे ॥ ३१ ॥ सारथिरुवाच ॥ धर्मं विजानताऽऽयुष्मन्कृतमेतन्मया विभो ॥ सूतः कृच्छ्रगतं रक्षेद्रथिनं सारथिं रथी ॥३२॥ एतद्विदित्वा तु भवान्मयाऽपोवाहितो रणात् ॥ उपसृष्टः परेणातिमूर्छितो गदया हतः ॥ ३३ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे शाल्वयुद्धे षट्सप्ततितमोऽध्यायः ॥ ७६ ॥

प्रद्युम्नको वक्षस्थल विदीर्ण देखेर सारथ्यधर्म जान्ने उनको सारथी दारुक-पुत्रले उनलाई रणभूमिबाट हटाएर अन्तै लग्यो ॥ २७ ॥ एक मुहूर्त बितेपछि जब प्रद्युम्नको चेतना आएपछि ती सारथीसित भने—'सूत ! यो निकै अनुचित भयो—जुन मलाई रणभूमिबाट हटायौ ॥२८॥ कायर सारथीले गर्दा जसलाई यस्तो कलंक प्राप्त भएको होस्, त्यस्तो मबाहेक यदुकुलमा अरू कोही वीर रणभूमिबाट हटेको सुनिएको छैन ॥ २९ ॥ अनि युद्धमा भागेको म आफ्ना पिता श्रीकृष्ण तथा बलरामसित भेटेर उनले सोधेपछि उनलाई म के उत्तर दिनँ ? ॥ ३० ॥ मेरा भाउजूहरू मेरो खिल्ली उडाउँदै जब मसित सोध्नेछन्—'हे वीर ! युद्धमा शत्रुहरूले तिमीलाई कायर कसरी तुल्याइदिए ?' ॥ ३१ ॥ सारथीले भन्यो—हे आयुष्मन् ! हे विभो ! सारथीका कर्तव्य हो कि संकटमा रथीको रक्षा गरोस् र रथी पनि सारथीलाई बचाओस्—यस धर्मलाई उचित ठानेर नै मैले यस्तो काम गरें ॥ ३२ ॥

हजुर शत्रुको प्रहारले अचेत हुनुभयो भन्ने जानेर मैले हजुरलाई रणभूमिबाट यहाँ ल्याएको हुँ ॥३३॥ इति श्रीमद्भागवते महापुराणे नेपाली भाषाटीकायां षट्सप्ततितमोऽध्यायः॥७६॥
( शाल्व-वध ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! अनि प्रद्युम्नले आचमन गरेर उत्तम कवच धारण गरी धनुष उचाले । अनि उनले सारथीसित भने–'मलाई वीरवर द्युमान्कहाँ लैजाऊ' ॥ १ ॥ त्यस बेला द्युमान यादवी सेनाको संहार गर्दै थियो । अतः त्यसकहाँ रुक्मिणी नन्दन प्रद्युम्नजीले रथ रोकार र हाँस्तै उसलाई तीखा आठ आठ बाणले घायल पारे ॥ २ ॥ आफ्ना चार बाणले त्यसका चार घोडालाई, एक बाणले सारथीलाई, दुइ बाणले धनुष र रथको ध्वजा तथा एक बाणले उसको शिर काटिदिए ॥ ३ ॥ यता गद, सात्यकि र साम्ब आदि यादव शाल्वका सेनाको संहार गर्नलागे र सौभविमानमा बसेका समस्त सैनिकगण तिनका बाणले घाँटी काटिएर समुद्रमा पर्नलागे ॥ ४ ॥ यसरी सत्ताइस दिनसम्म यादव र शाल्व-सेनामा परस्पर यौटा अर्कोमाथि प्रहार गर्दै भयङ्कर युद्ध भयो ॥ ५ ॥ हे राजन् ! त्यस बेला कृष्ण भगवान् धर्मराज युधिष्ठिरले डाकेर इन्द्रप्रस्थ

श्रीशुक उवाच ॥ स उपस्पृश्य सलिलं दंशितो धृतकार्मुकः ॥ नय मां द्युमतः पार्श्वं वीरस्येत्याह सारथिम् ॥१॥ विधमन्तं स्वसैन्यानि द्युमन्तं
रुक्मिणीसुतः ॥ प्रतिहत्य प्रत्यविध्यन्नाराचैरष्टभिः स्मयन् ॥२॥ चतुर्भिश्चतुरो वाहान्सूतमेकेन चाहनत् ॥ द्वाभ्यां धनुश्च केतुं च शरेणान्येन वै शिरः
॥३॥ गदसात्यकिसाम्बाद्या जघ्नुः सौभपतेर्बलम् ॥ पेतुः समुद्रे सौभेयाः सर्वे संछिन्नकन्धराः ॥४॥ एवं यदूनां शाल्वानां निघ्नतामितरेतरम् ॥ युद्धं
त्रिणवरात्रं तदभूत्तुमुलमुल्बणम् ॥५॥ इन्द्रप्रस्थं गतः कृष्ण आहूतो धर्मसूनुना ॥ राजसूयेऽथ निर्वृत्ते शिशुपाले च संस्थिते ॥ ६ ॥ कुरुवृद्धान-
नुज्ञाप्य मुनींश्च ससुतां पृथाम् ॥ निमित्तान्यतिघोराणि पश्यन्द्वारवतीं ययौ ॥ ७ ॥ आह चाहमिहायात आर्यमिश्राभिसङ्गतः ॥ राजन्याश्चैद्यपक्षीया
नूनं हन्युः पुरीं मम ॥ ८ ॥ वीक्ष्य तत्कदनं स्वानां निरूप्य पुररक्षणम् ॥ सौभं च शाल्वराजं च दारुकं प्राह केशवः ॥ ९ ॥ रथं प्रापय मे सूत
शाल्वस्यान्तिकमाशु वै ॥ सम्भ्रमस्ते न कर्तव्यो मायावी सौभराडयम् ॥ १० ॥ इत्युक्तश्चोदयामास रथमास्थाय दारुकः ॥ विशन्तं ददृशुः सर्वे
स्वे परे चारुणानुजम् ॥ ११ ॥ शाल्वश्च कृष्णमालोक्य हतप्रायबलेश्वरः ॥ प्राहरत्कृष्णसूताय शक्तिं भीमरवां मृधे ॥ १२ ॥ तामापतन्तीं नभसि

गएका थिए । त्यहाँ राजसूय यज्ञ समाप्त भएर शिशुपाल परलोक भइसकेपछि अनेक थरिका अपशकुन भएका देखेर कुरुवंशी, बूढा-पाका मुनीश्वर र युधिष्ठिर आदि पुत्रहरू संगै कुन्तीसित आज्ञा लिएर श्रीकृष्ण द्वारकापुरी हिंडे ॥ ६-७ ॥ ती मनमनै विचार्न लागे–'म आर्य बलरामका साथै यहाँ आएको छु, उता शिशुपालको पक्ष लिने अनेक राजाहरू र तिनका असंख्य सेनाहरूले अवश्य मेरो पुरीमा आक्रमण गरे होलान्' ॥ ८ ॥ द्वारका पुगेर उनले आफ्ना स्वजनको कष्ट तथा सौभविमान र राजा शाल्वलाई उपस्थित देखेर बलरामलाई नगरको रक्षा गर्ने भार सुम्पेर दारुक सारथीलाई भन्नुभयो–॥९॥ हे सूत ! मेरो रथ तुरुन्त शाल्वको सामुन्ने पुऱ्याऊ । सौभराज ठूलो मायावी छ, तर त्योसित नडराऊ ॥१०॥ भगवान् कृष्णको आज्ञा पाएर दारुकले रथमा बसी घोडाहरू दगुराए । त्यस बेला यादव तथा शाल्व दुवै पक्षका वीरले युद्धभूमिमा गरुडध्वज रथलाई आकृतिर आउन लागेको देखे ॥११॥ अनि जसका प्रायः सेनापति मरिसकेका थिए त्यस शाल्वले भगवान् कृष्णलाई युद्धभूमिमा देखेर उनको सारथी दारुकमाथि यौटा भयङ्कर शब्द गर्ने बलियो शक्ति प्रहार गऱ्यो ॥ १२ ॥

आकाशमा बिजुली समान दशै दिशालाई प्रकाशित पार्दै त्यस शक्तिलाई ठूलो वेगले आएको देखेर श्रीकृष्णले बाण वर्षा गरी त्यसको अनेक टुक्रा पारिदिए ॥ १३ ॥ फेरि सोह्र बाणले शाल्वलाई घायल पारी उनले, सूर्यदेव जस्तै आफ्ना किरणले आकाशलाई व्याप्त पार्दछन्, त्यस्तै नै आकाशमा घुमिरहेको विमानलाई पनि आफ्ना बाणसमूहले छिन्न-भिन्न पारिदिए ॥१४॥ शाल्वले पनि आफ्नू एक बाणले शार्ङ्गधन्वा भगवान्‌को शार्ङ्ग धनुयुक्त बायाँ बाहुमा घाउ लगाइदियो । त्यसले उनको हातको शार्ङ्गधनुष खस्रक्क झर्‍यो यो–मान्छैनै आश्चर्यजनक काम भयो ॥१५॥ त्यस महान् आश्चर्यलाई देखेर समस्त दर्शक हाहाकार गर्नलागे र सौभराजले भयङ्कर सिंहनाद गर्दै भगवान कृष्णसित भन्यो ॥१६॥ —'हे मूढ ! तिमीहरूले हामी सबैको समक्ष हाम्रा मित्र र भाई शिशुपालको पत्नी रुक्मिणीलाई हरेर ल्यायौ । पछि असावधान स्थितिमा सखालाई पनि ठूलो सभामै मारिदियौ । यसले तिमी आफूलाई अजेय ठान्न लाग्यौ । आज तिमी मेरो सामुन्ने अडियौ भने म तिमीलाई आफ्ना बाणले त्यस लोकमा पठाइदिनेछु, जहाँ गएर प्राणी फेरि फर्केर आउन्न'

महोल्कामिव रंहसा ॥ भामयन्तीं दिशः शौरिः शायकैः शतधाऽच्छिनत् ॥१३॥ तं च षोडशभिर्विद्ध्वा बाणैः सौभं च खेभ्रमत् ॥ अविध्यच्छ-
रसन्दोहैः खं सूर्य इव रश्मिभिः ॥ १४ ॥ शाल्वः शौरेस्तु दोःसव्यं सशार्ङ्गं शार्ङ्गधन्वनः ॥ बिभेद न्यपतद्धस्ताच्छार्ङ्गमासीत्तदद्भुतम् ॥ १५ ॥
हाहाकारो महानासीद्भूतानां तत्र पश्यताम् ॥ निनद्य सौभराडुच्चैरिदमाह जनार्दनम् ॥ १६ ॥ यत्त्वया मूढ नः सख्युर्भ्रातुर्भार्या हृतेक्षताम् ॥
प्रमत्तः स सभामध्ये त्वया व्यापादितः सखा ॥ १७ ॥ तं त्वाऽद्य निशितैर्बाणैरपराजितमानिनम् ॥ नयाम्यपुनरावृत्तिं यदि तिष्ठेर्ममाग्रतः
॥ १८ ॥ श्रीभगवानुवाच ॥ वृथा त्वं कत्थसे मन्द न पश्यस्यन्तिकेऽन्तकम् ॥ पौरुषं दर्शयन्ति स्म शूरा न बहुभाषिणः ॥ १९ ॥ इत्युक्त्वा
भगवाञ्छाल्वं गदया भीमवेगया ॥ तताड जत्रौ संरब्धः स चकम्पे वमन्नसृक् ॥ २० ॥ गदायां सन्निवृत्तायां शाल्वस्त्वन्तरधीयत ॥ ततो मुहूर्त
आगत्य पुरुषः शिरसाऽच्युतम् ॥ देवक्या प्रहितोऽस्मीति नत्वा प्राह वचो रुदन् ॥ २१ ॥ कृष्ण कृष्ण महाबाहो पिता ते पितृवत्सल ॥
बद्ध्वाऽपनीतः शाल्वेन सौनिकेन यथा पशुः ॥ २२ ॥ निशम्य विप्रियं कृष्णो मानुषीं प्रकृतिं गतः ॥ विमनस्को घृणी स्नेहाद्बभाषे प्राकृतो यथा
॥ २३ ॥ कथं राममसम्भ्रान्तं जित्वाऽजेयं सुरासुरैः ॥ शाल्वेनाल्पीयसा नीतः पिता मे बलवान्विधिः ॥ २४ ॥ इति ब्रुवाणे गोविन्दे सौभराट्

। १७ ॥ १८ ॥ भगवान् भन्नुहुन्छ–'ए मन्दमति ! तँ व्यर्थ बकवाद गर्दछस् ! आफ्नू टाउकोमा नाच्ने काललाई देख्दैनस् । हे मूर्ख ! शूरवीर संग्राममा वीरता देखाउँछन्, म ठूलो भन्ने कुरा गरिरहन्नन् ॥ १९ ॥ यति भनेर भगवान् रिसाई पाँठा अत्यन्त वेगवती गदाले शाल्वको काँधमा प्रहार गर्नुभयो, त्यही चोटले रगत वमन गर्दै त्यो वीर थर-थर काम्न लाग्यो ॥२०॥ गदा फर्केपछि शाल्व अन्तर्धान भयो । त्यसको एकैछिनपछि पाँठा व्यक्ति आएर कृष्णलाई शिर निहुराएर प्रणाम गरी रोएर भन्न लाग्यो–'मलाई देवकी-ले पठाएकी हुन् र भनेकी छन्–'हे कृष्ण ! हे महाबाहो ! हे पितृवत्सल ! जस्तै कसाई पशु लैजान्छ, उसै गरी तिम्रा पितालाई शाल्वले बाँधेर लग्यो, ॥ २१ ॥ २२ ॥ यस्तो अप्रिय कुरा सुनेर भगवान् कृष्ण मानव-स्वभाव अनुसार करुणावश खिन्न भएर साधारण पुरुष झैं शोकाकुल भएर भन्नलागे ॥ २३ ॥ 'अहो आश्चर्य ! दैव साह्रै बलवान छ ।

1183

जसलाई देवता, असुर कोही पनि जित्न सक्तैनथे, ती सदैव सावधान रहने बलरामलाई जितेर अति अल्पवीर्य शाल्वले कसरी मेरा पितालाई बाँधेर लग्यो ?' ॥ २४ ॥ भगवान् यस्तो विचार गर्दै थिए, त्यसै बेला शाल्व वसुदेव जस्तै योटा माया-रचित पुरुषलाई लिएर त्यहाँ आयो र भन्नलाग्यो—॥ २५ ॥ 'ए मूर्ख ! हेर, यो तिम्रो जन्मदाता पिता हो—जसको निम्ति तिमी जीवन धारण गर्दछौ, म यसलाई तिम्रो सामुन्ने नै मारिरहेको छु । यदि सामर्थ्य छ भने, आएर रक्षा गर ॥२६॥ त्यो मायावी शाल्वले कृष्णलाई यसरी हप्काएर वसुदेवको टाउको काटिदियो र त्यो लिएर आकाशस्थ सौभ विमानमा गएर बस्यो ॥ २७ ॥ अनि भगवान् श्रीकृष्ण स्वयं ज्ञानवान् भएर पनि आफ्ना स्वजन वसुदेवको वियोगमा दुइ घडीसम्म साधारण पुरुषको समान शोकमा गाडिए, तर तुरुन्त थाहा पाए–यो त शाल्वले फिजाएको मयदानवको आसुरी माया थियो ॥२८॥ तत्काल सचेत भएपछि भगवान्ले स्वप्नको समान त्यस रणभूमिमा न दूतलाई देखे, न आफ्ना पिता वसुदेवको शरीरनै उनले पाए । ती सौभ विमानमा स्थित आफ्नू शत्रु शाल्वलाई आकाशमा घुमिरहेको

प्रत्युपस्थितः ॥ वसुदेवमिवानीय कृष्णं चेदमुवाच सः ॥ २५ ॥ एष ते जनिता तातो यदर्थमिह जीवसि ॥ वधिष्ये वीक्षतस्तेऽमुमीशश्चेत्पाहि बालिश ॥ २६ ॥ एवं निर्भर्त्स्य मायावी खड्गेनानकदुन्दुभेः ॥ उत्कृत्य शिर आदाय खस्थं सौभं समाविशत् ॥ २७ ॥ ततो मुहूर्तं प्रकृतावुपप्लुतः स्वबोध आस्ते स्वजनानुषङ्गतः ॥ महानुभावस्तदबुद्धयदासुरीं मायां स शाल्वप्रसृतां मयोदिताम् ॥२८॥ न तत्र दूतं न पितुः कलेवरं प्रबुद्ध आजौ समपश्यदच्युतः ॥ स्वाप्नं यथा चाम्बरचारिणं रिपुं सौभस्थमालोक्य निहन्तुमुद्यतः ॥२९॥ एवं वदन्ति राजर्षे ऋषयः केचनान्विताः ॥ यत्स्ववाचो विरुध्येत नूनं तेन स्मरन्त्युत ॥ ३० ॥ क्व शोकमोहौ स्नेहो वा भयं वा येऽज्ञसम्भवाः ॥ क्व चाखण्डितविज्ञानज्ञानैश्वर्यस्त्वखण्डितः ॥३१॥ यत्पादसेवोर्जितयात्मविद्यया हिन्वन्त्यनाद्यात्मविपर्ययग्रहम् ॥ लभन्त आत्मीयमनन्तमैश्वरं कुतो नु मोहः परमस्य सद्गतेः ॥ ३२ ॥ तं शस्त्रपूगैः प्रहरन्तमोजसा शाल्वं शरैः शौरिरमोघविक्रमः ॥ विद्ध्वाऽच्छिनद्वर्म धनुः शिरोमणिं सौभं च शत्रोर्गदया रुरोज ह ॥ ३३ ॥ तत्कृष्णहस्तेरितया विचूर्णितं पपात तोये गदया सहस्रधा ॥ विसृज्य तद्भूतलमास्थितो गदामुद्यम्य शाल्वोऽच्युतमभ्यगाद्द्रुतम् ॥३४॥ आधावतःसगदं तस्य बाहुं भल्लेन छित्त्वाथ

देखेर त्यसलाई मार्न उद्यत भए ॥२९॥ हे राजन् ! पूर्वापरको विचार नगर्ने केही मुनीश्वरको यो कथन छ, किन्तु ती यस कुराको विचार गर्दैनन् अनि यस्तो भन्दा उनको वाक्यमा विरोध आउँदछ ॥३०॥ कहाँ अज्ञानीजनमा हुने शोक, मोह, स्नेह र भय आदि कहाँ कहिल्यै खण्डित नहुने विज्ञान र ऐश्वर्यले परिपूर्ण श्रीकृष्णचन्द्र ! ॥ ३१ ॥ जसका चरण-सेवाले प्राप्त आत्मज्ञानद्वारा पुनिजन अनादि अविद्याजनित विपरीत ज्ञानको नाश गरेर असाधारण आत्मवैभव प्राप्त गर्दछन्, ती सत्पुरुषहरूका एकमात्र गति परमात्मालाई कसरी मोह हुन सक्तछ ? ॥३२॥ हे राजन् ! त्यस बेला शाल्व ठूलो वेगले शस्त्रसमूहका वर्षा गरिरहेको थियो । अतः अमोघवीर्य कृष्णले उसलाई बाणले घाइते पारेर भयङ्कर गदा प्रहार द्वारा उसको कवच, धनुष, शिरस्त्राण र सौभविमान धूलो पारिदिए ॥३३॥ त्यो विमान श्रीकृष्णको हातबाट छुटेको गदाले हजारौं भागमा खण्ड-खण्ड भएर जलमा गई हरायो । अनि शाल्व त्यसलाई छाडेर पृथ्वीमा उभियो र गदा उचाली निकै वेगले भगवान्तिर झम्टियो ॥३४॥ त्यसलाई आफूतिर शीघ्रतापूर्वक आउनलागेको देखेर भगवान्ले बाणद्वारा गदा समेत

हात काटिदिए र फेरि शाल्वलाई मार्नको निम्ति प्रलयकालीन सूर्य जस्तै तेजस्वी आफ्नू सुदर्शनचक्र उठाए । त्यस वेला ती सूर्य विराजित उदयाचल पर्वत समान राम्रा देखिए लागे ॥ ३५ ॥ भगवान्‌ले तत्काल त्यस चक्रद्वारा महामायावी शाल्वको किरीट-कुण्डल युक्त मस्तक यसरी काटिदिए जसरी इन्द्रले वज्रद्वारा वृत्रासुरको शिर काटेका थिए । त्यो देखेर शाल्वपक्षका बीरमा हाहाकार मच्चियो ॥३६॥ हे राजन् ! त्यो पापी शाल्व मरेपछि र गदाद्वारा सौभविमान नष्ट हुनाले आकाशमा देवगणद्वारा बजाइएको दुन्दुभीको निनाद हुन लाग्यो । यो आफना मित्र शिशुपालादिका साटो फेर्न दन्तवक्र रिसाएर युद्धभूमिमा आयो ॥३७॥ इति श्रीमद्भागवते दशमस्कन्धे नेपाली भाषाटीकायां सप्तसप्ततिमोऽध्यायः ॥७७ ॥

रथाङ्गमद्भुतम् ॥ वधाय शाल्वस्य लयार्कसन्निभं बिभ्रद्बभौ सार्क इवोदयाचलः ॥ ३५ ॥ जहार तेनैव शिरः सकुण्डलं किरीटयुक्तं पुरुमायिनोहरिः ॥ वज्रेण वृत्रस्य यथा पुरन्दरो बभूव हाहेति वचस्तदा नृणाम् ॥३६॥तस्मिन्निपतिते पापे सौभे च गदया हते ॥ नेदुर्दुन्दुभयो राजन्दिवि देवगणेरिताः ॥ सखीनामपचितिं कुर्वन्दन्तवक्रो रुषाऽभ्यगात् ॥३७॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे सौभवधो नाम सप्तसप्ततितमोऽध्यायः॥७७॥

श्रीशुक उवाच ॥ शिशुपालस्य शाल्वस्य पौण्ड्रकस्यापि दुर्मतिः ॥ परलोकगतानां च कुर्वन्पारोक्ष्यसौहृदम् ॥ १ ॥ एकः पदातिः संक्रुद्धो गदापाणिः प्रकम्पयन् ॥ पद्भ्यामिमां महाराज महासत्त्वो व्यदृश्यत ॥ २ ॥ तं तथाऽऽयान्तमालोक्य गदामादाय सत्वरः ॥ अवप्लुत्य रथात्कृष्णः सिन्धुं वेलेव प्रत्ययात् ॥ ३ ॥ गदामुद्यम्य कारूषो मुकुन्दं प्राह दुर्मदः ॥ दिष्ट्या दिष्ट्या भवानद्य मम दृष्टिपथं गतः ॥ ४ ॥ त्वं मातुलेयो नः

(दन्तवक्र र विदूरथ-वध, तीर्थयात्रामा बलरामजीको हातबाट सूतको शिर काटिनु)—श्री शुकदेव भन्दछन्—हे महाराज ! आफना परलोकगत शिशुपाल, शाल्व र पौण्ड्रकादिको परोक्षमा भलो गर्नका लागि आएको महापराक्रमी एवं दुर्बुद्धि दन्तवक्र क्रोधित भएर हातमा गदा लिई पृथ्वी कम्पित पार्दै एक्लै र पैदल नै द्वारका पुरीनेर देखापर्‍यो ॥ १-२ ॥ त्यो आएको देखेर भगवान् कृष्ण हातमा गदा लिई तुरुन्त रथबाट हाम्फालेर किनारले समुद्रलाई रोके भैं त्यसलाई उहीं रोकिदिए ॥ ३ ॥ अनि करुष देशको अधिपति र परम श्रेष्ठ दन्तवक्रले गदा उठाई श्रीकृष्णसित भन्यो—'आज ठूलो भाग्यले तिमी मेरो साम्हुन्ने आएका छौ ॥ ४ ॥ अरे ए कृष्ण ! तिमी हाम्रो मामाका

---

दृष्टान्तर (शठसित शठता नगरी मान्दैन) यौटा महात्मासित केही धन थियो । जब ती हरिद्वार जान लागे तब यौटा फलामको डण्डामा त्यो धन भरेर यौटा साहुकहाँ राखिदिए र भने-म आएपछि लिएर जाउँला । एक दिन साहुले पत्नीसित भन्यो-"यो डण्डा निकै गर्न्हौ छ, यसमा केही छ कि ? खोले पनि डण्डा उठाएर हेरी र सत्व लाग्यो । अनि साहुले लोभमा डण्डालाई कोरेर सबै रुपियाँ झिकिलिए । जब महात्मा फर्केर आएर साहुसित आफ्नू लोहदण्ड माग्नलागे तब साहुले भने हजुरको लोहदण्ड त छुचुन्द्रोले खाइदियो !" महात्माले निकै प्रार्थना गरे, परन्तु साहु भन्दै रहे 'छुचुन्द्रोले खाइदियो ।' अनि यस दुष्टले मेरो धन खाइदियो, भन्ने कुरा महात्माले बुझे । महात्मा के गर्न सक्थे । नबोलिकन गए । केही महीनापछि महात्मा त्यही गाउँमा आएर केटाकेटी पढाउन लागे । साहुको एकमात्र छोरो पनि महात्मासित पढ्न लाग्यो । अनि महात्माले विचार गरे-अब त्यो दुष्टलाई दुष्टताको फल अवश्य चाख्न दिनुपर्दछ । तदनुसार एक दिन महात्माले साहुको छोरोलाई निकै हकारएर भने— हेरेस् ! आज तँ चौबाटो सम्म गएर फेरि यहाँ फर्केर आइनस भने तेरो कुशल छैन भन्ने जानेस् !' बेलुका छुट्टी भएपछि सबै बालकसित साहुको छोरो पनि घर जान हिंड्यो, तर अलि पर गएर मनमनै डराई (गुरुको भराइ अनुसार) चौबाटोमा

॥१८५

छोरा हौ । यसै निम्ति मर्नयोग्य थियनौ, तर अब तिमी मेरा मित्रहरूका घातक छौ र मलाई पनि मार्न तयार छौ । हे मन्द ! म तिमीलाई आफ्ना वज्रसमान गदाले मारि-दिन्छु ॥ ५ ॥ हे जड ! आफ्ना मित्रको कल्याण गर्नको निम्ति आफ्नै शरीरबाट उत्पन्न रोगको समान आफ्नू बन्धुरूप शत्रु तिमीलाई मारेर आफ्ना मित्रबाट उऋण हुन्छु ॥६॥ अनि माहुतेले हात्तीलाई उत्तेजित पारे झैं, भगवान्‌लाई कटु वचनले उत्तेजित पारेर उसले प्रभुको मस्तकमा गदा प्रहार गरिदियो र सिंहसमान भयङ्कर गर्जन गऱ्यो ॥ ७ ॥ तर यदुनन्दन कृष्ण त्यसको गदाले आहत भएर रणभूमिमा अलिकति पनि विचलित हुनुभएन र प्रभुले कौमोदकी गदाले दन्तवक्रको वक्षस्थलमा अघात गर्नुभयो ॥८॥ गदा लाग्नाले त्यसको हृदय फुट्यो, मुखबाट रगतको धारा बग्नलाग्यो र त्यो प्राणहीन भई, हात-खुट्टा फर्याँकेर धराशायी भयो ॥९॥ हे राजन् ! जसरी शिशुपाल मरेपछि त्यसको मुखबाट निस्केको

कृष्ण मित्रध्रुङ्मां जिघांसया ॥ अतस्त्वां गदया मन्द हनिष्ये वज्रकल्पया ॥ ५ ॥ तर्ह्यानृण्यमुपैम्यज्ञ मित्राणां मित्रवत्सलः ॥ बन्धुरूपमरिं हत्वा व्याधिं देहचरं यथा ॥ ६ ॥ एवं रूक्षैस्तुदन्वाक्यैः कृष्णं तोत्रैरिव द्विपम् ॥ गदयाऽताडयन्मूर्ध्नि सिंहवद्व्यनदच्च सः ॥ ७ ॥ गदयाऽभिहतोऽप्याजौ न चचाल यदूद्वहः ॥ कृष्णोऽपि तमहन्गुर्व्या कौमोदक्या स्तनान्तरे ॥ ८ ॥ गदानिर्भिन्नहृदय उद्वमन् रुधिरं मुखात् ॥ प्रसार्य केशबाह्वङ्घ्रीन्धरण्यां न्यपतद्व्यसुः ॥९॥ ततः सूक्ष्मतरं ज्योतिः कृष्णमाविशदद्भुतम् ॥ पश्यतां सर्वभूतानां यथा चैद्यवधे नृप ॥ १० ॥ विदूरथस्तु तद्भ्राता भ्रातृशोकपरिप्लुतः ॥ आगच्छदसिचर्मभ्यामुच्छ्वसंस्तज्जिघांसया ॥ ११ ॥ तस्य चापततः कृष्णश्चक्रेण क्षुरनेमिना ॥ शिरो जहार राजेन्द्र सकिरीटं सकुण्डलम् ॥ १२ ॥ एवं सौभं च शाल्वं च दन्तवक्रं सहानुजम् ॥ हत्वा दुर्विषहानन्यैरीडितः सुरमानवैः ॥ १३ ॥ मुनिभिः सिद्धगन्धर्व

ज्योति भगवान्‌मा लीन भएको थियो । त्यसै गरी दन्तवक्रको मुखबाट निस्केको सूक्ष्म ज्योति पनि सबैले देख्दा-देख्दै भगवान श्रीकृष्णमा विलीन भयो ॥ १० ॥ अनि दन्तवक्रको भाई विदूरथ भ्रातृशोकले व्याकुल भएर भगवान् कृष्णलाई मार्ने इच्छाले ढाल-तरवार लिई लामू सास फेर्दै दगुर्दै आइपुग्यो ॥११॥ हे राजेन्द्र ! त्यसलाई आएको देखेर भगवान् कृष्णले त्यसको पनि किरीट-कुण्डल मण्डित मस्तक छूरा समान तीक्ष्ण धार हुने सुदर्शन चक्रले काटेर छुट्याइदिए ॥ १२ ॥ यसरी सौभ, शाल्व र भाई समेत दन्तवक्र यी दुर्धर्ष शत्रुहरूलाई मारेर देवता र मनुष्यहरूद्वारा स्तूयमान र ऋषि, मुनि, सिद्ध, योगी, गन्धर्व, विद्याधर, सर्प, अप्सरा, पितृगण, यक्ष, किन्नर र चारणादि द्वारा विजयगान र पुष्पवर्षा

फर्केर आयो । महात्माले त्यसलाई चोटा कोठामा थुनिदिए । केटका अब सबै केटा आफ्नाफ्नू घर पुगे र साहुको छोरो घर पुगेन । अनि साहु छोरो खोज्न पाठशालातिर गयो । बाटोमा थाहा पायो–केटो चौबाटोसम्म आएको थियो । तर त्यहाँबाट कता गयो, त्यो कसैले पनि भन्न सकेन । साहुले पढाउने महात्मालाई सोधे र उनले भने—'मैले त सबै केटासित उसलाई पनि छुट्टी दिएको हुँ, यो कुराको साक्षी अब सबै बालकहरू छन् । अनि त्यो कहाँ गयो, मलाई केही थाहा छैन ।' साहुले थानामा रिपोर्ट लेखाए । थानाको अधिकारी जाँचमा गए । सबै केटाहरूसित खोज-पूछ गर्दा तिनले चौबाटोसम्म गएको कुरा बताए । महात्मासित सोधपुछ गर्दा उनले—'चौबाटोसम्म केटो गएको थियो भन्ने कुरा तपाईंलाई थाहा भइहाल्यो । हिजो मैले चोटा गिद्धले बालक लिएर आकाशमा उडेको देखेँ त्यो केटो साहुकै छोरो थियो कि !' साहुले भने–देउँदवन् हजुर ! ... गिद्धले पनि बालक लिएर उड्न सक्छ !' महात्माले अधिकारीसित भने–शठस्य शाठ्यं शठ एव वेत्ति नैवाशठो वेत्ति शठस्य शाठ्यम् । छछुन्दरी खादति लौहदण्डं कथं न श्येन हरतः कुमारः ।' ... सक्छ, अदालते मान्दैन । अब छुचुन्द्रोले लौहदण्ड खान सक्छ भने गिद्धले बालक लिएर उड्नु के असम्भव छ ? भने साहुले लौहदण्ड फर्काइदिए र महात्माले केटोलाई थुनेको कोठाबाट ... लिएर साहुको जिम्मा लगाइदिए ।

अभिवर्षित भगवान् कृष्णले प्रमुख पार्षदका साथै राम्ररी सज्जित द्वारकापुरीमा प्रवेश गरे ॥ १३ ॥ १४ ॥ योगेश्वर तथा जगत्पति भगवान् कृष्ण यसै गरी अनेक लीलाहरू गर्दै रहन्थे, तर पशुहरू अर्थात् अज्ञानीका दृष्टिमा ती कहीं हारेका र कतै जितेका देखिन्थे ॥ १५ ॥ १६ ॥ एकपल्ट बलरामले कौरव र पाण्डवको संग्रामको तयारी सुनर दुवैका पक्षैको पनि पक्ष नलिई मध्यस्थ हुनाले गर्दा तीर्थस्नानको निहुँ गरी द्वारकाबाट निस्कनुभयो ॥ १७ ॥ त्यहाँबाट गएर उनले प्रभासक्षेत्रमा स्नान गरेर देवता, ऋषि र मनुष्यलाई तृप्त पारिसकेपछि विप्रगणका साथै प्रवाहाभिमुख भई सरस्वती नदीको किनारै-किनार हिँड्न लागे ॥१८॥ त्यहाँबाट पृथुदक, विन्दुसर, त्रितकूप, सुदर्शन, विशाल, ब्रह्मतीर्थ, चक्रतीर्थ तथा पूर्ववाहिनी सरस्वती आदि तीर्थमा गए ॥१९॥ हे भारत ! यमुना र गङ्गाका तटवर्ती तीर्थहरूमा डुल्दै ती नैमिषारण्य पुगे, त्यहाँ अनेक ऋषिहरू यज्ञ गरिरहेका थिए ॥ २० ॥ बलरामलाई देखेर दीर्घकालीन यज्ञको अनुष्ठान गर्ने भएका ती ऋषिहरूले आफाफ्ना आसनबाट उठेर उनको यथायोग्य अभिनन्दन, सत्कार र पूजा गरे ॥ २१ ॥ साथै सबै

विद्याधरमहोरगैः ॥ अप्सरोभिः पितृगणैर्यक्षैः किन्नरचारणैः ॥ १४ ॥ उपगीयमानविजयः कुसुमैरभिवर्षितः ॥ वृतश्च वृष्णिप्रवरैर्विवेशालंकृतां पुरीम् ॥ १५ ॥ एवं योगेश्वरः कृष्णो भगवाञ्जगदीश्वरः ॥ ईयते पशुदृष्टीनां निर्जितो जयतीति सः ॥ १६ ॥ श्रुत्वा युद्धोद्यमं रामः कुरूणां सह पाण्डवैः ॥ तीर्थाभिषेकव्याजेन मध्यस्थः प्रययौ किल ॥ १७ ॥ स्नात्वा प्रभासे सन्तर्प्य देवर्षिपितृमानवान् ॥ सरस्वतीं प्रतिस्रोतं ययौ ब्राह्मणसंवृतः ॥ १८ ॥ पृथूदकं बिन्दुसरस्त्रितकूपं सुदर्शनम् ॥ विशालं ब्रह्मतीर्थं च चक्रं प्राचीं सरस्वतीम् ॥ १९ ॥ यमुनामनु यान्येव गङ्गामनु च भारत ॥ जगाम नैमिषं यत्र ऋषयः सत्रमासते ॥ २० ॥ तमागतमभिप्रेत्य मुनयो दीर्घसत्रिणः ॥ अभिनन्द्य यथान्यायं प्रणम्योत्थाय चार्चयन् ॥ २१ ॥ सोऽर्चितः सपरीवारः कृतासनपरिग्रहः ॥ रोमहर्षणमासीनं महर्षेः शिष्यमैक्षत ॥ २२ ॥ अप्रत्युत्थायिनं सूतमकृतप्रह्वणाञ्जलिम् ॥ अध्यासीनं च तान्विप्राँश्चुकोपोद्वीक्ष्य माधवः ॥ २३ ॥ यस्मादसाविमान्विप्रानध्यास्ते प्रतिलोमजः ॥ धर्मपालाँस्तथैवास्मान्वधमर्हति दुर्मतिः ॥ २४ ॥ ऋषेर्भगवतो भूत्वा शिष्योऽधीत्य बहूनि च ॥ सेतिहासपुराणानि धर्मशास्त्राणि सर्वशः ॥ २५ ॥ अदान्तस्याविनीतस्य वृथा पण्डितमानिनः ॥ न गुणाय भवन्ति स्म नटस्येवाजितात्मनः ॥ २६ ॥ एतदर्थो हि लोकेऽस्मिन्नवतारो मया कृतः ॥ वध्या मे धर्मध्वजिनास्ते

उनीहरूद्वारा राम्ररी सम्मानित भई बलरामजी योग्य आसनमा आसीन भए । उसै बेला उनको दृष्टि व्यासासनमा बसेका महर्षि व्यासका सुयोग्य शिष्य रोमहर्षण माथि पर्‍यो ॥२२॥ यो देखेर—सूत जातिमा उत्पन्न भएर पनि रोमहर्षण बलराम आउँदा न आसनबाट उठे, न हात जोरेर प्रणाम नै गरे एवं ब्राह्मणहरू भन्दा पनि उच्चासनमा बसिरहेका छन्—यसले बलभद्रलाई रिस उठ्यो ॥ २३ ॥ उनले भने—यो रोमहर्षण प्रतिलोम जातिमा भएर पनि यी ब्राह्मणवर्ग र धर्मरक्षक हामीभन्दा पनि उच्चासनमा बसेको छ, यसैले यो दुष्ट वध-योग्य छ ॥२४॥ मुनिवर व्यासको शिष्य भएर यसले अनेक पुराण, इतिहास र धर्म-शास्त्र पढेको छ, तर त्यो अजितेन्द्रिय, अशिष्ट र स्वयं आफूलाई ठूलो पण्डित मान्ने भएको अजितात्मा सूतलाई ती शास्त्रहरूले उसै केही लाभ भएन, जस्तै नटका सबै चेष्टा केवल देखाउनका लागि हुन्छन् ॥ २५ ॥ २६ ॥ धर्मका चिह्न

धारण गर्ने जो जन धर्मानुसार आचरण गर्दैनन्, ती अझ बर्ता पापी हुन्छन् । अतः ती मेरा वध योग्य हुन्' ॥ २७ ॥ हे राजन् ! यद्यपि भगवान् बलराम दुष्टजनलाई मार्ने विचार गर्दैनथे, तापनि भावीवश उनले यति कुरा भनेर कुशको टुप्पाले नै सूतलाई तत्काल मारिदिए ॥ २८ ॥ सूतको मृत्यु भएको देखेर समस्त मुनिगण हाहाकार गर्न लागे र श्रीसङ्कर्षणसित विन्ती गरे—'हे प्रभो ! हजुरले यो ठूलो अनर्थ गरिदिनु भयो ॥ २९ ॥ हे यदुनन्दन ! इनलाई हामीले नै यस ब्रह्मासनमा बसाएका थियौं । जबसम्म हाम्रो यज्ञ समाप्त हुन्न, त्यस बेलासम्मको निम्ति शारीरिक कष्टहीन आयु पनि दिएका थियौं । हजुरले नजानेर ब्रह्महत्या समान यो घोर पाप गर्नुभयो । हजुर योगेश्वर हुनाले वेद पनि हजुरमाथि शासन गर्दैनन् ॥ ३० ॥ ३१ ॥ तापनि हे लोकपावन ! यदि हजुर कसैको आदेशमा बाँधिएर यो ब्रह्महत्याको प्रायश्चित्त गर्नुहुन्छ भने यसले संसारलाई शिक्षा मिल्नेछ ॥ ३२ ॥ बलरामले आज्ञा भयो—म जनहितको निम्ति नै यस हत्याको प्रायश्चित्त गर्नेछु । यसको निम्ति जे जस्तो श्रेष्ठ प्रायश्चित्त छ, मलाई भन्नुहवस् ॥ ३३ ॥ यस सूतको निम्ति

हि पातकिनोऽधिकाः ॥ २७ ॥ एतावदुक्त्वा भगवान्निवृत्तोऽसद्वधादपि ॥ भावित्वात्तं कुशाग्रेण करस्थेनाहनत्प्रभुः ॥ २८ ॥ हाहेति वादिनः सर्वे मुनयः खिन्नमानसाः ॥ ऊचुः सङ्कर्षणं देवमधर्मस्ते कृतः प्रभो ॥ २९ ॥ अस्य ब्रह्मासनं दत्तमस्माभिर्यदुनन्दन ॥ आयुश्चात्माक्लमं तावद्यावत्सत्रं समाप्यते ॥ ३० ॥ अजानतैवाचरितस्त्वया ब्रह्मवधो यथा ॥ योगेश्वरस्य भवतो नाम्नायोऽपि नियामकः ॥ ३१ ॥ यद्येतद्ब्रह्महत्यायाः पावनं लोकपावन ॥ चरिष्यति भवाँल्लोकसंग्रहोऽनन्यचोदितः ॥ ३२ ॥ श्रीभगवानुवाच ॥ करिष्ये वधनिर्वेशं लोकानुग्रहकाम्यया ॥ नियमः प्रथमे कल्पे यावान्स तु विधीयताम् ॥ ३३ ॥ दीर्घमायुर्बतैतस्य सत्त्वमिन्द्रियमेव च ॥ आशासितं यत्तद्ब्रूत साधये योगमायया ॥ ३४ ॥ ऋषय ऊचुः ॥ अस्त्रस्य तव वीर्यस्य मृत्योरस्माकमेव च ॥ यथा भवेद्वचः सत्यं तथा राम विधीयताम् ॥ ३५ ॥ श्रीभगवानुवाच ॥ आत्मा वै पुत्र उत्पन्न इति वेदानुशासनम् ॥ तस्मादस्य भवेद्वक्ता आयुरिन्द्रियसत्त्ववान् ॥ ३६ ॥ किं वा कामो मुनिश्रेष्ठा ब्रूताहं करवाण्यथ ॥ अजानतस्त्वपचितिं यथा मे चिन्त्यतां बुधाः ॥३७॥ ऋषय ऊचुः ॥ इल्वलस्य सुतो घोरो बल्वलो नाम दानवः ॥ स दूषयति नः सत्रमेत्य पर्वणि पर्वणि ॥ ३८ ॥ तं पापं जहि दाशार्ह तन्नः शुश्रूषणं परम् ॥ पूयशोणितविण्मूत्रसुरामांसाभिवर्षिणम् ॥३९॥ ततश्च भारतं वर्षं परीत्य सुसमाहितः ॥ चरित्वा द्वादश

दीर्घ आयु, बल र इन्द्रियहरूको अक्षुण्णता आदि जे सबैजना भन्नुहुन्छ, म योगबलले तुरुन्त दिन सक्छु' ॥ ३४ ॥ ऋषिहरू भन्छन्–हे बलराम ! अब कुनै यस्तो उपाय गर्नोस् जसले हजुरको शस्त्र, पराक्रम र यसको मृत्यु व्यर्थ नहोस् र हाम्रो वचन पनि असत्य नहोस् ॥ ३५ ॥ श्रीबलराम भन्नुहुन्छ–वेदमा कहिएको छ–'पिताको आत्मानै पुत्ररूपमा उत्पन्न हुन्छ' अतः यसको छोरो यही स्थानमा वक्ता बनोस् र दीर्घ आयु, इन्द्रिय र बल-सम्पन्न होस् ॥३६॥ हे मुनिश्रेष्ठ ! यो बाहेक पनि तपाईंहरूको अरु जे इच्छा छ, भन्नुहवस्, म पूर्ण गर्नेछु । हे विद्वज्जन ! अज्ञानमा गरिएका पापको प्रायश्चित्त के छ ? त्यो पनि विचार गरेर भन्नु हवस् ॥ ३७ ॥ उनीहरूले भने–हे भगवन् ! इल्वल दानवको पुत्र बल्वल नामक घोर राक्षस छ । त्यो प्रत्येक पर्वमा आएर हाम्रो यज्ञ दूषित पारिदिन्छ ॥ ३८ ॥ हे यदुनन्दन ! पीप, रगत, विष्ठा, मूत्र, मद्य र मासुको वर्षा गर्ने त्यो अघोर पापी

राक्षसलाई मारिदिनोस् यही हाम्रो ठूलो सेवा हुनेछ ॥ ३९ ॥ अनि बाह्र महीनासम्म समाहित चित्तले विविध तीर्थहरूमा स्नान गर्दै भारतवर्षको परिक्रमा गरेपछि हजुर पापमुक्त ! बन्नु हुनेछ ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपाली भाषाटीकायामष्टसप्ततितमोऽध्यायः ॥७८॥

( बलरामजीको तीर्थयात्रा ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! पर्वकाल आएपछि धूलोको वर्षा गर्दै प्रचण्ड पवन चल्न लाग्यो, त्यसले चारैतिर दुर्गन्ध फैलियो ॥ १ ॥ अनि यज्ञशालामा बल्वलले प्याँकेको मल-मूत्रादि अपवित्र वस्तु झर्न लागे र एकैछिनपछि त्यो भयङ्कर राक्षस हातमा त्रिशूल लिएको देखियो ॥ २ ॥ तताएको तामा झैं अरुण वर्णका केश, दाह्री जुँगा र बाङ्गा दाह्रा, भ्रुकुटिको कारण डरलाग्दो, काजलको थुप्रो झैं अत्यन्त कृष्णवर्ण र ठूलो देह हुने त्यो दैत्यलाई देखेर बलरामजीले शत्रुसेनाको संहार गर्ने आफ्नू मुसल र दैत्यलाई दलित पार्ने हलोको स्मरण गर्नु भयो र ती तुरुन्त उपस्थित भए ॥ ३-४ ॥ अनि बलरामले त्यो आकाशचारी र विप्रद्रोही बल्वललाई आफ्नू हलोको

मासांस्तीर्थस्नायी विशुद्ध्यसे॥४०॥इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे बलदेवचरित्रे बल्वलवधोपक्रमो नामाष्टसप्ततितमोऽध्यायः ॥७८॥

श्रीशुक उवाच ॥ ततः पर्वण्युपावृत्ते प्रचण्डः पांसुवर्षणः ॥ भीमो वायुरभूद्राजन्पूयगन्धस्तु सर्वशः ॥ १ ॥ ततोऽमेध्यमयं वर्षं बल्वलेन विनिर्मितम् ॥ अभवद्यज्ञशालायां सोऽन्वदृश्यत शूलधृक् ॥ २ ॥ तं विलोक्य बृहत्कायं भिन्नाञ्जनचयोपमम् ॥ तप्तताम्रशिखाश्मश्रुं दंष्ट्रोग्रभ्रुकुटीमुखम् ॥ ३ ॥ सस्मार मुसलं रामः परसैन्यविदारणम् ॥ हलं च दैत्यदमनं ते तूर्णमुपतस्थतुः ॥ ४ ॥ तमाकृष्य हलाग्रेण बल्वलं गगनेचरम् ॥ मुसलेनाहनत्क्रुद्धो मूर्ध्नि ब्रह्मद्रुहं बलः ॥ ५ ॥ सोऽपतद्भुवि निर्भिन्नललाटोऽसृक्समुत्सृजन् ॥ मुञ्चन्नार्तस्वरं शैलो यथा वज्रहतोऽरुणः ॥ ६ ॥ संस्तुत्य मुनयो रामं प्रयुज्यावितथाशिषः ॥ अभ्यषिञ्चन्महाभागा वृत्रघ्नं विबुधा यथा ॥ ७ ॥ वैजयन्तीं ददुर्मालां श्रीधामाम्लानपङ्कजाम् ॥ रामाय वाससी दिव्ये दिव्यान्याभरणानि च ॥ ८ ॥ अथ तैरभ्यनुज्ञातः कौशिकीमेत्य ब्राह्मणैः ॥ स्नात्वा सरोवरमगाद्यतः सरयुरास्रवत् ॥ ९ ॥ अनुस्रोतेन सरयूं प्रयागमुपगम्य सः ॥ स्नात्वा सन्तर्प्य देवादीञ्जगाम पुलहाश्रमम् ॥ १० ॥ गोमतीं गण्डकीं स्नात्वा विपाशां शोण आप्लुतः ॥ गयाँ गत्वा पितॄनिष्ट्वा गङ्गासागरसङ्गमे ॥ १० ॥ उपस्पृश्य महेन्द्राद्रौ रामं दृष्ट्वाऽभिवाद्य च ॥ सप्तगोदावरीं वेणां

अग्रभागले तानेर क्रोधित भई त्यसको शिरमा मुसल बजार्नु भयो ॥ ५ ॥ मुसलको चोटले त्यसको टाउको फुटी रगत बग्न लाग्यो र त्यो कष्टपूर्ण शब्द गर्दै वज्रको प्रहारले गेरुको पर्वत ढले जस्तै त्यहीं पछारियो ॥ ६ ॥ महर्षीहरूले बलरामजीको प्रशंसा गरेर आशीर्वाद दिए र उनलाई त्यसै प्रकार स्नान गराए, जसरी बलवान् वृत्रासुर मारिएपछि इन्द्रलाई देवताहरूले स्नान गराएका थिए ॥ ७ ॥ महर्षिहरूले बलरामलाई कहिल्यै नओइलाउने, सधैं ताजा रहने कमलको वैजयन्ती माला दिए। उनले दिव्य वस्त्र र दिव्य आभूषण पनि दिए ॥ ८ ॥ अनि ऋषिहरूको आज्ञानुसार ब्राह्मणहरू सहित बलरामजी कौशिकी नदीमा आए। त्यहाँ सानन्द नुहाई मानस सरोवर जान हिंडे, जहाँबाट सरयू निस्केकी छन् ॥ ९ ॥ त्यसपछि सरयूको प्रवाह साथैं ती प्रयाग पुगे। त्यहाँ त्रिवेणी स्नान गरेर उनले विविध देवताहरूलाई तृप्त पारे र पुलह ऋषिको आश्रम ( हरिक्षेत्र )

गए ॥ १० ॥ अनि गोमती, गण्डकी र विपाशामा स्नान गरेर उनले शोणभद्रमा नुहाए। गयामा पुगेर पितृहरूको पूजा श्राद्ध गरेर र त्यहाँबाट हिंडेर गङ्गासागर संगममा स्नान गरेर महेन्द्र पर्वतमा परशुरामको दर्शन र प्रणाम गरे। अनि सप्तगोदावरी, वेणी र पम्पाबाट सरासर भीमरथी पुगे ॥ ११ ॥ १२ ॥ त्यसपछि सर्वसमर्थ भगवान् बलराम स्वामिकार्तिकेयको दर्शन गरेर शिवजीको निवास स्थान श्रीशैल पुगे र द्रविड देशमा परम पुण्यप्रद वेङ्कट-पर्वतको पनि दर्शन गरे ॥ १३ ॥ त्यसपछि ती संकर्षण कामकोष्णी काञ्चीपुरी र उत्तम नदी कावेरीबाट परम पुण्यप्रद श्रीरंग नामका स्थानमा गए, जहाँ भगवान् नित्य विद्यमान रहन्छन् ॥ १४ ॥ त्यसपछि ऋषभ पर्वत तथा हरिक्षेत्र र मथुरा हुँदै महापातक नष्ट पार्ने सेतुबन्ध तीर्थ पुगे ॥ १५ ॥ त्यहाँ बलरामजीले दस हजार गाई ब्राह्मणहरूलाई दान दिए। त्यहाँबाट कृतमाला र ताम्रपर्णीमा नुहाई कुलाचल अर्थात् मलयपर्वतमा पुगे ॥ १६ ॥ त्यस पर्वतमा विराजमान अगस्त्य ऋषिलाई नमस्कार तथा अभिवादन गरेर बलरामले तिनको आशीर्वाद प्राप्त गरे। अनि दक्षिण समुद्र तटमा

पम्पां भीमरथीं ततः ॥ १२ ॥ स्कन्दं दृष्ट्वा ययौ रामः श्रीशैलं गिरिशालयम् ॥ द्रविडेषु महापुण्यं दृष्ट्वाऽद्रिं वेङ्कटं प्रभुः ॥ १३ ॥ कामकोष्णीं पुरीं काञ्चीं कावेरीं च सरिद्वराम् ॥ श्रीरङ्गाख्यं महापुण्यं यत्र संनिहितो हरिः ॥ १४ ॥ ऋषभाद्रिं हरेः क्षेत्रं दक्षिणां मथुरां तथा ॥ सामुद्रं सेतुमगमन्महापातकनाशनम् ॥ १५ ॥ तत्रायुतमदाद्धेनूर्ब्राह्मणेभ्यो हलायुधः ॥ कृतमालां ताम्रपर्णीं मलयं च कुलाचलम् ॥ १६ ॥ तत्रागस्त्यं समासीनं नमस्कृत्याभिवाद्य च ॥ योजितस्तेन चाशीर्भिरनुज्ञातो गतोऽर्णवम् ॥ दक्षिणं तत्र कन्याख्यां दुर्गां देवीं ददर्श सः ॥ १७ ॥ ततः फाल्गुनमासाद्य पञ्चाप्सरसमुत्तमम् ॥ विष्णुः सन्निहितो यत्र स्नानस्वाऽस्पर्शद्गवायुतम् ॥ १८ ॥ ततोऽभिव्रज्य भगवान्केरलांस्तु त्रिगर्तकान् ॥ गोकर्णाख्यं शिवक्षेत्रं सान्निध्यं यत्र धूर्जटेः ॥१९॥ आर्यां द्वैपायनीं दृष्ट्वा शूर्पारकमगाद्बलः ॥ तापीं पयोष्णीं निर्विन्ध्यामुपस्पृश्याथ दण्डकम् ॥ २० ॥ प्रविश्य रेवामगमद्यत्र माहिष्मती पुरी ॥ मनुतीर्थमुपस्पृश्य प्रभासं पुनरागमत् ॥ २१ ॥ श्रुत्वा द्विजैः कथ्यमानं कुरुपाण्डवसंयुगे ॥ सर्वराजन्यनिधनं भारं मेने हृतं भुवः ॥ २२ ॥ स भीमदुर्योधनयोर्गदाभ्यां युद्ध्यतोर्मृधे ॥ वारयिष्यन्विनशनं जगाम यदुनन्दनः ॥ २३ ॥ युधिष्ठिरस्तु तं दृष्ट्वा यमौ कृष्णार्जुनावपि ॥ अभिवाद्याभवंस्तूष्णीं किं विवक्षुरिहागतः ॥ २४ ॥ गदापाणी उभौ दृष्ट्वा संरब्धौ विजयैषिणौ ॥ मण्डलानि विचित्राणि

गएर कन्याकुमारी दुर्गादेवीको दर्शन गरे ॥ १७ ॥ अनि फल्गुतीर्थमा पुगे जहाँ सदा भगवान्को उपस्थिति रहन्छ त्यो पञ्चाप्सरस सरोवरमा स्नान गरेर उनले दस हजार गाई दान गरे ॥ १८ ॥ त्यसपछि केरल र त्रिगर्त आदि देशहरूमा डुल्दै ती गोकर्ण नामक शिवक्षेत्रमा पुगे, त्यहाँ भगवान् शङ्कर सर्वदा विद्यमान रहन्छन् ॥ १९ ॥ त्यहाँबाट उनी द्वीप निवासिनी आर्या देवीको दर्शन गरेर शूर्पारक क्षेत्र गए। अनि तापी, पयोष्णी, निर्विन्ध्या नदीहरूमा स्नान गरेर दण्डकारण्यमा प्रविष्ट भए। अनि नर्मदा नदीमा पुगे जहाँ माहिष्मतीपुरी छ र मनुतीर्थमा स्नान गरे। अनि प्रभास क्षेत्रमा फर्केर आए ॥ २० ॥ २१ ॥ त्यहाँ ब्राह्मणको मुखबाट कौरव र पाण्डवहरूको युद्धमा सबै क्षत्रियहरूको संहार सुनेर उनले पृथ्वीको भारी हलुङ्गो भयो भन्ने जाने ॥ २२ ॥ अनि भीमसेन र दुर्योधन रणभूमिमा परस्पर गदायुद्ध गर्दैछन् भन्ने सुनेर तिनलाई युद्धबाट विरत पार्न कुरुक्षेत्र

गए ॥ २३ ॥ बलरामजी आएका देखेर महाराज युधिष्ठिर, नकुल, सहदेव, कृष्ण र विजयले प्रणाम गरे र अब के भन्दछन् भन्ने आशङ्को निम्ति केही नबोली ती सबै जना मौन उभिइरहे ॥ २४ ॥ बलरामले भीमसेन तथा दुर्योधन हातमा गदा लिएर पौंटाले अर्कोलाई जित्नको निम्ति सान्है रिसाई थरि-थरिका युक्ति गरिरहेका देखेर भन्नुभयो—'हे राजा दुर्योधन ! हे भीमसेन ! तिमी दुवै वीर समान बलशाली छौ । म तिमी दुवैमा भीमसेनलाई बलमा र दुर्योधनलाई गदायुद्धको कौशलमा श्रेष्ठ मान्दछु ॥२५॥ ॥२६॥ अतः तिमी समान बल हुने वीरमा कुनै पौंटाको जय वा पराजय होस्—यस्तो म देखिरहेको छैन । अतः यस व्यर्थको युद्धबाट तिमी दुवै निवृत्त होओ' ॥ २७ ॥ हे राजन् ! बलरामको सल्लाह दुवैका लागि हितकारी थियो, तर पहिलेका कटु भाषण र दुर्व्यवहारहरू सम्झेर ती दुवैयोद्धामा परस्पर घोर शत्रुता भइसकेको थियो । अतः तिनले उनको अनुरोध मानेनन् ॥२८॥ दैवको त्यस्तै इच्छा जानेर बलराम द्वारकापुरी फर्के । त्यहाँ उग्रसेन आदि ज्ञाति-बन्धुहरूले अगाडि आएर उनको स्वागत गरे ॥ २९ ॥ त्यहाँबाट ती फेरि

चरन्ताविदमब्रवीत् ॥ २५ ॥ युवां तुल्यबलौ वीरौ हे राजन् हे वृकोदर ॥ एकं प्राणाधिकं मन्ये उतैकं शिक्षयाऽधिकम् ॥ २६ ॥ तस्मादेकतरस्येह
युवयोः समवीर्ययोः ॥ न लक्ष्यते जयोऽन्यो वा विरमत्वफलो रणः ॥ २७ ॥ न तद्वाक्यं जगृहतुर्बद्धवैरौ नृपार्थवत् ॥ अनुस्मरन्तावन्योन्यं दुरुक्तं
दुष्कृतानि च ॥२८॥ दिष्टं तदनुमन्वानो रामो द्वारवतीं ययौ ॥ उग्रसेनादिभिः प्रीतैर्ज्ञातिभिः समुपागतः ॥२९॥ तं पुनर्नैमिषं प्राप्तमृषयोऽयाजय-
न्मुदा ॥ क्रत्वङ्गं क्रतुभिः सर्वैर्निवृत्ताखिलविग्रहम् ॥ ३० ॥ तेभ्यो विशुद्धविज्ञानं भगवान्व्यतरद्विभुः ॥ येनैवात्मन्यदो विश्वमात्मानं विश्वगं विदुः
॥३१॥ स्वपत्न्याऽवभृथस्नातो ज्ञातिबन्धुसुहृद्वृतः ॥ रेजे स्वज्योत्स्नयेवेन्दुः सुवासाः सुष्ठ्वलंकृतः॥३२॥ईदृग्विधान्यसंख्यानि बलस्य बलशालिनः ॥
अनन्तस्याप्रमेय मायामर्त्यस्य सन्ति हि ॥३३॥ योऽनुस्मरेत रामस्य कर्माण्यद्भुतकर्मणः ॥ सायं प्रातरनन्तस्य विष्णोः स दयितो भवेत् ॥ ३४ ॥
इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे बलदेवतीर्थयात्रानिरूपणं नामैकोनाशीतितमोऽध्यायः ॥ ७९ ॥

राजोवाच ॥ भगवन्यानि चान्यानि मुकुन्दस्य महात्मनः ॥ वीर्याण्यनन्तवीर्यस्य श्रोतुमिच्छामहे प्रभो ॥ १ ॥ को नु श्रुत्वाऽसकृद्ब्रह्म-

नैमिषारन्य गए । सबैसित विरोध भावले रहित ती यज्ञमूर्ति भगवान् बलराम द्वारा मुनिहरूले आनन्दपूर्वक सबै प्रकारका यज्ञ गराए ॥ ३० ॥ श्री बलरामले तिनलाई विशुद्ध विज्ञानको उपदेश दिए, जसद्वारा ती ऋषिहरूले बुझे—यस आत्मामा सारा जगत् र सारा जगत्मा यो आत्मा व्याप्त छ ॥३१॥ अनि आफ्नी पत्नी रेवती सहित यज्ञान्तको अवभृथ स्नान गरेर वस्त्र र आभूषणादिले अलंकृत भई आफ्ना ज्ञाति-बन्धुहरूले घेरिएका बलराम यस्ता सुशोभित भए, जस्तै—चन्द्रिकासित चन्द्रदेवको शोभा हुन्छ ॥ ३२ ॥ महाबलवान्, अनन्त, अप्रमेय र मायामानुष रूपधारी बलरामका यस्ता अनेक चरित्र छन् ॥ ३३ ॥ अद्भुत कर्म गर्ने शेषावतार बलरामका यी विचित्र चरित्रहरू जुन व्यक्तिले बिहान र बेलुका स्मरण गर्दछ, त्यो विष्णु भगवान्को प्रियभक्त बन्दछ ॥ ३४ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे नेपाली भाषाटीकायामेकोनाशीतितमोऽध्यायः । ७९ ॥

( सुदामाको स्वागत-सत्कार ) परीक्षित्ले भने—हे भगवन् ! हे प्रभो ! अनन्तवीर्य महात्मा कृष्णले पराक्रमका अन्य जो-जो कार्य गरे, त्यो पनि सुन्ने मेरो प्रबल इच्छा छ ॥ १ ॥

॥ २ ॥ जुन वाणीले मनुष्य भगवान्‌को गुण-गान गर्दछ, वास्तवमा त्यही वाणी सफल छ । जुन हात भगवान्‌को निम्ति काम गर्दछन्, तिनै हात सफल छन् । जुन मन विश्वमा विद्यमान भगवान्‌को स्मरण गर्दछ, उही मन सफल हो । जुन कान भगवान्‌का पवित्र कथाहरू सुन्दछन् तिनै कान सार्थक हुन्छन् ॥ ३ ॥ जुन मस्तक प्रभुका चल-अचल दुवै थरि मूर्तिका समक्ष न्धुरन्छ, त्यही मस्तक सफल छ । जुन नेत्र भगवद्विग्रहको दर्शन गर्दछन्, तिनै नेत्र सफल हुन् । जुन अङ्ग भगवान् वा उनका भक्तगणको चरणोदक सेवन गर्दछन्, उनै अङ्ग सफल हुन्छन् ॥४॥ सूतजी भन्दछन्–राजा परीक्षितले यसरी सोधेपछि शुकदेवजीका मन भगवान् कृष्णमा लीन भयो र ती भन्नलागे ॥ ५ ॥ शुकदेवजी भन्दछन्–हे राजन् !

न्नुत्तमश्लोकसत्थाः ॥ विरमेत विशेषज्ञो विषण्णः काममार्गणैः ॥ २ ॥ सा वाग्यया तस्य गुणान् गृणीते करौ च तत्कर्मकरौ मनश्च ॥ स्मरेद्वसन्तं स्थिरजङ्गमेषु शृणोति तत्पुण्यकथाः स कर्णः ॥ ३ ॥ शिरस्तु तस्योभयलिङ्गमानमेत्तदेव यत्पश्यति तद्धि चक्षुः ॥ अङ्गानि विष्णोरथ तज्जनानां पादोदकं यानि भजन्ति नित्यम् ॥ ४ ॥ सूत उवाच ॥ विष्णुरातेन सम्पृष्टो भगवान्बादरायणिः ॥ वासुदेवे भगवति निमग्नहृदयोऽब्रवीत् ॥ ५ ॥ श्रीशुक उवाच ॥ कृष्णस्यासीत्सखा कश्चिद् ब्राह्मणो ब्रह्मवित्तमः ॥ विरक्त इन्द्रियार्थेषु प्रशान्तात्मा जितेन्द्रियः ॥ ६ ॥ यदृच्छयोपपन्नेन वर्तमानो गृहाश्रमी ॥ तस्य भार्या कुचैलस्य क्षुत्क्षामा च तथाविधा ॥ ७ ॥ पतिव्रता पतिं प्राह म्लायता वदनेन स ॥ दरिद्रा सीदमाना सा वेपमानाऽभिगम्य च ॥ ८ ॥ ननु ब्रह्मन्भगवतः सखा साक्षाच्छ्रियः पतिः ॥ ब्रह्मण्यश्च शरण्यश्च भगवान्सात्वतर्षभः ॥ ९ ॥ तमुपैहि महाभाग साधूनां च परायणम् ॥ दास्यति द्रविणं भूरि सीदते ते कुटुम्बिने ॥१०॥ आस्तेऽधुना द्वारवत्यां भोजवृष्ण्यन्धकेश्वरः ॥

ब्राह्मण सुदामा श्रीकृष्णका परम मित्र थिए । ती सुदामा सार्है विरक्त शान्तचित्त र जितेन्द्रिय थिए ॥ ६ ॥ ती गृहस्थ हुनाले प्रारब्धवश जे जति पाइन्थ्यो उसैमा निर्वाह गर्दथे । तिनका लुगा फाटेका र पुराना हुन्थे र उनकी स्त्री पनि उनी जस्तै भोकले कृश रहेकिन् ॥ ७ ॥ एक दिन ती दुःखिनी, पतिव्रता ब्राह्मणी भयले थर-थर काम्दै पतिको नगीचै गएर मलीन अनुहारले भनिन्‌ ॥८॥ हे ब्रह्मन् ! हजुरका मित्र साक्षात् लक्ष्मीपति कृष्ण निकै ब्राह्मणका भक्त र शरणागतवत्सल छन् ॥ ९ ॥ ती साधुजनका एकमात्र गति छन् ।

---

* कवि नरोत्तमदास भन्दछन्–जसका भालमा [illegible] तिलक छ, कानमा कुण्डल, शिरमा मणिजडित मुकुट छ, पीताम्बर ओढेका, घाँटीमा वैजयन्ती माला छ, चार बाहुमा शङ्ख, चक्र, गदा, पद्म धारण गरेका छन् । सान्दीपनी गुरुकहाँ सँगै पढेका सखा [illegible] । उनै अनाथका नाथ द्वारकामा निवास गर्दछन् । आफ्नी पत्नीले भनेको सुनी सुदामाले भने–जो सम्पूर्ण संसारका [illegible] [illegible] तपस्याले परलोक सपार्छन्, तिनलाई [illegible] । मेरो हृदयमा त हरिको निवास छ, यसको [illegible] परीक्षा पनि भइसकेको छ [illegible] [illegible] दीनदयालुको कस्तो चाला छ, ती दीनजनको [illegible] सदैव गर्दछन् । द्रौपदी, गजराज, प्रह्लादको पुकारमा विलम्ब लगाएका थिएनन् ! [illegible] राजाको चाकरी पनि किन गर्नुपर्थ्यो । केवल उनका पाउको स्मरण गर्नसके संसारमा केही पनि दुर्लभ वस्तु छैन । मेरो [illegible] ।

हजुर उनैकहाँ जानुहवस् । हजुर गृहस्थी हुनाले सार्है दुःखी रहनु हुन्छ । उनले हजुरलाई यथेच्छ धन दिन्छन् ॥ १० ॥ मैले सुनेकी छु–हिजो–आज ती द्वारका पुरीमा भोज, अन्धक र वृष्णीवंशीय यादवहरूका स्वामी छन् । आफना चरण-कमलको स्मरण गर्ने व्यक्तिलाई ती आफ्नू शरीर पनि दिन मान्हो मान्दैनन् ॥ ११ ॥ अनि आफना भक्तलाई उसको इच्छा नभए पनि अर्थ र काम दिन्छन भने आश्चर्यको कुरै छैन ।' यसरी स्त्रीले बारम्बार प्रार्थना गरेपछि ती विप्रवरले आफ्नू मनमनै विचार गरे–त्यहाँ जानाले सबैभन्दा ठूलो लाभ यो हुनेछ कि भगवान् कृष्णको दर्शन पाइने छ । अनि उनले द्वारका जाने निश्चय गरे र पत्नीलाई भने—'हे कल्याणि ! घरमा केही लैजाने सौगात छ भने ल्याऊ' ॥ १२॥१३ ॥

स्मरतः पादकमलमात्मानमपि यच्छति ॥ किं न्वर्थकामान्भजतो नात्यभीष्टाञ्जगद्गुरुः ॥ ११ ॥ स एवं भार्यया विप्रो बहुशः प्रार्थितो
मृदु ॥ अयं हि परमो लाभ उत्तमश्लोकदर्शनम् ॥ १२ ॥ इति सञ्चिन्त्य मनसा गमनाय मतिं दधे ॥ अप्यस्त्युपायनं किञ्चिद्गृहे कल्याणि
दीयताम् ॥ १३ ॥ याचित्वा चतुरो मुष्टीन्विप्रान्पृथुकतण्डुलान् ॥ चैलखण्डेन तान्बद्ध्वा भर्त्रे प्रादादुपायनम् ॥ १४ ॥ स तानादाय विप्राग्र्यः
प्रययौ द्वारकां किल ॥ कृष्णसन्दर्शनं मह्यं कथं स्यादिति चिन्तयन् ॥ १५ ॥ त्रीणि गुल्मान्यतीयाय तिस्रः कक्षाश्च स द्विजः ॥ विप्रोऽगम्या-
न्धकवृष्णीनां गृहेष्वच्युतधर्मिणाम् ॥ १६ ॥ गृहं द्व्यष्टसहस्राणां महिषीणां हरेर्द्विजः ॥ विवेशैकतमं श्रीमद्ब्रह्मानन्दं गतो यथा ॥ १७ ॥

अनि ब्राह्मणी छिमेकी ब्राह्मणका घरबाट चार मुठी चिउरा मागेर ल्याइन् र थोटा टालोमा पोको पारेर पतिलाई सौगात दिन भनेर जिम्मा लगाइन् ॥ १४ ॥ त्यो पोको कासी च्यापेर मनमनै—मलाई भगवान् कृष्णको दर्शन कहिले र कसरी प्राप्त हुनेछ—यस्तो तर्क गर्दै द्वारकापुरी जान हिंडे ॥ १५ ॥ हे राजन् ! *द्वारकापुरी पुगिसकेपछि सुदामा अन्यान्य ब्राह्मणवर्गका साथै सैनिकहरूका तीन पहरा र तीन ढोकाहरू नाघेर भगवद्धर्मको पालन गर्ने अन्धक र वृष्णिवंशी यादवका महलमा पुगे–जहाँ त्यहाँ पुग्न कठिन थियो ॥१६॥ अब ती विप्रले भगवान् कृष्णका सोह्र हजार रानीहरूका महलमा प्रवेश गरे–तब उनलाई ब्रह्मानन्दमा डुबेझैं भयो ॥ १७ ॥ सुदामालाई परबाट आउन लागेका देखेर प्रियाको शय्यामा

---

* अन्धक, वृष्णिवंशी यादवहरूका ती भव्य प्रसाद देखेर ब्राह्मण तिर्मिरिएका ती विप्र छक्क परेर हेरिरहे । जहाँ देवता समान सबैले मौन धारण गरेका छन् र कोही पनि कसैसित केही कुरा गर्दैनन्, त्यहाँ सुदामालाई देखेर पुरजनहरू सबैले सोधे–'कहाँ बाट आएको ? कसलाई खोजेको ?' अनि सुदामाले भने– 'यदुवीरका पैर, भक्तको पीडा हरण गर्ने भएका ती बलवीर कृष्णको भवन कुन हो ?' सुदामाको प्रश्न सुनी द्वारपालले ब्राह्मण भन्ने चालेर । फेरि सोध्यो–'हे विप्र देवता ! आफ्नु नाम भन्नुहवस् , र के काम छ त्यो पनि भन्नुहवस् ।' अनि सुदामाले भने–'मेरो नाम सुदामा हो, यदुनाथ कृष्ण र म गुरुकुलमा सँगै अध्ययन गर्दथ्यौं । उनो गेर बालसखा हुन । यो सबै कुरा यदुराय जान्दछन् ।' यति सुनेर द्वारपाल भगवान् कृष्णको सामुन्ने गएर हात जोरी बिन्ती गर्दछ–'हे नाथ ! शिरमा फेटा छैन अंगमा वस्त्र छैन, कुन ग्रामबाट आएका हुन् । फाटेको धोती छ, मैलो ओढ्ने छ गोडामा उपानह ( जुत्ता ) छैन । देख्दा सारै दुर्बल ब्राह्मण बाहिर द्वारमा चकित चकित भई द्वारकानाथको भवन हेरिरहेका छन् र उनी दीनदयालु हजुरलाई सोधिरहेका छन् । उनले आफ्नु नाम सुदामा भन्दैछन् ।

विराजमान श्रीहरि झट्ट उठेर द्वारतर्फ गई हर्षले उनलाई अंकमाल गरेर पाँटीमा टाँसे ॥ १८ ॥ आफ्ना प्रिय सखा सुदामाको अङ्गपङ्गले कमलनयन भगवान्लाई निकै आनन्द प्राप्त भयो र प्रेमवश नयनबाट जल बग्नलागे* ॥ १८ ॥ हे राजन् ! अनि करुणासिन्धु भगवान्ले आफ्ना सखालाई पलङ्गमा बसाले र स्वयं पूजाको सामग्री ल्याई तिनका पाउ पखालेर सबै लोकलाई पवित्र पार्ने प्रभुले त्यो चरणोदक शिरमा लगाए, अनि उनको शरीरमा सुगन्धित चन्दन, अगरु, कुङ्कुम आदि वस्तुको लेप गरिदिए ॥ २० ॥ २१ ॥ अनि सुगन्धित धूप र दीपावलीले आफ्ना मित्रको पूजन गरेर ताम्बूल र गाई निवेदन गरेर उनीसित स्वागत वाक्यहरू पनि भने ॥ २२ ॥ बिचरा सुदामा काटेको लुगाएका र अति दुर्बल मलिन र शिराजालले पूर्ण देखिन्थे। त्यस वेला लक्ष्मी स्वरूपा रुक्मिणीदेवी स्वयं तिनलाई पंखा हम्कन लागिन् ॥ २३ ॥ अनि पुण्यकीर्ति भगवान कृष्णले यौटा भिक्षुक

तं विलोक्याच्युतो दूरात्प्रियापर्यङ्कमास्थितः ॥ सहसोत्थाय चाभ्येत्य दोर्भ्यां पर्यग्रहीन्मुदा ॥ १८ ॥ सख्युः प्रियस्य विप्रर्षेरङ्गसङ्गातिनिर्वृतः ॥ प्रीतो व्यमुञ्चदब्बिन्दून् नेत्राभ्यां पुष्करेक्षणः ॥ १९ ॥ अथोपवेश्य पर्यङ्के स्वयं सख्युः समर्हणम् ॥ अपहृत्यावनिज्यास्य पादौ पादावनेजनीः ॥२०॥ अग्रहीच्छिरसा राजन् भगवाँल्लोकपावनः ॥ व्यलिम्पद्दिव्यगन्धेन चन्दनागुरुकुङ्कुमैः ॥ २१ ॥ धूपैः सुरभिभिर्मित्रं प्रदीपावलिभिर्मुदा ॥ अर्चित्वावेद्य ताम्बूलं गां च स्वागतमब्रवीत् ॥२२॥ कुचैलं मलिनं क्षामं द्विजं धमनिसंततम् ॥ देवी पर्यचरत्साक्षाच्चामरव्यजनेन वै ॥ २३ ॥ अन्तःपुरजनो दृष्ट्वा कृष्णेनामलकीर्तिना ॥ विस्मितोऽभूदतिप्रीत्या अवधूतं सभाजितम् ॥ २४ ॥ किमनेन कृतं पुण्यमवधूतेन भिक्षुणा ॥ श्रिया हीनेन लोकेऽस्मिन्गर्हितेनाधमेन च ॥ २५ ॥ योऽसौ त्रिलोकगुरुणा श्रीनिवासेन सम्भृतः ॥ पर्यङ्कस्थां श्रियं हित्वा परिष्वक्तोऽग्रजो यथा ॥ २६ ॥ कथयाञ्चक्रतुर्गाथाः पूर्वा गुरुकुले सतोः ॥ आत्मनो ललिता राजन्करौ गृह्य परस्परम् ॥ २७ ॥ श्रीभगवानुवाच ॥ अपि ब्रह्मन्गुरुकुलाद्भवता लब्धदक्षिणात् ॥ समावृत्तेन धर्मज्ञ भार्योढा सदृशी न वा ॥ २८ ॥ प्रायो गृहेषु ते चित्तमकामविहितं तथा ॥ नैवातिप्रीयसे विद्वन्धने विदितं हि मे

ब्राह्मणको त्यसरी अत्यन्त प्रसन्नतापूर्वक पूजा गरेको देखेर सबै अन्तःपुरनिवासी आश्चर्यमा परे । २४ ॥ ती परस्पर भन्नलागे—'यो श्रीहीन, निर्धन, र सबै लोकमा निन्दनीय तथा अवधूत भिखारीले यस्तो कुन् महान् पुण्य गरेका थिए, जसले लक्ष्मीका आश्रयस्थान र जगद्गुरु श्रीकृष्णले आफ्नू शय्यामा विराजमान लक्ष्मीलाई पनि त्यागेर इनको आफ्नू दाजू झैं आलिंगन र सत्कार पनि गरे' ॥ २५-२६ ॥ हे राजन् ! अनि कृष्ण-सुदामा यौटाले अर्कोको हात समातेर गुरुकुलमा बस्ताको मनोहर कुरा-कानी गर्न लागे ॥ २७ ॥ श्रीभगवान्ले आज्ञा गर्नु भयो—हे धर्मज्ञ ! गुरुदक्षिणा दिएर गुरुकुलबाट हामीहरू फर्केपछि तिमीले कुनै सुयोग्या कन्यासित विवाह गर्यौ कि गरेनौ ? मेरो पक्का विश्वास छ—तिम्रो

*नयनमा जल भरिएका प्रभुलाई देख्ना साथ सुदामाका सबै दुःख हराएर गए । तिनी सुरराज इन्द्र भन्दा पनि श्रेष्ठ, कल्पवृक्ष भन्दा पनि उत्तम, कुबेर भन्दा पनि धनी भए वा रघुवंश राजा उसै बखत भए, जब लक्ष्मीपति भगवान्ले अंकमाल गरे। अनि भगवान्ले आज्ञा भयो–'हे सखे ! बुढा कुटेर चिरिएको छ, काँडाले पैताला चालनो पारेको छ, यस्तो महादुःखमा परेर पनि यति का दिनसम्म कहाँ हरायौ ? किन आएनौ ?' सुदामाको यस्तो दीनदशा देखेर करुणाले करुणानिधि रोए । ठूलो थालमा राखेको पानी हालले छोएनन्, आफ्ना नयनका जलले सखाको पाऊ पखाले ।

चित्त गृहस्थीमा आसक्त छैन र तिमी धन पाएर पनि प्रसन्न हुँदैनौ ॥ २९ ॥ ईश्वरको मायाद्वारा निर्मित विषय-वासना त्याग गर्ने केही व्यक्ति विषयमा आसक्त नभए पनि म जस्तै केवल लोक-शिक्षाका लागि कर्म गर्दछन् ॥३०॥ हे ब्रह्मन् ! तिमीलाई उस वेलाको केही सम्झना छ, जब हामी संगसंगै गुरुकुलमा बस्तथ्यौं, जहाँ बसेर द्विज सबै ज्ञातव्य कुरा जानेर अज्ञात-सागरबाट पारी तर्दछन् ॥ ३१ ॥ हे मित्र ! गुरुकुल निवास नै द्विजलाई सत्कर्ममा लगाउने स्थान हो । त्यहाँ सबै आश्रमीहरूका ज्ञानदाता जगद्गुरु बस्तछन्, गुरुजन म जस्तै हुन्छन् ॥ ३२ ॥ हे ब्रह्मन् ! वर्णाश्रमीहरूमा जो व्यक्ति मेरै स्वरूप ठानेर गुरुको उपदेश द्वारा सहजै भवसागर पारी तर्न सक्छन्, तिनै आफ्नू वास्तविक स्वार्थ जान्दछन् ॥ ३३ ॥ सबै प्राणीको अन्तरात्मा म जति गुरु-सेवाले प्रसन्न हुन्छु, त्यति यज्ञ, ब्रह्मचर्य, तप र व्रत तथा उपशम आदि कुनै पनि साधनले प्रसन्न हुन्न ॥ ३४ ॥ हे ब्रह्मन् ! गुरुकुलमा बस्ता जब एक दिन हामी दुवैलाई गुरुपत्नीले समिधा ल्याउन वनमा पठाएकी थिइन्, त्यस बखत जे भएको थियो, त्यो तिमीले सम्झेका छौ ? ॥३५॥ त्यसवेला

॥ २९ ॥ केचित्कुर्वन्ति कर्माणि कामैरहतचेतसः ॥ त्यजन्तः प्रकृतीर्दैवीर्यथाऽहं लोकसंग्रहम् ॥ ३० ॥ कच्चिद्गुरुकुले वासं ब्रह्मन्स्मरसि नौ यतः ॥ द्विजो विज्ञाय विज्ञेयं तमसः पारमश्नुते ॥३१॥ स वै सत्कर्मणां साक्षाद् द्विजातिरिह सम्भवः ॥ आद्योऽङ्ग यत्राश्रमिणां यथाऽहं ज्ञानदो गुरुः ॥३२॥ नन्वर्थकोविदा ब्रह्मन्वर्णाश्रमवतामिह ॥ ये मया गुरुणा वाचा तरन्त्यञ्जो भवार्णवम् ॥ ३३ ॥ नाहमिज्याप्रजातिभ्यां तपसोपशमेन वा ॥ तुष्येयं सर्वभूतात्मा गुरुशुश्रूषया यथा ॥ ३४ ॥ अपि नः स्मर्यते ब्रह्मन्वृत्तं निवसतां गुरौ ॥ गुरुदारैश्चोदितानामिन्धनानयने क्वचित् ॥ ३५ ॥ प्रविष्टानां महारण्यमपर्तौ सुमहद्द्विज ॥ वातवर्षमभूत्तीव्रं निष्ठुराः स्तनयित्नवः ॥ ३६ ॥ सूर्यश्चास्तं गतस्तावत्तमसा चावृता दिशः ॥ निम्नकूलं जलमयं न प्राज्ञायत किञ्चन ॥ ३७ ॥ वयं भृशं तत्र महानिलाम्बुभिर्निहन्यमाना मुहुरम्बुसम्प्लवे ॥ दिशोऽविदन्तोऽथ परस्परं वने गृहीतहस्ताः परिबभ्रिमातुराः ॥ ३८ ॥ एतद्विदित्वा उदिते रवौ सान्दीपनिर्गुरुः ॥ अन्वेषमाणो नः शिष्यानाचार्योऽपश्यदातुरान् ॥ ३९ ॥ अहो हे पुत्रका यूयमस्मदर्थेऽतिदुःखिताः ॥ आत्मा वै प्राणिनां प्रेष्ठस्तमनादृत्य मत्पराः ॥ ४० ॥ एतदेव हि सच्छिष्यैः कर्तव्यं गुरुनिष्कृतम् ॥ यद्वै विशुद्धभावेन

हामी घोटा हरलाग्दो वनमा जाँदा वर्षाऋतु नभए पनि प्रचण्ड आँधी सहित घनघोर वर्षा हुन लागेको थियो ॥ ३६ ॥ सूर्यनारायण हाकिनाले दिशाहरूमा अन्धकार फैलियो र सारा भूमि जलमय भएको थियो, जसले अग्लो-होचो र बाटोको केही ज्ञान भइरहेको थिएन ॥ ३७ ॥ त्यो भयङ्कर जलप्रलयमा प्रचण्ड पवन तथा घनघोर वर्षाले अत्यन्त पीडित भएर हामी यस्तो अचेत झैं भयौं कि दिशा-विदिशाको ज्ञान पनि रहेन र हामी परस्पर हात समातेर अति व्याकुल भई वनमा यता-उता भौंतारिन लागेका थियौं ॥ ३८ ॥ जब सूर्योदय भयो तब हाम्रा गुरु सान्दीपनिलाई यो वृत्तान्त ज्ञात भयो तब ती शिष्यलाई खोज्दै वनमा आए । त्यहाँ उनले हामी दुवैलाई व्याकुल दशामा भेट्टाए ॥ ३९ ॥ उनले भने— 'अहो ! बाबु हो ! तिमी दुवैले हाम्रो निम्ति ठूलो कष्ट भोग्नुपऱ्यो । सबै जीवलाई आफ्नू शरीर बडो प्यारो हुन्छ, तर तिमी दुवैले त्यसको पनि विचार नराखी सेवा गऱ्यौ ॥ ४० ॥ सबै कामनाका साधनस्वरूप आफ्नू शरीरलाई पनि विशुद्धभावले गुरुको सेवामा लगाइदिनु राम्रा शिष्यद्वारा गर्नेयोग्य सबभन्दा गुरुनिष्कृति कहिएको छ ॥ ४१ ॥ हे विप्रवर !

म तिमी उसै प्रसन्न छु। तिम्रा सबै पूर्ण होउन् र तिम्रो विद्या यो लोक र परलोकमा पनि कहिल्यै निष्फल नहोस् ॥ ४२ ॥ हे ब्रह्मन् ! गुरुकहाँ बस्ता यस्तै अनेक प्रसङ्ग आएका थिए, तिमी के तो सम्झन्छौ ? प्रत्येक मनुष्य गुरु-कृपाले नै पूर्ण-मनोरथ भएर शान्तिलाभ गर्न योग्य हुन्छ ॥ ४३ ॥ सुदामाले भने—हे देवदेव ! हे जगद्गुरो ! अब हजुर सत्यसङ्कल्पसित गुरुकुलमा हाम्रो सहवास थियो, तब मैले आफ्नू कुन काम अपुरो छाडें ? ॥ ४४ ॥ हे विभो ! कल्याणको उद्भवस्थान छन्दोमय वेद नै जसको दिव्य शरीर छ, त्यस्ता हजुरले गुरुकुलमा बस्नु पनि विडम्बना थियो ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे नेपा ी भाषाटीकायामशीतितमोऽध्यायः ॥ ८० ॥

( सुदामाको ऐश्वर्य वृद्धि ) शुकदेव भन्छन्—हे राजन् ! ती द्विज-श्रेष्ठसित यस प्रकार वार्तालाप गरेर समस्त जीवमा व्यापक, सर्वज्ञ तथा ब्राह्मणका उत्तम भक्त तथा साधुजनका एकमात्र गति भगवान् कृष्णले आफ्ना सखा सुदामातिर प्रेमपूर्ण दृष्टिले हेर्दै मुसुक हाँसेर भन्नुभयो— । १ ॥ २ ॥ भगवान् बोल्नुभयो—हे ब्रह्मन् ! तिमीले आफ्नू

सर्वार्थात्मार्पणं गुरौ ॥ ४१ ॥ तुष्टोऽहं भो द्विजश्रेष्ठाः सत्याः सन्तु मनोरथाः ॥ छन्दांस्ययातयामानि भवन्त्विह परत्र च ॥४२॥ इत्थं विधान्यनेकानि वसतां गुरुवेश्मसु ॥ गुरोरनुग्रहेणैव पुमान्पूर्णः प्रशान्तये ॥ ४३ ॥ ब्राह्मण उवाच ॥ किमस्माभिरनिर्वृत्तं देवदेव धगद्गुरो ॥ भवता सत्यकामेन येषां वासो गुरावभूत् ॥ ४४ ॥ यस्य छन्दोमयं ब्रह्म देह आवपनं विभो ॥ श्रेयसां तस्य गुरुषु वासोऽत्यन्तविडम्बनम् ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे श्रीदामचरितेऽशीतितमोऽध्यायः ॥ ८० ॥

श्रीशुक उवाच ॥ स इत्थं द्विज मुख्येन सह सङ्कथयन्हरिः ॥ सर्वभूतमनोऽभिज्ञः स्मयमानउवाचतम्॥१॥ ब्रह्मण्यो ब्राह्मणं कृष्णोभगवान्प्रहसन्प्रियम्॥ प्रेम्णा निरीक्षणेनैव प्रेक्षन्खलु सतां गतिः ॥२॥ श्रीभगवानुवाच ॥ किमुपायनमानीतं ब्रह्मन्मे भवता गृहात् ॥ अण्वप्युपाहृतं भक्तैः प्रेम्णा भूर्येव मे भवेत् ॥ भूर्यप्यभक्तोपहृतं न मे तोषाय कल्पते ॥३॥ पत्रं पुष्पं फलं तोयं यो मे भक्त्या प्रयच्छति ॥ तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः ॥ ४ ॥ इत्युक्तोऽपि द्विजस्तस्मै व्रीडितः पतये श्रियः ॥ पृथुकप्रसृतिं राजन्न प्रायच्छदवाङ्मुखः॥५॥सर्वभूतात्मदृक्साक्षात्तस्यागमनकारणम्॥विज्ञायाचिन्तयन्नायं श्रीकामो माऽभजत्पुरा ॥६॥ पत्न्याः पतिव्रतायास्तु सखा प्रियचिकीर्षया ॥ प्राप्तो मामस्य दास्यामि सम्पदोऽमर्त्यदुर्लभाः॥७॥ इत्थं विचिन्त्य

घरबाट मलाई के सौगात ल्यायौ ? मेरा भक्त मलाई प्रेमपूर्वक यदि केही थोरै वस्तु दिन्छन् भने पनि मेरो दृष्टिमा त्यो अत्यन्त धेरै हुन्छ, तर अभक्तले दिएका धेरै वस्तुले पनि मलाई सन्तुष्ट पार्न समर्थ हुन्नन् ॥ ३ ॥ जो व्यक्ति भक्तिपूर्वक पत्र, पुष्प, फल, जल जे अर्पण गर्दछ, त्यो प्रेमी भक्तले अर्पण गरेको सौगात म अति भए पनि प्रसन्न मनले स्वीकार गर्दछु ॥ ४ ॥ हे राजन् ! भगवान्ले यसरी बुझाएर भन्दा पनि सुदामाले ती लक्ष्मीपतिलाई दिन ल्याएको त्यो चार मुठी चिउराको पोको दिन सकेनन् र सङ्कोचवश तल टाउको गरे ॥ ५ ॥ अनि सर्वे प्राणीका अन्तःकरणका ज्ञाता र साक्षी भगवान् श्रीकृष्ण उनी आएका कारण जानेर मनमनै विचार गर्नलागे—इनले कहिल्यै धनको इच्छाले मेरो भजन गरेनन्। यसैले ल्याएको आफ्नो अल्प सौगात मलाई दिन र आफ्नू कामना प्रकट गर्न इनलाई संकोच भइरहेको छ ॥ ६ ॥ मेरा यी मित्र केवल आफ्नी पत्नीको कामना पूर्ण गर्न-

नै मकहाँ आएका हुन् । म इनलाई यस्तो अटूट सम्पत्ति दिन्छु, जुन देवतालाई पनि दुर्लभ हुनेछ ॥ ७ ॥ यति विचारेर भगवान्ले ती विप्रको फाटेको लुगामा बाँधिएको चिउराको पोको 'यो के हो !' भन्दै खोस्नु भयो ॥ ८ ॥ अनि ठूलो आदरले भन्नुभयो—'मित्र ! तिमीले मलाई साह्रै मनपर्ने सौगात ल्याएका छौ, यो चिउराले त मलाई र मेरो आश्रयमा रहने समस्त विश्वलाई तृप्त पार्न सक्दछ ॥ ९ ॥ यति भनेर जब भगवान्ले एक मुठी चिउरा खाएर अर्को मुठी खाउँ आँट्नुभयो, तब लक्ष्मीरूपिणी श्रीरुक्मिणीले कृष्णको हात समाइ रोकिइन् ॥ १० ॥ उनले भनिन्—'हे विश्वात्मन् ! कुनै मनुष्यलाई इहलोक र परलोकमा सबै सम्पत्तिको सुखभोग प्राप्त गराउन एक मुठी चिउरा नै पर्याप्त छ । तात्पर्य के भने यो भन्दा बढ्ता उदारता देखाएर मलाई पनि इनकै अधीन नतुल्याउनोस् ॥ ११ ॥ ती विप्रले त्यो रात भगवान्कै भवनमा र विविध प्रकारका मीठा-मीठा खाने वस्तुहरू खाएर सुते र

वमनार्चीरबद्धान्द्विजन्मनः ॥ स्वयं जहार किमिदमिति पृथुकतण्डुलान् ॥ ८ ॥ नन्वेतदुपनीतं मे परमप्रीणनं सखे ॥ तर्पयन्त्यङ्ग मां विश्वमेते पृथुकतण्डुलाः ॥९॥ इति मुष्टिं सकृज्जग्ध्वा द्वितीयां जग्धुमाददे ॥ तावच्छ्रीर्जगृहे हस्तं तत्परा परमेष्ठिनः ॥१०॥ एतावताऽलं विश्वात्मन्सर्वसम्पत्समृद्धये ॥ अस्मिँल्लोकेऽथवाऽमुष्मिन्पुंसस्त्वत्तोषकारणम् ॥११॥ ब्राह्मणस्तां तु रजनीमुषित्वाऽच्युतमन्दिरे ॥ भुक्त्वा पीत्वा सुखं मेने आत्मानं स्वर्गतं यथा ॥१२॥ श्वोभूते विश्वभावेन स्वसुखेनाभिवन्दितः ॥ जगाम स्वालयं तात पथ्यनुव्रज्य नन्दितः ॥ १३ ॥ स चालब्ध्वा धनं कृष्णान्न तुयाचितवान्स्वयम् ॥ स्वगृहान्व्रीडितोऽगच्छन्महद्दर्शननिर्वृतः ॥१४॥ अहो ब्रह्मण्यदेवस्य दृष्टा ब्रह्मण्यता मया ॥ यद्दरिद्रतमो लक्ष्मीमाश्लिष्टो बिभ्रतोरसि ॥ १५॥ क्वाहं दरिद्रः पापीयान्क्व कृष्णः श्रीनिकेतनः ॥ ब्रह्मबन्धुरिति स्माहं बाहुभ्यां परिरम्भितः ॥ १६ ॥ निवासितः प्रियाजुष्टे पर्यङ्के भ्रातरो यथा ॥

आफूलाई स्वर्गमै गए झैं ठाने ॥ १२ ॥ हे तात ! भोलिपल्ट सूर्योदय भएपछि जगन्नियन्ता र आत्मानन्दस्वरूप भगवान् कृष्णबाट अभिवन्दित भएर र उनी द्वारा पसम्म आएर तथा विनयपूर्वक बिदा गरेपछि ती विप्रवर आफ्नू घरतिर फर्किए ॥ १३ ॥ कृष्णचन्द्रसित प्रत्यक्ष केही धन नपाए पनि उनले स्वयं प्रकुसित केही मागेनन् र आफ्नू चित्तको कृपणताले लज्जित तथा परमपुरुष परमात्माको दर्शनले आनन्दित हुँदै ती आफ्नू घर हिंडे ॥ १४ ॥ बाटोमा आँदा ती आफ्नू मनमा विचार गर्नलागे—अहो ! आज मैले ब्राह्मण्यदेव भगवान् कृष्णचन्द्रको ब्राह्मण-भक्ति देखें । यद्यपि ती साक्षात् लक्ष्मीलाई धारण गर्दछन्, तापनी उनले महादरिद्रलाई अंकमाल गरे ॥ १५ ॥ कहाँ म महापापी र दरिद्र ब्राह्मण र कहाँ लक्ष्मीपति भगवान् ! तथापि 'यी ब्राह्मण हुन्', यस्तो विचार गरेर मलाई छातीमा टाँसेर भेटे ॥ १६ ॥ श्रीकृष्णले आफ्नी प्रियाद्वारा सेवित पलंगमा मलाई आफ्नै भाईको समान

---

* कवि भन्दछन्—गुरुकुलमा छँदा पनि गुरुआमाले दिएको चना एक्लै खायौ, मलाई दिएनौ, 'यो कुरा कृष्णले मुसुक्क हाँसेर सुदामासित भने—हे सखे ! सुदामा ! चोर्ने बानीमा प्रवीण तिमी आज पनि यो पोको काखीमा च्यापेर मलाई दिइरहेका छैनौ । तिम्रो चोर्ने बानी अझ गएको रहेनछ—यसैले भाउजूले दिएको सौगात पनि दिन मन गरिरहेका छैनौ । प्रभुले एक मुठी चिउरा चपाउनासाथ लक्ष्मी कम्पित भइन् । आदिदि नवनिधि कम्पित भए । जब दोस्रो पाँको लिए तब स्वर्गमा सुरराज इन्द्र डराए । सुमेरु पर्वत डराए, कुबेर भयभीत भए—अर्थात् अब यो लोक नै आफ्ना मित्रलाई दिन आँटे भनेर सबै डराए । आफ्ना भक्तलाई अति धेरै दिए पनि थोरै भयो भन्ने संकोच मान्ने प्रभुको बानी नै हो । —जो सम्पदा शिव रावणहि दिन्हि दिए दस माथ । सोइ सम्पदा विभीषणहि सकुचि दिन्ह रघुनाथ ।—तुलसी ।

बसाले । त्यति मात्र होइन, मलाई थाकेको देखेर स्वयं उनकी पटरानीले पङ्खा हम्किन् ॥ १७ ॥ फेरि ती ब्राह्मणका परम भक्त श्रीहरिले पाउ मिच्ने आदि अनेक सेवाले देवताहरू भैं मेरो पूजा गरे ॥ १८ ॥ ती कृष्ण भगवानका चरणको पूजा त सबैको निम्ति पृथिवी र पातालको सम्पत्ति, अणिमादि ऐश्वर्य र स्वर्ग तथा मोक्षादि प्राप्तिको पनि कारण छ ॥ १९ ॥ तैपनि ती करुणासिन्धुले यो ठानेर कि 'यो निर्धन छ, धन पायो भने उन्मत्त भएर मेरो सम्झना गर्नेछैन'—मलाई अलिकति पनि धन दिएनन्* ॥ २० ॥ अब सुदामा

महिष्या वीजितः श्रान्तो वालव्यजनहस्तया ॥ १७ ॥ शुश्रूषया परमया पादसंवाहनादिभिः ॥ पूजितो देवदेवेन विप्रदेवेन देववत् ॥ १८ ॥ स्वर्गापवर्गयोः पुंसां रसायां भुवि सम्पदाम् ॥ सर्वासामपि सिद्धीनां मूलं तच्चरणार्चनम् ॥ १९ ॥ अधनोऽयं धनं प्राप्तो माद्यन्नुच्चैर्न मां स्मरेत् ॥ इति कारुणिको नूनं धनं मे भूरि नाददात् ॥ २० ॥ इति तच्चिन्तयन्नन्तः प्राप्तो निजगृहान्तिकम् ॥ सूर्यानलेन्दुसङ्काशैर्विमानैः सर्वतो वृतम् ॥ २१ ॥ विचित्रोपवनोद्यानैः कूजद्द्विजकुलाकुलैः ॥ प्रोत्फुल्लकुमुदाम्भोजकह्लारोत्पलवारिभिः ॥ २२ ॥ जुष्टं स्वलंकृतैः पुम्भिः स्त्रीभिश्च हरिणा-

मनमनै यस्तो तर्क गर्दै घर पुगे, तब उनले देखे कि त्यो स्थान सूर्य-चन्द्र र अग्नि समान देदीप्यमान अनेक ठूला-ठूला भवनहरूले भरिएको छ ॥२१॥ जसमा पक्षीगण मनोहर कलरव गरिरहेछन् । यस्ता चित्र-विचित्र बगैंचा—जसमा कुमुद, अम्भोज, कल्हार र उत्पल आदि अनेक थरिका कमल फक्रेका थिए, त्यस्ता उत्तम सरोवर तथा अनेक सुसज्जित पुरुषहरू र मृगनयनी नारीगणले त्यसको अपूर्व शोभा भइरहेको थियो । त्यो देखेर सुदामाले तर्क गरे—'यो के भयो ? यो कसका घर हुन ? मेरो स्थान यस्तो कसरी हुन गयो ?' ॥ २२ ॥

---

* कविको कथन यस्तो पनि छ—जे जति दिन मन लाग्यो त्यो दिइसके तर सुदामाले माग्न सकेनन् । मनमनै विचार गरे—गोपालले मेरो हातमा केही पनि दिएनन् । त्यो प्रसन्न हुनुहुँदा यो दगुर्दै आएर अंकमाल गर्नु ती आदरका कुरा गर्नु, ती सम्मान गर्नु, त्यो परसम्म पुऱ्याउन आउनु—गोपालका बाल जानी र बुभिन सक्नु छैनन् । जो दही र नौनीका निम्ति घरघरै डुल्दथे, ती आज कस्ता साज-सज्जाका साथ बस्तछन् । म त आउन पनि मन गरिरहेको थिइन, पत्नीले नै बलपूर्वक पठाएकी हुन् । अब भन्दछु—स्त्री यो धन सबै गयो राख । मेरो बालककालका सखा हुन् तिनलाई म के आप दिउँ—यति मात्र भन्दछु—जस्तो हरिले मलाई दिए त्योभन्दा पनि बढी पाउन् । अब बढी के भनौं—जहाँ कंचन सुनकै भवन-प्रासाद छन् तर मेरो सखाको हृदय सान्है कठोर रहेछ, मलाई सखा भनेर छ दाम केही पनि हातमा हालिदिन सकेनन । अनेक रत्नादिका भण्डार छन् बढ़का तिनले दिएनन् भनेर दोष दिनु पनि व्यर्थ छ, म त कुनै प्रकारको रिस गर्नु भन्दा बरू आफ्नै भाग्यलाई दोष दिन्छु । यस्तै अनेक कुराको तर्क र विचार गर्दै ती दरिद्र सुदामा मनमा पछिलो मान्दै आफ्नू गाममा नगीचै आइपुगे र गौतम ऋषिको नाम स्मरण गरेर नगरमा प्रवेश गरे । त्यहाँ उनले द्वारकापुरी जस्तै हात्ती, घोडा, रथ अन्य अलभ्य वस्तु चारैतिर देखेर मनमनै छक्क परे । अनि विचार गरे—म फेरि बाटो बिर्सेर हरिका द्वारका पुरीमै आइपुगें कि भन्ने भ्रम भयो । उता हरिको दर्शनले सारा दुःख हराइसकेको थियो कसको ती विप्र सुदामा ती भवनहरू देखेर गाउँका अभ्यास आफ्ना छिमेकीलाई साध्दै पहिले आफ्नू झुप्रो भएका स्थानमा पुगे तर त्यहाँ झुप्रोको कुनै पनि चिन्ह थिएन । त्यतिमै उनकी पतिव्रता पत्नीले देखेर दगुर्दै आई स्वामीलाई महलमा लगेर बसालिन् ! स. कुरा के भने यति ठूलो सम्पत्ति पाएर पनि सुदामाले हरिका चरणमा प्रेम गर्न छाडेनन् । निर्लिप्त भावले भौतिक सुख भोग्दै आफ्ना शेष दिन हरिको चिन्तनमा बिताए ।

॥ २३ ॥ ती यस्तै तर्कनामा पाडिएका थिए–उसै बेला देवता झैं तेजस्वी अनेक नर-नारी उत्साहपूर्वक गाना बजाना गर्दै उनको स्वागतका लागि आइपुगे ॥ २४ ॥ आफ्ना पतिको आगमन सुनेर उनकी रूपवती भार्या हर्ष र उत्साहसाथ तुरुन्त घरबाट बाहिर यसरी निस्किन्, मानो स्वयं लक्ष्मी आफ्नू स्थान अर्थात् कमलवनबाट निस्केर आइरहेकी छिन् ॥ २५ ॥ आफ्ना पतिलाई देख्नासाथ ती पतिव्रताका नेत्रमा हर्षका आँसु उम्लेर आए। उनको आँखा चिम्लेर प्रेमभावले पतिलाई नमस्कार गरिन् र मनमनै आलिङ्गन पनि गरिन् ॥ २६ ॥ आफ्नी पत्नीलाई घाँटीमा गहना लाएका दासीहरूको माझ विमानस्थित देवाङ्गना समान शोभायमान देखेर सुदामालाई ठूलो आश्चर्य भयो ॥ २७ ॥ ती प्रसन्न भएर उनीसित आफ्नू भवनमा गए, जुन इन्द्रको भवन समान सयकडौं मणिमय स्तम्भले अलंकृत थियो ॥ २८ ॥ त्यसमा दुग्धफेन समान सुकोमल बिछौना, हात्ती दाँतका सुवर्ण जडित उत्तम पलंग

क्षिभिः ॥ किमिदं कस्य वा स्थानं कथं तदिदमित्यभूत् ॥ २३ ॥ एवं मीमांसमानं तं नरा नार्योऽमरप्रभाः ॥ प्रत्यगृह्णन्महाभागं गीतवाद्येन भूयसा ॥ २४ ॥ पतिमागतमाकर्ण्य पत्न्युद्धर्षातिसम्भ्रमा ॥ निश्चक्राम गृहात्तूर्णं रूपिणी श्रीरिवालयात् ॥ २५ ॥ पतिव्रता पतिं दृष्ट्वा प्रेमोत्कण्ठाश्रुलोचना ॥ मीलिताक्ष्यनमद् बुद्ध्या मनसा परिषस्वजे ॥ २६ ॥ पत्नीं वीक्ष्य विस्फुरन्तीं देवीं वैमानिकीमिव ॥ दासीनां निष्ककण्ठीनां मध्ये भान्तीं स विस्मितः ॥ २७ । प्रीतः स्वयं तया युक्तः प्रविष्टो निजमन्दिरम् ॥ मणिस्तम्भशतोपेतं महेन्द्रभवनं यथा ॥ २८ ॥ पयःफेननिभाः शय्या दान्ता रुक्मपरिच्छदाः ॥ पर्यङ्का हेमदण्डानि चामरव्यजनानि च ॥ २९ ॥ आसनानि च हैमानि मृदूपस्तरणानि च ॥ मुक्तादामविलम्बीनि वितानानि द्युमन्ति च ॥ ३० ॥ स्वच्छस्फटिककुड्येषु महामरकतेषु च ॥ रत्नदीपान्भ्राजमानाँल्ललनारत्नसंयुतान् ॥ ३१ ॥ विलोक्य ब्राह्मणस्तत्र समृद्धि सर्वसम्पदाम् ॥ तर्कयामास निर्व्यग्रः स्वसमृद्धिमहैतुकीम् ॥ ३२ ॥ नूनं बतैतन्मम दुर्भगस्य शश्वद्दरिद्रस्य समृद्धिहेतुः ॥ महाविभूतेरवलोकतोऽन्यो नैवोपपद्येत यदूत्तमस्य ॥ ३३ ॥ नन्वब्रुवाणो दिशते समक्षं याचिष्णवे भूर्यपि भूरिभोगः ॥ पर्जन्यवत्तत्स्वयमीक्षमाणो दाशार्हकाणामृषभः सखा मे ॥ ३४ ॥ किञ्चित्करोत्युर्वपि यत्स्वदत्तं सुहृत्कृतं फल्ग्वपि भूरिकारी ॥ मयोपनीतां पृथुकैकमुष्टिं प्रत्यग्रहीत्प्रीतियुतो महात्मा ॥ ३५ ॥ तस्यैव मे सौहृदसख्यमैत्री दास्यं पुनर्जन्मनि जन्मनि स्यात् ॥ महानुभावेन गुणालयेन विषज्जतस्तत्पुरुषप्रसङ्गः ॥३६॥ भक्ताय चित्रा भगवान्हि सम्पदो

र सुनका दण्ड हुने चमर, पङ्खा विद्यमान थिए ॥ २९ ॥ त्यहाँ सुकोमल बिछौनायुक्त सुनको सिंहासन तथा मोतीका मालायुक्त झलमल गर्ने चँदुवा आदि सुशोभित भइरहेथे ॥ ३० ॥ अगणित रमणीरत्नले परिपूर्ण तथा स्वच्छ स्फटिक मणिका भित्ता र इन्द्रनीलमणिको भूमिले सुसज्जित त्यस महलको मणिमय बत्ती तथा तथा सबै सम्पत्तिहरू देखेर ती विप्रवर सावधानीपूर्वक सहसा प्राप्त आफ्नू सम्पत्तिको कारण विचार्न लागे ॥ ३१ ॥ ३२ ॥ उनले मनमनै विचार गरे–म अभागी र सदाको दरिद्रलाई महाविभूतिको उत्कर्षका कारण श्रीकृष्णको कृपा-कटाक्ष बाहेक अरु केही हुन सक्दैन ॥ ३३ ॥ अनन्त भोगहरूले सम्पन्न मेरा सखा श्रीकृष्णचन्द्र गम्भीर मेघ झैं अतिशय उदार छन्। अतएव याचना गर्नेका इच्छुक आफ्ना भक्तलाई प्रत्यक्ष केही नदिए पनि उसको भावानुसार स्वतः केही दिन्छन् ॥ ३४ ॥ ती आफूले दिएको थोरै ठान्दछन् र भक्तका उपहारलाई धेरै ठान्दछन्

टाल्दछन् । हेरन, ती महात्माले मेरो एक मुठी चिउरालाई पनि कति प्रेमले स्वीकार गरे ॥ ३५ ॥ मलाई जन्म-जन्म उनैको सौहार्द, सख्यभाव, मित्रता तथा दासता मिलोस् र ती विविध गुणहरूका आश्रयस्थल भगवान् कृष्णमा अनुराग राख्दै मलाई उनैका चरणको सत्सङ्ग प्राप्त होस् ॥ ३६ ॥ अपरिपक्व विचार हुने भक्तलाई ती धनीवर्गको ऐश्वर्यमदले हुने पतन देखेर कहिल्यै प्रचुर सम्पत्ति, राज्य र ऐश्वर्य आदि प्रदान गर्दैनन् ॥ ३७ ॥ भगवद्भक्त सुदामा आफ्नू मनमा यस्तो निश्चय गरेर आफ्नी पत्नी सहित अनासक्त भावले त्यागपूर्वक ती ईश्वरप्रदत्त विषय भोग्न लागे ॥ ३८ ॥ ती देवदेव यज्ञपति कृष्णका ब्राह्मण नै प्रभु र देवता हुन् । उनको निम्ति ब्राह्मणभन्दा श्रेष्ठ अरू कोही पनि छैनन् ॥ ३९ ॥ ती विप्रवर सुदामाले कसैले पनि जित्न नसक्ने भगवान्लाई पनि आफ्ना भक्तगणसित हारेका देखेर उनैको ध्यानरूपी शस्त्रले आफ्नो अविद्यारूपिणी ग्रन्थिहरू छिनालेर केही समयमै सत्पुरुषहरूले पाउने योग्य भगवानको परमधाम पाए ॥ ४० ॥ ब्राह्मणहितकारी भगवान श्रीकृष्णको यो ब्रह्मण्यता सुन्नाले मनुष्य उनको प्रेम पाएर शीघ्र सर्व कर्मबन्धनबाट

राज्यं विभूतीर्न समर्थयत्यजः ॥ अदीर्घबोधाय विचक्षणः स्वयं पश्यन्निपातं धनिनां मदोद्भवम् ॥ ३७ ॥ इत्थं व्यवसितो बुद्ध्या भक्तोऽतीव जना-र्दने ॥ विषयाञ्जायया त्यक्ष्यन्बुभुजे नातिलम्पटः ॥ ३८ ॥ तस्य वै देवदेवस्य हरेर्यज्ञपतेः प्रभोः ॥ ब्राह्मणाः प्रभवो दैवं न तेभ्यो विद्यते परम् ॥ ३९ ॥ एवं स विप्रो भगवत्सुहृत्तदा दृष्ट्वा स्वभृत्यैरजितं पराजितम् ॥ तद्ध्यानवेगोद्ग्रथितात्मबन्धनस्तद्धाम लेभेऽचिरतः सतां गतिम् ॥ ४० ॥ एतद्ब्रह्मण्यदेवस्य श्रुत्वा ब्रह्मण्यतां नरः ॥ लब्धभावो भगवति कर्मबन्धाद्विमुच्यते ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे उत्तरार्धे पृथुकोपाख्यानं नामैकाशीतितमोऽध्यायः ॥ ८१ ॥

श्रीशुक उवाच ॥ अथैकदा द्वारवत्यां वसतो रामकृष्णयोः ॥ सूर्योपरागः सुमहानासीत्कल्पक्षये यथा ॥ १ ॥ तं ज्ञात्वा मनुजा राजन्पुरस्तादेव सर्वतः ॥ स्यमन्तपञ्चकं क्षेत्रं ययुः श्रेयोविधित्सया ॥२॥ निःक्षत्रियां महीं कुर्वन्रामः शस्त्रभृतां वरः ॥ नृपाणां रुधिरौघेण यत्र चक्रे महाह्रदान् ॥३॥ ईजे च भगवान्रामो यत्रास्पृष्टोऽपि कर्मणा ॥ लोकस्य ग्राहयन्नीशो यथान्योऽघापनुत्तये ॥ ४ ॥ महत्यां तीर्थयात्रायां तत्रागन्भारतीः प्रजाः ॥ वृष्ण-

मुक्त हुन्छन् ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे दशमस्कन्धे पं० गौरीशंकर वशिष्ठकृत 'वाशिष्ठी' भाषाटीकायामेकाशीतितमोऽध्यायः ॥ ८१ ॥

( व्रजका गोपहरूसित भगवान्को भेट ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन ! एक दिन राम-कृष्ण द्वारकापुरीमा बस्दा प्रलयकालीन ग्रहण झैं ठूलो ठूलो सूर्यग्रहण उपस्थित भयो ॥ १ ॥ त्यो सूर्यग्रहणको कुरा ज्योतिषीहरूबाट पहिल्यै सुनेर देश-देशान्तरका धेरै मानिस पुण्य गर्ने इच्छाले स्यमन्त पञ्चक तीर्थ कुरुक्षेत्रमा गए ॥ २ ॥ शस्त्रधारीहरूमा श्रेष्ठ भगवान् परशुरामले जहाँ पृथ्वीलाई क्षत्रियहीन गर्दा क्षत्रिय राजाहरूको रक्तले भरेर अनेक ठूला-ठूला कुण्डहरू बनाइदिएका थिए । त्यहीं नै परशुरामले क्षत्रियवधको पापले अलिप्त भएर पनि केवल लोकशिक्षाको निम्ति अन्य साधारण पुरुष झैं पापमुक्त हुनको निम्ति अनेक यज्ञ गरेका थिए ॥ ३ ॥ ४ ॥ यस तीर्थयात्राको प्रसङ्गमा भारतवर्षका धेरजसो प्रजा कुरुक्षेत्र पुगेका थिए । हे भारत ! त्यस अवसरमा अक्रूर, वसुदेव, उग्रसेन, गद, प्रद्युम्न, साम्बादि यादव पनि आफ्ना पाप मार्जन गर्न कुरुक्षेत्र आएका थिए । सूर्य-चन्द्र, शुक र सारण सहित